हरिहर संन्यास आश्रम, देवघाटधाम, तनहूँ, नेपाल-

द्वारा

ब्रह्मलीन श्री १००८ स्वामी परमानन्द सरस्वती गुरुमहाराजको

तृतीय वार्षिक-पुण्यस्मृति-तिथिको अवसरमा

प्रकाशित

# स्वामी परमानन्द गुरु-स्मृतिग्रन्थ

*प्रधान-सम्पादक :*

**● आचार्य जगन्नाथ शर्मा कण्डेल**

*सम्पादकहरू :*

- **चूडामणि शर्मा कण्डेल**
- **गुरुप्रसाद सुवेदी**
- **शोभाकर ब्रह्मचारी**
- **रामचन्द्र कण्डेल**
- **चेतराज कण्डेल**
- **कृष्णमणि पहारी**

*पुस्तक प्राप्ति स्थान :—*

**✳ हरिहर संन्यास आश्रम**

देवघाटधाम, तनहूँ

फोन : ०५६-२९४१७

**✳ लोकेश्वर शिवाश्रम,**

धर्मद्वारी दिब्रुङ, गुल्मी

**✳ परमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुल**

बिहूँ रामकोट, बाग्लुङ

✳

**लोकार्पण मिति : २०५६ माघ १४ गते**

**प्रकाशित प्रति : ११००**



✳

**सहयोग रू. :३००/-**

✳

*मुद्रक :*

**आनन्दकानन प्रेस**

**डी. १४/६५ टेढ़ीनीम, वाराणसी**

**फोन : ३९२३३७**

गुरुः साक्षात् परब्रह्म तस्मै श्रीगुरवे नमः



ब्रह्मलीन श्री१००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराज

अमन्दानन्दसन्दोहदानकर्मणि दीक्षिताः।
स्वामिनः परमानन्दाश्चन्दना नन्दयन्तु नः ॥

आविर्भाव : वि. सं. १९९४ आश्विन १८ गते, रविवार अमावस्या, सायं ५.३० बजे

तिरोभाव : विं. सं. २०५३, माघ १८ गते कृष्ण-अष्टमी, शुक्रवार प्रातः ९.४५ बजे

(२ अक्तूबर १९३७—२८ जनवरी १९९७)

हरिहर संन्यास आश्रम देवघाटधामका संरक्षक, परमार्थशिरोमणि

श्रोत्रिय ब्रह्मनिष्ठ, प्रातः स्मरणीय, परमहंस, अनन्तश्रीविभूषित स्वामी

सत्यप्रकाशानन्द सरस्वतीज्यू महाराज



ब्रह्मलीन श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराजका संन्यासदीक्षागुरु

सत्यं प्रकाशितं ब्रह्म यदन्तेवसता सता।
परमानन्दयतिना सोऽसौ गुणगुरुर्गुरुः॥

टे.फो. नं. ( २-२८१८७ / २-२८७८६ / २-२८६११

पयास नं. ००६७७-१-२४०१८७

पत्र संख्याः-प्रनिस ११८२।०५६

श्री ५ महाराजाधिराजका प्रमुख निजी सचिवालय

राजदरबार,
काठमाडौं, नेपाल ।

विषयः–

श्री १००८ स्वामी ज्ञानानन्द सरस्वती
हरिहर संन्यास आश्रम
देवघाटधाम, तनहुँ ।

श्री ५ महाराजाधिराज सरकारका हजूरमा तपाईंले मिति २०५६।१०।१४ मा चढाउनु भएको विन्तिपत्रको विषय जाहेर भयो । मौसूफबाट त्यस आश्रमद्वारा प्रकाशित गरिन लागेको स्वामी परमानन्द गुरु स्मृति ग्रन्थका लागि देहाय बमोजिमको शुभकामना बक्सेको व्यहोरा जानकारी गराएको छु ।

"बागलुङ जिल्ला जन्मथलो हुने श्री १००८ स्वामी परमानन्द सरस्वतीको स्मृतिमा प्रकाशित हुन लागेको यस ग्रन्थले आध्यात्मिक तथा सामाजिक क्षेत्रमा लाग्ने सबैलाई, जीवात्माहरुको रक्षार्थ र मानव सभ्यताको विकासका लागि पथप्रदर्शन गर्ने प्रेरणा दिनेछ भन्ने मेरो शुभकामना छ ।"

( डा. चेतबहादुर कुँवर )
श्री ५ महाराजाधिराजका प्रमुख निजी सचिव

**श्रोत्रिय ब्रह्मनिष्ठ-प्रातःस्मरणीय परमार्थशिरोमणि-यतिकुलकमलदिवाकर-साधुभूषण-अनन्तश्रीविभूषितस्वामी सत्यप्रकाशानन्द सरस्वतीज्यू महाराजको**

# शुभ-आशीर्वचन

*हमारे प्रथम शिष्य स्वामी परमानन्दजी की प्रशंसा में जितना भी लिखा जाय थोड़ा ही होगा। वे बड़े ही धर्म और समाज के सेवक थे। इतने कम समय में सुविधा तथा साधनों की पर्याप्त कमी के वावजूद भी जितने अच्छे काम इन्होंने किये उतने जल्दी और किसीसे अब होना हमें संभव नहीं दिखता।*

*हमारे यहाँ धर्मरक्षार्थ देवांश से बहुत से महापुरुष हुए। हम मानते हैं कि बोधमय नित्य गुरु भगवान् शङ्कर ही आचार्य शङ्कर के रूप में केरल के कालडी में कूद पड़े थे। पहले किसीने थोड़े ही ज़ाना कि ये शङ्कर ही हैं। उपकृत समाज लम्बे सोच-समझ के बाद ही उपकारी पुरुषका उचित सत्कार करता जाता है। हमें लगता है कि ये भी ऐसे ही महापुरुषों में कोई हैं। इसी कारण विद्वानों के प्रयास से हरिहर संन्यास आश्रम देवघाट धाम से यह 'स्वामी परमानन्द गुरु-स्मृतिग्रन्थ' प्रकाशन हो रहा है। इस ग्रन्थ के प्रति हमारी शुभकामना है।*

*इस कार्य में जिन लोगों ने सहयोग किये, उन संबको भगवान् हरिहर की कृपा प्राप्त हो; यही हमारा शुभ--आशीर्वचन है।*

**स्वामी सत्यप्रकाशानन्द सरस्वती**

नारायणी निवास

कनखल, हरिद्वार

फोन नं. : ०८२-२९०१९
फ्याक्स नं. : ०८२-२९०१८

# उप-कुलपतिको कार्यालय

# OFFICE OF THE VICE-CHANCELLOR

महेन्द्र संस्कृत विश्वविद्यालय
केन्द्रीय कार्यालय, बेलझुण्डी, दाङ्ग
पो. ब. नं. ५००३

Mehendra Sanskrit University
Central Office, Beljhundi, Dang
Post Box No. 5003

Date : 2054/9/24

पत्र संख्या :-
चलानी नम्बर

## शुभाशंसा

'सर्वे भवन्तु सुखिनः' र 'वसुधैव कुटुम्बकम्' जस्ता उच्च आदर्शलाई चरितार्थ तुल्याउने सनातन वैदिक हिन्दु धर्म र संस्कृतिको संरक्षण तथा सम्बर्धनमा आजीवन समर्पित स्व. परमानन्द सरस्वती स्वामीज्यूको स्मृतिग्रन्थ प्रकाशित हुन लागेको सुन्दा ज्यादै नै खुशी लाग्यो।

'परोपकारः पुण्याय' जस्तो पवित्रमय सत्मार्गको अनुसरण गरी प्रत्येक समाजलाई परोपकार गर्न अभिप्रेरित गर्ने श्रद्धेय स्वामीज्यूको मार्गलाई अवलम्बन गरी मठ, मन्दिर, विद्यालय, बाटो र पाटी-पौवा जस्ता प्रतिष्ठायुक्त कार्यलाई निरन्तरता प्रदान गर्दै जान सकेमा मात्र वहाँ प्रति देखाइएको आदरभावले सम्मान पाउने मैले ठानेको छु। विश्वमा धेरै मनुष्यको जन्म हुन्छ तर 'कर्मण्येवाधिकारस्ते' को अनुसरण गर्ने हजारौं व्यक्तिमा एक दुई जना मात्र जन्मिन्छन् र यस्तै महापुरुषका कर्म र योगदानले नै समाजलाई मार्गदर्शन गराउँदछ। स्व. परमानन्द स्वामीज्यूको जीवनवृत्तलाई नियाल्दा वहाँलाई कुनै राग, द्वेष, लोभ मोहले छुन नसकेको प्रतीत हुन्छ। सनातन वैदिक हिंन्दु धर्म र हिन्दु समाजको निर्माणमा वहाँले खेल्नुभएको भूमिका प्रशंसनीय रहेको छ र वहाँको दर्शनमा जाने भक्तजनहरूमध्ये साधुले साधुत्वको, गृहस्थले धार्मिक र मर्यादायुक्त समाजसुधारक एवं आदर्श पुरुषको र राजनीतिज्ञले धर्मनीतियुक्त राजनीतिको ज्ञान पाउँथ्यो भन्ने कुरा वहाँसंग प्रत्यक्ष सम्पर्क राख्ने सबैले अनुभव गरेको पाइन्छ। अतः यस्ता महापुरुषको स्मृतिग्रन्थ प्रकाशनले हाम्रो आदर्श र परम्परागत मूल्य एवं मान्यताको संरक्षणका साथै सनातन हिन्दु धर्मको प्रचार प्रसारमा सफलता मिल्नेछ भन्ने आशा लिएको छु।

यस्ता महान् पुरुषको स्मृतिग्रन्थ प्रकाशन गर्ने जस्तो महनीय कार्यको शुभारम्भ गर्नुहुने श्रीजगन्नाथ शर्मा कण्डेलज्यू र वहाँका सहयोगी मित्रहरू प्रति हार्दिक साधुवाद ज्ञापन गर्दै वैदिक धर्म र संस्कृतिको प्रचार र प्रसारमा समेत यो स्मृतिग्रन्थ सहायकसिद्ध हुनेछ भन्ने हार्दिक शुभेच्छा प्रकट गर्दछु।

(माधवराज गौतम)
उपकुलपति
महेन्द्र संस्कृत विश्वविद्यालय

# विषय-सूची



## उपक्रम खण्ड

### स्वामी परमानन्द गुरु-स्मृति विविध सान्दर्भिक विषय प्रकाश



## प्रथम खण्ड

### स्वामी परमानन्द गुरु-स्मृति-विविध जीवन-वृत्त प्रकाश



## द्वितीय खण्ड

### स्वामी परमानन्द गुरु स्मृति विविध गुण चरित्र प्रकाश

## तृतीय खण्ड

### स्वामी परमानन्द गुरु स्मृति विविध शास्त्रीय विषय प्रकाश

## परिशिष्ट

### स्वामी परमानन्द गुरु स्मृति अवशिष्ट विषय प्रकाश



**सम्पूर्ण ग्रन्थ-पृष्ठाङ्क : ३६५......**

**द्रष्टव्य-**

यस स्मृतिग्रन्थमा प्रकाशित लेख/रचनाभित्र रहेका जिज्ञासाहरूको समाधान गर्ने उत्तरदायित्व स्वयं लेखकवर्गमा नै निहित छ।

# प्रकाशकीय

आश्रम गुरुशोक-सागरभित्रै थियो, शोक-सभा षोडशी भण्डाराहरू चल्दै थिए, विद्वान् बुद्धिजीवीहरूको भेलाले स्मृति-ग्रन्थ प्रकाशनको आवश्यकता जनायो। आश्रमसंबद्ध व्यक्ति समेतको प्रकाशन समिति पनि गठित भयो। प्रथम वर्ष त शोकमै बित्यो, दोश्रो वर्ष गुरुमहाराजको संकल्प पूरा गर्ने क्रममा देवघाटमा यस आश्रमको आयोजनामा महायज्ञ सम्पादनतर्फ लाग्यौं। सबै काम एकसाथ गर्न सकेनौं। जताततै छरिएका गुरुमहाराजका कीर्ति-किरणहरू सँगालिएर के हीं हामीलाई प्रकाश दिन्छन् कि! भन्नेतर्फ लाग्दा पनि प्रकाशनमा ढिला भयो। भक्तहरूबाट हामीलाई यस प्रकाशन-कार्यनिम्ति गुरूमहाराजका ब्रह्मीभावका लगत्तै पछिबाट नै सहयोग प्राप्त हुँदै आएको हो।

तर अहिले पनि यो यस्तै आयो। यसमा संस्कार परिष्कार र विकास पनि आउन सक्नेछन्। सामग्री संकलन, आर्थिक सहयोग, जीवनी रचना, अन्य रचना, प्रेस कपी तैयारी, संशोधन, संपादन आदि द्वारा सहयोग गरी यस स्मृतिग्रन्थको निर्माण गर्ने सबै महानुभावहरूलाई धन्यवाद दिंदै यस ग्रन्थले ब्रह्मलीन गुरुमहाराजको लोकहितैषिणी कीर्ति-कौमुदीलाई दिगन्त-व्यापिनी बनाओस्; यही भगवान् हरिहरसंग प्रार्थना छ।

**अध्यक्ष :**
हरिहर संन्यास आश्रम
देवघाटधाम,
तनहूँ, नेपाल

# सम्पादकीय

स्वामीज्यूको जीवनकालमै पनि अभिनन्दनग्रन्थका रूपमा यसको प्रकाशन गर्न तर्खरिएकाहरू पनि यस सम्पादन-प्रकाशनमा छँदै छौं, तर पनि प्रकाशनमा ढिला हुनु अस्वाभाविक नै देखिएला तर अरु सबै थोकले भन्दा स्मृतिग्रन्थको आकारप्रकारको सीमाङ्कनमा भएका हाम्रा अल्झाईले धेरै समय लियो कि जस्तो हामीलाई लागेको छ। फेरि स्वामीज्यूको जीवनचित्र क्रमिक भरपर्दो र गहकिलो समेत बन्न सक्छ कि भन्ने लोभले पनि हाम्रो निकै समय.र श्रम खायो। गतिलै लोभ पनि ठीक हुँदो रहेनछ कि! हाम्रा आ-आफ्ना सीमा र समस्याप्रति पनि अलिकति सहानुभूतिपूर्ण नजर राखिदिन सक्ने विवेकी समाजका अस्तित्वमा हामी पूर्ण विश्वस्त छौं।

प्रत्येक ठाउँमा स्वयं पुगेर परिश्रम पूर्वक स्वामीज्यूका श्लाघ्य ज़ीवन क्षणका जताततै छरिएका महिनकणहरू मेसैसंग नबिराइकन टिप्ने जमर्को गरेर पनि सोचे जस्तरी त्यो काम पूरा गर्न भ्याइएन। ठीकै छ, यस पटक यो यस्तै भयो, यसरी नै सधैं सबैको न्यानो भर-विश्वास मिल्दै रहे अझपनि काम गर्दै रहौंला, छिपेर बसेका मसिना दृश्यहरू पनि प्रकाशित गर्दै रहौंला; गुरु-स्मृति योजनामा नौला नौला आयाम (विविध साहित्यिक विधा) थपिंदै जालान्। फेरि चौथो, पाचौं, दशौं पच्चीसौं, पचासौं, र सयौं, (२१५३ वि. सं. मा) स्मृति सभाहरू हुँदै जालान्; स्वामीज्यू सम्बन्धी रहल-पहल सबै किसिमका लेखन, प्रकाशन वाचन, श्रावण, गायन मञ्चन, प्रदर्शन आदि हुँदै जालान्। अहिले गुरुचरितमानस-सागरबाट यत्ति नै कण भएपनि बाहिर निस्कन सके। स्मृतिग्रन्थलाई यति नै साजसज्जा मिल्न सक्यो। काम अझै धेरै बाँकी छन्, ती क्रमश: हुँदै जाने छन् तर श्रद्धा र विश्वासरूप भवानीशङ्कर नहराऊन्; यतिमात्र हाम्रो प्रार्थना छ।

अन्तमा लेखन, सम्पादन, प्रकाशन समेतका समस्त कार्यहरू समस्त जीव-जगत्व्याप्त, सर्वान्त:प्रविष्ट, परब्रह्ममा लीन, सर्वधीसाक्षीभूत स्वामीज्यूकै शिव संकल्पबाट नै हुन सकेको ठान्दै स्मृति-ग्रन्थनायक नबिर्साउने प्रार्थना वहाँसंगै गर्दै गुरुचरितमानसका तीन शोकाश्रुबिन्दुहरू केही परिवर्तन साथ यहाँ प्रस्तुत गर्दछौं—

गुरुनिम्ति रुँदा पनि भित्र कुना, गुरुका गुणले खुश छन् दिलका।
हर जन्म नबिर्सन पाउँ गुरु, भुलिऊन् अरु चीज समस्त बरु॥

दिलभित्र पसेर सिकाइरह्यौ, तनभित्र बसेर गराइरह्यौ।
नभुली अझ काल अनन्ततक, तिमि नै यिनलाई पछ्याइरह॥

तिमि नै सबभित्र पसेर बसी, स्मृतिग्रन्थ रच्यौ निजबोध दिई।
गुरु चुम्बक लौह भयौं जनता, निज बिम्बतिरै हुन गो ममता॥

'त्वदीयं वस्तु हे स्वामिन्! तुभ्यमेव समर्पये'

*सम्पादक-मण्डल*

# -: नेपाल :-

ब्रह्मलीन गुरुमहाराजको जन्म एवं तपोभूमि तथा वहाँद्वारा संस्थापित, सञ्चालित प्रमुख मठ-मन्दिर र आश्रम-स्थल : नेपालको मान-चित्रमा।




| १. | २. | ३. | ४. | ५. | ६. | ७. |
|---|---|---|---|---|---|---|
| बागलुङ | गुल्मी | पाल्पा | म्याग्दी | नवलपरासी | चितवन | तनहुँ |
| रामकोट<br>रामपुर (पौवाडाँडा)<br>आनन्दपुर<br>लेखानी<br>शिवधुरी<br>सोलीघोप्टे | सालिमेदह<br>दिबुङ रूपाकोट<br>सोता<br>रुद्रवेणी<br>रिडी | रिडी | मुसुङ | अमरापुरी<br>गैंडाकोट | शरदपुर<br>लब्छू | देवघाट |

श्रीः

स्वस्तिश्री गिरिराजचक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत महेन्द्रमाला परम नेपालप्रतापभास्कर ओजस्विराजन्य परम गौरवमय तेजस्वी त्रिभुवनप्रजातन्त्रश्रीपद परम उज्ज्वल कीर्तिमय नेपालश्रीपद परम प्रोज्ज्वल नेपालतारा परम पवित्र ॐरामपट्ट परम ज्योतिर्मय सुविख्यात त्रिशक्तिपट्ट परम सुप्रसिद्ध प्रबल गोरखादक्षिणबाहु परमाधिपति अतिरथी परम सेनाधिपति श्री श्री श्री श्री श्रीमन्महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेव देवानाम् सदा समरविजयिनाम् ।

आगे स्वामी श्री परमानन्द सरस्वती, देवघाट के यथोचित उप्रान्त कदर लायक असल काम गरे बापत सुप्रबल गोरखादक्षिणबाहुको मानपदवी लाउनाको अधिकार र सो सम्बन्धी मानमर्यादा औ हकसमेत बक्सन योग्य ठहऱ्याई सो प्रदान गरिबक्सेका छौं । श्रीईश्वरका अनुग्रहले चिरकाल पर्यन्त सुख आनन्दपूर्वक मातृभूमि र निमकको सोझो चिताई यो इज्जतको उपभोग गर्न मिलोस् ।

श्री ५ महाराजाधिराजका हुकुमले

पृथुलाधीश

प्रधानमन्त्री तथा राजदरबार सम्बन्धी मन्त्री
एवं
अध्यक्ष, विभूषण समिति

प्रमुख सचिव
प्रमुख सचिवालय, राजदरबार

२०५१।८।१४।५

॥ श्रीमते रामानुजाय नमः ॥

श्रीमद्भारद्वाजकुलकमलदिवाकर-धर्मधारणधौरेय-धराधामधन्यायमान-धीमन्मणि-देशनरेश-महेशसुसेवा-समाश्रितसर्वजीवन-शिखरिशिखरप्रखरतपश्चरणपरायण-सन्मखसमायोजननिपुण-सामाजिकधान्या-चलप्रवर्त्तक-वेदविद्यासनातनधर्मप्रचारैकव्रत-सर्वसम्प्रदायसंवर्धनसंरक्षणपर-कृतानेक-मन्दिरस्थापनं- संचालन-विहितबहुविधयज्ञानां श्रीमतां पूज्य-ब्रह्मचारि-श्रीपरमानन्दमहाभागानां करकमलयोः समुपाह्रियमाणः

# ❁ शब्दकुसुमाञ्जलिः ❁

पूतः - सुचरितो सद्गुणभरितो गृहतो विरतो निरतो यः।
ज्यायसि ब्रह्मणि निखिलसुधर्मिणि हरिहरभक्तो जयतु सदा॥ १॥

ब्रह्मध्यान - समुद्रमध्यविलसत्क्रीडः प्रकृष्टोदयो,
ह्यस्माकं बहुपुण्यपुञ्जनिवहैः संप्राप्तसद्दर्शनः॥
मत्या निर्मलया विनाशिततमः प्रोद्दीप्तकीर्त्या सह,
चाम्नायाभ्यसनानुरागि - परमानन्दश्चिरं जीवतु॥ २॥

रीतिर्यस्य मखेषु विस्मयकरी लोकातिगा वर्त्तते,
श्रीनारायण-मन्दिरोन्नतिविधौ, व्यासक्तधीः सुव्रतः॥
पद्भ्यामेव भ्रमन् जनान् बहुविधान् संबोधयन् योऽस्ति हि,
रम्यामोदवाग्विलासमधुरो भूयात् शतायुर्मुनिः॥ ३॥

माधुर्यामृतपूर्ण - भक्तिनिपुणो सद्भाव - पूर्णान्तरो,
नन्दी वा गरुडोऽपि वा हरिहरोत्कर्षार्थमत्रागतः॥
दम्भाचार - विहीन - शुद्ध - चरितो त्यागीश्वरो धार्मिकः,
तन्द्रालस्य-वियुक्त-शक्ति-सहितो ज्ञानी जगद् भासताम्॥ ४॥

पत्युः संयमिनो हि यस्य विमला कीर्तिर्विशाला भुवि,
स्वीयं धर्ममहर्निशं सनियमं संरक्ष्य यो वर्द्धते॥
प्रच्छन्नो गरलं पिबन् जनकृते किं नीलकण्ठःशिवो-,
भुक्त्वा कष्टमहो महान्तमपि सद्धर्मप्रचारे रतः॥ ५॥

शिक्षां वेदमयीं प्रचारयति य ओङ्कारनिष्ठो मुदा,
वन्द्यैः सद्गुण-सञ्चयैः समुदितस्त्यागादिभिर्निर्मलैः॥
धुर्यस्त्वं सुरभारतीसुभरणे वेदे तदन्तेऽपि च,
रीत्या निर्मलया विवेकपरया विख्यातकीर्तिर्बुधः॥ ६॥

निन्दासंस्तुति-खेदहर्ष - रहितो मान्यो वदान्यो गुणी,
वाक्चित्तादिक्रियासु चैक्यममलं सम्पादयन् सज्जनः॥
सीताराम - पदारविन्दमधुपः संत्यक्तकामादिकः,
जीवेत्श्री-सुख-मान-शान्ति-करुणा-बोधप्रकर्षान्वितः ॥ ७॥

श्रीमत्पराङ्कुशाचार्य- स्थापिते श्रीहरेः परे। मन्दिरे छीससद्ग्रामे धान्याचल-महामखे॥
भगवत्सन्निधावेतत् पत्रपुष्पो - पहारकम्। वैष्णवं विष्णु - रूपाय तुभ्यं समभिदध्महे॥

निवेदक :

**श्री लक्ष्मीनारायण मन्दिर**

संचालन समिति तथा धान्याचल आयोजक समिति

छीस दर्बार, काँडेवास बाग्लुङ

धान्यचल महायज्ञ

पौष ११ गते, वि०सं० २०३४

श्री

## असतो मा सद्गमय, तमसो मा ज्योर्तिगमय।

परम पूजनीय आबाल ब्रह्मचारी परमानन्दज्यू
( धर्मद्वारी ब्रह्मचर्याश्रम दिब्रुङ, गुल्मी )
का चरण कमलमा समर्पित

# अभिनन्दन पत्र

आज हाम्रो सौभाग्यले धर्मरक्षक गुरुज्यूको स्वागत गर्ने सु-अवसर मिल्दा हामी समस्त विद्यार्थी परिवारहरू हर्ष विभोर भएका छौं। हाम्रो यस विकट तथा दुर्गम ठाउँमा युगद्रष्टा हजूरको दिव्य दृष्टि र उपदेशबाट हामीहरू अज्ञान र अन्धकारको दिशाबाट मुक्त भै ज्ञान र ज्योतिको पुञ्जतर्फ गैरहेका छौं र अपार आनन्द पाइरहेका छौं। साधारण मनुष्यबाट हुन नसक्ने काम ईश्वरीय अंशकै कारण हजूरबाट अनकण्टार दिब्रुङ्लाई आज स्वर्गतुल्य बनाइबक्सेको छ। हजूरका कार्यको वर्णन जति गरे पनि अपूर्ण नै हुन्छ। वैदिक हिन्दू सनातन वाङ्मयको व्याख्या र धर्मरक्षा जस्ता कार्य हाल नेपाल अधिराज्यका विविध क्षेत्रहरूमा दृष्टि पुऱ्याईरहनुभएकै छ र गुरुज्यूको असीम निगाह सदा झैं पाइ रहिरहनेछौं।

*युगावतार गुरुज्यू !*

हजूरद्वारा संस्थापित श्री लोकेश्वर महादेव मन्दिरको काखमा गरीब-दुःखी अवस्थामा तड्पिरहेको यस विद्यामन्दिरमा हामीहरू अध्ययनरत छौं। हामी सबैका घटघट र हृदयमा स्थापित हजूरका हामी छोराछोरी हौं। वर्तमान अवस्थामा आर्थिक न्यूनताको कारणले चर्को शैक्षिक शुल्कले गर्दा पीडित हामी शिक्षाको ज्योतिबाट विमुख हुन थालिसकेका थियौं। यस अवस्थामा हजूरका सत्वाणी र मार्गदर्शनबाट धर्मसेवी, समाजसेवी, शिक्षाप्रेमी र बुद्धिजीवीहरूलाई समेट्दै ( समस्या निराकरण गर्दै ) विद्यालयलाई निःशुल्क गर्ने प्रयास गरिदिनुभएकाले हामी दुःखी दरिद्रका छोराछोरी लगायत सम्पूर्ण समाजको कल्याण हुने भएकोले बिन्ति टक्र्याउँदछौं। साथै हामी पूर्ण आशामुखी पनि छौं।

पूज्य गुरुज्यू!

अब अन्त्यमा, हामीबाट अज्ञानवश भएका गल्ति कमजोरीहरूलाई औंल्याउँदै सन्मार्ग, सत्बुद्धि र सत्प्रेरणातर्फ दीक्षित तुल्याई हाम्रो भविष्य सफल तुल्याउनु हुन हार्दिक अनुरोध गर्दछौं। जो कृपा।

गुरुज्यूका अनन्यभक्त विद्यार्थीहरू
तथा
श्री शारदा नि०मा० विद्यालय परिवार
दिब्रुङ्ग, गुल्मी

२०४२/५/१५
मिति

*श्री १०८ आबाल ब्रह्मचारी परमानन्द गुरुज्यूका चरणकमलमा सादरं समर्पित*

# अभिनन्दन पत्र

**धर्मावतार प्रभु!**

जब जब संसारमा कलुषित पापमतिको विस्तार र धर्म संस्कृति तथा सदाचारको क्रमिक लोप हुँदै जान्छ, तब भगवान्‌ले कुनै न कुनै रूपमा अवतरित भई यस धरातलका भारभूत पापीहरूलाई धराशायी गराई धर्मात्माहरूको रक्षा र अभ्युदय गर्नुभएको छ। एवं रूपमा पूज्य गुरुज्यूबाट हाम्रो यस क्षेत्रमा भएका महान् एवं अविस्मरणीय कार्यहरूबाट धर्म संस्कृति, सदाचार र शिक्षाको क्षेत्रमा जुन् अनन्यतम उपलब्धि प्राप्त भएको छ, यस महान् शक्तिलाई हामी हृदंयतः साक्षात् धर्मावतार संज्ञी प्रभुको पाउमा हार्दिक अभिनन्दन चढाउँछौं।

**भक्तवत्सल प्रभु!**

आफ्ना भक्तहरूप्रति असीम माया प्रदान गर्नु हाम्रा आदिदेव र प्राचीन वैदिक संस्कृति र सभ्यताको मूलभूत विशषता रहिआएको छ। सोही अनुरूप पूज्यपाद गुरुज्यूबाट के ठूला, के साना, के धनी, के गरीब आफ्ना संपूर्ण भक्तहरूप्रति खास गरी हिन्दूधर्म एवं संस्कृतिमा आस्था राख्ने समस्त मानवजाति उपर नै समद्रष्टा बनी उनीहरूका घर आँगनमा घुमी सामाजिक मठ–मन्दिर, देवालय, शिवालय र शिक्षालय जस्ता लोक–कल्याणकारी प्रतिष्ठानहरूको स्थापनामा आफ्नो जुन् अमूल्य नेतृत्व प्रदान गर्नुभएको छ, त्यसबाट हामी समस्त भक्तजनहरू अपार हर्षले गद्‌गद् एवं कृतकृत्य भई बारम्बार अभिनन्दन गर्दछौं।

**विद्याका पक्षधर प्रभु!**

आजको संसार भौतिकताको बग्गीमा चढी अति नै तीव्र गतिमा अगाडि बढी रहेछ। मानिसले अनेकानेक नवीनतम आविष्कारहरू गरेको छ तर पनि आज मानिस सुखी छैन। किनत ? उत्तर स्पष्ट छ— एकोहोरो भौतिकता। वास्तविक सुख प्राप्तिको निमित्त **''ज्ञान विज्ञानको हात जोड्नु पर्दछ कार्यमा''** अध्यात्मदर्शन भौतिकदर्शन वीच सामञ्जस्य युंक्त शिक्षाले नै सम्भव छ। यसै कुरालाई हृदयङ्गम गरी प्रातः स्मरणीय गुरुज्यूबाट विभिन्न ठाउँहरूमा जस्तै यस आँपचौरमा माध्यमिक विद्यालयको स्थापनाको निमित्त मनसा–वचसा–कर्मणा समर्पित भई प्रदान गर्नुभएको योगदान यस पंचायतको इतिहासमा स्वर्णाक्षरमा अंकित हुनेछ। यहाँका प्रत्येक बाल–बालिकाको आत्माले पल–पल यशगान गरिरहनेछ।

**ब्रह्मनिष्ठ गुरुदेव!**

वर्षौंको प्रयासबाट पनि सम्भव हुने नसकेका कार्यहरूलाई क्षणभरमै सफल तुल्याई जनमानसमा **''धिग्बलं क्षत्रियबलं ब्रह्मतेजो बलं बलम्''**को आदर्शप्रति विश्वास जगाई ब्रह्मनिष्ठताको अनुपम प्रमाण प्रस्तुत गर्नुभएको कुरा स्पष्ट छ। गुरुज्यूका निगाह पाएका हामी सबैका आवश्यकताहरू पूर्ण भएका छन्। अझै पनि विश्वकै निमित्त तमोनाशक सत्वबमको प्रमुख आवश्यकता छ जुन् कुरा हजूर जस्तां आध्यात्मिक तपस्वीबाट हामी पाउने नै छौं।

अन्त्यमा, हाम्रा यी श्रद्धेयमा श्रद्धा होस्। यी विश्वसनीयमा विश्वास होस्। यी पूजनीयलाई पूजा गरौं परन्तु श्रद्धाले हामीलाई अल्छी नबनाओस्; विश्वासले हामीलाई अन्धो नबनाओस्। पूजाले हामीलाई पंगु नबनाओस् भन्ने प्रभुका आशीर्वचनको कामना गर्दै सतत हार्दिक अभिनन्दन चढ़ाउँदछौं।

*प्रभुका अनन्य भक्त*

**श्री दुर्गाभवन निम्न माध्यमिक विद्यालय परिवार**

आँपचौर, गुल्मी

मिति २०४२ / ६ / ९

श्री

श्रीगुरवे नमः

बाग्लुङ बिहूँका प्रतिष्ठित ब्राह्मण परिवारमा जन्मी ब्रह्मचर्यको पालना गर्दै म्याग्दी, बाग्लुङर गुल्मी जिल्लाका गिरिशिखरहरूमा रही प्रबल तपस्या-कर्ताका रूपमा विख्यात् हुनुभएका; नेपाली माटो पानीका विशुद्ध उत्पादन, म्याग्दी, बाग्लुङ्ग, गुल्मी बाँके आदि जिल्लामा दुई दर्जन भन्दा पनि बढी विभिन्न देवमूर्तिको स्थापना गराई नित्य पूजापाठ र उत्सव आदिको व्यवस्थित सञ्चालन गराउने, लगभग एक दर्जन जति आधुनिक विद्यालय-हरूलाई धान्याचल महायज्ञको माध्यमले उल्लेखनीय सहयोग गराई यशस्वी हुँदै आउनु भएका; वर्तमान नेपालमा ठोस धार्मिक कार्यक्रम चलाई हिन्दूधर्मको समन्वित रूप प्रस्तुत गर्दै रहनुभएका, धर्मको माध्यमले समाज सेवाको कार्य गरी विख्यात बन्नुभएका, निर्भीक धर्म प्रवक्ता, दूरदर्शी युगपुरुष, तत्वज्ञानी, महात्यागी आवाल ब्रह्मचारी श्री १०८ परमानन्द गुरुज्यूका चरण-कमलमा "श्री जन जागृति (प्र.) माध्यमिक विद्यालयको" सहयोग निमित्त आर्जित "विश्व शान्ति ध्यान्याचल महायज्ञको" समापन अवसरमा समर्पित

## ❀ अभिनन्दन - पद्य - पुष्पाञ्जलि ❀

भारद्वाज सुवंशका मणि गुरो! आनन्द वर्षाउने,
तिम्रो निर्मल ज्ञानबाट जनता छन् धेर हर्षाउने।
तिम्रा देश विकास निम्ति गरिने यज्ञ क्रिया यी सब,
गाउँ गाउँ र टोल-टोल बिच गै दिन्छन् ठुलो वैभव॥

तिम्रो नाम पवित्र भित्र मनले जसै गरी चिन्तन,
तिम्रै सुन्दर वाक्यको मन विषे, सम्झेर तिम्रा गुन।
विद्या-धर्म विषे अपार गुरूका श्रद्धाहरूका भल,
देख्दा आज झुक्यौं सबै चरणामा आस्था लिई निश्चल॥

तिम्रो ज्ञान-प्रकाश यो जगतमा निभ्दै ननिभ्ने बनोस्,
तिम्रा भाव फुरेर देश भरमा चौंतर्फ आभा बढोस्।
तिम्रा त्याग समुद्रका कण मिली त्यागी महात्मा बनून्,
तिम्रै बुद्धि-विवेकको रस मिली सत्कार्य चल्दै रहुन्॥

हिंसा मासिनमा पुगोस् अझ पुरै सद्धर्म यो फैलियोस्,
सारा देवहरू सुपूजित बनुन् निन्दा र टन्टा ढलोस्।
हानाहान न दाउपेच नबनुन् यी धर्म सारा सब,
पाई श्रीगुरुदेवको शुभ कृपा सौहार्द गम्कोस् अब॥

नेपाली ऋषि वंशमा हजूरले आयाम नौलो थपी,
नौलो साहस ठोस चाल दिल त्यो सारै दरीलो लिई।
सारा शास्त्र निचोड शुद्ध दिलले छानी झिकी झट्पट,
बाँड्दा सज्जनवृन्दमा समय नै फर्क्यो सुनौलो अब॥

मीठो भाव-परम्परा हजुरको नेपालमा गम्कियोस्,
भक्ति ज्ञान र कर्मको तहहरू फैलेर यो ढाकियोस्।
मेधा मान र त्याग शान्ति अझ झन् बढ्दै यहाँमा रहून,
उक्ति श्रीगुरुदेवका जन कुनै मान्दै नमान्ने नहून्॥

हिन्दू गौरव देश यो हिमचुली-शोभा भएको ठुलो,
धर्म प्राण नरेश - रक्षित सदा लम्किरहेको उँभो।
आफ्नै रीति र शीलले अघि बढोस् उत्थानको मार्गमा,
धर्मोत्थान सबै गरुन् हजूर झैं यी सन्त यो देशमा॥

प्यारो वैदिक धर्म यो हजुरले मोडेर सेवातिर,
विद्या - केन्द्र र वेद - मन्दिरहरू धेरै बने सर्सर।
जिल्ला धेर भए कृतार्थ गुरुको पाएर सेवा ठुलो।,
नेपालै अझ ढाकिनेछ गुरुको सेवा मिली झन् बडो॥

हाम्रो बालकवृन्द जो हजुरको पाई कृपापूर्ण यो,
ज्यादै खूश भएर कीर्ति गुरुको गाई बढेको उँभो।
विद्या-केन्द्र सुकीर्ति गान गुरुको गर्दै अघि यो बढोस्,
विद्या बुद्धि विवेक वृद्धि हुन गै यो देश जम्की रहोस्॥

धेरै काम समाजमा हजुरले गर्दा खुबै निर्मल,
बुद्धि त्याग विवेक फेरि करुणा ज्यादै दिई निश्चल।
चोखो भाव र शुद्ध चित्त बहुतै देखेर हामी अब,
गर्छौं नित्य हजूरको स्तुति प्रभो श्रद्धा ठुलो ली सब॥

हामी सेवक धर्मका र गुरुका यो देश औ ज्ञानका,
श्रद्धा भक्ति र प्रीति निर्मल लिई यो भाव पुष्पाञ्जलि।
राख्छौं श्रीगुरुदेवका चरणमा गल्ती क्षमा माग्दछौं।,
"हामी माथि रहोस् सदा गुरु कृपा" यो प्रार्थना गर्दछौं॥

(२०४४ वि.सं.) *रचना*—आचार्य जगन्नाथ शर्मा कण्डेल

*प्रस्तुत कर्ता :*
विश्वशान्ति धान्याचल महायज्ञ समिति
श्री जनजागृति माध्यमिक विद्यालय, काँड़ेवास
तथा यज्ञमा सम्मिलित धर्मप्रेमी समस्त भद्र भलाद्मीहरू

# श्री १०८ आबाल ब्रह्मचारी परमानन्दज्यूलाई चढाएको

## * अभिनन्दन पत्र *

***आबाल ब्रह्मचारी गुरुज्यू!***

जीवनहरूका ८४ (लाख) मोडहरू पारगर्दै प्राप्त गरेको अमूल्य मनुष्य चोलामा अवतरित भएपछि यस पुण्य भूमिमा केहि गरेर छोड्नु पर्ने प्रेरणा प्रदान गर्नु हुने परम पूज्य आबाल ब्रह्मचारी परमानन्दज्यूले आफ्ना परमआनन्दमय जीवनलाई यसरी परमार्थी कार्यमा समर्पित गर्दै सम्पूर्ण सुख सैल र आफ्नो निजी स्वास्थ्य सम्मको परवाह नगरी मनुष्य जीवनको सार्थकता र ब्रह्मज्ञानको आवश्यकताप्रतिको समर्पणले निश्चय पनि इहलोक र परलोक यात्रा साफल्य पार्न दिग्दर्शन भएको छ।

***धर्मप्रेमी गुरुज्यू!***

आध्यात्मिक तथा भौतिकवादमा अल्मलिएका हामी यस क्षेत्रका तमाम नागरिकहरू यस युगका साक्षात् ईश्वर ब्रह्मचारी गुरुज्यूलाई हाम्रो काखमा पाउँदा हर्षाश्रुले ओत-प्रोत भएका छौं भने दिग्भ्रमित असंख्य नर-नारीहरूमा एउटा नूतन धार्मिक हौसला र सुषुप्त जिज्ञासा प्रस्फुरित भएको महसूस गरेका छौं।

आफ्ना वर्षौंसम्मका व्यस्त धर्मक्रमबाट ज्यादै बेफुर्सदी भएको अवस्था बुझ्दा-बुझ्दै पनि हामी अज्ञानीहरू बूझ पचाएर यसमुसीकोट रबडागाउँ गा.पं. हरूमा गुरुज्यूका पदन्याप पार्ने लक्ष्यले उहाँका संमुख रोदन क्रन्दन गर्‍यौं। यस क्षेत्रका भुक्ति-मुक्ति खोज्ने नर नारीहरू र यस श्रीपृथ्वी मा.वि. को दयनीय अवस्था हृदयंगम गरी स्वास्थ्यले साथ नदिंदा नदिंदै पनि यत्रो समय कृपा गरेर ठूलो गुन लगाउनु भएको छ। त्यसको लागि हामी लाखौं अभिनन्दन गरेर पनि भारा चुक्ता गर्न सक्दैनौं। यसरी हामी अज्ञानीहरू प्रति दर्शाएको गुरुज्यूको स्नेहमय प्रवचनले हामीलाई रोमाञ्चित तुल्याएको छ। हामीप्रति यत्रो त्याग गर्ने प्रभुलाई यो सानो अभिनन्दन चढाउन पाउँदा हामी आज नतमस्तक भएका छौं। हामी माथि सदा सर्वदा यस्तै माया र आशीर्वाद आविर्भाव भई रहोस्। गुरुज्यू! जो आज्ञा।

विश्वशान्ति-धान्याचल-महायज्ञ आयोजक समितिका तर्फबाट

*उपाध्यक्ष*
**चिना बहादुर सिंह**
प्र. पं.
बडागाउँ गा. पं.

*अध्यक्ष*
**रण बहादुर सिंह**
प्र. पं.
मुसीकोट गा. पं.

मिति २०४६/९/३

ॐ

श्रीपरमात्मने नमः

मिति २०४९/१०/२१

# ✳ सादर-अभिनन्दन-पत्रम् ✳

आज मिति २०४९ साल माघ २१ गतेका दिन जैमिनि सँस्कृत पाठशाला शिवपुरी दमेकको प्राङ्गणमा परिव्राजकाचार्य, परमहंस, पूज्यपाद, श्री१०८ स्वामी परमानन्द सरस्वतीज्यू महाराजको हामी सादर अभिनन्दन गर्दछौं।

**हे ब्रह्मनिष्ठ श्रोत्रिय गलेश्वर पीठाधीश!**

तपाईले यस मानिसहरूको पावन पुण्यक्षेत्र एवं तपोभूमिमा आध्यात्मिक तथा ब्रह्मविद्याको क्षेत्रमा दिनुभएको योगदान अत्यन्त प्रशंसनीय छ।

**हे हिन्दूराष्ट्र नेपालका महान् तपस्वी सन्तजी महाराज!**

तपाइँले आफ्नो तपोबलद्वारा विभिन्न ठाउँमा संस्कृत पाठशालाहरूको स्थापना र हाईस्कूल क्याम्पसहरूको समेत उत्थान संरक्षण संवर्धन जस्ता कार्यमा दिनुभएको योगदान एक ऐतिहासिक दस्तावेज नै हो।

**हे शिक्षाको उज्यालो ज्योतिले सबैको आत्मा उजिल्याउने शिक्षाप्रेमी आध्यात्मिक चिन्तक!**

तपाइँबाट समाजको सेवा, विभिन्न मठ मन्दिर र आश्रमहरूको निर्माण गरी गराई अनेकन् ठाउहँरूमा निःस्वार्थ रूपले रचनात्मक कार्य गरी समाजकै सर्वाङ्गीण क्षेत्रमा सहयोग पुऱ्याएकोमा हामी हिन्दूधर्मावलम्बीहरू हार्दिक कृतज्ञता ज्ञापन गर्दछौं।

**नेपाल सन्तसमाजको केन्द्रीय अध्यक्ष एवं अन्य संघ-संस्थामा उच्च पदासीन समस्त नेपाल र नेपालीका आध्यात्मिक विभूति!**

तपाइँबाट भएको हिन्दू धर्मको निरन्तर संरक्षण एवं संवर्धनले राष्ट्रिय स्तरमै ठूलो योगदान पुग्ने कुरा निर्विवाद छ।

**ब्रह्मचिन्तन, अध्यात्मविद्या, सरलस्वभाव र उच्चविचारका महान् धनी! ब्रह्मनिष्ठ महात्मा!**

तपाइँलाई हामी वाक्य-पुष्पोपहारले सादर अभिनन्दन गर्दछौं।

**विश्वशान्ति धान्याचल महायज्ञ**
आयोजक समिति
जैमिनि संस्कृत पाठशाला
शिवपुरी दमेक बाग्लुङ्ग
धवलागिरि अञ्चल

ॐ नमः शिवाय

# अभिनन्दन पत्र

*प्रातःस्मरणीय धर्मावतार पूज्यपाद श्री १००८ परमानन्द सरस्वतीजी महाराज!*

श्रीचरणका शुभ अनुग्रहले हामीहरूले मर्यादा पुरुषोत्तम श्रीरामचन्द्र प्रभुको प्रतिष्ठामहोत्सवको सम्पूर्ति अवलोकन गर्ने सु-अवसर प्राप्त गर्न सक्यौं। अज्ञ, मन्द मनुष्यले यस्तै महामहिम, महामानवको महिमामण्डित महान् प्रयासद्वारा नै लौकिक-पारलौकिक सफलता प्राप्तगर्न सक्छ भन्ने दृढ़ आस्था र अवधारणा नै हाम्रो अवलम्बन बनेको छ।

*सनातन धर्मरक्षक परमहंस-परिव्राजकाचार्य महाराज!*

श्रीमान्का आजसम्म हुँदै आएका त्याग र तपस्याका उदारता र विशाल हृदयताका धर्म रक्षा र लोक-कल्याणका प्रेरणा र उत्साहलाई बढाउने प्रसंगहरू नै यस धर्मह्रासका राष्ट्रिय संकटका घड़ीमा यस वैदिक सनातन धर्मका सनातनताका साधन बनेका छन्।

*युगद्रष्टा·राष्ट्रिय सन्त!*

हिन्दू धर्मधाराहरूका वैविध्यका कारणले अधीर भएको अवसरमा सबै धाराहरूको वैषम्य पन्छाई एक जूट भई विश्वगुरु हुन हिन्दूमात्रमा आह्वान गर्ने युगबोध-सम्पन्न मनीषीको रूपमा आज श्रीमान्लाई न केवल नेपालले अपितु समस्त हिन्दुजगत्ले चिन्न लागेको अनुभव गर्दै श्रीमान्को पदार्पणले हामी यस भेगको नै महान् कल्याण भएको तथ्य स्पष्ट पार्दछौं।

*देवघाट गलेश्वर पीठाधीश्वर सन्तवर!*

नेपालको आदिप्रयाग हिमाली देवनदीहरूको पवित्र संगमस्थल पवित्रतम देवघाट तीर्थमा परम तपस्वी गलेश्वर बाबाको मठको आधिपत्य लिई नेपालको हृदयस्थल विकासको माध्यमले पूरै देशमा धर्मचक्रको प्रवर्तन गर्दै रहनुभएका महान् सन्तका विश्वोद्धारक चरणकमलमा सभक्ति स्वागताभिनन्दन पत्र समर्पण गर्दै हामी गुरुवरका चिरऋणी रहिरहेको मन्तव्य समेत व्यक्त गर्दछौं।

भवदीय :

श्रीराममन्दिर-प्रतिष्ठा-समारोह समिति
अमरापुरी ६, न० प०
स्थानीय समस्त धार्मिक जनता

श्रीरामनवमीमहोत्सव
२०४९ चैत्र २०

**पूज्यपाद प्रातःस्मरणीय धर्मावतार राष्ट्रिय सन्त वैदिक सनातन हिन्दूधर्म संरक्षक युगद्रष्टा गलेश्वर पीठाधीश्वर श्रोत्रिय ब्रह्मनिष्ठ श्रीमद् परिव्राजकाचार्य यतीश्वर श्री १००८ स्वामी परमानन्द सरस्वती महाराजज्यू का चरणकमलमा सभक्ति समर्पित**

# ✷ अभिनन्दन पत्र ✷

केही काल अघि उराठ धरती, नेपाल शून्यै थियो!
हिन्दूधर्म कता कता गुटुमुटू, अन्योलमा नै थियो!!
गाई वेद र ब्राह्मणादिहरूमा, आस्था घटेको थियो!
सारा अन्ध मिटाइ जन्मनु भयो, नेपाल नै धन्य भो!!

सानै देखि अपार भक्ति रसमा, चुर्लुम्म डुब्नू भयो!
छोटो बालक कालमा गुरु संगै, विद्या कमाऊनु भो!!
भोग्दै घोर कठोर जंगलभरी, आँधी र बेरी सबै!
कैयौं रात बिते हिमालहरुमा, गीता थियो साथमै॥

आफ्नो धर्म बचाउने प्रण गरी, नेपालमा घुम्नु भो!
हिन्दू धर्म प्रचारमै दिन बिते, यो देश अर्कै भयो॥
हिन्दू धर्म नचाहने कति यहाँ, ऐले भए आस्तिक!
कैयौं सभ्य बने असभ्य जनता, छैनन् कतै नास्तिक॥

सुन्छौं आज जता सुकै नगरमा, नेपालका दीपक!
योगीका पनि योगी सभ्य प्रतिभा! यो राष्ट्रका चिन्तक!!
गर्छन् आदर झुक्छ शीर पहिल्यै, देखेर यो तस्विर!
पौवा ठाँटि बने अनेक अहिले, कैयौं बने मन्दिर!!

शिक्षा वर्णन गर्न आज प्रतिभा, यो गाउँमा पाल्नु भो!
मीठा भक्ति र भावका प्रिय कथा, सारा पिलाऊनु भो!!
बिर्सन्नन् अब गाउँका मनुजले, योगी तपस्वी गुरु!
बिर्सन्नौं उपदेशका प्रिय कथा, हे सन्त प्यारा प्रभु!!

टक्र्याऔं अब के गरीब जनता, के पो यहाँ हुन्छ र?
खाली भाव र भक्ति छन् मनभरी, अर्को यहाँ के छ र?
खाली पुष्प चढाउछौं हृदयले, टक्र्याउँछौं भावना!
अर्पन्छौं अमरापुरी जन सबै, श्रद्धा अभीनन्दन!!

**(पौष कृष्ण एकादशी २०५०)**

**विश्वशान्ति धान्यचल आयोजक समिति**
अमरापुरी-६,
नवलपरासी

*श्रीमत्-परमहंस परिव्राजाकाचार्य श्रोत्रिय ब्रह्मनिष्ठ देवघाट-गलेश्वरपीठाधिपति-अनेक मठमन्दिर संस्कृत विद्यालयादि संस्थापन-संचालनादिकार्य-सम्पादन-प्रवीण, दिग्दिगन्त-व्याप्त कीर्ति, लोकोपकारक राष्ट्रिय सन्त, नेपाल-मणि, वैदिक-सनातन-हिन्दु-धर्मोद्धारक श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यूका चरणकलमा श्री हरिहरमन्दिर (मिति २०५०/९/२२ वाट २८-सम्म सम्पन्न) विकासार्थ आयोजित साङ्ग-विश्वशान्ति-धान्याचल-महायज्ञको पूर्णाहुतिका अवसरमा स्थानीय धार्मिक समाजद्वारा श्रद्धा-भक्तिपूर्वक समर्पित*

# अभिनन्दन-पत्र

हे आचार्य गुरो! अथाह गहिरा सौशील्य वात्सल्यको
खानी को छ यहाँ विना हजुर हे! यो हिन्दु संसारमा।
हाम्रा धर्म र यज्ञकर्म-महिमा विद्या कला संस्कृति
बाँच्दै छन् गुरुकै कृपा रहन गै नेपालका माझमा॥ १॥

हामी शैव र शाक्त वैष्णव तथा सौरादि जो छौं यहाँ।
सारा दिव्य विशाल वैदिक ठुला यो वृक्षका देशमा॥
बस्छौं पाइ कृपा सधैं हजुरको सौहार्दले बस्दछौं
छायामा गुरुका विशाल-दिलका निर्भीक सानन्द छौं॥ २॥

स्वामिन् ! लेक पहाड़का शिखरमा प्रज्ञान पाईकन
आई सम्थरमा फिंजाइ सुकिलो त्यो ज्ञान गंगा यहाँ।
पारी उज्वल यो तराइतट नै धोई-पखाली गरी
मैला यी मनका उजारी दिनुभो त्यो ज्ञान आभा छरी॥ ३॥

पाई संगत नाथको अलि अलि यो धर्म बुझ्ने भयौं।
के हो ईश्वरतत्व ? शास्त्र कुन हो भन्ने पनि क्यै बुझ्यौं।
तीनै ताप छुटे पवित्र मन भै अज्ञान टाढा गयो
'मैरै हुन् सब' भन्दिए हजुर ले उद्धार हाम्रो भयो॥ ४॥

नेता धर्म र यज्ञका हजुर नै संसारका दीपक
हाम्रो राष्ट्रिय सभ्यता गहकिलो पार्नै लिएका व्रत।
त्यागी लोभ र काम हीन गुरु हे! बाँची सधैं चित्तमा
हाम्रा झुल्कनुहोस् यतीश! दिलका प्यारा सधैं लोकमा॥ ५॥

चारै आश्रमा पुगेर जनका कल्याण गर्ने गुरु।
बोली अमृतघोल दिव्य परमै आनन्द छर्ने गुरु।
हिंसा तास चुरोट खोट सब यी पन्छाउने सद्गुरु।
हाम्रा भाग्य हजूर नै हुनुभयो सद्ज्ञान दाता गुरु।

हाम्रा यी मठ मन्दिरादिक तथा कालेज विद्यालय।
बाटो सेतु र पाटि घाट बढिया पार्ने हजुर्को जय।
गाऔं देश-विदेश मुक्तमनले, सत्कीर्तिका भाजन।
लाखौं वर्ष रही सुकीर्ति जगमा गर्नेछ उद्धारण।

वि० सं०२०५० साल
पौष शुक्ल प्रतिपदा सौर पौष २८ गते
श्रीहरिहर मन्दिर, शीतलनगर
गैंडाकोट-७ नवलपरासी।

*गुरुचरणका चरणरेणुको आशा राख्ने*
महायज्ञ आयोजकहरू र धार्मिक जनसमूह

*श्री १००८ परमहंस स्वामी परमानन्द सरस्वती महाराजको संमानमा समर्पित*

# अभिनन्दन-पत्र

***पूज्य गुरुदेव,***

सृष्टिको आदिकालदेखि नै चलिआएको विद्या-अविद्या, ज्ञान-अज्ञान, धर्म-अधर्म बीचको द्वन्द्व यस संसारमा शाश्वत सत्यको रूपमा आजसंम पनि दृश्य-अदृश्य रूपमा विद्यमान छ। जबजब सांसारिक प्रपंचमा लागेका मानिसहरू काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यको चक्रव्यूहमा फँसेर मुक्तिको मार्ग फेला पार्न नसकी अलपत्र परेका हुन्छन्, तबतब उनीहरूलाई जीवनको वास्तविक स्वरूपको बोध गराई सत्यको नजीक पुऱ्याइदिने ऋषि मनीषिहरूको यस धर्तीमा अवतरण हुन्छ। प्रातः स्मरणीय एवं पूज्यचरण गुरुज्यूको यस धर्तीमा भएको सुखद एवं अविस्मरणीय उपस्थितिलाई यस क्षेत्रका हामी समस्त भक्त एवं शिष्यहरूले अन्तःकरणदेखि नै उपर्युक्त अवतरणको रूपमा आत्मसात् गरेको कुरा सनम्र निवेदन गर्दछौं।

***भक्तवत्सल गुरुज्यू!***

खर्सू र चुत्राले भरिएको दिब्रुङ्को अरण्यलाई पवित्र तपोभूमिमा परिणत गर्दै त्यस पुण्य शिखरबाट गुरुज्यूले फुक्नुभएको शंखघोषले गाउँ-गाउँ दिक्-दिगन्तका नरनारीहरूको अन्तः करणमा धर्म र ईश्वर-भक्तिको बीजारोपण गरेको मात्र होइन अपितु जहाँ-जहाँ गुरुका चरणहरूको पवित्र स्पर्श भयो त्यहाँ-त्यहाँ असंख्य शिक्षार्थीहरूले पाठशाला, धर्मात्माहरूले ईश्वर आराधना स्थल मन्दिर, दीनदुःखीहरूले धर्मशाला, साधुसन्तहरूले आश्रम र धर्मार्थी गृहस्थीहरूले यज्ञयागको प्रेरणा प्राप्त गरेका छन्। यसरी आफ्नो जीवनको संपूर्ण समय, श्रम र आर्जनलाई मानवमात्रको सेवामा समर्पण गर्ने महान् आत्मालाई हामी आँपचौरबासीहरूले पनि अनेकौं पटक स्वागत गर्ने अवसर पाउनु गाउकै सौभाग्य ठानेका छौं।

***करुणामूर्ति गुरुदेव!***

ईश्वरको अनुकम्पा र गुरुज्यूको आशीर्वादले आज पुनः एक पटक यस गाउँमा गुरुदृष्टि र भगवत् दृष्टिको संयोग हुन गएको छ। हामीले कोटेश्वर महादेव प्राप्त गरेका छौं। गुरुजीका करकमलबाट यस मन्दिरको समुद्घाटन भएको छ। धर्म र मानव कल्याणको निम्ति अहर्निश चिन्तनशीलताको कारणबाट राष्ट्रिय ख्यातिप्राप्त एवं धार्मिक कृत्यहरूका लागि अत्यन्त व्यस्त रहनुहुने महापुरुषलाई आफ्नै आँखा अगाडि देख्न, मस्तकले चरणस्पर्श गर्न, कानले दिव्य उपदेशहरू सुन्न पाउँदा हामी अत्यन्त हर्षविभोर छौं। हर्षको यस मंगलमय घड़ीमा हाम्रो गुरुभक्ति र हामी उपर गुरुकृपा निरन्तर बनिरहोस् भन्ने आशीर्वादको कामना सहित गुरुज्यूका पदारविन्दमा नतमस्तक हुँदै हार्दिक स्वागत अभिनन्दन चढाउँदछौं।

**व्यवस्थापन समिति**
त्रिवेणी कोटेश्वर महादेव मन्दिर
आँपचौर-५
गुल्मी लुम्बिनी अञ्चल

मिति-२०५२ आश्विन १३
शुक्ल पञ्चमी

ॐ

श्रीगणेशाय नमः

# ❋ अभिनन्दन–पत्र ❋

देवताहरूको सुरम्य वासस्थान, ऋषिमुनिको तपोवन, कर्मयोगिको कर्मभूमि, शिव पार्वतीको क्रीडास्थल, कृष्णा गण्डकीको उद्गमस्थल, कुवेरको भण्डार भएको हिमालयको पवित्र देश नेपालको पश्चिमी भूभागमा धर्मरक्षार्थ अवतरित गलेश्वर पीठाधीश श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यूमा हामी केरवानी, देवदहवासीको तर्फबाट अनन्त भक्तिका साथ सादर अभिनन्दन!

### *हे सन्त समाजका अध्यक्ष!*

वर्तमान विश्वको विषम परिस्थितिमा शान्तिको अभावमा छट्पटाइरहेको आजको मानवलाई विश्वशान्ति छर्न अवतरित हे बुद्धका प्रतिमूर्ति! लोक कल्याणार्थ समग्र सांसारिक प्रपञ्चबाट मुक्त रही विभिन्न मठ मन्दिर र पीठहरूको निर्माण गरी धर्म पालन गर्न समर्पित संस्कृत र संस्कृतिका परमसंरक्षक गुरु आबाल ब्रह्मचारी स्वामीप्रति हाम्रो अन्तर्हृदयदेखि नै सभक्ति प्रणाम!

### *हे हिन्दू धर्मका संरक्षक!*

जसरी कलाकारको औंलाले वीणाको तार छुँदा मधुर ध्वनि गुञ्जन्छ, त्यसरी नै तपाइँको भगीरथ प्रयत्न एवं अविरल त्याग–तपस्याले कहाली लाग्दो दिब्रुङ र बिहूँका लेकहरूले पनि कैलाशको आभास दिन्छन् जहाँ पुगेपछि प्रत्येक प्राणीले परम आनन्दको अनुभूति गर्छन्! यही कैलाशको तलबग्ने रुद्रावतीको सेरोफेरो जसले तपाइँको स्पर्श पाएर आफूलाई परमानन्दनगरमा रुपान्तरित गर्न सकेको छ। रिड़ी होस् वा रुद्रवेणी अथवा गलेश्वरका प्रत्येक जीवात्माले प्रभुको गुणगान गाउँछन्। आफ्नो ज्ञान वचन र कर्मले सबैलाई आनन्द एवं मोक्ष पार्न समर्थ सद्गुरु सन्तशिरोमणिप्रति हाम्रो सादर अभिवादन!

### *हे नेपाल आमाका सपूत! वैदिक धर्मका संरक्षक!*

लोकहितार्थ गरेको महाभिनिष्क्रमणको यात्रा गर्ने क्रममा बुद्धको प्रतिरूप लिएर महायज्ञको आमन्त्रण स्वीकार्दै यस ऐतिहासिक पुण्यभूमि भगवान् बुद्धको मावलीस्थल देवदहमा पदार्पण गर्नुभई उपदेशामृत पान गराई कृतकृत्य पार्नुभएकोमा हामि हर्षविभोर भएका छौं। अतः आजको यस महायज्ञको पुनीत शुभअवसरमा श्री महामाया भवानी उच्च० मा० वि० परिवार एवं महायज्ञ सम्पादन समिति लगायत स्थानीय जनसमुदायको तर्फबाट पूज्य स्वामीज्यूका चरणारविन्दमा अनन्य भक्ति सहित यो अभिनन्दन समर्पण गर्दछौं!

दिनांक : २०५२ साल चैत्राष्टमी

यतो धर्मः ततो जय!

ब्रह्मलीन स्वामीज्यूद्वारा पवित्रित केही तपस्थली; संस्थापित तथा सञ्चालित मन्दिर, आश्रम, गुरुकुल आदिका र स्वयं स्वामीज्यूका उपलब्ध केही मुख्य तत्-तत् स्थलसंग संबन्धित छायाचित्रहरु–



स्वामीज्यूको जन्मस्थलमें निर्मित श्रीराम मन्दिर एवं रामाश्रम, पौवाडाँडा, बिहूँ, बाग्लुङ्।



मानवपं तपस्या गर्दा स्वामीज्यूद्वारा पिउन पानीका लागि निर्मित पत्थर माथिको जल-कुण्ड, (मुसुङ, म्याग्दी)।



बाग्लुङ जिल्ला विहूँ, (व्यांमकुट) अन्तर्गतको उच्चतम शिवधुरी लेक, जसमा स्वामीज्यूले थुप्रै दिन गुफामा बसी आध्यात्मिक साधना गर्नुभएको थियो।



त्रिपुरेश्वर शिवालय, बिहूँ, रामकोटमा स्वामीज्यू ब्रह्मचर्य-अवस्थामा।



त्रिपुरेश्वर शिवालय, बिहूँ, रामकोट, बाग्लुङ।



२०३३ सालमा स्थापना भएको, परमानन्द वेद-वेदाङ्ग-संस्कृत-गुरुकुल बिहूँ, रामकोट, बाग्लुङ।



धूपीका रूखमुनि ध्यान-अवस्थामा स्वामीज्यू महाराज। (बिहूँ, रामकोट, बाग्लुङ)



गुरुपूजनका लागि गुरुपूर्णिमामा उपस्थित भक्तसमूह।
(बिहूँ, रामकोट, बाग्लुङ)



२०२४ चैत्रमा तपस्या गरेको दिब्रुङ गुल्मीको उच्चतम निर्जन विकट शिखरको गुफा।



स्वामीज्यूद्वारा संस्थापित आश्रमहरू मध्ये पहिलो :— लोकेश्वर शिवाश्रम, धर्मद्वारी दिब्रुङ, गुल्मी।



स्वामीज्यूका आध्यात्मिक नव-जीवन प्रदाता गुरुवर त्याग-तपोमूर्ति स्वामी श्रीछविप्रकाशानन्द सरस्वतीज्यूको अन्तिम तपःस्थली तथा वहाँको पार्थिव शरीर राखिएको ठाउँ (समाधि स्थल) मा निर्मित श्रीराम मन्दिर, सालिमे दह, गुल्मी।



नर्मदेश्वर शिवालय तथा श्रीपरमानन्द वेद-वेदाङ्ग-संस्कृत-गुरुकुल, रूपाकोट दमुका, गुल्मी।



पंचवटी आश्रम र श्रीराम मन्दिर। रूपाकोट सोता, गुल्मी।



श्रीराम मन्दिर परिसरमा निर्मित श्रीरामाश्रम रुद्रवर्णाधाम, गुल्मी।



२०५२ मा सम्पन्न विश्व-शान्ति धान्याचल महायज्ञमा स्वामीज्यूद्वारा गरिएको आध्यात्मिक प्रवचनद्वारा प्रभावित जनसमुदायको माग अनुसार 'चोरकाटे'-बाट 'परमानन्दनगर' बन्न पुगेको आदर्श ठाउँमा निर्मित श्रीपरमानन्द आश्रम, परमानन्दनगर, गुल्मी।



श्रीपरमानन्द वेदवेदाङ्ग-संस्कृत-गुरुकुल। त्रिपुरेश्वर शिवालय, भ. न. पा.-९ शरदपुर, चितवन।



श्रीपशुपति शिवालय (बोलबम काँवरिया) भ. न. पा. लंकू, चितवन।



सर्वप्रथम देवघाटधाममा स्वामीज्यूद्वारा निर्मित रातो पाँवा। देवघाटधाम, तनहूँ।



गलेश्वर आश्रम देवघाटको पीठाधीश भएपछि स्वामीज्यूले निर्माण गर्नु भएका भवन मध्ये सन्त निवास एवं गलेश्वर आश्रमको एक झलक।



२०४६ कार्तिक २३गते सुप्रसिद्ध देवघाटस्थ गलेश्वर-आश्रम पीठाधीश दण्डी स्वामी श्री आशुतोषानन्द सरस्वतीज्यूद्वारा गलेश्वर पीठाधीश पदमा राखी सविधि च्यादर ओढाइएको अवस्था।



२०४८ जेष्ठ २८ मा परमहंस संन्यास ग्रहणको क्रममा दण्डधारण गरी पितृदेवार्चन गरिरहेको अवस्था।



२०४८ जेष्ठ २९ मा परमहंस संन्यास ग्रहणपछि संन्यास प्रदाता गुरुवरका साथमा स्वामीज्यू-देवघाटधाममा।



२०५१ को शारदीय नवरात्रमा उद्घाटित विस्तृत सत्सङ्गकक्ष एवम् आकर्षक प्रतिष्ठित अनेक प्रसिद्ध देवमूर्ति–सहितको दुई तले (विविध विशेषताले नेपाल प्रसिद्ध) श्रीहरिहर मन्दिर, हरिहर संन्यास आश्रम, देवघाटधाम, तनहूँ।



संन्यास–दीक्षा ग्रहणपछि स्वामीज्यू महाराज बिहूँ रामकोट, बालुङमा।



हरिहर संन्यास आश्रम अन्तर्गतको अतिथि निवास, देवघाटधाम, तनहूँ।



नेपाल सन्त समाजका केन्द्रीय अध्यक्ष स्वामीज्यू देवघाटधाममा आयोजित सन्त सम्मेलनको अध्यक्षता गर्नुहुँदै।



उपचारका लागि मद्रास प्रस्थान गर्ने क्रममा उपदेश गर्दै स्वामीज्यू महाराज देवघाटधाम, नेपालमा।



उपचारको क्रममा स्वामीज्यू महाराज रामचन्द्रन् हस्पिटल, मद्रासमा।



२०५३ माघ १८ गते प्रातः ९.४५ बजे काठमाडौं पशुपति परिसरमा ब्रह्मलीन भएपछि सायं ४ बजे देवघाट हरिहर संन्यास आश्रममा अनन्त श्रद्धाञ्जलि चढ़ाइएको स्वामीज्यूको पार्थिव शरीर।



०५३ माघ १९ गते १० बजे अन्तिम संस्कारको तैयारीमा देवघाट हरिहर संन्यास आश्रममा अन्तिम दर्शनका लागि राखिएको लोकोपकारक स्वामीज्यूको पार्थिव शरीर।

# श्री ५ महाराजाधिराज तथा श्री ५ बडामहारानी

बाट

स्वामी परमानन्द सरस्वती को दुःखद निधनमा

हरिहर सन्यास आश्रम, देवघाटका साधु सन्तहरु तथा शोक संतप्त ~~परिवारलाई~~

समाजलाई

## हार्दिक समवेदना !

राजदरबार
काठमाडौं
नेपाल

मिति:- २०५२।१०।२२

प्रधानमन्त्री

काठमाडौं, नेपाल

२०५३।१०।२४

## समवेदना

नेपाल सन्त समाजका केन्द्रिय अध्यक्ष तथा हरिहर सन्यास-आश्रम देवघाट धामका अध्यक्ष श्री १००८ स्वामी परमानन्द सरस्वतीको निधनवाट मलाई गहिरो दुःख लागेको छ ।

उहांको निधनवाट देशले धार्मिक, सामाजिक एवं शैक्षिक क्षेत्रमा महत्वपूर्ण योगदान गर्ने एक महान व्यक्तित्व गुमाएको छ । यस दुखद घडीमा उहांको आत्माको चीर शान्तिको कामना गर्दै शोक सन्तप्न उहाका अनुयायी सवैमा धैर्य धारण गर्ने शक्ति मिलोस भन्ने प्रार्थना गर्दछु ।

(शेरवहादुर देउवा)

ॐ नमो धर्माय महते

रजि. ६२/०५०

# वैदिक धर्म परिषद्, नेपाल

आबद्धता–३२४६

स्था. २०४९

केन्द्रीय कार्यालय, मणिग्राम, रूपन्देही

मिति. ०५३।१०।२५

## ※ शोक-समवेदना ※

श्री १००८ स्वामी परमानन्द सरस्वतीजी कै प्रेरणाबाट जन्मिएको वैदिक धर्म परिषद्, नेपालका वहाँ प्रथम संरक्षक हुनुहुन्थ्यो। वैदिक धर्मको पुनरुत्थानमा वहाँको योगदान अविस्मरणीय छ। आफ्ना प्रेरणास्रोतस्वरूप महापुरुषको असामयिक ब्रह्मीभावले सम्पूर्ण शाखा–प्रशाखा सहित वैदिक धर्म परिषद् आज टुहुरो भएको छ।

स्वामीज्यूको आध्यात्मिक व्यक्तित्व र कृतित्वको प्रचार गर्दै वहाँद्वारा शुरु गरिएको वैदिक धर्म प्रचाररूप यस पवित्रतम कार्यलाई निरन्तरता दिने शिव–संकल्प लिई हामी सबै परिषद् सदस्यहरू यस दुःखद अवसरलाई सहन गर्न सकौं; परमेश्वरसंग यही प्रार्थना छ।

अध्यक्ष

जगन्नाथ शर्मा कण्डेल

क्रमाङ्क : ९५४

ॐ गौः श्रीः शिवो वेदः

आत्मा खलु विश्वमूलम्! कृण्वन्तो विश्वमार्यम्! वेदोऽखिलो धर्ममूलम्!

श्रीवागीश्वरी विजयते!

# विश्व-बृहद्-बौद्धिक-सन्त-सम्मेलन-(प्रथम)

योगी नरहरिनाथ आश्रम, अखण्ड कोटिहोमस्थली श्रीवागीश्वरी पञ्चायनमन्दिर, देवद्वार, देवघाट धाम चित्रवन, नारायणी अञ्चल, गोरक्षक हिन्दुराष्ट्र (नेपाल)

दूरभाष : २२५९७

मिति : २०५३।११।३१

नेपाल सन्त समाजका अध्यक्ष एवम् श्री हरिहर संन्यास आश्रमका पीठाधीश श्री स्वामी परमानन्द सरस्वती ब्रह्मलीन हुनुभएको हुँदा मेरा तथा समस्त जनताका तर्फबाट वहाँका आत्माको शास्वत शान्तिको कामना गर्दै यो समवेदना प्रकट गरिएको छ।

सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामयाः।
सर्वे भद्राणि पश्यन्तु मा कश्चिद् दुःखभाक् भवेत्॥

योगी नरहरिनाथः

# गणेशमान सिंह

चाक्सीबारी, क्षेत्रपाटी, काठमाडौं

५२३६१५
फो २२३३६६
२१३१३१


मिति : २०५३-१०-२४

## समवेदना

नेपाल सन्त समाजका अध्यक्ष स्वामी परमानन्द सरस्वतीको दुःखद निधन भएकोमा मलाई ज्यादै दुःख लागेको छ। देशको शैक्षिक, सामाजिक तथा धार्मिक क्षेत्रमा उल्लेखनीय योगदान गर्नुभएका स्वामी असमयमै ब्रह्मलीन हुनुभएबाट मुलुकले एकजना सच्चा कर्मयोगीलाई गुमाएको छ। दुःखको यस घडीमा म उहाँका शोकसन्तप्त शिष्यगण तथा अनुयायीहरू लगायत नेपाल सन्त समाजप्रति हार्दिक समवेदना व्यक्त गर्दछु।

गणेशमान सिंह

(गणेशमान सिंह)

**गोपालप्रसाद सापकोटा**
**सभापति।**
**जिल्ला विकास समिति, बाग्लुङ्**

मिति : २०५३।१०।१८

# ✲ समवेदना ✲

उच्च हिमशृङ्खलाका काखमा अवस्थित बाग्लुङ् जिल्लाको बिहूँ पौवाडाँडामा जन्मेर हिन्दू धर्मको ध्वजा देश-विदेशमा फहराउँदै सम्पूर्ण मानवजातिकै कल्याणार्थ अहर्निश धर्म र शिक्षा प्रचारमा जीवन अर्पण गर्नुभएका श्री १००८ स्वामी परमानन्द सरस्वतीजी महाराज ब्रह्मलीन हुनुभएको दुःखद सूचनाले आज बाग्लुङ्ग जिल्लाका साथै सिङ्गो राष्ट्र नै स्तब्ध भएको छ।

राष्ट्रले सच्चा कर्मयोगी, महान् सन्त गुमाउनु परेको यस दुःखद घड़ीमा आश्रमबासी साधु-सन्त भक्तहरू लगायत समस्त धर्मप्रेमी महानुभावहरूमा धैर्यधारण गर्न सक्ने क्षमता प्राप्त होस्; श्रीहरिहर भगवान्संग यही प्रार्थना छ।

**सभापति**

**जिल्ला विकास समिति**
**बाग्लुङ**

तेजस्विनावधीतमस्तु

*स्थापितम्-२०४५ (वि. सं.)*

# नेपाली संस्कृतच्छात्र-परिषद्, वाराणसी

## ※ समवेदना ※

नेपालसन्तसमाजादिधार्मिक संस्थाधारभूतानां परमपूज्यानां श्री १००८ स्वामिपरमानन्द सरस्वती-महाराजानां ब्रह्मीभावेनेयं संस्कृतच्छात्र-परिषद् अतीव खिन्ना।

आजीवनं सनातनधर्मस्य संस्कृतविद्यानाञ्च रक्षार्थं स्वामिभिः प्रयतितम्। एतैः विविधरूपेण समाजसेवा च विहिता। त्यागिनः साधकाश्चेमे धर्मविषयकोपदेशैः सामूहिक-धान्याचलादि महायज्ञप्रवर्तनेन च सर्वान् धर्मपरान् सदाचारिणः आत्मचिन्तकाँश्च विधाय सर्वत्र नेपाले महदुपकृतम्। बहूनि वेदवेदाङ्गसंस्कृतगुरूकुलानि संस्थाप्य सञ्चाल्य च एतैः सनातनधर्मरक्षायै महान् प्रयास. कृतः।

एवंविधानां विविधगुणानां संस्कृतसंस्कृतिरक्षकाणां महापुरुषाणां वियोगेन सर्वेऽपि नेपाल-भारतस्य धर्मसंस्कृति-संस्कृतहितैषिणः शोकाकुलाः। वस्तुत एतेषां ब्रह्मीभावेन संस्कृतस्य महती क्षतिरभूदिति अस्याः क्षतेः पूरणाय स्वामिभक्तानां मनसि धैर्यरक्षणाय च भगवन्तं भवानीजानिं काशीनाथं विश्वनाथं प्रार्थयामः।

# ब्रह्मलीन स्वामीज्यू महाराजको जन्मकुण्डली

श्री संवत् १९९४ आश्विनमासे १८ गते रविवासरे अमावास्यां तिथौ उत्तराफाल्गुनीतृतीयचरणे बाग्लुङ्मण्डलान्तर्गत - बिहूँ - (व्योमकूट) पौवाडाँडाग्रामे श्रीटीकारामशर्मणः पाणिगृहीताया अदितिदेवीनाम्न्या भार्यायाः सुवर्णमयकुक्षौ, पाराशर-नामा तृतीयपुत्ररत्नमजीजनत्।

## ॥ जन्माङ्गचक्रम् ॥



# श्रीमत्परमानन्दाष्टोत्तरशतनामावलिस्तोत्रम्

आचार्यजगन्नाथशर्मकण्डेलः

नमः सद्गुणपुञ्जाय गुरवे ज्ञानदायिने।
कण्डेलकुलदीपाय यतमानाय कर्मसु॥ १॥

सुकर्ममतये लोकपतये पावितात्मने।
नेपालपालपूज्याय, ज्यायसे शुद्धधीमताम्॥ २॥

सेव्याय सर्वयमिभिर्मिताहाराय ते नमः।
तेजसां निधये धर्मपालायैकान्तसेविने॥ ३॥

नेत्रे धार्मिकसंघस्य सदाद्वैतधिये नमः।
नेपालसाधुरत्नाय प्रत्नाय पुरुषाय च॥ ४॥

सिरूवारिनिवासाय वनवासप्रियाय ते।
छविप्रकाशपादाब्ज-सेवावाप्तसुबुद्धये ॥५॥

शङ्कराचार्यचरणध्यानपूतहृदे नमः।
नेत्राय दृष्टिहीनानां नानाभ्रमहराय च॥ ६॥

सप्ततन्तुशताहर्त्रे कर्त्रे विद्यागृहस्य च।
लोभगन्धविहीनाय दीनानामन्नदायिने॥ ७॥

पायिनेऽज्ञानसिन्धूनामगस्त्यसमतेजसे ।
सेविताय सदा सद्भिर्भीतानां भयहारिणे॥ ८॥

ऋणमोचनदक्षाय श्रीगुरोर्ज्ञानदायिनः।
नेपालभाग्यभूताय यतये यमिने नमः॥ ९॥

नमस्यते सदा देवान् श्रीरामप्रमुखान् मुदा।
दामोदरैकभक्ताय साक्षाच्छङ्कररूपिणे॥ १०॥

व्योमकूटीयश्रीरामकूटोन्नयनहेतवे ।
सेतवे सर्वधर्माणां वैदिकानां विशेषतः॥ ११॥

तस्करायाघराशीनामाशिषां निधये नमः।
नाम्नां भगवतो नित्यंगायकाय सतां मुदे॥ १२॥

देवर्षिरिव सर्वेषां भ्रामं भ्रामं गृहे गृहे।
हेतवे यज्ञकार्याणां रक्षकाय दयालवे॥ १३॥

वेदान्तमतसंगोप्त्रे वेदवेदाङ्गरक्षिणे।
क्षीणसर्वजगत्तापपापवृन्दाय बृंहते॥ १४॥

ब्राह्मणोत्तमकुल्याय भारद्वाजाय भास्वते।
तेजसां निधये तीर्थशोधकाय नमो नमः॥ १५॥

नमो मुसुङसक्षेत्रप्राप्तज्ञानघनाय च।
गण्डकीकूलसम्बद्ध-हीलेनग - निवासिने॥ १६॥

महादेवकुलाम्भोधौ चन्द्रायानन्ददायिने।
ब्रह्मशर्मकुलाम्भोज-वनोद्भासन-भास्वते ॥ १७॥

अदितेः पुत्ररत्नाय जगतां भय-हारिणे।
पौवाडाँडासमुद्भूतशरीरायार्कतेजसे ॥ १८॥

आबाल्यात् शान्तमनसे सदा गोवंशसेविने।
राजमाषमहाक्षेत्रजन्मक्षेत्राय भिक्षवे॥ १९॥

पूतपर्वतवासाय गवां गोष्ठेषु शायिने।
सदा रामचरित्राब्धिनिमग्न-शुद्धबुद्धये॥ २०॥

बुद्धिस्थशम्भवे तस्मै बाल्याप्तशिवदृष्टये।
जगत्तुच्छत्त्व-बुद्ध्युत्थ-वैराग्यातिशयात्मने ॥ २१॥

पितृभक्ताय सततं स्निग्धैः सद्भ्रातृभिः सह।
सदा सर्वजनाह्लाद-क्षमबुद्धिमते नमः॥ २२॥

साधूनामपि सर्वेषां गुरवे ज्ञानदायिने।
अमानिने मानदाय मान्याय सततं समैः॥ २३॥

सत्त्वोत्तराय शान्ताय सर्वान् सान्त्वयते नमः।
कामक्रोधमदध्वान्तनाशिने वनवासिने॥ २४॥

निश्छलाय प्रसन्नाय प्रसादनपराय ते।
कृतज्ञाय कृतघ्नानामपि रक्षणहेतवे॥ २५॥

प्रणताय गुरौ नित्यं नतानामार्तिहारिणे।
श्रमसंपीतगम्भीरकूपाम्भोबिन्दवेऽन्दवे ॥ २६॥

देवाराममहाक्षेत्रे तपःशोधितचेतसे।
खरसूवृक्षमूलोत्थ-तपसा लब्धसिद्धये॥ २७॥

घुम्टेस्थसिद्धवाराह-सेविने त्रिकुटाचले।
कृतवासाय, सिंहादि-सहवासपराय ते॥ २८॥

जलाशयाध्व-देवेज्यास्थल-विद्यागृहादिषु ।
सेतौ च कृतयत्नाय, प्रत्नविद्याप्रियाय च॥ २९॥

रुरुक्षेत्रस्य-गायत्रीपीठ-संस्थापकाय च।
ऋष्यशृंगाश्रमाभ्यस्त- योगाययतये नमः॥ ३०॥

ह्रदे सालिमसंज्ञे वै गुल्मीमण्डलमध्यगे।
सत्कृतो देशिको येन गुरुभक्ताय ते नमः॥ ३१॥

गण्डकी-रुद्रनद्योर्वै सम्भेदे भेदनाशने।
रुद्रवेण्यां राममुख्यान् देवानर्चयते नमः॥ ३२॥

सत्यप्रकाशानन्दाख्यात् गुरोरमिततेजसः।
लब्धसंन्यासधर्माय धर्माय नरमूर्तये॥ ३३॥

गण्डकीनवसम्भेदे देवघट्टे मनोरमे।
शालग्राममहाक्षेत्रे पुण्ये हरिहरात्मके॥ ३४॥

रममाणाय, रम्याय, रमणीयगुणाय च।
सर्ववैषम्यहीनाय, हीनोद्धरणकर्मणे॥ ३५॥

संस्थापित - सुसंन्यासाश्रमाय गुरवे नमः।
षट्चक्रध्यानविध्वस्त-तमसे सात्त्विकाय ते॥ ३६॥

ब्रह्मैक्यभावविध्वस्तसर्वद्वैताय भिक्षवे।
परमानन्दमग्नाय ज्ञानदात्रे नमोऽस्तु ते॥ ३७॥

☆



उत्तुङ्ग शिखरका गिरिकन्दरामा तपस्यारत
स्वामीज्यू महाराज : ब्रह्मचर्यावस्थामा।



# जीवनी खण्ड

## श्री १००८ स्वामी परमानन्द गुरुमहाराजको
## ❋ जीवन-चरित्र ❋

**—आचार्य जगन्नाथ शर्मा कण्डेल**

**वदनं प्रसादसदनं सदयं हृदयं सुधामुचो वाचः।**
**करणं परोपकरणं येषां केषां न ते वन्द्याः?**

### सनातन धर्मरक्षक महापुरुष :—

वेदलाई मुख्य प्रमाण मात्रै भएकाले यस धर्मलाई वैदिक भनिन्छ भने अनादिकालदेखि अनन्तकालसम्म अविच्छिन्न रूपले चलिरहने भएकाले यसलाई सनातन पनि भन्दछन्। यसरी यो धर्म अनादि-अनन्त परमात्मद्वारा अनादि-अनन्तकालसम्म चलिरहन्छ। अन्य धर्महरू कुनै एक समयवाट कुनै एक प्रभावशाली व्यक्तिले चलाइएका हुन्छन् र केही समयसम्म चली संसारका अन्य वस्तुहरू झैं नै समयको महाप्रवाहमा विलीन हुन्छन्। यो त्यस्तो छैन। समय-समयमा विविध रूप लिई स्वयम् परमात्माले यसको संरक्षण गर्दै धर्मविरोधीहरूलाई पन्छाउनुहुन्छ। परमेश्वरका सत्सङ्कल्पले वहाँकै अंशबाट पृथ्वीमा प्रकट भएका साधु-सन्त र महात्माहरूले यस धर्मलाई प्रचारमा ल्याई यसको परम्परालाई अटूट राख्नुहुन्छ। यो नै यथार्थ धर्म भएकाले समग्र संसारको हितकारक छ। यस धर्मका मान्य वेदादि शास्त्रहरूमा वर्णन गरिएका उपदेशहरूले प्राणीहरूमा सद्भाव, मित्रता र दयाको सञ्चार गराई विश्वलाई नै सुख-शान्ति प्रदान गराउने क्षमता राखेका छन्। यस धर्मको मूलग्रन्थ वेद नै भए पनि वेदानुकूल स्मृति-इतिहास र पुराणहरूले वेदको व्याख्या प्रस्तुत गरी जीवहरूलाई सम्झाउँछन्। यसरी वेद, मन्वादि स्मृति, इतिहास र पुराण यस धर्मका प्रमाण ग्रन्थ हुन्। यस धर्मले महान् तत्व-द्रष्टा आचार्यहरू समय-समयमा प्राप्त गर्दै आएको छ। यस धर्ममाथि जब-जब बाहिर र भित्रबाट पनि सङ्कट आइपर्छन् तब-तब कुनै न कुनै लोकोपकारक महापुरुषको उदय भएकै हुन्छ। यी आचार्यहरूको परम्परा अक्षुण्ण रूपमा चली आजसम्म पनि केही न केही आध्यात्मिक ऊर्जा जनतालाई मिलिरहेकै छ। ती आचार्यहरूमा जगद्गुरु आद्य शङ्कराचार्यज्यूको श्रीनाम प्रमुख छ। हाम्रा चरित्रनायक श्री १००८ स्वामी परमानन्द महाराज यसै परम्परामा प्रकट भई सनातन वैदिक धर्मको संरक्षणमा आफ्नो समग्र जीवन अर्पण गरी पाञ्चभौतिक शरीर त्यागेर पनि अमर बन्न पुग्नु भएको छ।

### सनातन परम्परामा सन्त महात्माहरूको योगदान—

हाम्रो सनातन धर्ममा साधु, सन्त या महात्मा नामले प्रसिद्ध व्यक्तिहरू प्राचीनकालदेखि नै रहिआएका छन्। यद्यपि पण्डित, पुरोहित, गुरु, आचार्य आदि शब्दहरूले जानिने व्यक्तिहरूद्वारा पनि धर्म संस्कृतिको रक्षा भइआएको छ। तथापि यिनीहरू र सन्त महात्माहरूमा केही फरक छ। सन्त या साधु त्यस व्यक्तिलाई भनिन्छ जो धर्म संस्कृतिको प्रचार वा रक्षा गरे बापत त्यस समाजबाट कुनै पनि सहयोग या मूल्यको पटक्कै आशा राख्दैन। असली सन्त ती हुन् जसका जीवनका प्रत्येक क्षण लोकोपकारमा नै व्यतीत हुन्छन्। लोकोपकार बाहेक अरू कुनै प्रयोजन नहुने

महापुरुषलाई मात्र सन्त या साधु अथवा महात्मा भन्न उचित हुन्छ। प्राय: साधुहरूको सोच फराकिलो र सेवाको क्षेत्र निकै विस्तृत हुन्छ। जात, जाति, वर्ण, आश्रम, लिङ्ग, वय, देश, काल, उपासना, सम्प्रदाय र वादको घेरामा जो जति-जति बाँधिदै जान्छ उसको साधुता उति-उति दुब्लाउँदै जान्छ। जति-जति त्यस घेराबाट आफूलाई फुकाउँदै लान्छ उति-उति उसमा साधुता मौलाउँदै र फस्टाउँदै जान्छ। त्यसो त वहाँ पनि निश्चय नै अरू झै एक न एक घेरामा नै हुनुहुन्थ्यो; तर वहाँले त्यसको पर्वाह नगरी प्राणीमात्रका सेवाको उद्देश्य राख्नु भएको थियो। अत एव स्वामी परमानन्द सरस्वतीज्यू सर्वलोकोपकारी, यथार्थमा अद्वयवादी, सर्वत्र ईश्वर दर्शन गरेर जसको सेवा गर्दा पनि ईश्वर-सेवा नै सम्झने, संसारभरका सबै प्राणीहरूलाई आफ्नै परिवारको रूपमा देख्ने, कसैमा कुनै किसिमको द्वेष र राग नराख्ने यथार्थ सन्त या साधु हुनुहुन्थ्यो।

## सनातन धर्ममा शङ्कराचार्यको प्रभाव—

दक्षिण भारतको केरल प्रान्तको कालडीमा सनातन धर्मको वर्चस्व घटेको समयमा जन्म लिई आचार्य शङ्करले सनातन धर्म जगत्लाई केवल ३२ वर्षको छोटो आयुमा अतुलनीय देन दिनु भयो। त्यतिखेर पनि सनातन धर्म ज्यादै सङ्कटमा थियो। वैदिक धर्मको विरोधमा अनेक सशक्त समुदाय सुनियोजित ढंगबाट लागेका थिए। उनीहरू संस्कृत भाषा छाडी तत्कालीन जनसाधारणको भाषालाई आफ्नो विचारका प्रचारको साधन बनाई जनतामा आफ्नो प्रभाव बढाइरहेका थिए। त्यस समयमा पनि वैदिक धर्मले स्वीकार गरेको वर्ण-आश्रम व्यवस्था र श्रौत-यज्ञको परिपाटीलाई आलोचनाको मुख्य विषय बनाई वेद, संस्कृत भाषा र वैदिक-यज्ञहरूको उपहास गरिन्थ्यो। अधिष्ठान सत्ता समेत स्वीकार नगरी सारा जगत्लाई भ्रमकल्पित मिथ्या मात्रे विपक्षीहरूका प्रबल तर्कहरूलाई खण्डन गरी जगत्को भ्रमात्मकता सिद्ध गर्न सत्य अधिष्ठानको आवश्यकता बताई आचार्य शङ्करले **''आत्मा खलु विश्वमूलम्''** भन्ने प्राचीन वैदिक उद्घोषलाई पुन: प्रतिष्ठापित गर्नुभयो। सनातन धर्म भित्र रहने विविध सम्प्रदाय र मतहरूलाई समन्वय गर्न शङ्करद्वारा ठूलो प्रयास गरियो। त्यतिखेर पनि शैव, वैष्णव, सौर, शाक्त, गाणपत्य एवं कौमार नामक छ: सम्प्रदायहरू आ-आफ्नो प्रक्रियाबाट चल्दथे। एक एक आचार्य एक-एक सम्प्रदाय मात्रको रक्षक र प्रचारक हुन्थे, यसरी एउटै धर्म भित्र अनेक धर्मको विकास भइरहेकाले सनातन धर्ममा एकताको अभाव बढ्दै गएको थियो। कालान्तरमा सनातन धर्म भन्ने कुनै मूलरूप नरही शैव आदि सम्प्रदाय मात्र रहने सम्भावना बढिरहेको थियो। यस सङ्कटलाई हटाउन शङ्करले आफ्ना शिष्यहरूलाई समानरूपमा सबै देवताको उपासना गर्ने शिक्षा दिई सनातन धर्मलाई अपूर्व गुन लगाउनुभयो। अत एव आचार्य शङ्कर र वहाँका अनुयायीहरूलाई आज पनि **षणमतस्थापकाचार्य** भन्ने सम्मानित उपाधि प्राप्त छ। यसरी शङ्कराचार्यले सनातन धर्मको समग्रतालाई अँगाली एकताको शङ्खनाद गर्नुभएको थियो। **''एकं सद् विप्रा बहुधा वदन्ति''** भनेर ऋग्वेदले गरेको घोषणालाई व्यवहारमा उतार्ने काम आचार्य शङ्करले नै गरेको देखिन्छ। वेद वाक्यहरूमा प्रतीत हुने ब्रह्मको सगुणता र निर्गुणताको समन्वय पनि शङ्करले गर्नुभयो। निर्गुण निराकार निर्विशेष परब्रह्म पारमार्थिक अवस्थामा प्राप्य हो भने सगुण साकार सविशेष ब्रह्म व्यावहारिक अवस्थामा रहने साधकहरूद्वारा प्राप्य हो। यसरी सबै श्रुतिवाक्य, पुराण, इतिहास आदि मान्य ग्रन्थहरूद्वारा वर्णित विषयमा समन्वय ल्याई आचार्य शङ्करले सनातन धर्मावलम्बीहरूमा एकता ल्याउनु भएको देखिन्छ। अद्वैतवादको प्रचार गर्दा पनि लोकमा चलेका समस्त उपासना पद्धतिहरूको समुचित सम्मान गरी वहाँले सबै उपासकहरूको हृदय आकृष्ट गर्नुभयो भने वैदिक वर्ण-आश्रम अनुसारका कर्महरू प्रारम्भिक दशामा सबैले गर्नुपर्छ भनी कर्म मार्गको परम्परालाई पनि आदर दिनुभयो। यसरी कर्म, उपासना र ज्ञान तीनोटै पक्षको रक्षा गर्नुले पनि वैदिक धर्मको



सर्वाङ्गीण विकासमा आचार्यको दृष्टि रहेको र वैदिकहरूलाई एकताको सूत्रमा बाँध्ने पनि लक्ष्य रहेको समेत बुझिन आउँछ। यसरी शङ्करले थोरै समयमा विपक्षीहरूद्वारा नष्ट गरिएको सनातन धर्मलाई पुनः प्रतिष्ठापित गर्नुभयो। यस पछिका आचार्यहरूले क्रमशः यस धर्मलाई समृद्धशाली बनाउँदै लानुभयो।

## शङ्कराचार्यको परम्परा—

आद्य शङ्कराचार्यले वैदिक सिद्धान्तको रक्षा निम्ति भारतवर्षको पूर्वको जगन्नाथपुरीमा गोवर्धन पीठ, पश्चिमको द्वारकापुरीमा शारदापीठ, दक्षिणमा शृङ्गेरी पीठ र उत्तरको बदरिकाश्रममा ज्योतिष्पीठको स्थापना गर्नुभयो। स्थापनाकालदेखि आजसम्म पनि सम्पूर्ण भारतवर्षमा यी चारै पीठहरूद्वारा वैदिक धर्मको प्रचार-प्रसार र संरक्षण समेत हुँदै आएको छ। यसै परम्परामा दशनामी संन्यासी मठ र अखाडाहरूको विकास भयो। अखाडामा संन्यासी महात्माहरूका सेना रहन्छन्। यस सेनाले विधर्मीहरूसंग भिडी वैदिक धर्मको रक्षा गर्थ्यो। आज पनि ती अखाडाहरू छँदै छन्। गिरि, पुरी, भारती, सरस्वती, वन, पर्वत, आश्रम, तीर्थ, अरण्य र सागर यी दशवटा शङ्कराचार्यका अनुयायी संन्यासीहरूका नामका पछि लाग्ने उपाधि हुन्। यद्यपि शङ्करले संन्यास परम्परा नै चलाउनु भएको हो तथापि संन्यास दीक्षा नलिइकन पनि शङ्कराचार्य परम्पराका संन्यासीलाई गुरु मानी वहाँको सिद्धान्तलाई पालना गर्ने व्यक्तिहरू पनि धेरै संख्यामा सबै देशमा रहिआएका छन्।

## नेपालमा शङ्कराचार्यको प्रभाव—

नेपालको मुख्य देवस्थल श्रीपशुपतिनाथको मन्दिरमा दक्षिणबाट पूजारी ल्याई पूजा चलाउने व्यवस्था आद्य शङ्कराचार्यबाट थालिएको हो भन्ने जनश्रुति छ। नेपाली जनता र राजवंशले आजसम्म पनि शङ्कराचार्यपीठहरूको यथा-समय आदर सत्कार गर्दै आएका छन्। नेपाली साहित्यमा शाङ्करवेदान्तको गहिरो छाप छ। आदि कवि भानुभक्त, लेखनाथ आदि त शाङ्करवेदान्तका अनुयायी नै देखिन्छन्। वेदान्तका शाखा-प्रशाखा जे जति भए पनि आजसम्म वेदान्त भन्नाले साधारण व्यक्तिले शाङ्कर-वेदान्त नै बुझ्दछन्। नेपालमा लामो समयदेखि चलेका पञ्चायन देवपूजाको थालनी शङ्कराचार्यबाट नै भएको बुझिन्छ, किनभने सबै देवहरूको समानरूपले आदर गर्ने चलन शङ्कराचार्यले बसाल्नु भएको हो। शाङ्करमतमा वास्तवमा निर्गुण निराकार ब्रह्म नै परमार्थ भएकाले सगुण साकार विष्णु आदि मूर्तिहरूमा ठूला-सानाको प्रश्न नै भएन। मायावच्छिन्न चेतनांशहरू सबै समान नै हुने भए। शाङ्कर सिद्धान्तमा शिव विष्णु आदि ईश्वरका साकार रूपहरू मायोपहित चैतन्य हुन् र देवदत्त यज्ञदत्त आदि जीवहरू अविद्योपहित चैतन्य हुन्। यसरी देवताहरूमा र प्राणीहरूमा पनि ऊँच-नीच नगर्ने कुरा शाङ्करसिद्धान्तको अनुकूल छ। निर्गुण निर्विशेष एक ब्रह्म नै परमार्थ रूपमा सत्य रहेको र अरू सबै उसैमा कल्पित हुनाले असत्य रहेकाले त्यस्ता विषयलाई लिई ठूलो सानो भनी विवाद गर्नु अनुचित हो भनी सबैमा समता स्थापित गर्नु यस सिद्धान्तको व्यावहारिक उपयोगिता हो। पारमार्थिक लक्ष्य भने जीव-ब्रह्मको एकता-बोधद्वारा नित्य निर्विकार निश्चल मोक्ष स्थितिलाई प्राप्त गर्नु नै हो।

आज पनि नेपाली जन-जीवनमा शाङ्कर सिद्धान्तका प्रतिपादक योगवाशिष्ठ, आत्मपुराण आदि ग्रन्थहरूद्वारा शाङ्करसिद्धान्त बुझ्ने रुचि देखिन्छ। जनतामा गीता, भागवत, उपनिषद् र उनका व्याख्यानहरूबाट शाङ्कर सिद्धान्त सम्झाउने काम भइरहेकै छ। शङ्कर सिद्धान्तमा ज्ञानको प्रधानता भए पनि उसले कर्म र भक्तिलाई ज्ञान-प्राप्तिकै साधनकै रूपमा भए





पनि आवश्यक बताएको हुनाले सबैले शङ्कराचार्यको महत्त्व स्वीकारेका छन्। थोरै आयुमा तर्कपूर्ण गम्भीर महान् ग्रन्थहरू बनाई सर्वत्र भ्रमण गरी शास्त्रार्थद्वारा वैदिक धर्म विरोधलाई परास्त गरी वैदिक-धर्म-विजय-वैजयन्ती फहराएका हुनाले पनि आचार्य शङ्कर सर्वमान्य बन्न पुगुभएको हो।

## स्वामी परमानन्द सरस्वतीज्यूका प्राकट्यको पृष्ठभूमि—

विधर्मी शासकहरूका अत्याचारले आत्तिएर हिन्दूहरू विशेषत: ब्राह्मणहरू-दक्षिणतर्फबाट उत्तर हिमालका फेदी तिर बस्ती गर्न लागे। दुर्गम क्षेत्र भएको र स्थानीय राजा प्रतापी पनि भएकाले यहाँ आई उनीहरूले आफूलाई सुरक्षित पाए। कान्यकुब्ज देशबाट हिमाली क्षेत्रमा आएकाले यिनीहरू कान्यकुब्ज भनिए। पहिले देखि नै पनि हिमाली क्षेत्रमा ब्राह्मणादि आर्यहरूको बस्ती छँदै थियो, त्यसैमा थपिने काम ईशाको छैटौं शताब्दीदेखि विशेषरूपमा थालिई १७औं शताब्दीसम्म चलि नै रह्यो।

आचार, व्यवहार, कुल, मूल आदिमा एकै भएता पनि विभिन्न समय विभिन्न ठाउँबाट भित्रिनाले ब्राह्मणहरूमा पनि कहिलेकाहीं केही भेदभावका लक्षणहरू देखा पर्दै रहे पनि यथार्थ वस्तुतत्त्व जान्ने साधुसन्त-विद्वान्‌हरूका सत्प्रयासले ती कालाबादलहरू लामो समयसम्म टिक्न पाउँदैनथे। प्रकृत चरित्रनायक पनि यस्तै द्विज समाजोन्नायक महापुरुषहरूमा अन्यतम हुनुभयो।

राणा शासन त्यसबेला चरम सीमामा पुगेको थियो। साधारण जनता शिक्षाबाट विमुख थिए। कुल-परम्पराबाट प्रत्येक विद्याको प्राण-मात्र धानिएको थियो। भारतका तीर्थस्थल काशी, वृन्दावन आदिबाट अध्ययन गरी जाने साधु, सन्त र विद्वान्‌हरूले ठाउँ-ठाउँमा गीता भागवत, रामायण आदिको आधारमा अहिंसा, ईश्वर भक्तिं आदिको प्रचार गरी धार्मिक भावनाको संरक्षण गर्थे। स्वामीज्यू धराधाममा अवतीर्ण हुनुभन्दा पहिलेदेखि नै प्यूठानमा स्वर्गद्वारी आश्रमको सञ्चालन भइरहेको थियो। त्यस आश्रममा वेद-वेदाङ्गको अध्ययन गरी फर्केका व्यक्तिहरूले वैदिक धर्मको रक्षा गर्ने प्रयास गर्दै थिए। साथै पूर्वी नेपालको भोजपुर दिङ्लामा आबाल ब्रह्मचारी षडानन्द गुरुद्वारा संस्कृत पाठशाला स्थापित भई वेद-वेदाङ्गको रक्षा भएको थियो। त्यस्तै बाग्लुङ्को समीपस्थ जिल्ला पर्वतको नाङ्लिवाङ्मा भारतमा गई अध्ययन गरी आएका श्रीशालिग्रामाचार्य रेग्मीद्वारा भागवत आदि धर्मग्रन्थको व्याख्याद्वारा वैदिकधर्मप्रचार भइरहेको थियो। उपर्युक्त व्यक्ति र संस्थाहरूले वैदिक सदाचारका साथ **'मा हिंस्यात् सर्वांभूतानि'** अर्थात् कुनै पनि प्राणीको हिंसा वा हत्या नगर भन्ने वेदवाक्य अनुसार काटमार र पशु बलि दिने प्रथा हटाई सदाचारको प्रचार-प्रसार गर्ने अथक प्रयास गर्दै थिए।

स्वर्गद्वारी आश्रमका गिरि सम्प्रदायका संन्यासी महात्माहरूले बाग्लुङको नजिकमा पर्ने **गलेश्वर धाम** र पुलहाश्रममा धार्मिक वातावरण सिर्जना गरिरहेका थिए। यता दक्षिण भेगबाट तपस्या गर्न चाहने साधुहरूले पनि नेपालका उत्तरी भेगका धुरीहरूमा गई तपस्या गर्दै गाउँबाट दर्शन गर्न जानेहरूलाई केही न केही धर्मोपदेश गर्दथे। साथै ग्रामीण पण्डित, पुरोहित र ज्योतिषीहरूले आ-आफ्ना घरलाई नै नि:शुल्क विद्यालयको रूप दिई आ-आफ्ना विद्याको जन-तन प्रचार गर्दै थिए तापनि यो परम्परा लुप्त हुने स्थितिमा पुगेकाले शास्त्ररक्षा गर्न धेरै कठिन भइरहेको थियो। कुनै योजनाबद्ध ढंगले सचेत रूपमा धर्म-संस्कृति जोगाउन ठोस कदम कहीं कतै चलाउन सकिइरहेको थिएन। शिक्षाको अभाव र कुसङ्गतले गर्दा ब्राह्मणहरू समेत मांसभक्षणको कुप्रवृत्तिमा फंसेका थिए। धर्म रक्षा गर्न, जीवहत्या बन्द गर्न र परपुरूषसंग सम्बन्ध गर्नाले जसरी नारी पतित हुन्छे त्यस्तै परपत्नी संसर्गले पुरुष पनि पतित हुन्छ भन्ने आदर्श रक्षा गर्न चाहनेहरूले साथ



पाएका थिएनन्। यता परम सात्त्विक ब्राह्मण वंशजहरूले पनि भूत-प्रेत पूजा गर्दै प्राणी-हिंसा गर्ने मार्ग अपनाएका थिए। ठाउँ-ठाउँका रूखहरूमा धजा बाँधी, घन्ट झुण्ड्याई, ढुङ्गाको स्थान बनाई, ढुङ्गाको नै मूर्ति राखी बाजे-बज्यै, कुलायन, सिरम, झाँक्री आदि नाम दिई कोटहरू समेत बनाई प्रायः प्राणी हिंसाद्वारा भूत-प्रेत पूज्ने चलन चलाई त्यसैमा चुर्लुम्म डुबिसकेका थिए। कुल परम्पराबाट आएको धर्म नै यही हो भनी कल्कलाउँदा पाठा र परेवाहरूको घाँटी रेटेर आफूलाई धार्मिक भन्न सर्माउँदैनथे। वास्तवमा आफ्ना पूर्वजको सात्विक महिमालाई नबुझी केवल तामस प्रवृत्तिलाई स्वीकार गरेका थिए। यसरी अज्ञान, अशिक्षा, अभावको भुमरीमा परेका जनतालाई वास्तवमा कर्तव्य-अकर्तव्यको कुनै ज्ञान नै थिएन। यस्तै परिस्थितिमा बाग्लुङ र गुल्मीलाई केन्द्र बनाई वैदिक सनातन धर्मको पुनः स्थापना गराउन सत्य-संकल्प परमेश्वरले एक अद्‌भुत अवतारी पुरुषलाई नेपालका मध्य-पश्चिमाञ्चल क्षेत्रका धवलागिरि अञ्चलको बाग्लुङ जिल्लाको बिहूँकोट गा०वि०स० वार्ड नं०-३, पौवा डाँडा (रामपुर) भन्ने ठाउँमा पठाउनुभयो।

## स्वामीज्यूका जन्मस्थान र वंशको परिचय—

जम्बूद्वीपको नौ खण्डमध्ये भारत वर्षको शिरोभाग हिमालय हो। नेपाल हिमाली राज्य हो। श्री ५ पृथ्वीनारायण शाह र उनका उत्तराधिकारीहरूद्वारा नेपालको एकीकरण हुनुभन्दा पहिले, मेचीदेखि महाकालीको सीमामा वि०सं० १८७२ मा अंग्रेजसंग भएको सुगौली सन्धिपछि बाँधिएको नेपाल अनेकौं रजौटाहरूमा बाँडिएको थियो।

गण्डकी प्रान्तमा २४ राज्य थिए। यी सबैको साझा नाम मगरात थियो। यिनीहरूमा गोर्खा, कास्की, पर्वत, गल्कोट, मुसिकोट र पाल्पा आदि प्रसिद्ध राज्य हुन्। अहिलेका बाग्लुङ जिल्लाको हरिचौरमा दरम खोला (दर्भ खोला)को तटमा मल्ल ठकुरीहरूका गल्कोट राज्यको राजधानी थियो। यसै ठाउँमा वि०सं० १७५० तिर कर्णाली क्षेत्रको काँडा गाउँ बिर्ता पाई काँडेल-कँडेल थर पाएका पण्डित महादेव शर्मा पत्नी सहित आए। गल्कोटे राजाका राज्यमा यिनको विद्वत्ता फैलिएकाले राजाले यिनलाई आफ्ना राज्यको पूर्वी सीमामा रहेको बिहूँ भन्ने ठाउँ बिर्ता दिई आफ्ना गुरु समेत माने। वेदादि शास्त्रका ज्ञाता महादेवलाई गल्कोट दरबारमा अध्यापन वृत्ति पनि मिलेकाले यिनी उपाध्याय पनि कहलाइए। ज्योतिष विद्यामा पारङ्गत हुँदा ज्योतिषी पनि भनिए। यिनै महादेव शर्माले बिर्ता पाएको बिहूँ प्रायः जनशून्य थियो। रामकोट भन्ने ठाउँमा केही रामभक्त साधुहरूका कुटीहरू बाहेक त्यस क्षेत्रमा अरु कुनै व्यक्तिको बसोबास थिएन।

पं० महादेवले आफ्ना नौ भाइ औरस पुत्रलाई बिहूँमा भागबण्डा गरी सबै भागमा बस्ती बसाए। क्रमशः बिहूँमा नाता सम्बन्धीको रूपमा अन्य गोत्रका ब्राह्मणहरूको पनि प्रवेश भयो। विभिन्न कामहरूका लागि सम्बन्धित जात-जातिका मानिसहरू बोलाई जमीन दिई घर-वासको व्यवस्था मिलाइयो। गल्कोट नरेशको परामर्श अनुसार बिहूँको विकास पं० महादेव र उनका छोराहरूबाट छिट्टै नै भयो। क्रमशः यस गाउँका कँडेलहरू बाग्लुङकै विविध भागमा र अन्य जिल्ला समेतमा बसाइँ सरी महान् महादेव वंशको विस्तार गर्न सफल भए। अहिले पनि देशका विविध जिल्लाहरूमा छरिएर रहेका छन्।

महादेवकी कान्छी धर्मपत्नीपट्टिका कान्छा ब्रह्मदेव (ब्रह्माबाजे) गल्कोट राजाका मन्त्री एवं सल्लाहकार रहनका साथै शूरा प्रतापी र विद्वान् पनि थिए। यिनको यसै राज्यका सिमानास्थित सिंगाना राज्यसंग राजनैतिक कारणले झगडा थियो। सिंगाना राज्यले बिहूँकोटको घरमा गई उनलाई हत्या गरेको र त्यसै पीरले भाउजु कृष्णा बज्यै सती भएकीले यी दुबैलाई बाजेबज्यै भनी बलिप्रथाद्वारा पूजा गर्ने चलन चलेको थियो। साथै यसै कारणले बिहूँकोटेको एक ठूलो समुदायमा रेस सिंगाना गाउँमा गई कुनै चिज नखाने चलन कृष्णा बज्यैको आज्ञापालनको रूपमा चलेको थियो।

यी दुबै वल्ला-पल्ला जोडिएका गाउँहरूको यो विवाद लगभग तीनसय वर्षसम्म चलिरह्यो। अब गल्कोट र सिंगाना जस्ता राज्यको अस्तित्व पूरै सकियो। नेपाल एक भयो। दुबै गाउँ एकै राज्यका एकै जिल्लामा परे तर त्यो पुरानो रीस इबी या सतीको श्राप जस्ताको तस्तै बनिरह्यो। ब्रह्मदेवकै पालादेखि बिहुँलेहरू सिंगाना मौजालाई पार गरी दमेक पुगी विवाह आदि लेन-देन गर्थे। बीचमा पर्ने सिंगाना गाउँमा कलिला शिशुलाई दूध न खुवाउने र आफूहरूले पनि पानी समेत नपिउने गरी आफ्ना पूर्वजहरूको आज्ञालाई बिहूँले कण्डेलहरूले पूरा गर्दै आएका थिए।

स्वामीज्यूको मावल दमेक गाउँको तल्ला थोक भन्ने ठाउँमा हो। हजूरबा र हजूरमुमाको नाम पनि व्यासका माता-पिताको नाम झैं नै पाराशर र मत्स्यरूपा थियो। कौण्डिन्यगोत्री सापकोटा वहाँका मावली हुन्। डिलाराम र शशिधर दुई मामा थिए। जगच्चक्षु सूर्यदेव जस्ता स्वामीज्यूलाई गर्भमा राखी जन्म दिने आमा 'अदिति' देवमाता अदितिकै अर्को रूप हुनुहुन्थ्यो।

बिहूँबाट दमेक जाँदा बीचमा पर्ने सिंगाना मौजामा परम्परा अनुसार स्वामीज्यूले मावल जाने आउने गर्दा माताजीको स्तनपान गर्न पनि पाउनुभएको थिएन।

माताजीबाट सुनेका यी कुराले स्वाजीज्यूको मन प्रभावित भएको थियो। पछि स्वामीज्यूले स्वयं प्रयत्न गरी त्यो प्रथा छुटाई वलिप्रथाबाट पूजा हुने बाजै-बज्यैको थान अलैंचेमा देव मन्दिर बनाई ठूलो सामाजिक सुधार ल्याउनुभएको हो।

## स्वामीज्यूका जन्मभूमिको प्राकृतिक छटा—

जुन ठाउँले लोकोत्तर महापुरुषको अवतार भूमि बन्ने सौभाग्य प्राप्त गऱ्यो, त्यस महिमामय माटाको जति वर्णन गरे पनि पुग्दैन। जहाँ हाम्रा महापुरुषले तोते बोली बोल्दै ताते गरेका थिए त्यो माटो हाम्रो लागि शिरको चन्दन बनेको छ। हामीले त्यहाँ त्याग, तपस्या, अहिंसा र मित्रताका सूत्रहरू फेला पार्छौं, त्यहाँ पुगी एक छिन घोरिंदा, स्वधर्मप्रति श्रद्धा र प्रेम पैदा हुन्छ, त्यहाँ हामी आफ्नो स्वरूप चिन्ने तरखरमा लम्किरहेको महसूस गर्छौं। हामीले त्यहाँ त्यो शान्ति प्राप्त गर्छौं, जो अन्यत्र दुर्लभ छ। त्यो क्षेत्र नै गुरुभक्तको निम्ति श्रद्धा र आस्थाको घनीभूत केन्द्र बन्न पुगेको छ। त्यस ठाउँको नाम हो पौवाडाँडा। दण्ड शब्दबाट डाँडा शब्द बन्दछ। दण्डशब्दका लौरो र सजाय भन्ने दुई अर्थ हुन्छन्। डाँडाहरू पनि टाढाबाट हेर्दा लौराजस्ता तेर्सो सुतेका देखिन्छन्। पहिले इडारे पानी मास्तिरको घाँचमा एक पौवा थियो। पौवा भन्नाले धर्मार्थ बनाइएको त्यो घर बुझिन्थ्यो जो मूल सार्वजनिक बाटाको छेउ-छाउमा बनेको हुन्थ्यो, जहाँ जो व्यक्ति आएर पनि रात बिताउन पावोस्। पौवा साझो हुन्थ्यो। यहाँ मलामीदेखि राजासम्मका मानिस बस्ने गर्थे, एकसाथ धेरै ठाउँबाट आएका धेरै थरी जनताले गुजारा गर्नुपर्थ्यो। त्यहाँ तेरो-मेरोको सवाल उठाउनु नै पाप थियो। त्यहाँ सबैसंग मिलेर बस्नुपर्थ्यो। आजको लज होटलको यस युगमा पाटी-पौवाको जानकारी लिने पनि मिल्दैनन्, तर कुनै समयमा यिनै पाटी-पौवाहरू सबैका आधार थिए। वास्तवमा पौवा यस क्षणभङ्गुर संसारको नै प्रतीक हो। पौवा चिन्नेले संसार चिन्दछ। जसरी पौवामा सधैं एउटैको राज्य रहन्न, दिनदिनै त्यहाँ रहनेहरू अर्कोतिर गइरहेका हुन्छन्; त्यस्तै हो यो संसार पनि। यहाँ आउन र बस्न कुनै रोकावट छैन तर यसलाई मेरो भनी एकाधिकार जमाउन खोज्नु अपराध हो; यस संसाररूप पौवामा आऊ, बस, तर यो नबिर्स कि यो मेरो होइन र हामी यहाँ हरदिन रहन पाउन्नौं। यदि यो बिर्सेर एकाधिकार जमाउनेतर्फ लाग्छौ भने यस पौवामा बस्नाले तिमी डाँडा (दण्ड) को अधिकारी बन्दछौ। पौवा-साझा संसार-मा रहेर यदि पौवा नै आफ्नो पार्न कोशिस गरिन्छ भने डाँडा-दण्डा-सजाय मिल्छ। अतः यो पौवा डाँडा शब्द नै स्वामीज्यूले गरेका उपदेशको सारसंग्रह हो। यसरी शाब्दिक र भावनात्मक दुबै दृष्टिले ''पौवाडाँडा'' शब्द हाम्रा श्रद्धाको पात्र बनेको छ।

पहिले यो ठाउँ गल्कोट राज्यको बिहूँकोट मौजाको इडारेपानी पौवाडाँडा भनिए तापनि अहिले नेपाल राज्यको मध्य-पश्चिमाञ्चल क्षेत्र अन्तर्गत पर्ने धवलागिरि अञ्चलको बाग्लुङ् जिल्लाको बिहूँकोट गा०वि०स० अन्तर्गत वार्ड नं० ३ भनिन्छ। यस पौवाडाँडाबाट चारैतर्फ देखिन्छ। माथिका हिउँले भरिएका टाकुराहरू र तलको गण्डकीको तट दुबै एकसाथ देख्न पाइने यो ठाउँ बिहूँको बीचमा भएकाले धेरै सर्दी र गर्मीको बाधा नभएको समशीतोष्ण छ। स्वामीज्यूको प्रकृति पनि समशीतोष्ण अर्थात् न धेरै तातो न धेरै चिसो थियो।

'कारणको गुणले कार्यका गुणहरू पैदा गर्दछन्' भनी न्यायशास्त्रीले भनेको साँचै निस्क्यो; जस्तो ठाउँ थियो त्यस्तै स्वामीज्यूको आविर्भाव भयो।

स्वामीज्यू अत्यन्त सजिला र अत्यन्त कडा पनि हुनुहुन्थ्यो। अति सरल भएर पनि धर्म संस्कृतिको बार-बार नोक्सान गर्ने समाज र व्यक्तिप्रति कठिन भएको व्यवहार पनि देखाउनुहुन्थ्यो। श्रीरामका लागि महर्षिले पनि भन्नुभएको थियो **''कालाग्निसदृशः क्रोधे क्षमया पृथिवीसमः''** अर्थात् श्रीराम रिसाउँदा कालानल जस्ता एवं क्षमा गर्नुपर्दा सर्वसहा पृथ्वी बन्नुहुन्थ्यो। स्वामीज्यू पनि भगवान् झैं नै निर्विकार एवं एकरूप भएर पनि धर्ममा आस्था र अधर्ममा अरूचि बढ़ाउन धार्मिकको लागि अति सरल र अधार्मिकका लागि अति रुखा पनि देखिनुभयो।

स्वामीज्यूको जन्मस्थल पौवाडाँडा केही समथर र चारैतर्फ खुला भएकाले हवादार स्वास्थ्य-वर्धक र रमाइलो पनि छ। यहाँबाट लगभग छ कोश उत्तरमा पुलहाश्रम, गलेश्वरधाम पर्छ, जहाँको चक्रशिलाले सबैको मनोरथ पूरा गर्दछ, जहाँ राजर्षि भरत राज्य-सुखलाई लात मारी भगवद्‌भजनको परमानन्दमा निमग्न भएका थिए।

यो बिहूँ गाउँका दुबैतर्फ खोला रहेका र बीचको भाग ऊँचो भएको एवं दुबैतर्फका पाखा पाल्टे पर्दै खोलासम्म पुगेकाले आधा दिनसम्म एक भागमा सूर्यकिरणको विशेष प्रताप देखिन्छ भने त्यसपछि अर्को भागमा सूर्यकिरणको विशेष प्रताप देखिन्छ। अतः यहाँ पालै पालोसंग प्रतिदिन दुबै पाखा सूर्यका नजरमा पर्छन्। यसरी सूर्य माथि बसेकाले कुनै पनि भूभागका प्रति पक्षपातपूर्ण दृष्टि राख्न हुन्न भन्ने शिक्षा शासकवर्गलाई दिएको देखिन्थ्यो।

यहाँ सबै ऋतुहरू आनन्ददायी भएर आउँछन्। यहाँ बसन्तकै पालादेखि नै कालो-कालो मुखपारी बादलले आकाशमा वर-पर नचरी लगाउन थालेको हुन्छ। चैतबाट आकाशका आँखा रसाउन र पेट गडगडाउन थाल्दछ। यहाँका कान्ला र पाखाहरूले कँटिलो थकैलाका संगसंगै आफ्नो छातीमा कमलो प्याउली पनि फुलाउँछन्; साथै लालीगुराँसहरू यसै समयमा प्रकृतिदेवीको स्वागतका निम्ति आफू रक्ताम्मे हुन औधि रमाउँछन्। विविधतामय संसारमा सबै थरि मिलेर बस्नुपर्छ भन्ने शिक्षा यहाँको प्रकृतिले अहर्निश दिइरहेको पाइन्छ। यिनै कान्ला र पाखा वर्षा र शरद्‌मा भगवान् कृष्णका लालिमा लिएका ललित लावण्यमय ओठसंग दाँजिन कत्ति नडराउने रातै लटरम्म परेका बिम्बफल-गोलाकाँग्रीका झाङ्ले आफूलाई सिंगारी 'भएँ कि भैन' को भावमा गमक्क गम्किरहेका हुन्छन्। एकाएक पाएको विपुल समृद्धिले नफुर्कने को पो होला!

फेरि गर्मीको मौकामा यिनै पाखा पखेराहरू दुई थरी काँडेदार झ्याङ्हरूमा झुलेका पाक्दा काला र पहेंला हुने फलले गर्दा आफूतिर जनता आकर्षित गर्न सफल हुन्छन्। काँडासंग डराउनेले त्यो मीठो फल कहाँ पाउनु! इष्ट फल पाउनु छ भने दुःख कष्टको पर्वाह गर्नु हुन्छ त?

**आषाढस्य प्रथमदिवसे मेघमाश्लिष्टसानुम्** भनेर कालिदासले मेघदूतमा औंल्याएको समय यहाँ लुकेर पहिले नै आउँछ। कालीदासले असार एक गते बादल पहाडको टाकुरामा टाँस्सिएर बसेको लेखे भने यहाँ त जेठकै प्रारम्भदेखि नै बादलले जम्मै पहाड च्याम्मै ढाक्न थाल्दछ। यहाँका कृषकबालाले बादलको बाटो हेर्ने काम पनि चैतैदेखि थालिन्छ।





लेखाली भेग तिर त वैशाख-जेठ भित्रै ९० प्रतिशत खेती लगाउने काम सिद्धिएको हुन्छ॥ यहाँका खहरेको बैंस उर्लन पनि असार-साउन कुरिरहन पर्दैन। कुलाका बाँध फोरेर खेत बँझ्याउने विनामेसै सिंगौरी खेल्दै डुक्रेर सबैको सातो-पुत्लो लिने खहरेहरूको चकचकी स्थायी रहन भने पाउँदैन। हो, अकारण अरुको विध्वंस गर्नेहरू अल्पायु नै भएको ठीक हो।

वर्षामा यहाँका भ्याउँकिरीले खेतालाहरूलाई समयको सङ्केत गरेका हुन्छन्। उनले भनेको मानी सबैले काम छोड्दछन्। हो, जसको दिनचर्या नियमित हुन्छ त्यसको बचन कसैले काट्दैनन्। यहाँका वन पाखाहरू शहरियाहरूलाई डरलाग्दा भए पनि प्रकृति-प्रेमीहरूलाई रहर लाग्दा नै छन्। सधैं सबैलाई राम्रो लाग्ने वस्तु त संसारमा कहाँ होला र! यहाँका लेखाली डाँडाहरूले हेमन्त र शिशिरका चारोटा महिनाहरूमा बेला-बेला हिउँको सेतो मोटो पगरी गुत्ने गरेका हुन्छन्। हिउँद यहाँ हिमद (हिमं ददाति इति हिमद:)=हिउँ दिनेवाला नै हुन्छ। लेखतिरका रुखहरूले वर्षपिच्छेको हिमबाधा खसा-खसा दिक्क भई खोल्दै नखोल्ने झूलका कपडा लगाई गेरुवाधारी साधुको भेष लिन खोजिरहेको देखिन्छ। यहाँका नारीहरूको सतीत्व संझाउन यहाँ सतीपोखरा र सतीचौतारा बनेका छन्। घर-घर देवपूजा र भजनकीर्तन भएको हुन्छ। यतातिर सबै वर्ग र आश्रमका मानव आपसी प्रेम-भावका साथ दिन बिताउँछन्। यो स्थिति स्वामीज्यूका जन्मस्थलको हो।

यसबेला आजको वर्गवाद, जातिवाद र क्षेत्रवादको विषले वायुमण्डल दूषित बनाउन भ्याएको थिएन। प्रत्येक पेशामा रहेको जन-जीवन एक अर्काको सहयोगले मौलाएको थियो। यद्यपि राजनैतिक दृष्टिले राणा शासनको अन्तिमकाल थियो। तथापि यहाँको शान्त ग्रामीण-जीवनमा त्यसको खास केही असर थिएन। हर जाति, क्षेत्र, वर्ग, गाउँ, परिवार र घरले एक अर्कोलाई सहयोग गर्ने भएकाले सामाजिक समरसताको उत्कृष्ट उदाहरण थियो त्यस वेलाको बिहूँ। यद्यपि त्यसबेला आधुनिक विज्ञानद्वारा मिलेका सुविधाहरू बिहूँमा थिएनन् तथापि मानिसमा सन्तोष र शान्तिको अधिकता थियो विहूँ। जसको आज अत्यन्त कमी भइरहेछ। यस्तो सुरम्य बिहूँको अनुपम पौवाडाँडा स्वामीज्यूको आविर्भावले झन् महिमामय बन्न पुग्यो।

**भगवान् नारायणबाट महर्षि भरद्वाजसम्म—**

भगवान् शेषशायी नारायणको समस्त सृष्टिको आदिकन्दभूत नाभिबाट उत्पन्न भएका दिव्य-कमलमा चतुर्मुख ब्रह्माको आविर्भाव भयो। अपार शक्तिमान् भगवान् ब्रह्माले आफ्ना संकल्पमात्रबाट दश ऋषिहरूको उत्पत्ति गर्नुभयो। ती दशमध्येका अङ्गिरा महर्षिबाट देवगुरु बृहस्पतिको जन्म भयो। बृहस्पतिबाट भरद्वाज जन्मनु भयो। वेदका संहिता, ब्राह्मण, आरण्यक र उपनिषद् सबै तहमा सम्मान सहित यी महर्षिको उल्लेख छ। आदिकाव्य रामायणका रचयिता वाल्मीकिका शिष्यका रूपमा पनि भरद्वाजको उल्लेख भएको छ। प्रयागमा भरद्वाजको आश्रम भएको इतिहास र पुराण दुबैमा विस्तृत रूपमा वर्णित छ। आयुर्वेदको 'चरक संहिता' नामक ग्रन्थको आरम्भमा यस्तो वर्णन आएको छ—''जनताको शरीर र मनमा अनेक रोग देखी अत्यन्त चिन्तित भएका धेरै ऋषिहरूको सभा भयो। भरद्वाजको पनि त्यहाँ उपस्थिति थियो। छलफलपछि के निर्णय भयो भने—अब हामीले स्वर्गमा गई देवराज इन्द्रबाट आयुर्वेद ठीकसंग सिकी त्यस विद्याद्वारा जनताको रोग निवृत्ति गरौं। हामी मध्ये कोही वहाँ गई आयुर्विद्या सिकी यहाँ आई जनहित गर्ने व्यक्ति छानिनुपर्‍यो।'' यस्तो निर्णय सुनी दयालु, पुरुषार्थी र निर्भीक भरद्वाजले भन्नुभयो—''यो काम म गर्छु।'' सबैको सहर्ष स्वीकृति पाई महर्षिले इन्द्रबाट समस्त आयुर्वेद शास्त्र सिकी पृथ्वीमा आई त्यसको प्रचार गरी जनस्वास्थ्यको रक्षा गर्नुभयो। यस्तै गरी भरद्वाजका सम्बन्धमा धेरै किसिमका वर्णन पाइन्छन्। यस्ता अतुलनीय परोपकारी महर्षि भरद्वाजको वंश परम्परामा आज करोडौं मानव संसारमा छन्।



हाम्रो संस्कृतिले आफ्ना पूर्वजहरूलाई कहिल्यै पनि नबिर्सने शिक्षा दिएको छ। प्रत्येक धार्मिक काममा हामी आफ्ना नामका साथ आफ्ना आदिपूर्वपुरुषको नाम अवश्य जोड्दछौं। आदिपूर्वपुरुषको नामलाई नै गोत्र भनेर भनिन्छ।

## भरद्वाजदेखि स्वामी परमानन्दसम्म—

गोत्र चलाउने ऋषिहरू सृष्टिको आरम्भमा नै भए। त्यसपछि लाखौं वर्ष बिते। महर्षि भरद्वाजका वंशमा धेरै युगपछि श्रीधर भट्ट नामका विद्वान् ब्राह्मण पैदा भए। यिनी दक्षिणबाट नेपालको कर्णाली क्षेत्रमा आई त्यहाँका राजाका गुरु पुरोहित बने। राजाले सदाचारी उत्तम ब्राह्मण जानी 'काँडा' नामको गाउँ दान गरे। सपरिवार त्यहाँ रहनाले कँडेल थर बन्यो। अब भट्ट भन्न छाडेर स्थानीय थरको नै प्रचार बढ्दै गयो। यिनका सुपुत्र मुकुन्दका महादेव, मन्नाथ र केशव (केशु) नामका तीन भाइ छोराहरू भए। जेठा महादेव सपरिवार मुक्तिनाथको दर्शन गर्न गल्कोटको बाटो हिंडेका थिए। पिताबाटै वेद-वेदाङ्गमा पारङ्गत भएका महादेवको विद्वत्ताको ठाउँ-ठाउँमा कदर भएको थियो। एक दिन गल्कोट राज्यको राजधानी हरिचौरका दर्ममा मल्ल राजाको दरबारमा बस्न पुगे। उनको ज्ञान र गुणको महिमालाई बुझी राजाले केही दिन आफ्नै राज्यमा बस्न अनुरोध गरे। सम्पर्क बढ्दै जाँदा राजगुरुको पद मिलेकाले पण्डित महादेवले गल्कोट राज्यमै बसोबास गर्नुपर्ने स्थिति आयो। ज्योतिष र तन्त्र-मन्त्र विद्या समेतका विशेष दखल रहेकाले महादेवको कीर्ति चारै तर्फ छिट्टै फैलियो। गर्दागर्दै उनी त्यस राज्यका मुख्य र आवश्यक व्यक्ति बन्न पुगे। पछि गल्कोटे राजाले बिहूँ गाउँ बिर्ता दिएकाले सपरिवार बिहूँ आई बस्न थाले। उनका दुई श्रीमतीहरूबाट भएका नौ भाइहरू मध्ये कान्छीपट्टिका कान्छा ब्रह्मदेवका कलाधर (कलै) र कामदेव दुई छोरा भए। यिनै कलाधरका वंशमा स्वामीज्यूको आविर्भाव भयो। कलाधरबाट देवपति भए जसका काशीराम र भागीरथ दुई छोरा भए। काशीरामबाट पनि कृष्णानन्द र तुलाराम दुई छोरा जन्मिए। कृष्णानन्दबाट नारायण जन्मिए। उनबाट श्रीहर्ष र कुलपति नामका दुई प्रतापी छोरा जन्मे। श्रीहर्षका हरिशङ्कर, खडानन्द, जयभद्र, हरिलाल, महावीर र वीर नामका छ भाइ छोरा जन्मे। हरिशङ्कर पनि ठूला यशस्वी थिए। उनका पृथ्वीप्रसाद, मुक्तिराम, भीमलाल, मणिराम र देवीलाल नामका ५ भाइ छोरा भए। मणिरामको पौवाडाँडा भन्ने ठाउँमा बसोबास भयो। वहाँकी धर्मपत्नीको नाम गौरी देवी थियो। मणिरामबाट दुई छोरा जेठा टीकाराम र कान्छा हरिलाल जन्मे। टीकारामको जन्म वि०सं० १९४६ सालको फागुनमा भएको थियो। टीकारामज्यू पनि पिताकै समयको घर डाँडामा नै रहनुहुन्थ्यो। वहाँका तीन विवाह भए जेठी गोमाबाट कुनै सन्तान भएनन्। बागलुङ्कै दमेक तल्लाथोकमा गई श्रीटीकारामले सं० १९६२ साल साउन ६ गते रविवारमा श्रीपराशर सापकोटाकी मत्स्यरूपा पत्नीमा जन्मने 'अदिति' नामकी कन्यासंग दोस्रो विवाह गर्नुभयो। तेस्री पत्नीको नाम रेवती थियो। यी अदिति र रेवती दुबैपट्टि ६-६ भाइ छोरा भए। अदितिकी छोरी एक र रेवतीका छोरी दुई हुन्। अदितिका कोखबाट १९९४ सालको असोज १८ गते रविवार पितृविसर्जन औंसीको दिन सायं ५:३० बजे गोधूली साँझमा टीकाराम र अदितिका तृतीय पुत्र-रत्नका रूपमा स्वामीज्यूको आविर्भाव भयो।

## माता अदितिको सफल स्वप्न—

माता अदिति र पिता टीकाराम दुबै अत्यन्त सरल स्वभाव भएका देव-पितृ र अतिथिभक्त दम्पती हुनुहुन्थ्यो। माता अदितिले आर्थिक स्थिति साधारण रहँदा पनि अत्यन्त कुशलता साथ त्यति ठूलो परिवारको सञ्चालन गर्नुभएको थियो। ठूलो परिवारमा पनि कुनै किसिमको वैमनस्य आउन नदिई प्रेमपूर्वक घर-परिवार चलाउन सक्नु घरिना महिलाको ठूलो पुरुषार्थ हो। तीर्थ-व्रत, दान-पुण्य आदि सत्कर्ममा सधैं रुचि राख्ने आमा अदितिलाई वि०सं० १९९३ सालको भदौमा





''गलेश्वर तीर्थ गर्न जाऊ'' भनी स्वप्न भयो। त्यो स्वप्न पतिलाई सुनाएपछि दुबै दम्पत्तिको त्यसै वर्षको मंसीरको बालाचतुर्दशीका दिन शत-बीउ छर्ने गरी इष्ट-मित्र सहित गलेश्वर यात्रा भयो। पुलाहाश्रम गलेश्वर धाममा शत-बीउ छरी रहुघाट नुहाई, गलेश्वर शिवको विधिपूर्वक पूजा गरी बास बसेको राति आमा अदितिले फेरि शिवको दर्शन पाई वहाँको शिरका चन्द्रको प्रकाश पाएको स्वप्न देख्नुभएछ। यस घटनाको ठीक नौ महिनापछि असोज १८ गते स्वामीज्यूको जन्म भयो। शिवाराधनाको फलस्वरूप वहाँको जन्म भएको कुरा स्वप्नबाट अवगत हुन्छ। श्रद्धाभक्तिपूर्वक गरिएको ईश्वरभक्ति तत्काल फलदायक हुन्छ भन्ने कुरामा कसैले सन्देह मान्नुपर्दैन।

## स्वामीज्यूका अवतारको बेला—

असौजको महिना, आकाशका छेउ-छाउमा हल्का सेतो बादल छिट-फुट टाँसिएका, सूर्यका किरण खोला-खाली छाडी माथि-माथि डाँडा-डाँडामा मात्र लागिरहेका, झ्याउँकिरीले झ्याली बजाइरहेका, बाँस घारीहरूमा टाढा-टाढाबाट चराहरू बास बस्न आउँदा विवाहघर जस्तो होहल्ला समेतको रमाइलो भइरहेको, हिमालयका सेता टाकुरीहरूका सिउँदामा सन्ध्याकालीन सूर्यले आफ्ना राता किरणद्वारा सिंदूर छरिरहेका, गाई चराउँदै, मुरली बजाउँदै वन विहार गर्ने श्रीकृष्णको पुन: प्रकट हुन थालेकोले नै होला वनतिरबाट घर फर्कने गाईको बथान आज झन् छिटै-दौडिरहेको, गाईका खुरका आघातले उडेको गोधूलीको धुलोलाई सूर्यका राता किरणद्वारा अबिर बनाइमागेर वायुदेवताले बाटा-बाटै छरिरहेका, साँझपखको सिर्सिरे बतासले 'अहिले नवर्षाएका फूल कहिलेलाई' भन्दै पुष्पवती लताशाखाहरूलाई हात-हातमा समाई तान्दै जगाउँदै फूल बर्साउन प्रेरणा गरिरहेको, वारी-पारीका छहराहरूमा मोटो र मैलोपन हटी सेतो सुथरोपन बढिरहेको, साना-ठूला खेतवारीका गरा-पाटा र फोहोटाहरूमा धान-कोदोका गहकिला बाला ढिक-ढिकबाट कान्ला-कान्ला झुल्दै मस्ती मनाइरहेका, भट्टबारीमा हल्का, पहेंलो कपडा पहिरेका पाकेका भट्टका झुप्पाहरूले शिरका पातको कपड़ा हटाई पीताम्बरधारी, टोपी नलगाएका भक्तजनको भेष लिई पाटा-पाटामा लाइन लगाई कुनै महापुरुषको स्वागत गर्न तैयार भएको आभास दिइरहेका।

औंसीका साथ रविवार अँध्यारोमा उज्यालोको प्रतीक थियो। वेद-वेदाङ्गको पढ़ाई सद्धर्मको अनुष्ठान आदिबाट हुने उज्यालो हराइसकेको अज्ञान अवस्थाको अँध्यारो रात्रीमा ज्ञान-रविको उज्वल छवि आइरहेको सङ्केत गर्न नै आज औंशीका दिन रविवार परेको थियो। पितृपक्षको अमावस्या रहेकाले नै आज जन्मने शिशुले आगामी वंश-विस्तार तर्फ नलागी भूत-प्रेत आदि विविध योनिमा घुमिरहेका पितृहरूको संसारबाट विसर्जन-मुक्ति गर्ने काममा लाग्नुभयो। पितृपक्षको औंसी पर्नुको यही तात्पर्य हो।

भोलिदेखि वर्षे दशैंको दुर्गापूजा थालिनु छ, त्यसको ठीक पूर्वदिनमा स्वामीज्यूको आविर्भावको पनि विशेष रहस्य बुझिन्छ। केही कालदेखि अज्ञानवश दशैं अनाथ पशुपंक्षीको लागि दशै भएको थियो। जगन्माता भगवतीलाई खुशी पार्न वहाँका अत्यन्त प्यारा पशु-पक्षीहरूको बलि दिने कुप्रथा चलेको थियो। स्वामीज्यूले यस कु-प्रथालाई पन्छाउन पूर्ण प्रयास गर्नुभयो। धर्मको रूप धारण गरिसकेका यस कुप्रथाले निकै गहिराईसम्म जरा गाडिसकेकाले यसलाई उखेली फ्याँक्न निकै सङ्घर्ष गर्नुपऱ्यो। पुग्न सकेको ठाउँमा वहाँका अहिंसावादको निकै प्रभाव पऱ्यो। वहाँका आविर्भावको मुख्य प्रयोजनमध्ये प्राणीहिंसा निवारण पनि पर्दछ। दशैंको पक्ष लाग्नुभन्दा पूर्वदिनको प्राकट्यले दशैं आदि पवित्र अवसरमा प्राणीहत्या जस्तो अपवित्र कार्य गर्न हुन्न भन्ने शिक्षा-प्रदान गर्न चाहेको छ। पितृ-विसर्जन औंसीको जन्मले संन्यास आश्रम प्रवेश गरी देवपितृकर्मको विसर्जन-त्याग गर्ने सङ्केत पनि दिएको छ।

भगवान् सूर्यले झुलेनीको धुरीबाट पौवाडाँडा का ठूला पाटामा भट्ट काट्न कस्सिएकी ३२ वर्षे आसन्नप्रसवा महिलाको चाल चलन देखेर त्यसै राता भएका थिए, कम-से-कम यस्ता महापुरुषको स्वागतमा केही छिन त बिसाउन पर्छ भन्ने सूर्यदेवको भाव थियो होला! जेहोस्, राता भएर झुलेनीको धुरीमा उभिएर केही न केही त भनेकै थिए सूर्य नारायणले। के भने उनै जानून्, मेरा वंशमा जन्मने श्रीरामका भक्तको अवतार हुन लागेको कसैले थाहा नपाउँदा रिसाएर राता भएका हुन् कि! प्रसवकालको पनि ख्याल नराख्ने आमा अदितिसंग रिसाएका हुन् कि! आफ्नी आमा पनि अदिति नै भएकी हुनाले आमाकै झल्काले अनुरागले राता मुख लगाएका पनि हुन सक्छन्।

यता महापुरुषका आविर्भावको बेला आयो, सारा प्रकृतिले स्वागत गरेको अनुभव भइरहेको थियो। आधुनिक घडीहरूले पाँचको संख्या काटेर छ संख्याको आधासम्मको यात्रा गरिसकेका थिए। चन्द्र र सूर्य आज साथ-साथै अस्ताउने सल्लाह गरेका थिए। महापुरुषका संसर्गले सधैं अलग-अलग बाटोमा हिंड्ने पनि एकै बाटोमा लाग्ने गर्छन्। यसैले औंसीको अर्को नाम ''सूर्येन्दुसङ्गम'' पनि हो। अकस्मात् आएको साधारण पीडाले नै सुन्दर बालकको भट्टबारी का घाँस-पात माथि प्राकट्य भयो। खुला आकाश मनि एकाएक जन्मेको शिशु देखेर आमालाई सपना र विपनाको सन्देह भयो। यता-उता हेर्दा पनि कोही देखिएन। स्वयं सुन्दर शिशुलाई काखमा च्यापी घरको पिंढीमा गएर बस्नुभयो। घरकाले थाहा पाएपछि वर-पर खबर भयो। सबै छिमेकी महिला आश्चर्यसाथ धमाधम आए। शिशुको सुन्दरता र आविर्भावको आकस्मिकताले सबैलाई दङ्ग पाऱ्यो।

दुई छोरा पछि जन्मिए तापनि यस उज्वल अनुपम तेजस्वी शिशुको अनुहार देखेर माता-पिताका हृदयले प्रथम-पुत्रदर्शन भन्दा पनि कति-कति गुना अधिक आनन्दको अनुभव गरिरहेको थियो। नजाने किन हो हेर्न आउनेहरूको मन पनि आज निकै प्रसन्न थियो। यो दिव्य प्रसन्नता कहाँबाट किन कसरी आयो यसको थाहा कसैलाई भएन। आज यस्ता महापुरुषको अवतार भएको थियो जसद्वारा लाखौं-लाख जीवहरूका अज्ञात-अन्धकारले बिदा पाउने छ, जसका अपार करुणा-स्रोतस्विनीका अविरल प्रवाहमा न केवल मानव अपितु पशु-पक्षी समेतको प्राणी-जगत् पर्नेछ। अज्ञान र अभावले युगौंदेखि पिल्सिएका लाखौं जनताले जसबाट ज्ञानको प्रकाश भेट्टाएर आत्मोन्नतिका मार्गमा अग्रसर बन्नेछन्।

अत: आज समस्त प्रकृति नै प्रफुल्ल थियो। न केवल कण्डेलवंशका दुर्मरणादिद्वारा अपगतिमा परेका पितृहरूका उद्धारको मौका आएको थियो अपितु यी महापुरुषद्वारा कुल्चिएका हरेक घर-गाउँका व्यक्तिहरूका पुस्तौं पुस्तादेखिका पितृहरूका उद्धारको सुअवसर आएको थियो। अनेक ठाउँमा देव-देवीका नाममा गरिने बलिप्रथाले यस भेगबाट गौरवहीन भएर पर सर्नु थियो र नै पौवाडाँडामा आज यस शिशुको जन्म भएको थियो।

आज वेद, उपवेद, वेदाङ्ग र दर्शन शास्त्रहरू हर्षसागरमा डुबेका थिए। बीचमा धेरै दिनदेखि उपेक्षा भइरहेको बेलामा आफ्नो रक्षार्थ ईश्वरांशबाट महापुरुषको प्राकट्य भएकोले सबै प्रसन्न हुनु स्वाभाविकै थियो, तर अधर्म र उसकी छोरी हिंसा भने निकै चिन्तामा परेका थिए। कलियुगमा हाम्रो एकछत्र राज्य रहनुपर्नेमा आज यस शिशुका कारणले हाम्रो अखण्ड साम्राज्यमा विघ्न-बाधा आउने भए भनी उनीहरू आत्तिइरहेका थिए।

आज गण्डकी नदी धेरै उर्लेकी थिइन् किनकि-गण्डकीनन्दन शालग्रामको देवत्व प्रतिष्ठापन गरी शालग्राम पूजाको महत्त्व गाउने महापुरुषले यही नजिकै शिशुरूपमा आज दर्शन दिइरहेको थियो। भगवती गुह्यकाली र भगवान् पशुपतिनाथ

पनि आज सारै प्रसन्न हुनुभएको थियो, किनभने मूर्तिपूजाको महत्त्व बताई जनतामा आस्तिकता बढाउने महापुरुष आज थाङ्नाको विस्तरामा सुतिरहेको थियो।

मध्यपश्चिमाञ्चलकी यी समग्र पर्वतीय धारालाई यिनै महापुरुषका आगामी चरणस्पर्शका कल्पनाले आजैदेखि रोमाञ्चको अनुभव भइरहेको थियो।

यी दिव्य शिशुका अन्य शिशुमा भन्दा फरक लक्षणहरू थिए। माताको स्तनमा दूध सकिनु भन्दा केही पूर्व नै दूध चुस्न छाड्नु, पर्याप्त रुने कारण हुँदाहुँदै पनि पटक्कै नरुनु, कदाचित् अति विशेष कारणले रुँदा पनि भगवान्का नाम सुनाइदिएमा तुरन्त शान्त हुनु, शान्त निश्चल मुद्रामा जागेर पनि पल्टी राख्नु आदि विचित्र लक्षण थिए। यी लक्षण देखी यी बालकको भविष्य अनुमान गर्न सकिन्थ्यो। पौवाडाँडा भनिने ठाउँका निवासले पितामह श्री मणिरामका पालादेखि नै यस परिवारलाई डाँडाका या ''डाँडे'' भन्ने उपनाम मिलेको थियो। क्रमशः नवजात शिशुलाई पनि डाँडेका छोरा भन्दाभन्दै डाँडे महात्मा या 'डाँडे प्रभु' भन्ने नाम मिल्दै गएको हो। यो निवासस्थलकृत पारिवारिक नाम पनि यस नवज्योतिको सन्दर्भमा त अतिं नै सार्थक र उपयुक्त पनि देखियो। स्वामीज्यूका जीवनमा हरेक क्षण डाँडामा नै बिते। डाँडाहरू नै वहाँका जीवनसाथी बने। वास्तवमा भनौं भने वहाँ समुद्री सतहदेखि धेरै उचाईमा सं. १९९४ मा प्रकट भई क्रमशः उन्नतिको डाँडातिर चढ्दा चढ्दा २०५३ को माघ १८ सम्म छ दशकको अखण्ड पर्वतारोहण यात्राले सगरमाथाको सर्वोच्च शिखरमा पुग्नुभयो। जनताले ख्यालख्यालैमा जुन 'डाँडे' नाम दिएका थिए त्यसलाई सार्थक पार्न नै आजीवन प्रयासरत रहनुभयो। यी डाँडेद्वारा अति खाल्टामा परेर माथि आउन नसकेकाहरूलाई डाँडातिर तानियो। अति नीलो गहीरो भवसागरको महागर्तमा परी निसासिएका, अत्तालिएका आत्माहरूलाई बाहिर निकाली माथितिर पठाइयो। डाँडे त डाँडे यस्तो पो डाँडे!

स्वामीज्यूको बालक उमेर इनारेपानीको पौवाडाँडामा बाललीला गरेर किशोर र यौवनको उमेर मिहिले घइडाँडा र सिरुवारीको डाँडाकटेरीमा गोसेवा, भजनकीर्तन र वंशीवादन गरेर मानिसलाई पतनका पराकाष्ठासम्म धकेल्न बल गर्ने मध्य यौवनका क्षणहरू म्यादी मुसुङ्का नाकेडाँडामा ब्रह्मनिष्ठ लामिछाने साधुको सेवा गर्दै कठिन तपश्चर्यासाथ वेदान्त अध्ययन गरेर बित्यो भने त्यसपछि त झन् डाँडे ब्रह्मचारीलाई डाँडै डाँडाको बास लेख्यो। सोलीघोप्टे, झुलेनी, हीले दिब्रुङ, शिवेधुरी, तीनचुले रामकोट आदि सबै डाँडै त हुन्। डाँडा-डाँडा चाहरी भीर कान्ला, गुफा कन्दराहरू डुल्दै आत्माज्योतिको अन्वेषण गरी त्यसै आलोकमा सबै जनताको अज्ञानान्धकारको अपहरण गर्ने महात्मा डाँडे नभएर को डाँडे हुने त? तर यसरी स्वयं पक्का डाँडे भएर पनि यी महात्माका उपदेशका विषय र शैली अत्यन्त गहिरा, तलस्पर्शी हुँदै गए। यसप्रकार यी नवजात शिशु एकसाथ डाँडे र गैरे दुबै बन्दै जानुभयो। धन्य भए ती बिहूँका भीर कान्ला, चौतारा, बाटा, पाखा पखेराहरू! जहाँजहाँ खेती या गोचरण गर्दा यस ईश्वरीय ज्योतिलाई आमाबाबु या दाजु आदिले हातमा समाई ताते गराइयो।

श्रीरामलाई महर्षि वाल्मीकिले ''**बाल्यात् प्रभृति सुस्निग्धाः**'' अर्थात् 'सानैबाट अत्यन्त मधुर स्वभाव भएका' भने झैं नै रामभक्त स्वामीज्यू पनि सानै उमेरदेखि मिजासी, सरल, मीठो बोल्ने रिसाएकालाई पनि खुशी पार्ने, बन्दै जानुभयो। क्रमशः छरछिमेकमा यथोचित प्रेम, मातापिता र मान्यजनमा श्रद्धाआदि आदर्श गुणहरूको विकास हुँदै गयो। घर र छिमेकमा पनि बेलाबेलामा सत्यनारायण पूजा, रुद्री, कार्तिक आदि महिना र एकादशी माहात्म्य, ससाह र नवाहहरू तिथिबारका व्रत, उद्यापनहरू र यी अवसरमा भजनकीर्तन समेत भइरहने गर्दथे। यी धार्मिक अवसरमा बालक



स्वामीजीको भावपूर्ण उपस्थिति हुनथाल्यो। प्रत्येक धार्मिक आजापूजामा ध्यान दिएर हेर्ने र स्वयं सिक्न चाहने प्रवृत्तिहरू बढ्दै गए। परमानन्दको यो हालचाल देखी धर्मप्रेमी मातापिता परमानन्दमय बन्दै गए। कृष्णलाई झैं नै बालसमाजले अगुवा बनाउन थाल्यो। पुराणकथामा सुनेका कुरा जंस्ताको तस्तै आफ्ना साथीहरूलाई सुनाउन लाग्नुभयो। अब खेल पनि पूजापाठका हुन थाले। स्वामीज्यूलाई अग्लो ठाउँमा पण्डित बनाई बसाल्न थालियो। अरू केटाकेटी यजमानको भेष लिएर पूजा गर्न थाले। गाउँका फलफूल प्रसाद बने, अन्तिममा जयजयकार पनि भयो। अब छिमेकमा मात्र नभएर टाढाटाढा पनि परमानन्दका चर्चा चले। आए, भेटे, परमानन्द हेरे, परमानन्द पाए, गए। यस्तै घटनाहरू धेरै भइरहे।

समयका पाना पल्टँदै गए। परमानन्दका गाउँमा 'परमानन्द' नै भयो। समय बितेको होसै भएन। घर-छिमेकमा आउने पाहुना, किनबेचमा आएका व्यापारी, नालनाता, गुरु, पुरोहित आदिले यी बालकलाई भेटेर नै जाने गर्दथे। महर्षिले रामायणमा भन्नु भएको छ :—जसले रामलाई देख्न पाउँदैनथ्यो र रामको पनि जसमा दृष्टि पर्दैनथ्यो त्यस व्यक्तिका आत्माले आफैंलाई धिक्कार्दथ्यो।[१]

## पौवाडाँडामा डमरुधारी—

२००१ सालको माघे संक्रान्ति थियो। पौवाडाँडामा स्वामीज्यूको बाललीला चलिरहेको थियो। अहिलेसम्म अक्षरारम्भ पनि भएको थिएन। कहीं नजीक सार्वजनिक पढ्ने-पढ़ाउने व्यवस्था थिएन। टाढै गुरुको घरमा लगेर पढाउने व्यवस्था गर्न पनि टीकारामज्यूले सक्नुभएको थिएन। अतः स्वामीज्यूलाई पनि पढ्ने अवसर मिलेन। ''खाने मुखलाई जुँघाले छेक्दैन'' भनेको साच्चैं हो, बाबु-आमाले अक्षरसम्म पनि चिन्ने व्यवस्था मिलाउन नभ्याएका बालकले ठूला-ठूला षट्शास्त्री विद्वान्हरूका पनि माननीय गुरुमहाराज बन्ने अवसर पाउलान् भन्ने कसैलाई आभास पनि थिएन। टीकारामज्यूको मन यस दिव्य बालकको दर्शन गर्दा घरी-घरी खिन्न हुन्थ्यो।

''मेरो शक्ति छैन, फुर्सद पनि छैन,यस मेरा मुटुका धड्कनलाई पढाउने अवसर छैन। यस्तो दिमाक छ, यसको। पढाइदिन पाए यो पण्डित, ज्योतिषी, डिठ्ठा, हाकिम के के हुन्थ्यो। सबैको गुरु पो बन्थ्यो कि! 'जे गर्छन् ईश्वरले नै गरून्।' गलेश्वर महादेव र गण्डकी आमाको प्रसाद हो। यसलाई जे बनाउनुपर्छ उनैले बनाऊन्; बिहान-बेलुका सुखा-रूखाले पेट भरिदिन र नाङ्गो नराख्न मात्र पाए हुन्थ्यो'', बुवाका मन भित्र-भित्रै गुनुनाउँथ्यो।

सातबाट आठमा पाइला मात्र के टेक्नु भएको थियो, स्वामीज्यूमा एकान्तमा बसेर घोरिने, भजन-कीर्तनमा थाहा पाएसम्म वर-परसम्म पनि जाने, पाका-पुरानासंग बसेर भजन गाउने, कल-झगडा नगर्ने, जेपाई जहाँ-तहाँ जसतसले दिएको नखाने, भोकले नआत्तिने, राम्रो अर्ति तुरुन्त टिप्ने, कसैको केही नछुने, दिउँसो नसुत्ने, बिहानै उठ्ने, भनेको काममा अल्छी नमान्ने, जे दिए पनि झगडा नगरी मीठो मुखले खाने, नपुगे पनि अघाएकै ढङ्गले उठी अर्को खाने बेलासम्म नआत्तिई पर्खने, यस्तै यस्ता शीलहरू दिन गनेर बढिरहेका थिए।

यो सबै देखेर आमाका कमलो मनले भन्थ्यो—'यो लाटो हुने भयो।' यसलाई न खानको चिन्ता छ न रिस-राग, यो त दाजु-भाइसंग लुछा-लुछको उमेर हो, अहिलेसम्म आफ्ना पेटको पनि यसलाई ख्याल छैन, कस्तो हुने होला, यसले कसरी जिन्दगी बिताउला! महादेव! 'तिम्रो वरदान हो' रक्षा गर! म अज्ञानी अबलाले के गर्न सक्छु र! तर,

*(१) यश्च रामं न पश्येत्तु यं च रामो न पश्यति।*
*निन्दितः सर्वलोकेषु स्वात्माप्येनं विगर्हते। (वाल्मीकि. अयोध्या काण्ड १७.१४)*





आफूले खान पनि नजान्ने यस लाटाले एकै साथ पाँच-सात हज्जारको हुललाई उत्तम भोज खुवाएर मात्र पानी अचाउला भन्ने कुरा बिचरी आमाले त्यतिखेर के जान्नु; ईश्वर र योगी बाहेक कसैले जानेनन्; पछि लाटो ठानिएका महापुरुषको पराक्रम सबैले देखे।

त्यसदिन सबैले तरुलको तरकारी, घीउ-खिर्चो खाजा खाने बेलामा खाएका थिए। सर्वसम्मतिले बेलुका केही नपकाउने निधो भएको थियो। माघको जाडो, सबै बेलैमा सुते, निदाए। माता-पिताको प्रार्थना सुनेर हो कि! किन हो? आज महादेवले यस पवित्र बालकलाई आफूतिर आकर्षित गर्ने मनसाय लिनुभएछ। लगभग बेलुकाको नौ बजेको थियो। चारैतिर अँध्याराको साम्राज्य फैलिएको, केही झकाएको बेला, स्वामीज्यूलाई महादेवको दर्शन भएछ। दाहिने हातमा त्रिशूल, बायाँमा डमरु, कमलको फूलमा विराजमान, पाँच-मुख, तीन आँखा, शिरमा चन्द्ररेखा, उज्ज्वल शान्त स्वरूप, गोरो वर्ण यस्ता सुललित लावण्यमय अलौकिक सुषमामय दिव्य रूपको दर्शन पाएर, भविष्णु भाग्यशाली बालकले आत्म-विभोर बनी एक-टक नजरले त्यसै मूर्तितर्फ हेरी नै रहनुभएछ। महिमामय श्रीविग्रहका अद्‌भूत दर्शनले स्वामी परमानन्दज्यू वास्तवमा परमानन्दमय नै बन्नुभएछ।

स्वामीज्यूले आफ्नो बाल्य-कालको स्वप्न सम्झेर भन्दा निम्नलिखित शास्त्रीय श्लोक अनुसार नै भगवान् महादेवको दर्शन पाएको बुझिन्छ—

शान्तं पद्मासनस्थं शशिधरमुकुटं पञ्चवक्त्रं त्रिनेत्रम्।
शूलं वज्रञ्च खड्‌गं परशुमभयदं दक्षिणाङ्गैर्वहन्तम्॥
नागं पाशञ्च घण्टां डमरुकसहितं सांकुशं वामभागे।
नानालङ्कारदीप्तं स्फटिकमणिनिभं पार्वतीशं नमामि॥

आज स्वामीज्यूले वास्तविक शक्ति-केन्द्र (पावर हाऊस) फेला पार्नुभएको थियो। परमात्मले त्यस शुद्ध आत्मालाई चुम्बकले फलामलाई झैं अनायास आफैंतर्फ तानिरहेको थियो। यहाँ स्वजातीय आकर्षणको वैज्ञानिक-प्रक्रिया लागू भएको थियो। बिम्बले आफ्नो प्रतिबिम्बलाई आत्मसात् गर्ने तर्खरमा थियो। प्रतिबिम्ब पनि बिम्बी भावको कल्पना-तरङ्गमा रुमलिइरहेको थियो। अद्भुत थियो त्यो भक्त र भगवान्‌का प्रेममय मिलनको शुभ-घड़ी। उच्चतम भक्ति-भागीरथीका अविरल प्रवाहको बीच हेर्दा-हेर्दै कहीं द्रष्टा र दृश्य नै हटाई दृग्भावमात्र पो शेष रहने हो कि! जस्तो पनि भइरहेको थियो। जे होस्, त्यो त्यस्तै अवर्णनीय अवस्था-विशेष थियो।

*'जब मैं था तो हरि नहीं, अब हरि हैं मैं नहीं।*
*प्रेम गली अति सांकरी, ता में दो न समाय।'*

भने झैं प्रेमको अधिकताले पनि भेद-भावशून्य अवस्था अथवा अद्वैत अवस्थामा पुऱ्याउने गरेका उदाहरण धेरै छन्। त्यस आनन्दमय सुधा-सिन्धुमा चुर्लुम्म डुबेर परम-प्रेमास्पद प्रियतमलाई स्वात्मरूपमा नै अनुभव गर्दै तन्मय भएको स्वर्णिम-अवसर धेरै समयतक स्थिर रहन सकेन। अझै अरु पाँच दशकतक यस धराधामलाई गुल्जार गरी अनि मात्र सायुज्य प्राप्त हुनु थियो, जाने समय आएको थिएन। स्वामीज्यू त्यस समाधिकल्प अर्धनिद्रित आनन्दमय अवस्थाबाट ब्यूँझिनुभयो।

यसरी परम-प्रेमास्पद परमेश्वरको दिव्य मङ्गलमय श्रीविग्रहको दिव्य-दर्शन त ओझेल भयो तर त्यहाँका तेज:पुञ्जको यता सङ्क्रमण भने अवश्य भयो। अब त झन् विचारशीलता, मित-भाषिता, एकान्त-प्रियता, सर्वानुकूलता, आदि योगमार्गोचित गुणहरूको विकास हुँदै गयो। बालकको आकृतिमा तेज, स्वभावमा कोमलता, व्यवहारमा सौम्यता,



दृष्टिमा ऋजुता, भोजनमा अल्पता आदि सुगुणहरू दिनानुदिन फष्टाउन थाले। घर-घर चर्चा बढ्दै गयो। मातपिता र कुल-खानदानलाई पनि धन्यवाद दिनेहरूको धुइरो लाग्न थाल्यो। गुण-गाउनेहरूको घुइँचो बढ्नथाल्यो। बालकका निश्छल तोते बोलीबाट शिव-दर्शन वर्णन सुन्दा सबैका आँखा रसाए। के पत्याउनु के नपत्याउनु, घटना सुन्नेहरू अन्योलमा परे। धेरैले पत्याए, धेरैले पत्याएनन्।

जे होस्, घटना चाहीं सत्य थियो। यसै दिन परमात्मा शिव यी बालकमा आफ्ना परम-शक्तिको आधान गर्न यहाँ आउनुभएको थियो।

यसरी शिवशक्ति प्राप्त गरी महिमामय महात्माका शैशव जीवनका स्वर्णिम क्षणहरू अघि-अघि लमकिंदै गए।

यो हो दुई हजार एक सालको समय अर्थात् स्वामीज्यूका जीवनको आठौं वर्ष।

शताब्दीले काँचुली फेरिसकेको थियो, विश्वभरि नै राजनैतिक र सामाजिक व्यवस्थामा पनि द्रुतगतिले परिवर्तन आइरहेको थियो, नेपालका पनि १०४ वर्षको आयु लिएर आएको राणाशासनले एक शताब्दी पूरा गर्न थालेको थियो। धार्मिक आस्थामा झन्-झन् कुठाराघात हुँदै जाने वातावरण बन्दै गएको थियो। सनातन धर्म सनातन ईश्वरद्वारा नै रक्षित र सञ्चालित हुन्छ। परमात्माकै इच्छाले सनातन मर्यादाको रक्षाका निम्ति अवतरित ईश्वरीय शक्तिलाई नै पौवाडाँडाका निवासी श्रीटीकारामज्यूले परमानन्द नाम राख्नुभएको थियो। यो को थियो? यो कुरा उसै पठाउनेलाई थाहा छ, तर यसद्वारा यहाँ के कति काम कुन-कुन तरिकासंग भए, यसको उल्लेख यथासम्भव यहाँ गर्नेछौं।

### रमाइला बालक: शिरबारीको शिखरमा—

विशेष रूपले एघार वर्षको उमेरदेखि बिहूँलेभन्दा मेहेले शिरबारीको शीतल-शान्त-एकान्त शिखरका नैसर्गिकताले यी प्रकृति-शिशुलाई रुचाउन थाल्यो। गिरि-शिखरमा नै अधिकतर जीवन बिताउनु थियो। यतै तपस्याको सिद्धि-प्राप्त हुनु थियो। ज-जसलाई जे-जस्तो परिवेश दिई जे-जे बनाउन पर्ने हो त्यो ईश नियन्त्रित प्रकृति-माता स्वयं बनाउँदै जान्छिन्, मेसो मिल्दै जान्छ, बाटो सोझिंदै जान्छ। यस किशोर वयमा नै स्वामीज्यू उकालो लाग्नुभयो। उकालो लाग्नेहरू सानैबाट उकालो लाग्छन्; दाह्री-जुँगा पर्खन्नन्। दाह्री जुँगाका साथमा माथि चढ्नै नसकिने स्थिति पनि सिर्जित भइसकेको हुनसक्छ। फेरि त तलको तलै झन्-झन् गढेको गढ्यै। श्रीकृष्ण पनि गीतामा भन्नुहुन्छ—**ऊर्ध्वं गच्छन्ति सत्त्वस्था:** अर्थात् सात्त्विक मनोवृत्ति हुनेहरू उँभो नै लाग्दछन्। सत्त्वगुणी स्वामीज्यू पनि उँभो नै लाग्नुभयो शिरवारीतिर।

हाम्रो संस्कृतिमा गिरि-शिखरको ठूलो महत्त्व छ, विना मेसै साधु सन्तहरू धुरीमा बस्दैनन्। सारा ज्ञान-विज्ञानको मूल यिनै पर्वत शिखरहरूबाट फुट्ने गर्छ। बच्चाको जीवनाधार दूधपनि उच्च स्तनबाट नै बर्सिन्छ। भगवत्पत्नी पृथ्वी माताका स्तन (छाती) यिनै उच्च पर्वतहरू हुन्। यी स्तनरूप पर्वतका चुचुरा पृथ्वी-माताका चूचूक (स्तनका अग्रभाग) हुन्। यहाँबाट नै अमृतको मूल फुट्दछ। यसरी भौतिक र आध्यात्मिक दुबैथरि जीवनलाई जिलाउने अविरल अमृत-धारा उच्चस्थलबाट नै झर्ने गर्दछन्। ठूला-ठूला महर्षिहरूले आ-आफ्ना ज्ञानगंगाको प्रवाह उच्च-पर्वत शिखरहरूका अनुपम रहस्यमय कन्दराहरूबाट नै प्रवाहित गरेका छन्। भगवान् नारायणले गुरु र शिष्य नर र नारायण ऋषि बनी यस्तै बदरिकाश्रम पहाड़बाट तपस्या र संयमको गंगा बगाउनुभएको थियो। भगवान् शिवले माता पार्वतीलाई रामायण सहित समस्त शास्त्रको उपदेश यिनै शिखरमा रही प्रदान गर्नु भयो। महर्षिहरूको ऋतम्भरा प्रज्ञामा अनादि सिद्ध वेदमन्त्रहरूको अवतार पनि यिनै पर्वतहरूमा नै भएको हो। बादरायण महर्षि व्यासले ब्रह्मसूत्र, महाभारत र पुराण-संहिताको त्रिवेणी फुटाएको पनि यिनै पर्वतबाट नै हो।

शिरबारी या सिरुवारी यस नामको निर्वचन दुई तहले हुन्छ। सिरु (कुशका जातको घाँस) धेरै हुने हुनाले र सबै बारीहरूका शिरमा भएको हुनाले। यसभन्दा माथि उतिबेला अरु बारी नभएको हुनाले यसको नाम शिरबारी रहेको होला!

आज शिरबारीको शिर निकै ठाडो भएको छ। राती का चन्द्र र दिनका सूर्य दुबैका किरणमा सधैंभन्दा चहक र गहक बढेको छ। नीलो आकाश आज अझै गाढा नीलिमाको चहक-धारण गरेर प्रसन्नता जनाएको छ।

यहाँकी पर्वतीय उच्च धरा आज धेरै खुशीमा छिन्, किनकि जो आश्चर्यमय बालक आजसम्म पौवाडाँडाको धरामा सबैको आकर्षणको केन्द्र-बिन्दु बनेको थियो, अब यहाँ रहन आइपुगेको छ। यहाँको जन-मानस पनि आज अत्यन्त प्रसन्न थियो-यस ईश्वरीय शक्तिसम्पन्न बालकको सङ्गति अब उसले पनि प्राप्त गर्नेभयो। बालकको प्रसिद्धि बालक पुग्नुभन्दा धेरै पहिलेदेखि नै पुगेकाले सबै मानिस यी बालकप्रति आस्थावान् बनिसकेका थिए।

२००२ सालका प्रारम्भिक दिनहरू थिए। विचारशील र सदाचारी यी कुमारको व्रतबन्ध गरौं भन्ने इष्ट-मित्रहरूको रायं आएकाले पिताज्यूले यस बालकका व्रतबन्धको निम्ता सबैमा गर्नुभयो। भीमपोखरा निवासी पं० रत्नलाल गौतम (माहिला गुरु) ज्यूका आचार्यत्वमा ठाउँ-ठाउँबाट आएका पण्डितहरूद्वारा उपनयन संस्कार विधिवत् सम्पन्न गराई वेदारम्भ पनि गराइयो। नाता, गोता, पण्डित, पुरोहित सबै नै यी कुमारको शील-स्वभाव र प्रतिभा देखेर आश्चर्य-चकित भए। सबै आ-आफ्ना इष्टदेवसंग यस बालकको लागि हार्दिक आशीर्वाद माग्दै यी कुमारको अनुहार दिलमा राखेर आ-आफ्नो बाटो लागे।

शास्त्रोक्त समयमा विधिपूर्वक व्रतबन्ध भए पछि ब्रह्मतेज देदीप्यमान हुँदै गयो। अब समय अनुसारको स्नान, जप-पाठ-पूजा र मातापिता आदि मान्यजनको सेवाले वहाँको जीवनमा स्वच्छता, सुशीलता, संयमिता, विनयशीलता र सच्चरित्रताको विकास गर्दै लग्यो।

### गिरिशिखरमा कृष्णलीला र श्रीरामभक्ति—

अब गाई चराउने र मुरली बजाउने कृष्णलीलाको आरम्भ भयो। वंशीवादन-कलामा पनि स्वामीज्यू थोरै दिनमा नै पारङ्गत हुनुभयो। साथीहरूको ठूलो जमात साथ चल्दथ्यो। गाई खोलिदिने, जंगल पुऱ्याइदिने, घाँसमा तह पारिदिने, पानी पियाउन लगिदिने र फर्काई गोठमा ल्याई बाँधिदिने समेतका काम साथीहरूले तँछाड मछाड का साथ गर्दथे। वहाँलाई कुनै कष्ट हुन दिदैनथे। वहाँको आकर्षक व्यक्तित्वले सबै साथीहरू वहाँका आज्ञाकारी बनेका थिए। बालक र गोवंशका हूल र वंशीवादनका दृश्यले वृन्दावनले नै शिरबारीको रूपमा अवतार लिएको हो कि! जस्तो आभास हुन्थ्यो। अग्ला थुम्काहरूबाट स्वामीज्यूले बजाएका मुरलीका मनमोहक, सुललित स्वरलहरीले सारा पर्वत, शिखर, पाखा, खोल्सा, र भीरहरूमा ठक्कर खाई प्रतिध्वनित हुँदै सबैतिर आनन्दसुधाको वर्षा गरिरहेको हुन्थ्यो। जहाँ स्वामीज्यूको गोचारण र वंशीवादन-लीला भएको हुन्थ्यो त्यसै भाग्यमानी ठाउँतिर नै जता-ततैबाट सारा घाँस-दाउरा गर्ने, वस्तुभाउ चराउने, कन्दमूल, फल, ओखती आदि खोज्ने, कागत बनाउन सेदवरूवाका बोक्रा खुइलाउने समेतका मानिसहरू आई घेरा लगाई गोपीहरूले कृष्णको अनुहार हेरे झैं स्वामीज्यूको मधुर मुस्कान सहितको अनुहार हेरिरहन्थे। भजन-कीर्तनका साथ नाच पनि हुन्थ्यो। स्वामीज्यूले ढुङ्गाका मूर्ति बनाई, पूजा गरी, कथा सुनाई, फूल-प्रसाद पनि बाँडी, जय-जयकार गराई सबैलई बिदा दिनुहुन्थ्यो। यसरी पछि यौवन र प्रौढ-अवस्थामा गरिने सत्कर्महरूको पूर्वाभ्यास (रिहल्सल)स्वामीज्यूले गरिरहनुभएको थियो। उच्च लक्ष्यमा पुग्न अविरल यात्राको आवश्यकता हुन्छ। अकर्मण्य बनी चुप-चाप बस्ने व्यक्ति कहीं पनि पुग्दैन। जहाँको त्यहीं सडेर जान्छ। स्वामीज्यूलाई अघि बढ्नु थियो, त्यसैले वहाँ निरन्तर



गतिशील रहनुभयो। 'गच्छन् वै मधु विन्दति, चरैवेति चरैवेति' यस्तो वेदको भनाई छ। अर्थात् हिंडिराख्ने, केही गरिराख्नेले मह भेट्टाउँछ. सुतिराख्नेले होइन। अतः प्रगति-पथमा अघि बढिरहू, अल्छी नबन, यिनै वेदवाक्यलाई पालन गरिरहनुभएको थियो स्वामीज्यूले।

यसरी एक भक्त बालकले पूरै त्यस लेकाली भेगलाई रमाइलो र गहकिलो पार्नुभएको थियो। यहाँका मानिसलाई जुन दिन कुनैकारण किशोर परमानन्दको दर्शन हुन पाउँदैनथ्यो, त्यो दिन साह्रै शून्य र उराठ लाग्दो बन्दथ्यो। यसरी दिनमा भेटदर्शन नमिल्नेहरू रातमा गई स्वामीज्यूसंग बसी भजन-कीर्तन गरी दिलको अत्त्यार मेट्ने गर्न लागे। यस प्रकार दिनानुदिन परमानन्दीय प्रभाव जन-मानसमा फस्टाउँदै गयो। यस रीतले गाई चराउँदै गरिएका मुरली-वादनले श्रीकृष्ण प्रभुलाई रिझाई, श्रीराम प्रभुलाई रिझाउँने इच्छा भयो। जेठा दाजु देवीलालज्यू भानुभक्तीय रामायण राम्रो भाकासंग पढी सबैलाई सुनाउने गर्नुहुन्थ्यो। स्वामीज्यूले वहाँकै साथबाट रामायणको श्लोक गाउन सिकेर त्यसै रामायणको पुस्तकबाट अक्षर चिन्ने काम पनि प्रारम्भ गर्नु भयो। केही समय भित्रै रामायण राम्रोसंग पढ्ने क्षमता अनायास पैदा भएको देखेर समाज चकित भयो। यसरी छिट्टै रामायण पढ्न सकेको देखी दाजु श्रीदेवीलालज्यूले आफ्नो अत्यन्त प्यारो रामायण बालक भाइलाई दिनु भयो। तर यही पुस्तक गुरु बनेर मेरा भाइलाई विश्वगुरु बनाउला भन्ने आभास भने थिएन। स्वामीज्यूले अब, राम्रोसंग रामायण पढ़ी त्यसको पाठ र प्रवचन सबैलाई सुनाउन लाग्नुभयो। अरूलाई पनि अक्षर चिनाई धमाधम रामायणमा लगाउनुभयो।

यसरी गोसेवा, मुरलीवादनका साथ गरिएका भगवन्नाम संकीर्तनका साथ रामचरित्र-अध्ययन-अध्यापनले चित्तको निर्मलता भएकाले परमात्माको साक्षात्कार गर्ने योग्यता स्वामीज्यूमा पूरा हुँदै आएको थियो। आत्मतत्त्वलाई यथार्थ चिन्न जन्मान्तरदेखि चलिआएका दुष्कर्म-वासनाको समूल विनाश आवश्यक छ। भगवान्का चरित्रका अनुभवले ती वासना हटी आत्मा निर्मल हुन्छ, यस कामनिम्ति श्रीरामायण सर्वोत्तम छ।

चरितं रघुनाथस्य शतकोटिप्रविस्तरम्।
एकैकमक्षरं पुंसां महापातकनाशनम्॥

अर्थात्—विस्तृत रामचरितमध्ये रामायणको एक-एक अक्षर पनि महान् पापको नाश गर्न समर्थ छ। वेद र रामायण समानरूपमा पुण्यदायक छन् किनभने वेदद्वारा बताइने परमात्माले दशरथ पुत्र भई अवतार लिएपछि परमात्माको प्रतिपादन गर्ने वेदले पनि महर्षि वाल्मीकिका रचना बनेर श्रीरामायणको रूपमा पृथ्वीमा अवतार लिएका थिए। यस विषयलाई यसरी भनिएको छ—

वेदवेद्ये परे पुंसि जाते दशरथात्मजे।
वेदः प्राचेतसादासीत् साक्षाद् रामायणात्मना॥

## गहकिलो जीवदया र चहकिलो वैराग्य—

साधुहरू अर्काको कष्ट सहन सक्दैनन्। सबभन्दा ठूलो कष्ट मृत्युकालमा हुन्छ। हामी मर्नेवालालाई बचाउन सक्तैनौं भने बाँचिरहेकालाई मार्ने पनि केही अधिकार नै छैन। हिंसा-कर्म गर्ने व्यक्तिमा दयाको लेश पनि हुन्न; आफ्नो स्वादको लागि अर्काको लहलहाउँदो जीवनमाथि हतियार चलाउनु महान् अन्याय हो। आज केवल मानव हत्यालाई मात्र अपराध सम्झने गरिन्छ। मानवको प्रति मात्र सौहार्द राख्न सके पनि दयालु मानिन्छ। मानव हत्या त पाप हुँदै हो साथै पशु-पंक्षी आदि अन्य जीवको हत्या पनि अपराध नै हो। वेदले हिंसालाई निषेध गरेका छन्। वेदद्वारा निषिद्ध





आचरणको नाम नै पाप हो। स्वामीज्यू बाल्यकालदेखि नै कुनै पनि प्राणीको हिंसाबाट टाढा रहनुभयो। यद्यपि गाउँमा हिंसकहरूको संख्या कम थिएन। सनातन धर्ममा परिपूर्ण आस्था भएकाहरू पनि देव-पितृका नामका पशु-बलि चढाउने काम चलिआएको परम्परा भनी मनमा दयाको भाव राख्दा-राख्दै पनि गर्ने गर्थे। बोका-पाठाको वध गरी उच्च जातका मानिसले पनि मासु खान्छन् भन्ने कुरा अवगत भएपछि साधु बालकका हृदयमा बोका-पाठाहरू प्रति झन् स्नेह र ममता बढ्न लाग्यो।

'तिम्रो हत्या कसरी रोक्न सकिएला, कसरी ब्राह्मण समेतका जिब्रामा बसेको मासुको तिर्सना मेट्न सकिएला, कसरी यी प्राणीहरू आफ्नो पूर्ण आयु पार गर्न पाउनन्।' यस्तै-यस्ता विचारहरू स्वामीज्यूमा उत्तरोत्तर बढ्न लागे। अहिंसाको प्रचार स्वामीज्यूको मुख्य कर्तव्य भयो। उमेरको चढाईको अनुसार नै वहाँको ध्यान यसैतर्फ केन्द्रित हुन थाल्यो।

**वैराग्यको उत्पत्ति—**

अब स्वामीज्यू सत्रौं शरदको ढोकानेर पुग्नु भएको थियो। त्यतिखेर १८ वर्षसम्म पुरुषको विवाहकाल सकिन्थ्यो। गाउँघरमा वहाँका उमेरका धेरै जसोको विवाह भइसकेको थियो। आज भोलि बिहूँ मा होस् या शिरवारीमा यही नै चर्चा थियो कि परमानन्दले विवाह गर्छन् कि गर्दैनन्!

बेला मौकामा स्वामीज्यूसंग नै पनि साथी-दौतरी या पाकापुरानाले पनि व्याहका कुरा चलाउँथे, वहाँले सुन्यो-नसुन्यो गर्नुहुन्थ्यो। बाबुआमालाई छोराको डर थियो; सोधेर गर्दिन भन्यो भने के गर्ने? छोरालाई बाबुआमाको त्रास थियो, उनीहरूले व्याहको प्रसङ्ग चलाए भने यिनका इच्छा विरूद्धको निर्णय कसरी सुनाऊँ? यस्तै सङ्कोचै-सङ्कोचमा केही दिन विते, दुबै थरिले दुबैको मन साय बुझेकै थिए, सिद्धान्त भिन्न थियो, दुबैथरिको इच्छा पूरा हुन सक्ने थिएन, तथापि भित्रभित्रै उकुस-मुकुस भएर पुत्ताएर बसेका, हुर्को फुट्न नसकेका हुर्केली झैं, बाहिर धिप्को फुट्न सकेको थिएन।

स्वामीज्यूका प्रयासले शिरवारीले प्रतिएकादशीमा रातभरि भजन-कीर्तन गर्न थालेको थियो। स्वामीज्यूले सबैको सहयोग जुटाई एक शिवालय पनि त्यहीं बनाई शिवको स्थापना पनि गराउनु भएको थियो। यही नै स्वामीज्यूद्वारा स्थापित हजारौं मन्दिर मध्येको जेठो हो। त्यो नै कीर्तनको अखाड़ा थियो। एकादशीको कीर्तन सकी बिहान पख घर फर्कदा एक घरमा भइरहेको लोग्ने स्वास्नीको प्रचण्ड बाझाबाझले गृहस्थ आश्रमप्रति रहेको सानो-तिनो आस्थाको जालो पनि जरैबाट उखेलियो।

चिन्तनशीलले पाइलैपिच्छे गुरु भेट्टाउँछ। विवेकहीनलाई कहीं कतै पनि गुरुदर्शन हुन्न, उसले त हरेकमा दोष मात्र देख्छ। मानौं ऊ बाहेक संसारमा निर्दोष कोही पनि छैन, फेरि ऊ कसको चेलो बनोस्, ऊ आफ्नो आफैं गुरु बनेर मर्दछ, र ग्री दम्पती नै गुरुज्यूका गुरु बने, वहाँले सोच्नुभयो—''संसार दुःखको खेती गर्छ, सुखको आशा राख्छ, यहाँ फंसेपछि निस्कन मुस्किल छ, पहिरामनि खाल्टामा थुप्रिएको गुद्‌गुदे हिलो हो गृहस्थ आश्रम, यहाँ परेपछि जति निस्कन्छु भन्यो उति फँस्दै गइन्छ तल-तल। जति विषय प्रति तल-तल लाग्छ उतिनै तल तल गडिन्छ। पिताज्यू र अरु पाका पुरानाहरूले पनि देव, पितृ र ऋषिऋण तिर्न विवाह गरी सन्तान पैदा गर्न भन्नुहुन्छ। देवताको निम्ति शास्त्रानुसार यज्ञयाग गर्ने, पितृको लागि विधिपूर्वक श्राद्ध गर्ने र ऋषिहरूका लागि षडङ्ग, वेदपाठ गर्ने सन्तान जन्मे भने बल्ल तीन ऋण तिरिएलान्, आज त गायत्री पनि शुद्ध उच्चारण गर्न नजान्ने सन्तान छन्, खै ऋण तिरिएको? झन् दुष्कर्मी सन्तान जन्माई समाजले आफ्नो ऋण बढ़ाइरहेको छ। पितृहरूलाई नरक धकेल्ने सन्तान जन्माएर कसरी ऋण तिरिने! समाजको निम्ति

वेद–वेदाङ्ग पढाउने पाठशाला चलाउन सकेमात्र ऋण तिरिन सक्थ्यो। आज सन्तान मात्र जन्माएर तीन ऋणबाट मुक्ति मिल्ने संभावना छैन।

**साधुरूपमा शङ्कर; शिरबारीको गोठमा—**

वि०सं० १९९३ को बालाचतुर्दशीको राती गलेश्वरमा आमालाई स्वप्नामा दर्शन दिने, वि०सं० २००२ सालमा पौवाडाँडा बिहूँमा स्वामीज्यूलाई राति झकाएको बेला दर्शन दिने शिवले यसपटक शिरवारीमा मध्य दिनमा साधुको रूपमा स्वामीज्यूलाई, प्रत्यक्ष दर्शन दिनुभयो। द्वादशी थियो, रातिका अनिंदा साहिंलालाई घरकुरुवा छाड़ी सबै दायाँ–बायाँ लागेका थिए। आज बिहान घामको झुल्को भन्दा पहिले नै साहिंलाका मनमा ज्ञान–वैराग्यको झुल्को फुटिसकेको थियो। सायद यिनै शिवले बिहानै पति–पत्नी भएर वैराग्य सिकाउनु भएको थियो कि? ईश्वरको अनुग्रह कहाँ कसरी झुल्कन्छ, भन्न सकिन्न। बिहानमा ''यस्तै वोक्सी पर्छे भन्ने भए त जोगी भएर लगौटी कसेर खरानी घस्ने थिएँ, के व्याह गर्दो हूँ।'' भन्ने लोग्ने, धर्मरक्षाको लागि परमानन्दलाई जोगी बनाउन आएको स्वयं शिव नै त थिएन! के भर! शिवसंकल्प नभई केही हुन पनि त सक्तैन। जो होस्, उस्तै–उस्तो संयोग मिल्दै गयो। रातिको अखण्ड भगवद्–भजन, विहानको वैराग्यदायी लोग्ने-स्वास्नीको झगड़ा, दिउँसोको एकान्तमा शिवस्वरूपी युवक साधुको दर्शन, भाग्यमानीलाई परी परी आउँछ भने जस्तै हुँदै गयो। यो सबै भवितव्यताको नै नाटक थियो।

त्यसताक ती लेखाली फाटफुटे घरहरूमा जोगी–साधुहरू कमै मात्रामा आउँथे। आज स्वामीज्यूलाई एक्लै देखी युवक साधु आउनुभयो। दिउँसो भएकाले गाईगोठ खाली छ। वहाँ गोठमा उभिनुभयो। डाँडेहरू नाममा डाँडे भए पनि साधु–अतिथिसेवा जस्ता महत्त्वपूर्ण कामहरूमा डाँडे थिएनन्। गहिरिएर आदर सत्कार गर्ने गर्थे स्वामीज्यूका त झन् के कुरा! वहाँ त गर्भैबाट अतिथिसेवाको प्रशिक्षण प्राप्त गरेका झैं हुनुहुन्थ्यो। वहाँले आफ्नो भाग्य आएर गाईगोठबाट आफूलाई बोलाए झैं मान्नुभयो। सामु गई प्रणामगरी घरका पिढीमा बोलाउँदा पनि गोठमै बस्न रुचाएकोले वहीं आसन दिई विनीत भावले घरमा अरू कोही नभएको बताउँदै भोजनको अनुरोध गर्नुभयो। साधुका इसारा अनुसार समान जुटाइसकेपछि साधुले स्वयं बनाई भोजन गर्नुभयो। बाँकी रहेको भोजन स्वामीज्यूलाई खान अह्राउनु भयो। अमृतरूपी त्यो प्रसाद स्वामीज्यूले खाएपछि आराम गर्दै रहनुभएका साधुले भन्नुभयो, **''बाबु! तिमी असल साधु चरित्र भएका रहेछौ, इच्छा छ भने मसँग हिड, खेतीपाती घर–गृहस्थी गरेर कुन पुरुषार्थ सिद्ध गर्न सक्छौ र? तिम्रो जीवन आनन्दमय बन्नेछ, हिड मेरा साथ।''**

साधुका बोलीबाट मीठास र स्नेहको धारा वर्षेको थियो। उमेर २२–२४ वर्ष, वर्ण गोरो, निधारमा त्रिपुण्ड, हातमा डमरू र त्रिशूल, गेरूवा कपड़ा, बगलीमा भिक्षान्नको झोली, साथमा कमण्डलु, अग्लो, उज्यालो तेजिष्ठ भव्य शरीर, साधुको रूप हेरिरहौं जस्तो थियो। एकछिन साधुको उज्यालो आनन्ददायी अनुहार हेरेर स्वामीज्यूले हात जोड़ी भन्नुभयो, ''हजुरको जो आज्ञा, म त यस्तै वचनका प्रतीक्षामा थिएँ।'आज मेरो भाग्य उदायो'' भन्दै खुलेको ढोका पनि नलगाई कुनै बित्तो–गल्दो केही नदेखी, कोही नभएको घर एक्लै छाड़ी, आङ्का कपड़ा बाहेक केही साथमा नलिई साधुका पछि लाग्नुभयो। जस्तै कुनै बालक वनमा एक्लै छुटी साथे नपाई घरको बाटो पनि नदेखी अलमलिएर वनमै समय बिताइरहेको मौकामा स्वयं पिताज्यू आएर 'हिड घर जाऊँ' भन्दा त्यस छोरालाई त्यो वन छोड्न कुनै कठिनाई हुन्न, त्यस्तै भयो यहाँ पनि। युवा साधु एकदम तेजीसाथ अघि बढिरहनुभएको थियो। पछि लागेका किशोर पनि पाइला खेदेर दौडनुभएको थियो। ''ए साइला, कहाँ! किन!'' भन्दै पर–परबाट आश्चर्यसाथ आइरहेका ग्रामीण महिलाहरूका आवाजको कुनै उत्तर नदिई दुबै जना उत्तरतर्फ बढ़िरहेका थिए। यी सुइँकीरहेकालाई भेटाएर फर्काउने साहस महिलाहरूले स्वयं गर्न नसकी

हल्ला-खल्ला गरी डाँडे टीकारामका छोरा साइला जोगीका पछि हिडेको खबर जनाततै पुऱ्याए। मानिस जम्मा भएर साइँलालाई खोज्न हिडिरहेका थिए। एक्कासी साइँलाका अघि-अघि हिडिरहेका साधु अदृश्य हुनुभएछ। दुई दिनका भोकाले भाग  बसिसकेपछि भाग खोसिएको जस्तो ठेस लागेर स्वामीज्यू साधु हराइएकै ठाउँमा थुचुक्कै बस्नुभएछ। जताततैबाट आएका मानिसले जताततै खोजे तर साधुको गन्ध पनि पाएनन्। जुन दिशातिर साधु लाग्नुभएको थियो, त्यताका बस्तीहरूका मानिसहरू पनि बोलाइए, उनीहरूले त्यहाँ खोजे, कहीं केही पत्तो लागेन।

यसरी साधुको लोप भएपछि सबै व्यक्ति स्वामीज्यूको पास आएर घेरा लागे। वहाँ मूर्छित जस्तो हुनुहुन्थ्यो। यथार्थ घटना सुनाउनुभयो। अरुले आफ्नो विचार अनुसार सोचे होलान्, स्वामीज्यूले भने हराउने साधुलाई साक्षात् शंकर नै सम्झनुभयो। भगवान्‌का लीलाको अनुभव गर्दै प्रेमविभोर हुँदै एकपटक फेरि घर फर्काउने प्रभुइच्छा बुझी अत्यन्त गम्भीर मुद्रामा कसैसँग केही नबोली सीधै घर आउनुभयो।

घरमा पुगेर सोच्नुभयो-"सारो जमीनमा गडेको किलो हल्लाई-हल्लाई प्वाल ठूलो परिसकेपछि मात्र सजिलै उखेलिन सक्छ। एकैपटकमा बल-जफत निकाल्न खोज्दा जहाँ त्यो गडेको छ, त्यो ठाउँ टाढा-टाढासम्म ओधिन्छ, परपरसम्म भताभुङ्ग हुन्छ। प्रभुले मेरा माता-पिता र बन्धुहरूका कोमल दिलाको ख्याल राख्नुभयो, आजै निस्केर नफर्केको भए उहाँहरूले सहन सक्नुहुने थिएन। यस्तै प्रक्रिया मिलाउँदै प्रभुले मेरा शरीरसम्बन्धी जनहरूको सहनशक्ति बढाउँदै हुनुहुन्छ। धन्य प्रभुको दयालुता!

यसप्रकार शिवरूपी साधुको शेष अन्न खाई उहाँका पछि लागेर फर्केपछि स्वामीज्यूमा झन्-झन् वैराग्य-भावना बढ्दै गइरहेको थियो। उनै युवक झैं साधु बनी घर छाडी स्वतन्त्र भई हिड्ने अवसर प्रभुले कहिले दिलाउनु होला भन्ने प्रतीक्षामा नै अब दिन-रात बित्न लागे।  परिवारको टण्टा, आपसी वैरभाव, साँध-किल्लाको कचपच, सासू-बुहारी आदिको बाझाबाझ आदि  गृहस्थ व्यवहार बुझी स्वामीज्यूको चतुर बुद्धि गृहस्थाश्रमको सारहीनता प्रति विश्वस्त हुँदै गयो। जतिजति उहाँ यौवनतर्फ लम्कँदै जानुभयो, उतिउति उहाँमा वैवाहिक जीवनप्रति अरुचि बढ्दै गएको सबैले स्पष्ट बुझिरहेका थिए।

यस साधुदर्शनपछि स्वामीज्यूका जीवनमा विशेषताहरू झन् थपिए। गीता-भागवत आदि संस्कृतग्रन्थमा वाचन शक्ति बढ्यो। अब झन् ईश्वरको चिन्तन मननमा पनि वृद्धि भयो। के घरमा, के वनमा सर्वत्र धर्म र ईश्वरका कुरा नै गरिरहन थाल्नुभयो। गाउँलेहरू पनि फुर्सद मिलेसम्म वहाँसंग आई ज्ञानगुनका कुरा सोध्ने गर्थे। कति नै दुष्ट स्वभावको व्यक्ति पनि उहाँका सामु पुगेपछि शिष्ट र सज्जन बनेको हुन्थ्यो। स्वामीज्यूमा झन्-झन् आकर्षण शक्तिको विकास भइरहेको थियो। टाढाटाढाबाट दर्शनभेट निम्ति मानिस आई वहाँमा रहेका सज्जनता, सरलता, निर्लोभिता आदि गुणहरूको दर्शन गरी प्रेमले गद्‌गद् भई फर्कन्थे।

यसरी १७ वर्षको उमेरसम्म गो-पालन, मातृपितृसेवा, नाम संकीर्तन, पूजन, स्वाध्याय, शिखरको एकान्त चिन्तन समेतको कर्मयोग र भक्तियोगको परिपाटी मिलेको र अन्तःकरण शुद्ध भई चित्तमा एकाग्रता पनि भइसकेकाले अब आत्मासाक्षात्कारका निम्ति श्रोत्रिय-ब्रह्मनिष्ठ ज्ञानी गुरुको आवश्यकता थियो। यसको व्यवस्था पनि रामायणपाठद्वारा प्रसन्न भएका श्रीरामद्वारा भइरहेको थियो।

**गृहस्थ आश्रमको अस्वीकार**

स्वामीज्यूमा घरबार त्यागी ईश्वर प्राप्त गर्न वन जाने इच्छा बढ्दै गए तापनि यस क्षेत्रमा कहीं कोही आबाल ब्रह्मचारी नरहेकाले माता-पितासमेत बन्धुजनको चित्त बुझाउन निकै कठिन भयो। अब सबैबाट राम्रोसँग बिदा लिएर

मात्र घरबाट निस्कने विचार आइरहेको थियो। विवाह नगरिकन वस्नु भनेको सारै असम्भव कुरो हो भन्ने अज्ञानले भरिएको समाजबाट सह्जाहले घर त्याग गरी निस्कन कठिन थियो। फेरि दाजुको विवाह नभई भाइहरूका विवाहको निषेध हुनाले र वहाँमुनिका भाई विवाहयोग्य हुँदै आइरहेकाले पनि छिट्टै विवाह नगरी नहुने परिस्थिति रहेको थियो। धेरै सन्तानको विवाह गर्नु पर्ने हुँदा मातापिता हतारिनु पनि स्वभाविकै थियो। अब कसरी मातापितालाई सम्झाउने भनेर स्वामीज्यू लख काट्न लाग्नुभयो। उहाँले संझनुभयो आफूमा सानैदेखि रहेको मूत्रनली सम्बन्धीरोग। मनमा भरोसा भयो कि अब यसै रोगले माता पिताको चित्त बुझाउन सहयोग गर्नेछ। यता माता-पितासमेतका बन्धुजनबाट अब विवाह छिट्टै गर्नुपर्छ भनी झन्झन् दबाव बढ्दै आएको थियो। यसै क्रममा २०१२ साल माघ ५ गतेका दिन बसेका बाबुआमासमेतका मान्यजनका भेलाले पनि विवाह छिट्टै गर्नुपर्छ नत्र भाइहरूको विवाहमा ढिला हुन्छ भनी उहाँमा जोडदार दबाव दियो। स्वामीज्यूले गृहस्थाश्रमका विघ्न-बाधाहरू खपी ईश्वर-चिन्तन गर्न कठिन छ भनेर धेरै दिनदेखि मान्यजनको प्रस्ताव टाल्दै आउनुभएको थियो। त्यसदिन सबैले अति नै बल गरेकोले अन्तिम उपायको रूपमा आफूमा भएका रोगको उल्लेख गर्दै विवाह गर्दिन भन्नु भएको हुँदा माता-पितालाई गम्भीर हुनुपर्‍यो। फेरि यौवनको बलियो बाढी पार गर्न कठिन छ भनी पिताज्यूले भन्दा एकान्तवास, शुद्ध, सात्त्विक कन्दमूलको एकछाक भोजन, संसारको लालच नभएका व्यक्तिको सहवास आदि उपायद्वारा यौवन-बाढी सजिलै तर्न सकिने कुरा बताई सबैको चित्त बुझाउनुभयो। बुढेसकालमा दुःख, विमार हुँदा एक्लो जोगी कसरी बाँच्ने भन्ने प्रश्नको उत्तरमा उहाँको आज्ञा भयो "सुख दुःख सबै पूर्वजन्मका कमाइं हुन्। पत्नी, पुत्रादि भएकाहरू पनि पानीसम्म दिने व्यक्ति पनि नपाई विस्तरामा कहराई रहेका देखिन्छन्। गृहस्थ हुँदैमा वृद्धकाल सुखमय हुन्छ भन्ने केही निधो छैन। झन् सारो आफू र पत्नी समेत अशक्त भई पीर-बाधा दुगुना हुने गरेको पनि देखिन्छ। त्यसकारण बुढेसकालमा सुख पाउन विवाह गर्ने भन्ने कुरो फजुल देखिन्छ। यसरी धेरै प्रश्नको चित्तबुझ्दो उत्तर पाएकोले पिताको मन अल्ली थामिए पनि आमाको मन बुझाउन मूत्रसम्बन्धी रोगको प्रदर्शन नै मुख्य साधन भयो। रोगको कुराले आमाको चित्त बुझाउन पाएकाले नै स्वामीज्यूले "रोग मेरो गुरु हो" भनी बारम्बार भन्ने गर्नुहुन्थ्यो। यसप्रकार स्वामीज्यू विवाह बन्धनबाट सह्जाहसँग नै जोगिन सफल हुनुभयो।

### ब्रह्मज्ञानी गुरुको भेट-दर्शन—

अब मलाई भवसागरबाट पार उतार्ने, अज्ञानको अँध्यारोबाट ज्ञानको उज्यालोमा पुऱ्याउने गुरु को मिल्ला ? भन्ने चिन्तामा स्वामीज्यू रातदिन पिल्सिन थाल्नुभएको थियो। ईश्वरले साँचो प्रार्थना गर्ने व्यक्तिका हरेक कामको व्यवस्था मिलाइ रहेको हुन्छ। यहाँदेखि चारकोश जति उत्तर रहेको मुसुङ्को धुरीमा केही दिन पहिलादेखि एक ब्रह्मनिष्ठ विरक्त महापुरुषलाई ईश्वरले पठाइदिइसक्नुभएको थियो। केही दिनपछि घर छाड़ी पहिले युवा साधुसंग हिडेकै बाटो लागी स्वामीज्यू मुसुङ पुग्नुभयो।

स्वामी परमानन्दज्यूको प्रवृत्ति सानैदेखि वैराग्य प्रधान थियो। गृहस्थीका सुखको लालसामा वहाँको मन कहिल्यै पनि कल्पेन। ईश्वर-भजन र आत्म-चिन्तनमा नै वहाँले सानैदेखि रस पाउन थाल्नुभएको थियो। "रसो वै सः" अर्थात् परमात्मा नै असली रस हो। "रसं ह्येवायं लब्ध्वा आनन्दी भवति" अर्थात् त्यसै परमात्मारूपी रसलाई प्राप्त गरेर मात्रै यो जीव आनन्दरूप हुन सक्छ इत्यादि श्रुतिवाक्यहरूमा वर्णित रसस्वरूप परमेश्वरको प्रस्फुरण अन्तरात्मामा भइसकेकाले नै उहाँ जग्गा, जमीन, घरद्वार, वस्तुभाउ, खेतीपाती, पत्नी-पुत्र आदि तुच्छ विषयबाट सुख लिन चाहना गर्दै गर्नुहुन्नथ्यो। सुख त भित्र रहेको हुन्छ हामी बाह्य वस्तुबाट सुखको कामना गर्ने गर्दा धोका खाइरहेका हुन्छौं। कस्तूरी मृगले अज्ञानवश आफू

भित्र भएको कस्तूरी बाहिर खोज्दै जङ्गलमा तलमाथि घुम्दा-घुम्दा थाकी कहीं नपाई कष्ट पाएर मर्छ, त्यही चाल छ यहाँ। आफू भित्र रहेको सुख खोज्न हामी बाहिर दगुरी दगुरी चक्कर खाएर मर्छौं। तर त्यो असली सुखको मुख पनि देख्न पाउन्नौं। यस विषयमा विचारकहरूको भनाइ छ—

**कस्तूरी कुण्डली वसै मृग ढुँढ्या वनमांहि**
**वैसे घटिघटि राम हैं दुनिया जानत नाहीं**

घटघटमा रहेको रामलाई फेला पार्न नसक्दा संसार रहेको हो। यसै विषयमा प्रह्लाद भन्नुहुन्छ :

**यन्मैथुनादिगृहमेधिसुखं हि तुच्छं कण्डूयनेन करयोरिव दुःखदुःखम्।**
**तृप्यन्ति नेह कृपणा बहुदुःखभाजः कण्डूतिवन्मनसिजं विसहेत धीरः॥**

पति-पत्नी आदिबाट हुने सुख वास्तवमा सुख नै होइन। सुखाभास मात्र हो। लुतो कन्याएर जसरी पार पाइन्न, त्यसरी नै संसारका सुखको संग्रह गरेर पार पाइन्न। सुख प्राप्तिका साथ-साथ दुःख पनि उपस्थित भइरहेको हुन्छ। त्यसो हुनाले चिलाएको लुतो कनाउनभन्दा हात बाँधेर एक छिन खटाउने हो भने त्यसको वेग स्वयं शान्त हुन्छ। यसैकारण धीर व्यक्तिहरू यो विषयको लुतो कन्याएर आनन्द लिनपट्टि नलागेर अर्कै अन्तरङ्ग सुखको खोजीतर्फ लाग्दछन्। जुन कुरा प्रल्हादले अनुभव गर्नुभयो, त्यही स्वामीज्यूलाई पनि अनुभव भइरहेको थियो। यसरी कर्म, भगवद्भक्ति र वैराग्य स्वामीज्यूमा स्वतः उद्भूत भएका थिए। ज्ञानको पूर्ण निष्ठामा पुग्न स्वामीज्यूले पनि गुरुस्थापना विधिवत् गर्न चाहनुभएको थियो। मुसुङका धुरीमा जुन् महापुरुषको दर्शन पाउनुभयो त्यसले उहाँको चित्त सारै नै प्रसन्न बन्यो। स्वामीज्यूलाई ज्ञाननिष्ठाको चरमसीमामा पुऱ्याउने परम विरक्त गुरु स्वामी छविप्रकाशानन्दज्यूको परिचय प्रसङ्गात् संक्षिप्त रूपमा यहाँ प्रस्तुत गरिन्छ।

## छविप्रकाशानन्द गुरुको परिचय :

हाल पर्वत जिल्ला गण्डकी अञ्चलको लुंखु देउरालीबाट केही तल पर्ने चिति पैयुँ धुवाँकोट भन्ने ठाउँमा बस्ने श्रीप्रतिमान लामिछानेज्यूकी जेठी पत्नीबाट वि०सं० १९४८ फाल्गुनमा जन्मी सनातन वर्णाश्रम धर्मकै मर्यादाभित्र रही वर्मा आदि देशसम्म घुमी घरायसी विविध प्रपञ्चका व्यवहार निर्लेप भावले सम्पन्न गर्दै, त्याग-वृत्तिका साथ गृहस्थाश्रम पूरा गरी ४८ वर्षमा उर्लेका प्रचण्ड वैराग्यले त्यसै क्षेत्रका भोक्सीङ् चौतारी भन्ने ठाउँका घर व्यवहार चटक्कै छोडी १९९६ का भदौ महिनाको कुनै मध्यरातमा जंगल पसी पुनः घर नफर्कने महान् त्यागी लामिछाने साधु स्वामी छविप्रकाशनन्दज्यूको जीवन-चरित्र निकै रोमाञ्चक, वैराग्य वर्धक, त्याग-तपोमय एवं प्रेरणादायक छ।

वहाँ सम्पन्न परिवारमा जन्मिएर पनि निरभिमानी, विद्वान् साधु-सन्त, अतिथिहरूका महान् सेवक सनातनधर्म-मर्यादामा रहने, अत्यन्त आस्तिक, मांसादि अभक्ष्य वस्तु देखि सधैं टाढा रहने, दानी स्वभावका मातृ-पितृभक्त सदाचारी उत्तम ब्राह्मण हुनुहुन्थ्यो। वहाँको त्याग यस्तो थियो कि वहाँले पैयुँ चिती भन्ने ठाउँमा पैत्रिक अंश लिएर जेठी पत्नीको परिवारलाई अंश दिई बाँकी रहेको आफ्नो र कान्छीपट्टिका परिवारको हिस्सामा रहेको सबै जेथा पतिभक्ता पत्नीको समेत इच्छाले सदाचारी ब्राह्मणलाई सर्वस्व दान दिई साना बाल-बच्चा र कान्छी पत्नी नन्दकला साथ लिई त्यहाँबाट तीर्थयात्राको लागि प्रस्थान गर्दा स्थानीय भद्र व्यक्तिहरूद्वारा नजिकै पर्ने भोकसीङ्ग चौतारीको नजिकमा रहेको पर्ति जग्गा दिई रहन अनुरोध गरेकाले त्यहीं रहनुभयो। कडा परिश्रमपूर्वक नयाँ ठाउँमा गृहस्थाश्रमको व्यवस्था मिलाउँदै रहँदा पनि



अन्त: करणले कहिल्यै भौतिक तुच्छ विषयहरूको वास्तवकिता पत्याएको थिएन। घरमा बस्ने पाहुनाका रूपमा वहाँले गृहस्थी चलाउनुभएको थियो।

तीन महिनाको गर्भस्थ शिशु सहितकी एक्ली पत्नीलाई यस्तो नयाँ सिर्जनका ठाउँमा चटक्क छाडी ४८ वर्षको उमेरमा घर त्याग गर्नु कुनै लरतरो कुरो थिएन, तर दृढ़ इच्छाशक्ति र प्रबल वैराग्यले सबै सम्भव भयो।

भोक्सिङ चौतारीबाट माथि पैयुँ स्युरासको धुरीगढी भन्ने ठाउँको एक ओडारमा गई कसैलाई पनि थाहा नदिई पाँच दिनसम्म भोकै तपस्यारत रहेको दशामा गाउँका केही असल व्यक्तिहरूले भेटाई गाउँलेका सहयोगले पर्णकुटी बनाइ दिए। साधुको सुगन्ध फैलिंदै गएकाले जतातत्तैबाट भक्तहरू ज्ञान सिक्न आउन थाले। यसरी वहाँबाट वेदान्त-श्रवण गर्ने हरुमा पं. तारानाथ, पं. आनन्दमणि र पं. देवेन्द्रप्रसाद समेतका त्यस क्षेत्रका शिक्षित व्यक्तिहरू मुख्य हुनुहुन्थ्यो। उता घरतर्फ उमेर पुगेका जबान दुई छोरा (एक विवाहित) थोरै समयको अन्तर भित्रै नै परलोक भए। यी दुबै खबरले साधुको मनमा केही विकार ल्याउन सकेन। महासागरले जति जस्ता खोला आएर पस्दा पनि न त आफ्नो स्वरूप छोड्दछ, न त आफ्नो निश्चलता नै त्यागदछ। त्यसपछि धर्मपत्नी नन्दकला आएर आफू एकदम निराधार भएको र वहाँले घर नफर्किदिए प्राण हत्या गर्ने निर्णय गर्दा पनि वहाँ केही कत्ति विचलित हुनुभएन। वहाँले "प्राणहत्याद्वारा नै मर्ने तिम्रो प्रारब्ध भए त्यसलाई कसैले रोक्न सक्दैन जे तिमीलाई उचित लाग्दछ त्यही गर" भनी ठोस जवाफ दिनुभयो। नन्दकलाले झुण्डिएर मर्नको निम्ति मागेको डोरी वहाँबाट पाउँदा पनि प्रारब्ध शेष रहेकाले त्यस्तो दुस्साहस गर्न सक्नुभएन। असली साधु सम्झी टाढैबाट ढोगी फर्किनुभयो।

पतिदेवको त्यागमय व्यवहारबाट शिक्षा पाएकी नन्दकलाले पनि चौतारी नजीक पतिदेवद्वारा आर्जिएको मृत दुई भाइका भागको घरसहितको सम्पत्ति वहाँकै सल्लाह लिई आफ्नो नाता नलाग्ने योग्य सदाचारी वेदपाठी ब्राह्मणलाई दान दिएर सानो छोरा नारायणको हिस्सा भनी राखिएको तृतीयांश जमीनमा रहेको गोठमा त्यसै नाबालक छोराको साथ ईश्वर चिन्तन-पूर्वक जीवनका क्षणहरू गुजार्दै रहनुभयो। त्यागले त्याग सिकाउँदछ लोभले लोभ सिकाउँछ भनेको यही हो। पत्नीको यस त्यागमय व्यवहारले साधु पतिलाई निक्कै प्रसन्न पारेको थियो। त्यागीलाई त्यागले रिझाउन सकिन्छ, न कि भोगले।

गढी छाडी अझै उच्च स्थान 'देवी स्थान' भन्ने ठाउँमा गई रहन थाल्नुभयो।

देवीथानमा पनि धेरै अनुष्ठान साधनाहरू भए। यहाँ बस्दाका प्रमुख सहयोगी २००९ सालबाट साथमा रहने कर्नास पाङराङ तीन कुलेका हिरामणि पाठक हुनुभयो। देवीथानमा पनि सम्पर्क बढ्दै जाँदा एकान्तता खल्बलिएकोले श्रीछवि प्रकाशानन्दज्यूमा यस ठाउँलाई पनि छाडी अन्तै जाने विचार आयो। त्यहाँबाट कास्की पोखरातर्फ हरपनको धुरीमा पनि केही दिन बसी यहाँको वातावरण अनुकूल नभएकोले पुन: देवीथान नै आउनुभयो। उच्च स्थितिका साधुलाई शिष्य शाखाहरू पनि बाधक हुन्छन्। वहाँमा यस क्षेत्रलाई छाडी अझै घोर जंगलको जन्मभूमिका सम्बन्धको गन्ध पनि नआउने ठाउँमा पुगी ब्रह्म-चिन्तन गर्ने रहर थियो। देवीथानमा टाढाटाढाबाट भक्तहरू आई उपदेश लिन्थे। अन्त जाने कुरा मात्रैले पनि सबैको सातो जाने गर्थ्यो। अत: वहाँ सबैले नदेख्ने गरी यहाँबाट निस्कने विचारले २०१२ सालमा देवीथानको तप:स्थलीबाट बाग्लुङ छिस्तीको बाटो गाजको धुरी, दर्म, काँक्राखोर हुँदै म्याग्दी जिल्लाको डोले, भकिम्ले, मुसुङ खानी भन्ने ठाउँको नासिकाकृति पहाड़को सानो कपेरोमा रहन लाग्नुभयो। केही दिनपछि गोठालाहरूले थाहापाई कुटी बनाइदिए। त्यसै ठाउँमा रही अत्यन्त कठोर तपस्या गर्न लाग्नुभयो।

उता बिहूँ पौवाडाँडामा जन्मी बाग्लुङकै मिहिले सिरुवारीमा रहँदै गरेका ब्रह्मचारी परमानन्दज्यू पनि प्रबल

वैराग्य र आत्मप्राप्तिको चाहनाले प्रेरित भई ब्रह्मज्ञानी गुरु खोज्दै मुसुङको निर्जन धुरीमा एक्लै आत्मानन्दमा मग्न रहेका साधुका कुटीमा आइपुग्नुभयो। ब्रह्मचारीको शील स्वभाव अनुकूल रहेकाले कसैलाई साथ नराख्ने साधुले पनि वहाँलाई साथमा राखी वेदान्त ज्ञान गराउन थाल्नुभयो। यदाकदा पैयुँ क्षेत्रबाट पनि गुरुदर्शनका लागि भक्तहरू आउँदै गर्नथाले। यता भकिम्ले, मुसुङतर्फका व्यक्तिका माग अनुसार २०१५ को चैत्र नवरात्रमा देवी भागवतपुराण मुसुङमा सम्पन्न भयो। चतुरा ब्रह्मचारीले गुरुको सबै भार लिएकाले यज्ञले गुरुदेवको मनन-चिन्तनलाई कुनै बाधा गरेन।

आफ्ना गुरुका साथ सात वर्षसम्म त्यहीं रहँदा एकपटक गुरु-जन्मभूमिको दर्शन गर्न इच्छा जागेकोले ब्रह्मचारी पैयुँ आई गुरुआमा नन्दकला र गुरुपुत्र नारायणसँग भेटघाट गर्नुभयो। यसै क्रममा, उनीहरूको आर्थिक स्थिति कमजोर भएको देखी उनीहरू दुबैको बसाइँ सारेर साथमै ल्याई मुसुङबाट ३/४ कोसमा पर्ने बराङ्जाको लाम्पाटामा आफूले प्राप्त गरेको पैत्रिक सम्पत्ति बिक्री गरेर ल्याएको धनले किनेको घर गोठसहितको श्रीसम्पत्ति २०१७ को माघ महिनामा गुरुपुत्रलाई सर्वस्व दान दिनुभयो। यसरी ब्रह्मचारीज्यूले पनि आफ्ना परमपूज्य गुरुदेवको अनुकरण गर्नुभयो।

यसपछि बराङ्जाको दुर्दीमा यज्ञ गरी शिवालय निर्माण पनि गुरुका आज्ञानुसार सम्पन्न भयो। गुरुको कुनै प्रेरणा र प्रोत्साहन विना नै समय-समयमा गुरुपरिवारको रेखदेख गर्दै रहनुभयो।

यसरी ब्रह्मचारीको सेवा प्राप्त गर्नुभएका गुरुवर लामिछाने लगभग सातवर्षसम्म मुसुङको धुरीमा रही त्यहाँ पनि धेरै व्यक्तिको आवत-जावत बढेकाले यस जनसम्पर्कबाट बँच्न बरङ्जामाथि पर्ने यस भेगको सर्वोच्च धुरी सोलीघोप्टे थामीमा पुगी ब्रह्मचारीज्यूका साथ-साथ कठिन तपस्या गर्न लाग्नुभयो। तर त्यहाँ पनि कताकताबाट गुरु-शिष्य त्यहाँ रहेको थाहापाई जनताहरू दर्शनार्थ आउन थाले। एकजना दर्शनार्थीको त बाघबाट मृत्यु समेत भयो। यस दुःखद घटनाले त्यहाँ बस्ने इच्छा नभएपछि ब्रह्मचारी स्वामीज्यूले अर्कै तपःस्थलको खोजी-गर्दा बिहूँ र तङ्ग्राम गा०वि०स० को मध्ववर्ती झुलेनी भन्ने लेखमा कुटी बनाउनु भयो र गुरुसँगै उहीं बसी वेदान्ताध्ययन गर्दै रहनुभयो। त्यहीं रहँदा पैयुँ धुवाँकोटतर्फबाट आफूलाई लैजान आएका व्यक्तिका साथ आफ्नो बदलामा ब्रह्मचारीलाई पठाई एक्लै बाग्लुङ झुलेनीको लेकमा रहन लाग्नुभयो। यता ब्रह्मचारी गुरुजन्मकर्मभूमिमा गुरुद्वारा प्राप्त ज्ञानको प्रचार गरी सेतीबेनीबाट पार गुल्मीमा रहेको त्यस क्षेत्रको अत्यन्त ऊँचो हिले पहाड़मा गई बनमा मिल्ने साग-सिस्नोमात्रले गुजारा गर्दै चार महिना बिताई झुलेनी फर्कनुभयो।

यसपछि वहाँले आफ्ना शिष्य ब्रह्मचारीलाई एकान्तमा गई योग-साधना पूरा गर्ने आज्ञा दिंदा ब्रह्मचारीले पनि गुरुआज्ञा पालन गर्नैपर्ने भएर गुरुले बताए अनुसार झुलेनीबाट २०२४ को चैतमा पश्चिमतिर लाग्नुभयो। पछि शिष्य ब्रह्मचारी गई गुल्मीको दिब्रुङ भन्ने धुरीमा तपस्या गर्दा आसपासका जनताले थाहापाई कुटी, मन्दिर समेत बनाइदिएको र त्यस क्षेत्रमा ब्रह्मचारीको प्रभाव निकै बढेको समेत थाहापाई आफूसँग भएको सबै माल-ताल र रूपैयाँ समेत व्यक्तिहरूमा बाँडी रित्तै २०२६ को असारमा दिब्रुङ पुग्नुभयो।

अत्यन्त एकान्त रुचाउने गुरुवर मठ-मन्दिर, विद्यालय आदिको आयोजना भैरहेको ठाउँ यो दिब्रुङ पनि मन पर्न नसकेकाले गुरुभक्त ब्रह्मचारीले दिब्रुङको ३ कोस जतिमा पर्ने गुल्मी जिल्लाकै सालिमेदह भन्ने निकै टाढासम्म मानव बस्ती नभएका घोर वनको बीचमा लगी छोडिदिनुभयो। २ दिन जति त्यहाँ खर्सुको धोद्रामा तपस्या गरेपछि टाढाटाढाबाट मानिस आई, कुटी बनाई केही व्यवस्था मिलाए। यसै शान्त एकान्त जंगलमा फाटफुट आउने सज्जनहरूलाई तत्त्वज्ञान बताउँदै



अत्यन्त त्यागमय निर्लेप, निःस्पृह जीवन बिताई २०२८ साल भदौको कृष्णद्वादशीको राति त्यहीं सालिमेमा नै ८१ वर्षको उमेरमा ब्रह्मलीन हुनुभयो।

दिब्रुङबाट ब्रह्मचारी आई गुरवर आत्मसंन्यास लिई कर्मोपरतिमा पुगिसक्नुभएकाले संन्यासविधिले नै गर्तस्थापना (स्थल समाधिप्रदान) गरी अन्तिम संस्कार गराउनुभयो। भगवत्-आराधना सहित एघार रात बिताई १२ दिनमा ब्रह्मचारीज्यूकै आयोजनमा ग्रामवासीहरूकै सहयोगले उदारतापूर्वक विशाल भण्डारा आदि आवश्यक कर्तव्य पूरा भयो। पछि ब्रह्मचारीज्यूकै श्रद्धाभक्तिले समाधिस्थलमा श्रीराममन्दिर बन्यो। आज त्यस क्षेत्रको पवित्र तीर्थस्थलको रूपमा सालिमेदहको आश्रम प्रसिद्ध हुँदै गएको छ। आज मन्दिर, धर्मशालाहरूले यस ठाउँको गौरव बढाएका छन्।

त्यसपछि झ्याम्पाली माइलागुरु (योगानन्द गिरिजी पनि) दुई वर्षतक यहाँ रही पछि अर्लाङ्कोट देउरालीमा झरी २०३१ मा ब्रह्मलीन हुनुभएको थियो। त्यसपछि छिस्तीतर्फबाट गएका माई-आमा तथा भक्तिनी आमाहरूले यसको संरक्षण गरेका छन्। विशेष रेखदेख दिब्रुङ् आश्रमबाट पनि भएको छ।

यसरी पर्वतको धुवाँकोट चितिमा जन्मी सदाचार, स्वाध्याय, शील, संयम सहितको जीवन भारत र वर्मा भ्रमणद्वारा विपुल व्यावहारिक ज्ञान र सम्पत्तिको आर्जन, सत्पात्रमा सर्वस्वदान, काँचो गृहस्थी पनि चाटचुट छाडेर हिडाउने प्रबल वैराग्य, १९९६ बाट २०१२ सम्म १६ वर्ष पर्वत जिल्लाका गढी आदि ठाउँहरूमा आदर्श गायत्रीसाधना, ब्रह्मोपासना, वेदान्तोपदेश र अन्य विविध सत्कर्म, कुनै पनि परिस्थितिमा देहसम्वन्धको आभास फर्कन नदिने यथार्थ आत्मस्वरूपज्ञान, रजस्-तमस्को गन्ध नभएको सात्त्विकता, उत्कृष्ट आत्मबल सहितको दरो निर्भयता, प्रारब्ध कर्मको शक्तिमा प्रबलतम अटूट आस्था, गीतामा तन्मयता आदि अनन्त विशेषताले युक्त गुरुवर छविलाल लामिछानेज्यू वास्तवमा लामी-छाने नै हुनुभयो। वहाँको कृपाको छानाभित्र नै आज परमानन्दीय दर्शनधाराको समग्र हिन्दु-मानवता अटाएको छ। यो लामिछानेको छानो पुरानो भएर पनि नचुहुने एवं निकै दरो, सुन्दर शान्त र विशाल पनि छ। कलिकाल-कल्मष बली खलबली मच्चाएको यस अवस्थामा यसै छानाको छायामा बसेर मात्र आत्मोद्धार हुने देखिन्छ।

यहाँमा उत्कृष्ट वैराग्य र सत्स्वरूपको ज्ञान रही स्वतः संन्यासवृत्ति सिद्ध देखिएकाले सालिमेदहमा रहन थालेपछि स्वामी छविप्रकाशानन्द नामले व्यवहार गर्न लागिएको थियो। वास्तवमा यहाँका छविका प्रकाशले आनन्दित भएका स्वामी परमानन्दज्यूद्वारा नै नेपाली जनजीवनमा असली परमानन्दको प्रादुर्भाव भएको हो। गुरु छविप्रकाशानन्द ब्रह्मसूत्र हुनुहुन्थ्यो भने गुरु परमानन्दजी त्यसको विस्तृत भाष्य हुनुभयो। वहाँ कालीगण्डकीको मुहान मुक्तिनाथ हुनुभयो भने यहाँ कालीगाण्डकीको विस्तार देवघाट हुनुभयो। व्यक्तिको रूपमा हेर्दा वहाँ गौडपादाचार्य हुनुहुन्थ्यो भने यहाँ आद्य शङ्कराचार्य।

### लामिछाने गुरुले दिएका उपदेशहरू :-

१. सांसारिक व्यवहारले व्यवहारतिरै तान्छ, ईश्वरका भजनले ईश्वरमा नै लान्छ।
२. सधैं भगवान् नाम जप्ने बानी बसाल, नाम जप्न नछोड़।
३. जीवन प्रारब्ध कर्मले धानिने हो, खाने वस्तुले होइन।
४. अर्कालाई कष्ट दिएर मीठो खानुभन्दा आधा-पेट रुखा-सुखा खाऊ।
५. नढाँट, नचोर, कुनै प्राणीलाई पनि कष्ट नदेऊ।
६. व्यवहारलेभन्दा संकल्पले हानि गर्छ, संकल्प नभइकन स्वभावले आएका व्यवहारको गहिरो छाप हुन्न।

७. गृहस्थीमा बसे पनि त्यसमा आसक्त नबन, पाहुना बसे झैं बस, सर्वस्व मेरै भनी हुरुक्क नबन, मेरो भन्ने अहंकार नराख।
८. लामो समय विरक्त भई रहन कठिन छ, छिट्टै घर नछाड।
९. मन वन होस् - तन घर होस् यो असल हो तर 'तन वन आएर पनि मन घर जानु' राम्रो होइन।
१०. विपना बिग्रे सपना, सपना बिग्रे विपना।
११. मन र इन्द्रिय सधैं आफ्ना मुठीमा राख, छाडा नछाड।
१२. आफ्ना अधीनमा नरहेका मन र इन्द्रियले चौरासी लाख योनिमा घुमाउँछन्।
१३. संसारलाई झूटो नश्वर संझ र आसक्ति हटाऊ।
१४. साधुले रूखमुनि वा ओडारमा एक्लै बस्नू।
१५. अर्काको सेवा लिएर र अर्काको आशामा साधु कहिल्यै नबस्नू।
१६. गृहस्थले दुई छाक खानू, विरक्तले प्राण धात्र मात्र खानू।
१७. विरक्तले भिक्षा नमिले वनमा मिलेको वस्तु ख़ानू, मरिन्न, प्रारब्धले जसरी भए पनि पाल्छ।
१८. साधु संग्रही भयो भने दुःख पाउँछ।
१९. आत्मज्ञान नभएसम्म जन्म-मरण छुट्दैन।
२०. शरीर छोड्दाका दिन आफूसँग भएका सबै चीजहरू केही साथै जादैनन् भन्ने ख्याल राख्नू।
२१. जाग्रत र स्वप्नमा दुःख मेटिन्नन्।
२२. कुनै पनि प्राणीलाई दुःख नदिई मिलेका वस्तु ईश्वरको प्रसाद संझी निरभिमानी बनी स्वीकार गर्नु।
२३. मेरा गुरु गीता नै हुन्, संसारमा गुरु नपाएको व्यक्ति गीताको शरणमा जानू।
२४. मन, वचन र कर्मले कहिल्यै पनि प्राणिहिंसा नगर्नू आदि।

## मुसुङ धुरीमा गुरु-सेवा र गुरुपुत्रलाई सर्वस्व-दान—

स्वामीज्यूलाई ज्ञान-निष्ठाको पराकाष्ठामा पुऱ्याउने लामिछाने कुलका दीपक गुरु छविलाल बाग्लुङ जिल्लाको मुसुङ धुरीमा आई ब्रह्मसाधनामा तल्लीन रहनुभएको थियो। यता संसारप्रति विरक्त भएका परमानन्दज्यूका मनमा गृहत्यागको विचार प्रौढ भएको थियो। वि०सं० २०१२ सालको वसन्त थियो, रूखहरूका पात पहेंला भएर झर्दै थिए, आफू जन्मेको घर छाड्दै थिए चिन्तनशील युवकका मनमा विचारतरङ्ग सलबलाए-पहेंला भएपछि (बूढा भएपछि) आफू जन्मेका घरले 'म यहीं बसिरहन्छु' भने पनि ननिकाली नमान्ने भएपछि यो घरमा किन बस्ने ? यसले छोड्नुभन्दा पहिले नै आफूले छोड्नु पो वेश हो। रूखबाट झरिरहेका बासन्ती पातहरूले टीकारामपुत्र परमानन्दलाई सुटुक्क कान फुके। पातले दिएको यो वैराग्य शिक्षा चिन्तनशील युवकका मनमा गड्यो। घरका सबै परिवार यताउता लागेको अवसर मिलाई यस घरमा फेरि नफर्कने विचार लिई वनैवन सिरवारीका उत्तरतर्फ लामिछाने गुरुले तपस्या गरेको मुसुङ धुरीमा आउनुभयो।

बेलुका झमक्क साँझ भयो, परैबाट कुटीमा तोरीका तेलमा मुस्कुराइरहेको दियोले ''आऊ बाबु! स्वागत छ, तिम्रो'' भनेजस्तो लाग्यो। चरा पनि सुतिसके, कतै केही आवाज छैन, चैतको लेकाली सिरेटो मात्र मन्द-मन्द सिर्सिराइरहेको थियो। हालसालै घर छोडेर खाली भूइँमा पसारिइरहेका वासन्ती पहेंला पात, नौला मानिस देखेर हो कि!

आपसम्मा सराङ्सुरुङ् गरिरहेका थिए। उहाँले अनुभव गर्नुभयो "महादेवले ध्यान गर्दै गरेको कैलाशपुरी नै म आइरहेको छु"। अघि बढ्दा धुनी जलिरहेको, त्यहींनिर विभूतिको रासमा ठिङ्ग उभिएको, त्रिशूलमा डमरु झुण्डिइरहेको, मूढा जलेर विभूति बनाइरहेका, संसारका मोहले मूढ भएका मूढा प्रचण्ड वैराग्यको ज्वालामा नजली संसारका विभूति हुन पाउँदैनन्। संसारी मूढालाई वैराग्यको आगामा जलाई उज्वल विभूति बनाउने केन्द्र भनेका यिनै लेखाली साधुहरूका साधनास्थल हुन्। यहाँ अरु केही थिएन, सेउलामाथि राखेका सुकेको खर-घाँसमा कम्मल थियो। त्यस कालो कम्मलमाथि ६५ वर्षीय जटाजूटधारी साधु टालेको भोटो भिरेर उज्वल ललाट टल्काउँदै ध्यानमग्न हुनुहुन्थ्यो। ध्यानमा अनुभूयमान परमेश्वरले सामुमा उपस्थित विरक्त युवा ब्राह्मणको आगमनको सूचना दिनुभयो। आँखाका पलेटा उघार्दा सौम्य दृष्टिले सामुमा विनय र सरलताका प्रतिमूर्ति नै भएका युवालाई पहिल्यायो। यताको युवादृष्टि ले, उताको प्रौढ तपस्याले देदीप्यमान दृष्टिसंग जम्का भेट गऱ्यो। पूर्व जन्मका संस्कारले नै कुनै वस्तु अकस्मात् रूपमा ज्यादै प्रियतम प्रतीत भएको हुन्छ। जन्म-जन्मान्तरबाट चलिआएको सौहार्दले आज पुनः नवीकृत हुने अवसर पाएको थियो। युवादृष्टिले महात्माको अनुहारमा शान्ति, निस्पृहता र वात्सल्यको सागर छल्किरहेको देख्यो। प्रौढ तपस्वीदृष्टिले सानो दियोको मन्द प्रकाशमा पनि यस ब्राह्मण युवकको मुहारमा अमन्द आध्यात्मिक ज्योतिको दर्शन गऱ्यो। कुटीमा केही साधारण वर्तन बाहेक केही खास वस्तु थिएन, तर कुटिवालाको अनुहारमा भने सर्वसाधनसम्पन्न व्यक्तिमा पनि हुन नसक्ने सन्तोष र परिपूर्णताको सूचक मन्द मुस्कान मौलाइरहेको थियो। सांसारिक व्यक्तिलाई वस्तुहरू जम्मा भए भने पूर्णताको अनुभव हुन्छ, साधुहरूलाई तिनै वस्तुहरू हटे भने पूर्णताको प्रतीति हुन्छ। मुसुङ्का धुरीमा तपोमय जीवन बिताइरहेका साधुलाई विश्वास थियो कि "मानिसको अथवा प्राणिको पालक उसको प्रारब्ध कर्म नै हुन्छ, जसरी पालिनुपर्ने हो, त्यसले त्यसरी नै पाल्छ। हामी किन खुल्तुलाउने!" त्यसो भएकाले नै साधुले संग्रहवृत्तिलाई छोडी त्यागवृत्तिलाई लिए किनकि वास्तविक सुख यसैमा छ। युवक ब्रह्मचारी भाव-विभोर हुँदै महात्माका पवित्र पाउमा समर्पित बन्नुभयो। युवकको झुकाईबाट नै वैराग्यको महक, शील, विनय र विवेकको चहक प्रकट भइरहेको थियो। महात्माले मधुर वाणीद्वारा 'को हौ?' को प्रश्न गर्दै बस्ने आसनतर्फ संकेत गर्नुभयो। युवकका अन्तरात्माले भनिरहेको थियो, "यसै प्रश्नको उत्तर खोज्न नै म यहाँ आएको, म को हूँ? मलाई कहाँ थाहा छ र? यही त बुझ्नु छ, म को हूँ?" त्यस मधुरो प्रकाशमा महात्माले युवकको अनुहार र उज्वल भविष्य पढिरहनुभएको थियो। चारैतिर वन, लेकको धुरी, नाकको आकार भएको डाँडामा शान्त एकान्त कुटिया, स्याउलाको छाप्रो, टाढा-टाढातक कहीं कसैको बस्ती छैन, कसैलाई साथमा राख्न पनि चाहना थिएन महात्माको। "परिवार जोडेर बस्न त गृहस्थी नै थियो, वन त एकान्त सेवनको निम्ति हो" भन्ने सोचाई भएका महात्माले एकलास कैलाशमा केही नहुँदा पनि भइरहेको आनन्दानुभूतिले युवकलाई निकै आकर्षित गऱ्यो। युवा-मनले यिनै विरक्त शिरोमणि महात्माका श्रीचरणमा फक्रिंदै रहेको आफ्नो जीवन-पुष्पको कोपिलो समर्पित गऱ्यो। विशेष बातचित या आपसी सम्पर्क नहुँदै भएको आपसी आकर्षणको कारण कुनै आन्तरिक नै हुनुपर्छ; किनभने विलक्षण आन्तरिक कारणले नै वस्तुहरूलाई एक आपसमा आकर्षित गर्छ। असली प्रेमलाई बाहिरी कारणहरूको आवश्यकता हुँदैन। कहाँको कमल! कहाँको सूर्य! तर सूर्य उदाउँदा कमल फक्रिन्छ। त्यस्तै चन्द्रकान्त पत्थर चीसा चन्द्रमाका किरणले प्रभावित हुन्छ। यसरी एकाएक परस्पर आकर्षण हुनमा आन्तरिक कुनै कारण हुनुपर्छ।

धुनीका छेऊमा केही लेकाली आलुहरू लाम लगाएर आगो तापिरहेका थिए। अतिथि युवाको सेवा गर्ने कोही

थिएन त्यहाँ; पाएको अतिथि-सेवाको अवसर किन छोड्ने ? त्यस कुटियाका महामण्डलेश्वरको इशारा पाउँदा माथ भाग जतिका सबैले एकसाथ ताता विभूतिका भुत्भुते सागरमा हाम फाले। असली चेलाहरूको गुरुको आज्ञा पाएपछि कहाँ जाने ? कहाँ नजाने ? भन्ने द्वन्द्वात्मक स्वभाव हुँदैन। एकछिनपछि साधुका चिम्टाका टुप्पाका सहाराले अज्ञानी व्यक्ति भवसागरबाट उतारे झैं विभूति-सागरबाट ती आलुहरू बाहिर निस्की महात्माका करकमलका स्पर्शले प्रसन्न भई नूनका ढिकासहित आगन्तुक युवाका अगिल्तिर गई उहाँसंग एकाकार भई अद्वैत सम्बन्ध स्थापित गरे। तिनै महात्माले भुङ्ग्रामा सेकेर नूनसंग दिएका आलुहरू महाप्रसाद संझी भोजन गरिसकेपछि नजिकै सुत्ने ठाउँ देखाउँदै महात्माले भन्नुभयो. ''हेर ! ब्रह्मचारी बाबु ! घर छोडेका आज १६ वर्ष बिते, आजसम्म मेरा यति नजिक कोही सुतेको थिएन; यहाँ आएपछि एउटा मगर नानी आए, केही दिन बसे तर छुट्टै कुटिया बनाई बसे, उनी अल्ली पाका थिए तिमी अल्ली आला (केटाकेटी) रहेछौ. शरीर उति स्वस्थ पनि देखिएन, यहीं सुत, भोलि फेरि कुरा गरौंला।''

**वि०सं० २०१२ साल चैत्र १३ गते बिहान नित्य क्रियापछि ज्ञानपिपासु विरक्त युवाको ब्रह्मनिष्ठ ज्ञानीसंग यस प्रकार संवाद भयो—**

**विरक्त युवक:**-गुरुज्यू ! गृहस्थ जीवनमा मानिसलाई अनेक विघ्न-बाधा भएकाले ईश्वर भजन गर्ने मौका नमिल्ने देखी विवाह गर्न नमानी ज्ञानी गुरुद्वारा ज्ञान प्राप्त गरी ईश्वरको भजन गर्न खोजिरहेको थिएँ; आज हजूरको दर्शन पाई अँध्यारोबाट उज्यालोमा पुगेको अनुभव गरिरहेको छु। अलिअलि अक्षर चिनेर रामायणसम्म पढ्छु, अरू केही जानेको छैन। गाउँका घर-घरमा झगडा भइरहेको देखेर गृहस्थीमा सुख रहेनछ भन्ने ज्ञानसम्म उब्जेको छ मनमा। यो ज्ञान सधैं रहला नरहला, अब सधैं हजूरको पासमा रहन चाहन्छु।

**ज्ञानी गुरु :-** मैले तिम्रा कुरा बुझें, वैराग्य हुनु असल हो, तर यो बाटो ज्यादै कठिन छ, यस कलीलो उमेरमा यता लागेर जीवनभर यसैमा रहन निकै कठिन छ। शास्त्रले बताए अनुसारको गृहस्थाश्रम पूरा गरेर मात्र यता आउन ठीक देखिन्छ। माथि आएर ख़सियो भने झन् धेरै चोट लाग्छ। माथिल्लो आश्रमबाट गिरियो भने झन् ठूलो पापी बनिन्छ।

**विरक्त युवक :**-गुरुज्यू ! के बलियो वैराग्य आइसकेपछि पनि घर छाड्न बूढेसकाल नै कुरिरहन पर्ला ? फेरि बूढेससम्म बाँचिरहने भरोसा पनि छैन। अर्को कुरा कठिन साधना गर्न अशक्त वृद्ध भएपछि कसरी सकिन्छ ? अब म छोडेको घर फर्कन्न, मलाई घर-गृहस्थी नरकजस्तो लागिरहेको छ। अरु सबैले त घर गृहस्थ गर्न कर लगाएकै छन्, हजूरले पनि त्यही सुँगुर-कुकुर कै व्यवहारमा मलाई नपठाउनुहोस्। मलाई यहीं रहन दिनुहोस्।

**ज्ञानीगुरु :-** तिम्रो बलियो वैराग्य देखेर म निकै खुशी भएँ, चिन्ता नलेऊ, मेरै साथ बसौला, तिम्रो पिशाबघर सम्बन्धी रोग भएजस्तो मैले ठानें, कमजोर रोगी शरीरद्वारा त ईश्वर भजन पनि हुन्न बाबु ! रोगीले त सधैं आफ्नै रोगबाट भएको कष्टको मात्र चिन्तन गर्नुपर्ने हुन्छ। जाऊ ! पोखरा गई अप्रेशन गरी रोग हटाएर मन भए आऊ ! मैले जोगी बनाउने हो, भोगी बन्ने भए उतै बस्नू, जोगी हुने भए यता आउनू। तिमी असली जोगी बन्ने जस्ता ठानी मैले बोलाएको हूँ। मैले जो सुकैलाई राख्दिन। भोगी जोगीकहाँ आयो भने जोगीको वृत्ति पनि बिगारिदिन्छ। संगतको फल सबैले भोग्नु नै पर्छ।



यसैबेला व्याकुल हुँदै जेठा छोरा देवीलाललाई साथमा लिई श्रीटीकाराम कण्डेलज्यू टुप्लुक्क आइपुग्नुभयो।'बेसै भयो, दवाइ गर्न मात्रै थिएन, यी महात्माका अर्तिले गर्दा मान्यो, भनी तीन बाबुछोरा भएर आ-आफ्ना मनोरथ सिद्ध हुन्छन् कि भन्दै मनमनै कुरा खेलाउँदै महात्मालाई ढोगी पोखरातिर लागे। बाबुको मनमा यो रोग हटेपछि त विवाह गर्ला कि! भन्ने आशा थियो भने विरक्त छोराका मनले भने निरोग भएर गुरुको सेवा गर्न पाउँला कि भन्ने आशा लिएको थियो।

२०१२ सालमा चैत्र २६ गते अस्पतालमा भर्ती भई, २०१३ साल वैशाख ४ गते भएको अप्रेशनद्वारा मूत्राशयबाट तीनवटा पत्थर निस्केका थिए। वि०सं० २०१३ जेठ १७ गते, मुसुङ फर्की बुबा र दाजुलाई पठाई आफू त्यहीं नै रहनुभयो। उनीहरूको लैजाने अथक प्रयास सफल भएन।

यता पोखराबाट फर्केपछि वेदान्तको अध्ययनका साथ सत्सङ्ग निरन्तर चलिरहन्थ्यो।

२०१४ साल चैत्र १२ गते मुसुङमा गुरु दर्शन गरी तीनकुले कान्छा धुवाँकोटतर्फ फर्केपछि स्वामीज्यूका गुरुदेवका कान्छा छोरा नारायण (उमेर १८ वर्ष) आफ्ना काकालाई साथमा लिई पतिव्रता माताका प्रेरणाले पिताज्यू भेट्न मुसुङ आउनुभयो। नजन्मदैबाट आफ्ना गुरुदेवले छाडिएका गुरुपुत्र नारायणप्रति स्वामीज्यूको प्रेमभाव विंशेषरूपले भयो। सबै आफ्ना घरको स्थिति र पिताज्यूको समग्र चरित्र उनीले स्वामीज्यूलाई सुनाए। सबै घटना सुन्दा गुरुदेवप्रति झन् आदरभाव बढ्यो। फर्कने बेलामा महागुरुले स्वामीज्यूलाई साक्षी राखी उनीहरूलाई भन्नुभयो—"मेरा विचारहरू त्यताका संबैले बुझेकै छन्, मेरो अर्ति मानी वहीं बसी, ईश्वर चिन्तन गर्नु, कष्ट उठाएर यति टाढा आउनुपर्दैन, यो खबर त्यता सबैलाई सुनाइदिनू कसैले दुःख नपाऊन्।"

५ दिन मुसुङमा साथै रहँदा गुरुपुत्रप्रति स्वामीज्यूका मनमा विशेष दया पलायो। उनका प्रति गुरुदेवको पनि केही कर्तव्य अवशेष रहेको समेत स्वामीज्यूका अन्तरात्माले ठान्यो। गुरुको शेष कर्तव्य विरक्त शिष्यले गर्नुपर्ने कुरा पनि मनमा खेल्न लागे। तर उनले विवाह गर्न चाहेका छन्, आमाको पत्नी-पुत्रको पालन पोषण गर्दा धन-सम्पत्ति चाहिन्छ, उनको पासमा केही छैन। कसरी उनका इच्छाहरू पूरा हुन्छन्? स्वामीज्यूलाई रातदिन यही चिन्ता हुन लाग्यो। गुरुदेवसँग वहाँका घरसम्बन्धीलाई सहयोग गर्ने कुरामा सल्लाह नमिल्ने ठानी उहाँसंग भने केही चर्चा गर्नुभएको थिएन। मसंग केही सम्पत्ति भए त यी गुरुपुत्रको केही व्यवस्था गराइदिने थिए। यस्तै सोच-विचारकै बीचमा याद भयो कि पिताज्यूले मेरो अंश दिन खोजिरहनुभएको छ। त्यही बेची यतै ल्याएर गुरु र गुरु-पुत्र दुबैको सेवा गर्न मिल्ने ठाउँमा जमिन किनी धुवाँकोटबाट छुटाई गुरुआमा र गुरुपुत्रलाई यतै ल्याई आफ्नो सम्पत्ति दान दिन्छु भन्ने मनमनै निर्णय गरी गुरुसंग एकपटक माता पिताको दर्शन गरी आउँछु भनी बिदा भई, सिरवारी गई शिवालयमा डेरा गरी, तीनदिनसम्म सत्सङ्ग चलाई पिताज्यूको आग्रह स्वीकार गरी आफ्नो हिस्साको धन २०१६ सालको माघ ७ गते लिई जमिन किनी गुरुपुत्रलाई दान गर्छु; तपाइँहरूलाई पनि भूमिदानमा बोलाउनेछु भन्ने सूचना समेत दिई मुसुङ फर्कनु भयो।

यता सर्वज्ञ योगी गुरुदेवले ब्रह्मचारीको मनमा सङ्कल्प अङ्कुराएकाले चिन्तामा भएको थाहापाएपछि गुरु शिष्यको यस्तो संवाद भयो—

गुरु :- ब्रह्मचारी! तिमीलाई मनमा कुनै सङ्कल्प टुसाए जस्तो छ नि? साँच्चै भन त के सङ्कल्प हो? आज-भोलि तिम्रा अनुहारले चिन्ता ओकेलिरहेको छ।

शिष्यः-गुरुदेव! योगीश्वर हजूरले नजान्ने के छ र? मेरो मनमा सङ्कल्प उब्जेर चिन्ता पारेको साँच्चै हो। गुरुआमा र गुरुपुत्रको खाने लाउने व्यवस्था कमजोर देखिएकाले उनीहरूको केही व्यवस्था मिलाइदिन पाए हुन्थ्यो

भन्ने सङ्कल्प उत्पन्न भयो। मैले यहीं आएको बेला बुझेको छु कि नारायणको गृहस्थाश्रममा प्रवेश लिन मनछ। गृहस्थी चलाउन धन चाहिने हुँदा पिताज्यूले दिइरहेकै अंश लिन नै म यसपटक शिरवारी पुगें। अंश पैसाको रूपमा बुझी यहीं ल्याएर आएको छु। मैले म्याग्दीमै जमिन किनी घरगोठ मिलाई गुरुपुत्रलाई यतै ल्याई सङ्कल्प गरी दान दिने हो भनी मातापिता समेतलाई निम्ता गरिसकें। पैसा पनि यहीं छ, कहाँ कति जमिन लिने अरू व्यवस्था कसरी मिलाउने ? उती पररहेका आमा र भाइ कसरी ल्याउने आदि विषयहरूले मलाई पिरली रहेका छन्। आज-भोलि आत्मचिन्तन नभएर यिनै विषयको चिन्तन भइरहेको छ गुरुदेव!

गुरु :- यो सङ्कल्प पूरा नहुन्जेल तिमी सधैं अशान्त रहनेछौ। चाँडो आँटेको काम पूरा गरी आफ्नो साधनातर्फ लाग। यस सङ्कल्पले गर्दा केही साधना मार्गमा अवरोध खडा भयो। अर्कालाई गृहस्थीमा झोसेर नै भए पनि तिमीले पनि गृहस्थका सुखदुःखको अनुभव गर्ने भयौ। यो पनि तिम्रा प्रारब्धको नै खेला हो। छोरो जन्माउने बाबु निश्चिन्त छ, दाम्पत्य जीवनको गन्ध पनि नसुँघेको ब्रह्मचारी अर्काको छोरोको विवाह गर्न घर गोठ, जमिन जम्मा पार्न भुट्भुटिएको छ। ठीक छ, यतिगरेपछि तिम्रा टाउकाबाट गृहस्थीका भूमरीमा पर्ने दोष हट्ने भयो। जन्मान्तरका केही वासना बाकी रहेकाले नै यो गृहस्थीको व्यवहारमा हात राख्न मन लागेको हो। धन्य छ! प्रारब्धको महिमा। यसले कसैलाई पनि छोड्दैन। मैलाई पनि एकटक सर्वस्व दान गरेर हिंडेपछि फेरि प्रारब्ध नसकिएकोले केही वर्षको लागि नयाँ ठाउँमा गई गृहस्थी जमाउन कर लागेको थियो। जाऊ,छिट्टै संकल्प पूर्ति गरेर फर्क। सकेसम्म साधुले राम्रो नराम्रो कुनै संकल्प नै नगर्नू, नराम्रो काम मनमा सङ्कल्पको रूपमा उब्जिहाले पनि त्यसको पूर्ति गर्ने तर्फ च्वाट्टै छाडिदिनू, राम्रो कामको सङ्कल्प भैसक्यो भने छिट्टै पूर्ति गरी आफ्नो साधनामा नै तुरुन्त फर्कनू। साधुले अन्त अन्तै सत्कर्म, परोपकार भनेर, नअल्झिराख्नू, आफ्नो आत्म-चिन्तनरूपी मूलकाममा फर्की जानू, त्यसो नभए साधुता भित्रभित्रै खोक्रिंदै गएर एकदिन बुर्लुङ्ग लड्छ।

यता स्वामी परमानन्दज्यू बरङ्जा लाम्पाटा गई गुरुमाता र गुरुपुत्रको निम्ति जमीन चहार्दै हुनुहुन्थ्यो। उता धूवाँकोटको चौतारी भन्ने ठाउँमा आमा-छोराको यसप्रकार बातचित भइरहेको थियो—

''बाबु! भेट्यौ त बुबालाई? कहाँ? कसरी?....'' भन्दा-भन्दै माता नन्दकलाका आँखा डबडबाएका थिए।

"अरू त उनै तीनकुले कान्छा दाइले भनेजस्तै हो। आजभोलि बुबाका साथमा एउटा मैरै उमेरका धपक्क बल्दो अनुहार भएका उहाँका ब्रह्मचारी चेला रहनुहुँदो रहेछ। घर छोडी ज्ञान सिक्न आएका रे! त्यति गुरुसेवा गर्न जानेको त कोही हुन्न आमा! अरु आउने जति सबैलाई पनि कति सेवा पुऱ्याउन सकेका हुन्। पहेंला कपडा लगाई केही न केही पढिराखेका या जपिराखेका देखिन्छन्, ती ब्रह्मचारी। गुरुले गर्भैदेखि छाडेका गुरुका छोरा भनी मलाई निकै माया गरे। मेरा पाउमा शिर राखी ढोगे। आफ्नै हातले मिचीमिची गोडा धोइदिए। सारै असल छन् आमा ती त। साक्षात् देवताजस्ता छन्। वहाँ बाबालाई केही दुःख छैन, आमा! दुःख त घर बस्ने हामीजस्तालाई पो हुने रहेछ। तपाइँलाई र मलाई बाबाले चोखीनिष्ठा गर्ने, झूठो नबोल्ने, मासु नखाने र ईश्वर नभुल्ने, नियम कहिल्यै नछोड्न भन्नुभएको छ। बाबाले त मलाई फेरि ''यहाँ नआउनू'' भन्नु भएको छ। तर ती ब्रह्मचारीले भने बाबाले नसुन्ने गरी ''तपाइँहरूलाई यसै देशमा ल्याउने व्यवस्था मिलाउँदै छु—आमालाई न आत्तिन भन्नू।'' केही दिनपछि तपाइँहरूलाई ल्याउन म स्वयं आउनेछु भन्नुभयो''—यसरी मुसुङका धुरीका कुरा विरहाकुल आमालाई सुनाई आमालाई छोराले सन्तोष दिलाए।



यता ब्रह्मचारीज्यू म्याग्दी जिल्लाकै बराङ्जा नामको गाउँमा गई जमीन खोज्न थाल्नुभयो। मुसुङका ब्रह्मचारी आउनुभएको खबरले सारा गाउँले लाम्पाटा भन्ने ठाउँमा जम्मा भए। त्यहींनेर 'दूर्दी' नामको आहाल अर्थात् सरोवर थियो। वरपर सबै हेर्दा स्वामीज्यूलाई यही ठाउँ मन पऱ्यो। गाउँलेहरूले एक शिवालय बनाई यहीं बस्नुहोस् ''यहाँ साधुसन्त कोही छैन, हामीले धर्मका कुरा बुझ्न पाएनौं'' भनी श्रद्धाभाव देखाएपछि ब्रह्मचारीज्यूले आफ्ना गुरुपुत्रलाई दान दिने जमिन चाहिएको कुरा गर्दा लाम्पाटाको घर सहितको जमिन लिने निर्णय गरी पैसा बुझाई आफ्ना नामका कागजपत्र लेखाउनुभयो। पछि दूर्दीको आहालनेरको खाली जमिनमा शिवालय बनाई पूजा चलाउने पर्व-पर्वमा कीर्तन गाउने, बाटो र पानी समेतको व्यवस्था मिलाउन पर्ने कुरामा चर्चा भएकाले गाउँलेहरू धेरै आशान्वित भए।

यसरी गुरुपुत्रको निम्ति जमिन लिएर स्वामीज्यू माथि मुसुङ पुगी गुरुलाई सबैकुरा बताई, आज्ञा लिई २०१६ साल माघ १४ गते बिहानै धुवाँकोट तर्फ प्रस्थान गरी १७ गते साँझ 'चौतारी' भन्ने ठाउँमा गुरुमाता र गुरुपुत्रसँग भेट गरी सारा बातचित गर्नुभयो। दुई दिन गुरुको जन्मभूमि 'चिती' तथा तपोभूमि 'देवीथान' गढीको गुफामा घुमी, गुरुभक्त तथा सम्बन्धीहरूसँग प्रेमपूर्वक भेट गरी भेला भएका समाजलाई धर्मको उपदेश गरी मोहित बनाउनु भयो। उपदेशको शैली आदिबाट नयाँ रूप लिएर आएका छविलाल गुरु नै सम्झी सबैले चरण वन्दना गरे। ''इनीहरूलाई उता नलैजानुहोस् बरू हजूर पनि यतै रहनुहोस्'' भनी विनम्र निवेदन गर्दै सबै रुन लागे। उहाँले वहाँ जमिन किनिसकेको र गुरुलाई पनि छोड्न नहुने कुरा देखाई भोलि नै गुरुआमा र गुरुपुत्रलाई लिई हिंड्ने निधो सुनाउनुभयो। फेरि कुनै समय यहाँ आउने वचन दिनुभयो।

बराङ्जाको लाम्पाटामा २३ गते बेलुका गुरु-परिवारको साथमा आएका उदार ब्रह्मचारीको सबैले भेट दर्शन गरे। उहाँहरूलाई आफूले किनेका घरमा राखी स्वयं भोजन बनाई, खुवाई, खाई, शयन गर्नुभयो। बिहान उठी गाई, भैंसी खरीद गरी, गोठमा बाँधिदिई, साँध-किल्ला बताई मुसुङ गई गुरु दर्शन गरी सबै कुरा बताउनुभयो। ''अब त ढुक्क भयो?'' भनी सोध्दा ''अझै धेरै कुरा मिलाउन बाँकी छ'' भन्दै बराङ्जा फर्कने आज्ञा लिनुभयो। हलो, जुवा, गोरु, हली, नाङ्लो, दाम्लो, डोको, स्याखु, घुम, आँसी-खुरपेटो समेतका सामान थोरै दिनमा गुरुपुत्रलाई जम्मा गराइदिई शिवालय बनाउने जनसभा जोड्नुभयो। त्यहाँ खानेपानीको कुवा राम्रो नरहेकाले जनता जुटाई त्यसको सुधार गर्नुभयो। पछि वर्षामा खेत रोपाइ गर्न पानी नपुग्ने समस्या देखी टाढाबाट कुलो खनी पानी ल्याउने व्यवस्था पनि मिलाउनु भयो। साङ्ग्रा-अप्ठारा बाटाहरूको सुधार गराई केही महिनाभित्रै बराङ्जाको रूपरेखा नै बदल्नुभयो। बराङ्जालीहरूले ब्रह्मचारीको अरुलाई काममा लगाउने क्षमतामात्र नभएर स्वयं नै अगि सरी अरूले गर्न नसकेको अप्ठेरो काम गर्ने बानी पनि देखे। नारायणलाई गृहस्थीको काम सिकाउन सबै काममा स्वयं लाग्नुभयो। सारा संसारमा अवनति भएको कारण हो आफूले नगर्ने, अरुलाई गर्न लगाउने। जहाँ अह्राउने वाला स्वयं अघि सरेर अरुले भन्दा धेरै काम गर्छ, त्यहाँ अवश्य प्रगति हुन्छ। गाउँ भरिका मानिस जम्मा भई पाला-पालैसंग प्रत्येक घरको एकसाथ काम गर्ने चलनलाई 'हुद्दा पस्ने' भन्ने नाम थियो। नारायणको साथ ब्रह्मचारीज्यू हुद्दामा पनि पस्नुभयो। गोड्न, रोप्न, काट्न, सबैमा हुद्दा पस्तथे। अरुले भन्दा दोब्बर काम गर्नुको साथै स्वामीज्यू मुखले उपदेश पनि गर्दै रहनुहुन्थ्यो। हुद्दामा रहेका मानिसहरूले हजूरको काम हामी गर्छौं, काम नगरी बसे पनि सबैले खेतालो तिर्नेछौं भनी काम नगर्न अनुरोध गर्दा पनि काम गर्दै रहनुभयो। सबैलाई भन्नुभयो ''शरीरमा शक्ति छँदाछँदै काम नगरी बसी खान खोज्नु महान् अपराध हो। काम नगर्नेलाई सानो भन्नुपर्छ, काम गर्नेलाई होइन। थिनै दश नङ्ग्रीगा लक्ष्मीको निवास छ, दश नङ्ग्री खियाउने-संगमात्र लक्ष्मी प्रसन्न रहनुहुन्छ। लक्ष्मी प्रसन्न नभए नारायण प्रसन्न

हुनुहुन्न। नारायण प्रसन्न नभएसम्म कुनै पनि इष्टसिद्धि हुन्न। अतः परिश्रमी बन्नु पर्छ, जति काम गऱ्यो उति काम गर्ने शक्तिको विकास हुन्छ। जति अल्छी गऱ्यो उति आफ्नो अमूल्य शक्ति घट्दै जान्छ।'' यस्तो सदुपदेश सुनी बराङ्जामा अल्छीहरूले पनि जाँगर झिक्न थाले। अल्छीलाई टाढै भगाए। यसरी बराङ्जामा जाँगर र नयाँ उत्साहको सञ्चार भयो। भजन कीर्तन र सत्सङ्गको पनि चलन चल्यो। शिवालय बनाई पूजाको निम्ति गुठीको व्यवस्था मिलाई पूजारीको नियुक्ति समेत थोरै दिनभित्र नै गर्नुभयो।

नन्दकला र नारायण दुबैले बराङ्जामा आउँदैका दिनदेखि तपस्वीको दर्शन गर्न खोजेका थिए। ब्रह्मचारीज्यूलाई अप्ठ्यारो परेको थियो। लैजाऊँ त गुरुदेवलाई कष्ट, नलैजाऊँ त गुरुपरिवारलाई कष्ट। नलगी नहुने भएको थियो। एकपटक देखेर मात्रै फर्कने कुरामा सम्म दुबै आमा-छोरा सहमत भएका थिए। गुरुलाई सोद्धा नल्याऊ भन्नुभएछ भने लैजान मिलेन, जिन्दगीभरि यहाँहरूले दर्शन नपाउने हुनुभयो। जे होला अब नसोधी लैजान्छु भन्ने निश्चय गरी गुरुमाता र गुरुपुत्रलाई साथमा लिई डरडरैसँग मुसुङ पुग्नुभयो। लेखको उचाई र वनको माझ देखेर नन्दकलाका आँखा वर्षन लागे। यतिका वर्षपछि देवीथानबाट भागेका पतिदेवको यहाँ यस्तो दुर्गम ठाउँमा दर्शन पाउँदा साथ कति नै रोक्छु भन्दाभन्दै पनि डाँको छुट्यो। दर्शन दिलाई तुरुन्तै आमा-छोरालाई ब्रह्मचारीज्यूले फिर्ता गरिदिनुभयो। चारबजे दिउँसो गुरु-शिष्यको यस्तो संवाद भयो—

''गुरुदेव! मैले गल्ती गरें, विरक्तवृत्तिमा रहने महापुरुषलाई उनका देहसम्बन्धी उपस्थित पारी कष्ट दिनु गल्ती हो, क्षमा दिनुहोस्'' भन्दै शिष्यले पछुतो जनाउनु भयो।

''हेर ब्रह्मचारी! नारायण या उनकी आमा जोसुकै आए पनि मलाई अब कुनै कष्ट छैन, चिन्ता नगर। ईश्वर कृपाले अब मलाई आफ्नो र पराइको भेद सकिएको छ। तलकी मगर्नी माइली र उसको छोरो होस् या नारायणकी आमा र नारायण होस्, मलाई दुबै थरी समान छन्। न अब मलाई कसैलाई देखेर हुरुक्क माया लाग्छ, न त झनक्क रीस उठ्छ। तिमीले उनीहरूको भलो गरेर गुरु खुशी हुनुभएको होला या रिसाउनुभएको होला भन्ने केही नसोच। म खुशी नै भएको छु, तर मेरा पत्नी पुत्रको उपकार गरे ब्रह्मचारीले भनेर खुशी भएको छैन, मानिसले मानिसको दुःख देख्यो भनेर म खुशी नै छु। यस कुरामा भने केही चिन्ता लागेको छ कि यिनीहरूको व्यवस्था मिलाई सुख दिने सङ्कल्प लिई ब्रह्मचारीले दुख पाए। हेर! पूरा नहुन्जेल सङ्कल्पले दुःख दिन्छ। जस्तो सङ्कल्प गऱ्यो ठीक त्यस्तै गरी काम पूरा पनि नहुने हुँदा सङ्कल्प दुःखदायी नै हो, तर आँटी गयौ, रहर पुऱ्याऊ, हुन त कसैले सुख दिएर कोही सुखी बन्नेवाला छैन। तर पनि परोपकारतर्फ लाग्नु असल काम हो'' भन्दै गुरुदेव आफ्ना नित्यकर्मतिर लाग्नुभयो।

केही दिन मुसुङमै गुरुसेवा एवं सत्सङ्गको क्रम फेरि चलिरहेको थियो। एकदिन ब्रह्मचारी शिष्य-संग गुरुले आफ्नो बदलिएको विचार सुनाउनुभयो—

"मलाई अब यो ठाउँ छाडौं कि जस्तो लागेको छ। यहाँ परिचय बढ्दै गयो, अब यहाँ तपस्या कमाइन्न, धन कमाउन चाहे बरु कमाइएला। जोपाई जान नसक्ने ठाउँ चाहियो, कहाँ छ त्यस्तो ठाउँ समय-समयमा तिमी पनि साथै चाहिन्छौ। त्यस्तो ठाउँ कतै थाहा छ?'' भन्दै गुरुले मुसुङ छाड्ने इच्छा प्रकट गर्नुभयो।

''ठीक भने जस्तो ठाउँ बराङ्जाको धुरी माथि छ। सोली घोप्ट्याएजस्तो देखिने हुनाले यसलाई सोलीघोप्टे पनि भन्छन्। उतापट्टि ताराखोलाको भेग पर्छ। यता म्याग्दीको बराङ्जा भयो। जन्तुको भने अल्लि डरै छ। अरु ठीकै छ त्यहाँ''। भनी शिष्यले सोलीघोप्टे जाने प्रस्ताव राख्नुभयो।

"मलाई जन्तुको केही डर छैन। धेरै दिनदेखि वनवासी भएँ, बाघ, भालु, दाइभाइजस्ता मान्छु। यो हामी जस्तै वनवासी हो भन्ने जानेपछि जङ्गली कुनै जन्तुले केही गर्दैन। गाउँतिर धेरै बसेर फर्कंदा केही डर हुन्छ। जङ्गलमै रहँदा केही डर हुन्न। गाउँका बाख्राका पाठा झैं बाघहरू मेरा त कहिले अघि-अघि हिड्छन् त कहिले पछि-पछि। अरु आउन नसकेमा राम्रै भयो। खोजेकै त्यही हो"—गुरुद्वारा सोलीघोप्टे जाने स्वीकृति मिल्यो।

"एकपटक थामीका धुरीमा पुगी त्यहाँको स्थिति बुझी सकेसम्म कुटीको रूपरेखा पनि मिलाई आउँछु, यही २०१७ साल माघ १२ गते बराङ्जाको जमिन नारायणज्यूलाई दान दिने भनेर शरीरका जन्मदाता समेतलाई बोलाएको छु। यो काम सकेर म थामी जान्छु। १८ सालको लाग्दैसम्म हामी थामी जाउँला। बराङ्जामा नारायणको विवाहका कुरा पनि चलाएको छु। सबै मिलाएर जाँदा चैत निश्चय नै बित्छ।

२०१७ साल माघको १२ गते बराङ्जा लाम्पाटानेरको शिवालयमा रुद्री छ, शिरवारीबाट पिताज्यू पनि अरु साथी लिएर आउनुभएको छ। आपसमा पुरोहित, पण्डितहरू जुटेका छन्, आज रातभरि भजन गर्ने सल्लाह छ, गुरुपुत्र नारायण नयाँ कपडाले सिंगारिएका छन् किनभने आज स्वामी परमानन्दज्यूले आफ्नो पैत्रिक सम्पत्ति बेची ल्याएका धनले यहाँ बराङ्जामा जमिन घर, गोठसमेत किनी गाई, भैंसी, गोरु आदि आवश्यक गृहस्थीका सबै समान् जुटाई आज उनलाई सर्वस्व दान दिनुहुनेभएको छ, भोज, भतेर पनि निकै चलेको छ। यसरी सर्वस्व दान दिने यस क्षेत्रमा कहीं-कसैले नगरेको हुनाले सबैले सारै अचम्म मानी ठाउँ-ठाउँमा यही चर्चा चलाएका छन्। अबदेखि यस घरमा ब्रह्मचारीज्यू आउन नहुने, आएमा शिवालयतिर नै बस्ने भन्ने चर्चा पनि छ।

## साधु गुरु र त्यागी चेला सोलीघोप्टे थामीमा

स्वामी परमानन्दज्यू माघमा भूमि-दान दिएपछि पनि गुरुपुत्रको बाँकी व्यवस्था मिलाउने काममा नै व्यस्त रहनुभयो। चैत्रको निस्कँदा मात्र फुर्सद लिई गुरुको बंसाइँ सार्ने व्यवस्था मिलाउन एक्लै थामीको धुरीमा पुगी एकरात धुनी जगाई त्यहीं बसी वरपर हेरी ठाउँ मन परी सिधै मुसुङ फर्कनुभयो। गुरु सहित दोस्रो दिन थामीको लागि प्रस्थान गर्नुभयो। थामी पुगी गुरुदेवले ब्रह्मचारीलाई पनि एकान्त बास गर्छु भनी फिर्ता गरी तीन दिनसम्म खर्सूको धोद्रामा बसी तपस्या गर्नुभयो। तीन दिनपछि ब्रह्मचारीज्यूले केही गाउँलेहरू लगी कुटी तयार पारी गुरुशिष्य नै कठिन तपस्यापूर्वक त्यहाँ रहन लाग्नुभयो, त्यहाँ अन्न मिल्दैनन्थ्यो, किनभने त्यहाँ कोही मानिस बन जन्तुका डरले पुग्न सक्दैनथ्यो। सिस्नु, निहुरो, बाँसका टुसा आदि लेखमा पाइने सागपातले जीवन धारण गर्दै ०१८ सालको प्रारम्भदेखि ०२१ सालसम्म गुरु शिष्यले ठूलो साधना गर्नुभयो।

गुरुदेव त अखण्ड नै बस्नुभयो तर शिष्य भने बराङ्जामा नारायणपरिवारका सेवाका कामले गर्दा केही कम समय रहनुभयो।

यसै बीचमा स्वामीज्यू मद्रास जानुपर्‍यो। नारायणज्यूलाई घर, गोठ,जमीन समेतको व्यवस्था मिलाएर पनि शेष अरु विवाहआदि काम गर्दा ऋण लाग्यो। त्यो ऋण स्वामीज्यूले आफ्नै जिम्मेदारीमा लिनुभएकोले तिरिदिन आवश्यक भयो। पाँचसय ऋण तिर्न २०१९ साल फाल्गुन १४ गते मद्रासको लागि प्रस्थान गर्नुभयो। फाल्गुनकै २५ गते मद्रास पुग्नुभयो। खोज्दा बजारको चौकीदारी गर्ने काम फेलापर्‍यो र छ महिनासम्ममा तिर्ने रूपैया जम्मा भएपछि फर्केर आश्विन ७ गते बराङ्जा आई साहू बोलाई, व्याजसहित ऋण चुक्ता गर्नुभयो। सोलीघोप्टे जस्तो उच्च शिखरमा साग सिस्नुमात्र खाएर तपस्या गरिरहने साधुले अर्काका लागि लिइदिएको ऋण तिर्न मद्रास पुगी रातिको बजारको चौकीदारी जस्तो काम

गर्नु पऱ्यो धर्म रक्षाका लागि। ऋण नतिर्नु पनि अधर्म हो। यस अधर्मबाट बच्न साधनमा लागेका साधुलाई पनि मद्रास पुग्नुपऱ्यो। पापबाट डराउनेहरूले यसरी पनि ऋण फिर्ता दिन्छन्। यस्तो आदर्श स्वामीज्यूका चरित्रबाट झल्किन्छ। नारायणको निमित्त लिएको ऋणबाट मुक्त भएपछि उहाँले सबै ग्रामवासीलाई बोलाई शिवालयको पूजा चलाउन भजन कीर्तन नछोड्न र नारायणलाई अह्राइ-सिकाइ गर्न अनुरोध गर्दै अब उपरान्त म सधैं गुरु-सेवामा नै रहन्छु धेरै दिनदेखि मेरो गुरुसेवा, सत्सङ्ग र साधना अल्मलिएको छ भन्दै हरका कपड़ाबाहेक केही नलिई थामीका धुरीतर्फ लाग्नुभयो। यस्तो यो अद्भुत चरित्र देख्ने, सुन्ने सबैले आश्चर्य माने।

२०२० सालका असौजदेखि २०२१ चैत्रसम्म थामीमा नै गुरुका साथ कठिन साधना गर्दै बिताउनु भयो।

त्यति अग्लो लेखमा दुइजना साधुले तपस्या गरेका छन्। त्यहाँ खाने अन्न केही पनि छैन भन्ने कुराको प्रचार भएकाले कति नै नआओ भन्दा-भन्दै पनि श्रद्धालु भक्तहरू खाने अन्न बोकेर आउन लागे। श्रद्धाको बाढी उर्लिएको हुनाले बन जन्तुको डर पनि मानेनन्। यसरी यहाँ पनि मानिसहरूद्वारा अन्नहरू आउन थाल्यो। "हामी जसरी पनि बाँच्दछौं, यति जन्तु यहाँ जङ्गलमा छन्, कसैले बाहिरबाट केही ल्याएर खान्नन्, केवल हामीले बाहिरबाट ल्याएर किन खाने?" यस्तो भन्दाभन्दै पनि एक व्यक्तिलाई अन्नलिई आउँदा बाघले मारेको खबर पाई महागुरु अन्यन्त चिन्तित हुनुभयो। "हामी यहाँ बस्दा श्रद्धालुहरूलाई वन जन्तुहरूले खाने भए, अब यो ठाउँ पनि छाडौं" भन्ने गुरु शिष्यको सल्लाह भएर स्वामीज्यू बाग्लुङ्ग जिल्लाको तङ्ग्राम र फापरखेतका माथिको धुरीतर्फ लाग्नुभयो। त्यहाँबाट धिहूँ या शिरवारी धेरै टाढा थिएनन्।

## झुलेनीको निवास र गुरुवियोगको वेदना

झुलेनीको धुरीमा गई ठाउँ ठम्याई, कुटी वनाई २०२२ सालको मार्गमा थामी आई गुरुदेव सहित स्वामीज्यू वहीं झुलेनी फर्कनुभयो। वादल झुलीरहने हुँदा, त्यस ठाउँलाई झुलेनी भनिएको थियो होला। साथै रुखहरूमा झुल धेरै लाग्ने हुँदा पनि यस लेकलाई झुलेनी भने होलान्। स्वामी परमानन्दज्यूका जन्मभूमिको निकट रहेकाले यहाँ आवत-जावत गर्नेहरूको संख्या वढ्यो। धेरै टाढावाट पनि भक्तहरू आउन थाले। सत्सङ्ग भजन-कीर्तन समेत रमझम पनि त्यहाँ थपियो। गुरु शिष्य दुवैले वेद-विद्या लोप हुन लागेकाले यसको रक्षा गर्नु पर्ने विचार समाजलाई दिन थाल्नुभयो। यसरी धर्म प्रचार गर्दै झुलेनीमा २०२३ सालको साउनसम्म आनन्दपूर्वक बिताउनु भयो।

२०२३ साल भाद्रको पहिलो हसामा धुवाँकोटतर्फका मानिसहरू साधु धर्मानन्दको साथमा झुलेनी आए। पहिले गुरु छविलालसंग धुवाँकोट जान आग्रह गरे। वहाँबाट स्वीकृति नमिलेपछि ब्रह्मचारीज्यूलाई लान पाऊँ भनी प्रार्थना गर्दा उनको चाहना भए जाउन् भन्ने गुरुको आदेश सुनी स्वामीज्यू ०२३ साल भदौका ९ गते झुलेनीबाट गुरुको निर्देशन लिई धर्मानन्दसमेतका व्यक्तिहरूको साथ बाग्लुङ बजारको बाटो पर्वत जिल्लाको कार्कीनेटा नजिकको डहरेको धुरीमा पुगी त्यहीं एक महिना वेदान्त प्रवचन गर्नुभयो। त्यहाँ मङ्गलाश्रम नामले आश्रम सञ्चालन हुनथाल्यो। त्यसपछि आश्विन १० गतेदेखि डहरे नजिकै रहेको हरिहर गुफामा रहन थाल्नु भयो। केही दिन त्यहाँ तपस्या गरेपछि ६ महिना जति घुम्दै आत्मपुराण, योगवासिष्ठ आदि ग्रन्थहरूको प्रवचन द्वारा गुरुदेवले तपस्या गरेका ठाउँहरू र गुरु जन्मभूमि, कर्मभूमि आदि त्यस क्षेत्रका ठाउँहरूमा ब्रह्मविद्याको प्रचार गरी गुरुदेवको महत्त्व सबैलाई बताउनु भयो।

गुरुवर श्रीछविलालज्यूका शिष्य आएका छन् भन्ने थाहापाई जता-ततैबाट जनता आई सम्पर्क धेरै बढेकाले आफ्नो योगाभ्यास बिग्रने ठानी त्यसठाउँलाई छाडी कृष्ण गण्डकीको तटमा रहेको उच्च शिखर हिलेतर्फ लाग्नुभयो। सेतीवेनीमा महाशिलाको दर्शन गरी गण्डकी नुहाई ठूलो वगरबाट उकालो लागी गुल्मी हिलेपर्वतको चुचुरोमा पुगी २०२३

साल चैत्र २८ गते देखि २०२४ साल भाद्रसम्म झारपात मात्र सेवन गरेर कठोर तपस्या गर्नुभयो। स्वप्नमा गुरुको याद आएर अब गुरुको सेवामा जीवनभरि रहन्छु भन्ने संकल्प लिएर २४ सालको भाद्रमा झुलेनी आई गुरुदर्शन गर्नुभयो। फेरि उहीं सत्सङ्ग र सेवाको काम थालियो। केही दिन बितेपछि उसै वर्ष फागुनमा त्यहीं गुरु शिष्यको यस्तो संवाद भयो—

"तिम्रो योगाभ्यास पूरा भएको छैन, तरिका त सबै सिकिसकेका छौ, तर अभ्यास गर्न बाँकी छ। एकान्त वास नभइकन योग सिद्ध हुँदैन। म पनि तिमी साथमा रही तिमीले सबै सेवा गरिदिने हुनाले अल्छी बनेको छु। साधुले आफ्नो सबै काम आफैं गर्नु पर्छ। मेरा इन्द्रिय, मेरो शरीर धारण निम्ति सबै काम गर्न समर्थ छन्, आफ्नो काम गर्न सक्नेले अरुको सेवा लिनु असल होइन, तिमी अब यहाँबाट पश्चिम जाऊ, तिमीलाई राम्रो हुनेछ"—गुरुदेवले शिष्यलाई झुलेनीबाट अन्त जाने आज्ञा दिनुभयो।

"गुरुदेव! हजूरका चरणदेखि अन्त मलाई कतै शान्ति मिल्ला जस्तो लाग्दैन। म अब जीवनभरि गुरुसेवा गर्दै साथै रहने इच्छाले हिलेबाट फर्केको हूँ। मलाई गुरु-सेवा छाडेर अन्त जाने मन छैन "—शिष्यले विनयपूर्वक प्रार्थना गुर्नभयो।

"भनेको मान, यहाँ नबस, पश्चिमतर्फ गई,योगसिद्धि गर, मलाई एकान्त बस्न देऊ, तिमी पनि एकान्त प्रेमी बन, अरु कसैका सेवाले कोही सुखी बन्दैन, आफ्नै प्रारब्धले सुख-दुःख प्रदान गर्छ, ईश्वरले तिमीलाई झैं नै मलाई पनि बाह्य इन्द्रिय र अन्तःकरण दिएको छ, म आफ्नो आइपरेको सबै काम स्वयं गर्न सक्छु, गुरु-शिष्यमा पनि लामो समयसम्म बस्दा आसक्ति बढ्न सक्छ। दुई जना साथ हुँदा एकजना विरामी भएमा दुबैले पिर लिनुपर्छ। एक्लो छँदा त कुनै चिन्ता नै हुन्न, हामीहरूलाई आफ्नो कष्ट सहने बानी त परेको हुन्छ, अरुको कष्ट भने सहन सकिन्न। त्यसो हुनाले भनेको मान, भोलि नै पश्चिमतर्फ लाग। तिम्रो लागि धेरै राम्रो हुँदै जानेछ"

यसरी स्वामीज्यू गुरु-आज्ञा शिरोपर गरी गुरु-सेवा छोड्न बाध्य हुनुभयो। यो घटना २०२४ साल फाल्गुन २६ गतेको थियो। स्वामीज्यूले अहिलेसम्म तीस शरद् बिताइसक्नु भएको थियो। फागुन २७ गतेको बिहान ७ बजे झुलेनीबाट प्रस्थान गर्दा गुरु भक्त शिष्यका मनमा धेरै कुरा खेले "मेरो सर्वस्व नै गुरुज्यू हुनुहुन्छ। उहाँलाई छाड़ी अब कहाँ गएर बस्ने, मलाई जन्मभूमि बिहूँ छाड़ी शिरवारी आउँदा कुनै कष्ट भएन। ममतामयी माताको मायाको पासो चुडालेर पिताको मुटुमा रहेको विरह-वेदनाको पर्वाह नराखेर शिरवारीबाट निस्कँदा त झन् आनन्दै-आनन्द थियो। मुसुङको धुरी आफ्नो दश नङग्रा खियाएर साग-सब्जी र फलफूलले हराभरा बनाइसकेर छोड्दा पनि गुरुको साथ नछुट्ने भएकाले केही बाधा लागेको होइन, बराङ्जा त गुरु पुत्र नाराणका लागि बसिएको थियो, त्यसलाई आफ्नो आश्रम मानिएको थिएन, छोड्दा कुनै चिन्ता हुने कुरै भएन, बाघ भालुलाई रत्याई बड़ा मिहिनेतले उभ्याइएको थामीको धुरीको कुटी छोड़ेर हिड्दा पनि साथै गुरु रहनुभएकोले केही जस्तो लागेन। झुलेनी आएर बसियो, आसपासको अशिक्षित समाजलाई सम्झाइयो, बुझाइयो, साधु बसेर सबैको भलो हुन्छ भनी पत्यारो पारियो, पानी नपरे पनि साधु बसेर हो, असिना परे पनि साधु बसेर हो भन्ने अशिक्षित समाजमा उभिन कठिन परेको हो। फेरि गुरुको आज्ञा भएकोले नै गुरुले चर्चेका क्षेत्र भनेर मात्रै धुँवाँकोटतर्फ जान खुट्टा चलेका हुन्। हिलेमा चार महिना बस्दा बहुत आनन्द लागेको थियो। समाधि चढ्न कुनै गाह्रो नै हुँदैनथ्यो तर स्वप्नमा दिनदिनैजसो गुरु दर्शन भई राख्दा गुरुदेवलाई दुःख-बिमार भएको हो कि भन्ने आशंकाले सिद्धि-प्राप्ति हुन-हुन लागेको अवस्थामा नै झ्याप्पै झुलेनी आइपुगें। मलाई त योग सिद्धिभन्दा पनि गुरुको साथमा निवास गर्दै गुरुसेवा गर्नु नै ठूलो पुरुषार्थ हो भन्ने लाग्छ। श्रीगुरुदेवका मूर्तिलाई मनमा चिताइराख्नु नै असली ध्यान हो, श्रीगुरुचरणको पूजा नै असली पूजा हो, गुरुले जे उपदेश गर्नुहुन्छ त्यो सबै मान्य हो। फेरि वास्तवमा कर्म, ज्ञान, भक्ति सबै भएपनि गुरुको कृपा

नभएसम्म यस-भवसागरबाट मोक्ष हुँदैन भन्ने कुरामा अलिकति पनि सन्देह लाग्दैन। के गरौं गुरु-आज्ञा उल्लंघन गर्नु हुँदैन, जान्छु, जे होला त नि, उहाँ कै कृपा हो आदि, झुलेनीबाट दिब्रुडतर्फ हिंडिरहनुभएको थियो बिहान ९ बज्दै थियो, बिहूँ पौवाडाँडातर्फ दृष्टि गयो। जाँदा तीन घण्टाको बाटो भए पनि हाराहारी भएकाले निध्याएर हेर्दा केही घर र ठूला रूखहरू देखिन्थे। बाल्यकाल याद भयो। इँडारे पानीको गहिरो, भित्रभित्रै टाढा पुगेर पानी ल्याउन पर्ने इनार, अलैंचेको पँधेरो, बाजे-बज्यैको स्थान, बेला मौकामा त्यहाँ हुने पशु-बलिहरू, सबै आँखा वरिपरि घुमे। आमाको काख छोडाएर बलिदिन ल्याएका दूधमुखे पाठाहरूले म्याँ-म्याँ गरेको पनि कानले सुन्यो, खुकुरीले ती पाठाहरूको टाउको धडबाट छुट्याई बाजे-बाज्यैलाई चढाएको दृश्य पनि आँखा वरिपरि भयो। मनमा चिन्ता लाग्यो—''वेद, गीता, रामायण, भागवत केही छैन, अब धर्मका नाममा, अनाथ विचार पाठा-परेवाहरूको हत्या गर्ने काम चलिरहेको छ। सोह्र संस्कारको लोप भइसकेको छ। पुरोहित-पण्डितहरूमा शिक्षा-दीक्षाको परम्परा हटेर सिउने र आरन थाप्नेहरूले झैं भाइ अंशका रूपमा घर बाँडने परम्परा मात्र बाँकी छ। आमा, बुबाले शिरवारीबाट निस्कँदा ''पितृको उद्धार गरे बाबु!'' भन्नुभएको थियो, एक जना धुरीमा बसेर मात्र पितृहरू कसरी माथि जालान्-जब हजारौ त्यस वंशका सन्तानले पितृलाई नरक धकेल्ने काम रातदिन गरिरहेका छन्। वेद-वेदाङ्ग, नभई हाम्रो सनातन धर्म रहन्न, खै! वेद-वेदाङ्ग यहाँ। विदेशबाट दवाई भनेर रक्सी मिसाइएका सिसीहरू ल्याइरहेका छन्। यहाँका रोगलाई पनपिनै नदिने या निर्मूल पार्ने जड़ीबूटीका खोज नै छैन, सरकार बद्लिरहेका छन्, प्रजातन्त्रले राम्रो हुन्छ भनेर ०७ सालमा ल्याए। फेरि ०१७ सालमा त्यो राम्रो भएन भनेर हटाए, एकता, मित्रताको उपदेश कसैले गर्दैन। यस्तो स्थितिमा साधुले पनि समाजमा हात हालेर निस्वार्थ भई समाज सुधारका काम गर्नुपर्ने देखिन्छ। तर गुरुको अझै तपस्या पूरा गर भन्ने आज्ञा छ, साधुको असली बल त त्यही तपस्या नै हो। जान्छु गुरुको आज्ञा अनुसार पश्चिमतिर लाग्छु। अहिले तपस्या नै गर्छु । अगाडि गुरुकृपाले जे होला''—भन्दै बाटा लाग्नु भयो।

बिहूँ पौवाडाँडातर्फबाटै झुल्की सहस्त्र किरण सूर्य भगवान्ले आपनो वंशमा रामरूपमा अवतार लिएका नारायणको भक्त रामचरित्रको प्रेमीको बाटो उज्यालो पारिरहनु भएको थियो। बिहूँमा, गिठापाटा, धरमदास, हटिया, रामकोट, पोखरा र दहपानीले मेसैसँग मुख देखाउँदै गए, एक्ला ब्रह्मचारी हेर्दै जानुभयो। पश्चिम घोडाबाँधेतिर स्वामीज्यू लम्किरहनु भएको छ। बिहूँको आसपास आयो चिन्नेखाले मनिसका आँखा छल्दै-छल्दै दहपानीमा पानी पिउन खोज्दा, मोही पिलाउने युवकले शिरवारीमा बस्ने डाँडे जेठाका छोरा साइँलालाई चिनिगए। साधु भेषमा स्वामीज्यूले हात जोड्नुभयो। भोलिको कुरा भोलिले नै बताउने छु, अहिले अगि नबडाऊँ भनेपछि ती बुद्धिमान् युवकले साधुलाई राम्रोसँग पढे। साधुको शैली, दृष्टि, शील, तेज र ल्याकतबाट निकै प्रभावित भई बिहूँका भाग्यले साथ दियो भने यिनको नेतृत्त्वमा बिहूँको कायाकल्प गर्न सकिन्छ भन्ने विश्वास मनमनै गरे। नौलो भेषको व्यक्ति देखी डाँडेका छोरा झुलेनीमा बस्ने त हैनन्! भन्ने शंका शंकामा भीड़ जुट्न लाग्यो, बाटामा घर हुने गृहस्थ युवकले आँखाका इशाराले साधु युवकलाई भीडको आँखा छलेर घर-पछाडिबाट बाहिर निकालिदिए। साधुले निकै गुनमानेको उनका आँखाले भनिरहेका थिए—''लौ त, फेरि भेटौंला, है त,''—साधुले भन्नुभयो। थाहै नपाइकन जोडिन पुगेका दुईवटा हातले नमस्कार गर्दै गृहस्थले भने-कुटी कहाँ हो? उत्तरमा साधुले केवल हातका इशाराले ''निश्चित कहीं छैन, जहाँ पनि हुन सक्छ'' भन्नु भएपछि हजूरले न बिर्सिनु होला, जहाँ भएपनि म पत्तो लगाउनेछु भन्दै गृहस्थ युवाले उनको रूप, मनमा नबिर्सिने गरी राखेर साधुलाई बिदा गरे। कुराको गन्ध सुँघ्दै केही बूढापाकाहरू यी दुई युवकको पछि-पछि आइरहेकोले बात लम्बिन सकेन तर पनि त्यही छोटो-मीठो संवाद नै पछि स्वामीज्यूलाई बिहूँ ल्याउने कारण बन्यो। साँझ तोरीखोला डहरे गई महात्मा झ्याम्पाली माइला गुरुका

कुटीमा पुगी बास बस्नुभयो। महात्माले स्वागत पूर्वक केही दिन त्यहीं राखी उहाँबाटै सत्सङ्ग लिनुभयो। त्यहीं बस्न आग्रह गरेतांपनि जन्मभूमिकै निकट भएकाले स्वीकार नगरी झ्याम्पाली महाराजले बताएको आधारमा बाग्लुङ् जिल्लाका यस भेगका धेरै धुरी र अन्य ठाउँहरूको भ्रमण गर्नुभयो।

घुम्टेको फेदी, हरिचौर निस्की अब स्वर्गद्वारीतर्फ नै लाग्छु भन्ने मनले दर्मखोलाको तिरै-तिर पश्चिमलागी बाँसखोला नजिकको गल्याङ भन्ने ठाउँमा गौतम ब्राह्मणका घर पुग्नुभयो। त्यसताक उहाँ पूर्णरूपले कर्मनिष्ठ स्वयंपाकी महात्मा हुनुहुन्थ्यो। आचार नै पहिलो धर्म हो। पहिलो धर्म आचार नभई दोस्रो धर्म ज्ञानप्राप्ति हुन्न भन्ने सिद्धान्तमा विश्वास भएकाले सदाचारमा धेरै ध्यान दिने गर्नुहुन्थ्यो।

गल्याङ (मल्म गा० वि० स०) मा बिहान नित्यक्रिया गरी पाण्डवखानी, सिसाखानीका लेखहरूमा तपस्या गर्ने विचारले दर्मखोलाको दाहिने किनाराको बाटो खोला कै साथसाथ पश्चिमतिर नै सलसली बगिरहनुभएको थियो। बाटामा रिश्मी, छिसदरबार समेतका गाउँहरूको बाटो हुँदै गत महिनाको २६ गते गुरुबाट बिदा लिई झुलेनीबाट पश्चिम लागेका ब्रह्मचारीज्यूले आज २०२४ साल चैत्र १६ गतेसम्म एकदिनका बाटा भित्रै वरपर तपस्याका लागि सुहाउँदो ठाउँ खोजिरहनुभयो, स्वर्गद्वारीतर्फ पुग्ने आँट आएन, किनभने गुरुज्यूका आज्ञाले झुलेनीबाट हिडे पनि मन झुलेनीमा नै झुलिरहेको थियो। गुरुको गन्ध नपाइने ठाउँमा पुग्न पाउ अघि बढेकै थिएनन्। गुरुको सुख-दुःख थाहा पाउने सम्मको ठाउँ खोजिरहनुभएको थियो। प्रेमको गति विचित्र हुन्छ, गुरु-प्रेमका डोरीले बाँधिएका स्वामी परमानन्दज्यू गुँडमा साना चल्ला भएका चरा टाढा जान नसके झैं झुलेनीकै सेरोफेरोमा घुमिरहनुभएको थियो। दाहिने भेगपट्टि, पानीको अभाव रहेकाले अब पुल तरी दर्मखोलाको बाँया पखेरातर्फ लाग्नुभएको थियो। यसरी दर्मखोलाका बाँया तटमा स्थित ठूलाखर्कको वेंसीमा मूल बाटाको चौतारामा चैत्र १६ गतेका दिन दिवा ४ बजेको समयमा पुगेर ठूला खर्कको शिखरपट्टि अग्लो वनले भरिएको पहाड़ हेर्दै अब यहीं बाट यसै बाँया पखेरामा ठडिऊँ कि भन्ने विचारले बिसाइरहेको बेला त्यसै चौतारामा ७० वर्ष जति उमेर भएका वृद्ध बसेको देखी उनको आडमा गई उभिएपछि यसप्रकार बातचित भए—

''को हौ? जोगीपना छ, मानिस सानै छौ?''—गाउँले वृद्धले प्रश्न गरे।

''म साधु हूँ, जोगी, तपस्या गर्न घना जङ्गल खोजेको छु, यता तपाइँहरूको लेखतिर त्यस्तो एकान्त बन छ कि?''—साधुले पनि उत्तर दिएर प्रश्न थप्नुभयो।

''यति कलिलैमा किन जोगी भएका? के पिर परेर होला? कठैवरा!!''—बूढाले जोगी भएकोमा पछुतो जनाए।

''तपाइँ झैं बूढो भएपछि जोगी भएर के गर्ने? मौकामा भए पो तप गर्न सकिन्छ। तपाइँ पनि सक्नुहुन्छ भने हिड्नुहोस् जाऊँ तप गर्न''—साधुले गाउँले बूढालाई जिस्काउनुभयो।

''सक्तिन बा! कत्ति सक्तिन! ६० वर्ष पुगेथें कि थलै परें। गयो, जप-तपको बेला। अब त न घर गर्न सकिन्छ, न वन जान सकिन्छ। बाबुले ठिकै भन्नुभयो जे पनि उमेरमैं गर्नुपर्ने रहेछ।''—ठूलाखर्केबूढाले पनि अब बूढेसमा केही पनि गर्न नसकिने कुरामा सम्मति जनाए।

''खै, मैले सोधेको जवाफ? यता तपस्यागर्ने ठाउँ कहाँ छ त?'' साधुले फेरि उही प्रश्न अगिसार्नुभयो।''यो ठूलोखर्क हो, यहाँबाट अलि पर 'वामी मैदान' भन्छन्। यहाँमाथि खोणादी छ, त्यसभन्दा माथि वन छ, बीचमा एउटा दह छ, त्यसलाई 'सालिमेदह' भन्दछन्। त्यसमाथि नेटो आउँछ, दिब्रुङ भन्ने लेख पनि त्यतै छ। नेटापारि विशुखर्क, सराङ, अर्जेवा, भन्ने ठाउँछन्''—''मलाई त यतै उँभो तपस्या गर्न ठीक पर्ला जस्तो लाग्छ।'' बूढाले यसै क्षेत्रमा तपस्या गर्न सिफारिश गरे।





घाम डाँडा चढिसकेका थिए। त्यहींबाट उकालो लागी ठूलाखर्क गाउँको ऋषिराम पाण्डेयको घरमा बास बस्न पुग्नुभयो। चैत्र १८ गते बिहान, नित्यकर्म सकेर ऋषिरामज्यूका सल्लहाले खोणादीको बाटो (सालिमे दह) ताकी उकालो लाग्नुभयो। त्यसै दिन तीन बजेतिर सालिमेदह पुगी जीवनका लागि नभई नहुने पानीको खोजी गर्नलाग्नुभयो। अरु कुरा ठीक लागे पनि पानी नपाइने हुँदा यो ठाउँ पनि तपस्या निम्ति उपयोगी नठानी रन्थनिएको बेला सल्यान सुखौरातर्फ जान हिंडेका कामी थरका केही व्यक्तिलाई भेटी बात-चितबाट यस क्षेत्रमा पानी नभएको र माथि दिब्रुडको धुरी साधु-सन्तलाई असल भएको कुरो बुझेर बाटो सोद्धा हामी पनि उतै माथिसम्म जान्छौं भनेकाले उनीहरूकै साथ नेटासम्म पुगी उनीहरू आफ्नो घरतिर लागे पछि उनीहरूले देखाएको बाटो दिब्रुडको धुरीमा पुग्नुभयो। यस थरकालाई आजीवन स्वामीज्यूले मेरा मार्ग दर्शक मनी आदर गर्नु हुन्थ्यो मौकामा विशेष-व्यक्तिलाई गरेको सानो उपकार पनि इतिहास बन्दछ। रामभक्त स्वामीज्यूमा भगवान् मर्यादापुरुषोत्तम रामका सब गुणहरूको संक्रमण भएको थियो।[१]

जसरी-तसरी गरेका एउटै उपकारले पनि श्रीराम जिन्दगीभर खुशी रहनुहुन्थ्यो। आफूप्रति गरेका अनन्त अपराध पनि ख्यालै राख्नु हुन्नथ्यो। यही श्रीरामको शाल हाम्रा स्वामीज्यूमा पनि थियो।

यसरी जीवनको ३२ औं बसन्तको आगमन र स्वामीज्यूको दिब्रुङ आगमन एकसाथ भयो। ओडारमा बसी, फ़ेरि रूखमुनि तपस्या गर्दा-गर्दै मेसैसंग कुटी, धर्मशाला, मन्दिर, विद्यालयसमेतको निर्माण संचालन समेतको सौभाग्य सर्वप्रथमप्राप्त गरी यस ठाउँले स्वामीज्यूद्वारा स्थापित आश्रमहरूमा प्रथम-स्थान प्राप्त गर्‍यो। यही आश्रमलाई स्वामीज्यूको मूल आश्रम भनिन्छ।

## मूल आश्रम दिब्रुडको परिचय

मध्य नेपालको गुल्मी जिल्लाको पूर्वी हिस्सामा पर्ने यस पहाड़को परिचय यस प्रकार छ। यसको पश्चिममा रेसुङ्गाको धुरी (गुल्मी), उत्तरमा घुम्टेको घुरी (बाग्लुङ्), पूर्वमा गाजको धुरी (बाग्लुङ) र दक्षिणमा हिलेको धुरी (गुल्मी), यी चार ऐतिहासिक उच्च धुरी छन् यस पहाड़को जल रुद्रावती (बड़ीगाड) मा झरी रुद्रवेणीमा गण्डकीसँग मिल्छ। यहाँबाट रुद्रवेणी दक्षिणतर्फ आठकोश जतिमा पर्छ। सालिमेदह यसको पश्चिमोत्तरमा छ। पूर्वमा तल वेसीमा शान्तिपुर बजार छ। पूर्वतर्फबाट यहाँ जाने यही शान्तिपुरबाट उकालो लागी क्यूँ, भञ्ज्याङ, लाम्दासी हुँदै तीन घण्टामा यहाँ आउँछन्। दक्षिण रूपाकोटतर्फबाट आउनेले रूपाकोट मजुवा (तुराड) दमार, किसीकोट, लाम्दासी हुँदै यहाँ आउनुपर्छ। रूपाकोट दमुकाबाट यहाँ आउन अर्कोबाटो यसरी छ—रूपाकोट दमुका, मजुवा, रामपुर (पुलको मुखबाट उकालो) कुमाल गाऊँ, कोटेश्वर गुफा, (भूगर्भबाट निस्केका विचित्र अनन्त देवमूर्तिहरू भएको ठाउँ) सराङ हुँदै दिब्रुङ। बाग्लुडको गल्कोट तर्फबाट बाटो यसरी छ—बाग्लुङ बजारबाट बिहूँ—घोड़ाबाँधे—नरेठाँटी-हटिया-काँडेवास हुँदै दाडसिडको फाँटबाट उकालो लागि ददल्काको धुरी काटी दह गाउँ हुँदै दिब्रुङ।

अर्को बाटो—काँडेवासबाट दार्डसिङ, अर्लाड्कोट, देउराली हुँदै सालिमेदह आई दुई घण्टा लेखको जङ्गल चढेपछि दिब्रुङ।

अर्कोबाटो—काँडेबास-दाडसिङ-डाँसीकोट हुँदै वामी-मैदानबाट पूर्व फर्की तीनकोश हिंडी सालिमेदह आई दिब्रुङ।

अर्कोबाटो—बिहूँ-गल्कोट-हटिया-चालीसेटोला जिमिरेको उकालो चढी, थाले पोखरा—दह हुँदै दिब्रुङ।

---

*(१) कथञ्चिदुपकारेण कृतेनैकेन तुष्यति न स्मरत्यपकाराणां शतमप्यात्मवत्तया (वा. रा. अयो.)*



यस वनमा खर्सु, बाँझ, सिर्मु, चाँप, निगाँला आदि रूखहरू र बाघ, चितुवा, घोरल, मृग आदि पशु एवं कालिच आदि पंक्षीहरू पाइन्छन्। यहाँ पानीको कमी छ। यो डाँडो हाल दिब्रुङगा०वि०स०र विशुखर्क गा०वि०स०को बीचमा छ। दुवै गा०वि०स०का मानिसहरू यसलाई आफ्नै संझी सहयोग गर्छन्।

## दिब्रुडको धुरीमा भएका अद्‌भुत साधनाको झलक

यसरी चैत्र १८ गते घाम अस्ताउने बेलामा दिब्रुडको कोटनेर आई घुम्न लाग्नुभयो। सुखौरा जाने साथीहरूले पानी छ भनेका हुनाले पानीको मूल खोज्नु भएको थियो, तर रात परिसकेकाले नभेट्टाई अब गाउँलेलाई सोधी-आऊँ भनी केही तल 'अर्जेवा' भन्ने ठाउँमा झरी त्यसगाउँका प्रधान, योगप्रसाद खरेलका घर बास बस्नुभयो।

उनीसँग 'म यस माथिका बनमा तपस्या गर्न आएको छु, बस्नको निम्ति पानी नपर्ने ओडार र नुहाउन, पिउन पानी भएको ठाउँ यस वनमा कहाँ होला' भनी सोद्धा हजूरको तपस्या पूरा भए कतै मिल्न सक्ला, यहींनेर छ भन्ने थाहा हामीलाई पनि छैन भन्ने उत्तर दिए। चैत्र १९ गते बिहान नित्य कर्म सकी जङ्गलमा तपस्या गर्ने ठाउँ खोज्ने साथी माग्दा ग्राम प्रधानले आफ्नो छोरो साथ लगाइदिए। दुबै जनाले जङ्गल घुमी पानी भएको ठाउँ हेर्दा ठूलो पानी वर्षन थाल्यो। पानीको डरले साथी साथ छोड़ी घरतिर कुदे। स्वामीज्यू पानीमा दिनभरि घुम्दै पानी नै खोजिरहनुभयो। विधिको विडम्बना भनौ या भगवान्‌द्वारा गरिएको साधुको परीक्षा भनौं आकाशबाट भने अखण्ड जलधारा बर्षिरहेको छ तर पिउने पानी कहीं देखिन्न! 'तपस्या पूरा रहेछ भने पानी भेटिएला' भनेको संझी-संझी भोकै, तिर्खै दिनभरि लुछुप्पै रूझी पानी खोज्नुभयो। कतै केही अत्तो-पत्तो लागेन। ओडार (गुफा) पनि भने जस्तो पाइएन, साँझ परिसकेको थियो। शरीरमा तिलको दाना अडिने ठाउँ पनि ओवानु रहेन। कमण्डलु र ५० पैसा (एक मोहर) बाहेक अरु केही वस्तु पनि साथमा थिएन। बल्ल-तल्ल एक साँघुरो, तप-तप पानी चुहिरहेको ओडार भेटियो। 'न मामाभन्दा कानो मामा निको' के गर्नु त भनेर स्वामीज्यूले यहीं रात बिताउने विचार गर्नुभयो। चारैतिर घना जङ्गल छ, वर्षाका भलले बढेका खहरेहरू छङ्छङ्ग्याइरहेका छन्। आकाशभरि बादल सलबलाइरहेका छन्। आकाशको पेटबाट बीच-बीचमा गड्‌गडाहट सुनिन्छ। चन्द्रमा र तारा सबल साधुको दुःख देख्न नसकेर हो कि! बादलका बाक्ला मैला ध्वाँसे च्यादरले मुख ढाकी दम्पट भएका छन्। दिनमा सूर्यले भने बादल भित्रैबाट पनि उज्यालो दिएकै थए। तर रातमा भने चन्द्रमा र ताराको केही लागेन। केवल जुनकिरीहरूले साधुनेर गएर शक्तिअनुसार उज्यालो देखाउँदै थिए। दुनियाँमा अधिकतर यही देखिन्छ कि धनी र बाठा शिक्षित मानिनेहरू साधु-सेवाको अवसर आएपछि मुख लुकाउन बेर लगाउन्नन् तर बिचरा गरीब, थोरै उज्यालो हुने बरु साधुको आसपासमा गई सेवारत भई आफ्नो जीवन सार्थक पार्छन्! कल्पना गरौं त्यो रात कसरी बिते होला साधुको!

हिजोको त्यत्रो ठूलाखर्कदेखि-दिब्रुङ अर्ज्यासम्मको नजानेको घोर जङ्गलको सोद्धै-खोज्दै, लोट्दै-पोट्दै गरेको यात्राको थकाई राति यत्तिकै बल्ल-तल्ल पुगी प्रधानको पिढीमा फालिनु, बिहान अँधेरै जङ्गलतर्फ लागी दिनभरिको घनघोर लेखाली असिना सहितको वर्षामा कुटिनु-थिचिनु, शरीर, शरीर नै हो लुग्लुगाएको थियो। बाघ, चितुवा, आदि हिंस्रक जन्तु दिउँसै पनि छरास-छुरुस देखिंदै थिए। राति त झन् आँखा देख्ने हुँदा घुमिरहेकै थिए। अतासिएर मर्ने थिए उस्तै भए तर '**कार्यं वा साधयेयं, देहं वा पातयेयम्**' यो नश्वर देह जान्छ भने जाओस्, आँटिको काम पूरा नगरी छाड्दिन भन्ने दृढ निश्चय भएका हाम्रा महापुरुष कत्ति विचलित हुनुभएन। मानिसलाई शारीरिक-बलले भन्दा मनोबलले धेरै दऱ्याएको हुन्छ। उच्च आकांक्षा पूर्तिमा मानसिक-तरङ्गले उफारिएको उत्साही झट्टै नडगी कस्तै विपत्तिमा पनि अडिग रहन्छ। शिव-संकल्पको शक्ति नै मानव जीवनको ठूलो आलम्बन हो। यो नसोधौं, सुत्नु भयो या भएन? माथिबाट पानी तपपाउँदा तल

दह परेको छ, के सुत्ने ? के बस्ने ? संसारको उपकार गर्नु बाँकी थियो या प्रारब्ध शेष थियो या दिन सकिएका थिएनन्। रात बित्यो, बिहान केही बेर सूर्यले मुख देखाएर तताए। फेरि मध्यदिनपछि उही असिनाका छर्का सहितको लेकाली चैतेझरी।

पिउने पानी र असल पानी नचुहुने ठाउँको खोजी आज पनि चल्यो। नचिनेका जङ्गलको उवड-खावडमा हतारसँगको दिनभरिको घुमाई नबिसाइकन आज पनि चलिरह्यो। ''आज त भनेजस्तो ठाउँ जसरी पनि खोजी छोड्छु'' भन्ने दृढताले यो दिन बितेको पनि थाहै भएन। दिउँसभरि घरि-घरि अँध्यारो हुँदै केही उजेलिँदै गर्थ्यो, यसपटक उजेलिएन, रात परेको रहेछ। अर्को ठाउँ मिलेको थिएन। कहाँ जाने उही हिजोको साँगुरो गुफा नै आजको पनि शरण बन्यो 'जस्तो पर्छ उस्तै टर्छ' भनेको साँच्चै रहेछ। यो रात पनि कट्यो या जन-तन सकियो। नुहाउन र जपगर्न ठाउँ-ठाउँमा खोल्सामा थ्युरिएको पानीले काम दिएको थियो। हालसालै मन्टो तानेका निहुराले उतिखेरै शिर झुकाई महात्मलाई ढोग्दै भनेका थिए, ''महाराज ! हामी अन्न, दूध, दहीले झैं बल दिन त के सक्थ्यौं, तर केही दिन प्राण थामिदिन सक्छौं, त्यही भाका छोपेर पानीअमलाले पनि पहरामा झुण्डिदै महात्मालाई बोलाएका थिए ''केही नपाएका बेलामा मात्रै भए पनि हामीलाई संझी दिए हामी पनि कृतार्थ बन्ने थियौं'' नभन्दै महाराजले पानीअमलासंग निहुराका मन्टा चबाएर दोस्रो दिन धकेल्नुभयो। जीवनादृष्टले (बचाउने प्रारब्ध-कर्म) कता-कताबाट बचाउने साधन खोजिरहेकै हुन्छ। मर्नै पर्नेलाई एकछिन पछिसम्म बचाउँन र बाँच्नै पर्नेलाई केही छिन अगाडि मार्न कसैको केही लाग्दैन। जीवनादृष्टले धर्म नछोडेसम्म मर्न पाइन्न। एक न एक बाँच्ने उपाय निस्किजान्छ। बचाउँने प्रारब्ध कर्म नै आज निहुराका मुन्टा र पानीअमलाको रूप लिएर पेटमा पुगेर महात्मालाई आज पनि दिनभरि घुमायो, बस्न दिएन। उसो त हिमाली औषधीहरूको गन्ध लिएर घुम्ने लेखाली हावामा पनि संजीवनी शक्तिको कमी थिएन, उसैमा निहुरो र पानीअमला भएपछि जीवन धान्न गाहारो परेन।

तेस्रो दिन बितिरहेको पनि थाहै भएन छ, पर-परसम्म सबै जङ्गल चहारिसक्छु भन्ने धुनमा रात आएको खबरै भएन, आज पनि दिउसो थालिएको सिंसिमेझरी साँझसम्म अखण्ड चलिरहेको थियो। आज तेस्रो दिन पनि उही ठाउँ छोडेर, त्यत्तिको पनि कुनै आधार मिलेन।

चौथोदिन सारै कमजोरी बढेकाले, बाँच्ने इच्छाले अरुको खोज गर्नै पर्ने आदेश दियो र बिहान उठी तल झर्दा एउटा मगरको गोठ फेला पऱ्यो। त्यसताक बाहिरबाट अन्नको पैठारीको व्यवस्था नभएकोले रहेक क्षेत्रले अन्नको समस्या आ-आफै समाधान गर्नुपर्ने हुन्थ्यो। यो क्षेत्रमा अन्न कम भएकाले धेरै जसोले छ मैनामात्र आफ्नो खेतीको उब्जा खाने र त्यसपछि बेसीतिर झरेर निबेक गर्न बाध्य हुनु-पर्थ्यो। मुख्य अन्न भनिएको मकै पनि कम उब्जन्थ्यो। जन-तन गोठ पुग्दा एउटी बूढी मगर्नी आमा भेटिइन्। थोरै मकैका झोता अगेनामाथि झुण्डिएर आगो तापिरहेका थिए। भुल्ला भने धुवाँले पूरै काला भएका थिए। त्यसै माग्ने कुरै भएन, साधु को हो ? र दिने किन हो ? भन्ने कुरा नै नबुझेकाहरूसंग। उसैमा त्यस्तो गरीबी देख्दा-देख्दै कसरी माग्नु ? याद आयो कछाडका फुर्कामा बाँधेको मोहरको। बूढीआमालाई मोहर दिएर छ मुठी मकैका दाना प्राप्त गर्न सक्नु पनि यस्तो अवस्थामा एक ठुलै कुरा थियो। ठाउँ र परिस्थिति अनुसार नै उपलब्धिको पनि मूल्याङ्कन हुनु पर्ने हुन्छ। काँचो मकैका दाना आगाको सम्पर्क नभई कसै गरे पनि घाँटीबाट तल झर्न मान्दैनथे, र केही दाउरा सहित अगुल्टाको आगो र मकै भुट्ने ताप्के हातमा लिई उनै आवैले देखाएको कुवाबाट कमण्डलुमा जल लिई तीन दिनदेखि बास दिने उसै ओडारमा पुग्नु भयो। बाटामा चीसा पछ्यौराका छेउमा बाँधेर छातीमा झुण्डिएका मकैका दानाहरूले मुटुको ढुकढुकीलाई मानौं आंश्वासन दिइरहेका ''थिएहामी जसरी-तसरी पेटभित्र आइपुग्न पायौं भने तिमीलाई



बन्दहुन (मुटुको धड्कन रोकिन) अवश्य दिन्नौं! नआत्तिअ!'' ओडारभित्र आगो बल्यो, ढुङ्गाका चुम्कामाथि ताप्के तात्न थाल्यो। साधुका उच्च मनोबलको मीठास पाएर मकैका कठोर दाना पनि हाँसे। जंगली ओडारका छेउमा फरर हाँसेका मकैको सुवास बनैया वायुले टाढा-टाढासम्म फैलायो। ईश्वरले दिएको वस्तु उहाँलाई नै अर्पण भयो। 'त्वदीयं वस्तु देवेश.......भनी ढुङ्गामाथि एउटा फुलो स्थानदेवतालाई चढाएर, अप्सनी लगाइयो, जल अचाइयो। हिजो निहुराका मन्टा र पानीअमलाको छेउ पाएका स्थान-देवता आज मकैको फुलो पाउँदा धेरै प्रसन्न भए हुन्! आधा मकै सकिएपछि मात्र कमण्डलुका जलले मुखमा प्रवेश गर्ने अवसर पायो। एकसाथ दुईमाने कमण्डलुको जल भित्र पुगेपछि एकछिन खाने क्रम पनि रोकियो। निख्ला पेटमा चीसो लेखाली पानी र राम्रो नचपाईकन निलेका मकैका ठेलाको संघर्ष चालु थियो। केही छिनपछि त्यो संघर्ष मथारिएको थाहा भएपछि बाँकी मकै पनि निलिए। केही छिन चीसा छपनीमा आङ सोझ्याई दिनभर उही हिजो-अस्तिकै काम चालु भयो।

दिव्रुङको धुरी गुलजार बन्नुथियो, धर्मद्वारी-आश्रमको स्थापना हुनु थियो। स्वामीज्यूको मनले हरेस खाएन, चौथो दिन पनि पानी र ओडारको खोजी जारि रह्यो। पानीको मूल फेला पऱ्यो तर निर्वाह चल्ने खालको ओडार भने मिलेन। दिउँसो वनमा आएका मानिसबाट साधु-सन्तको सहयोग गर्ने समाजसेवी श्यामबहादुर के०सी०को पत्तो लगाई चौथा दिन बेलुका त्यस क्षेत्रका जिमुवाल मुखिया उनै के०सी०का घर गाई गोठमा सुत्नुभयो। तीन दिनसम्म खोज्दा पनि असल ओडार प्राप्त नभएकोले अब बनाएको कुटीमैं रहेर भए पनि तपस्या गर्ने मनआयो। यो ठाउँ वहाँलाई भने निकै मनपर्दै गएको थियो। प्रारब्धले आफ्नो अनुकूल ठाउँ फेला पारेको हुन्छ। यस क्षेत्रको इतिहासमा नाम दर्ता गराउनुथियो। युग-युगसम्म यसका कीर्ति-कौमुदीको विस्तार हुनु थियो, स्वामीज्यूको मन त्यति कष्ट पाउँदा पनि यस क्षेत्रबाट विरक्तिएन। स्वामीज्यूको प्रवेशभन्दा पूर्व त्यस डाँडाको नाम आसपासका गाउँहरूका वन जाने मानिसहरू बाहेक कसैले जान्दैनथे। त्यस्ता थुम्का, डाँडा, धुरी, कति हुन्छन् कति! कुन-कुनका नाम जानेर सकिन्छ र! तर यहाँको प्रवेश पछि यस डाँडाले एक्कासी जुन नाम कमायो, त्यसको कल्पना पनि कहीं कसैलाई थिएन। अब यो दिव्रुङबाट देवाराम या दिव्याराम भइसकेको छ। तब त संस्कृतमा 'आराम' शब्दले बगैचा बताउँछ। ''देवानाम् शिवादीनाम् आरामः उद्यानम्=भ्रमणस्थान मितियावत्'' यस विग्रहद्वारा सिद्ध, देवाराम शब्द या दिव्य=उत्तम, आराम-बगैंचा भन्ने अर्थमा बनेको दिव्याराम शब्दबाट झर्दै दिव्रुङया देवरूङशब्द बन्यो भन्न सकिन्छ। यस क्षेत्रको किंवा हामी सबै नेपालवासीको भाग्य थियो कि स्वामीज्यूको यहीं कुटी बनाई रहने मन भयो।

बिहान नित्य क्रिया सकेर के०सी०ज्यूसँग बातचित भयो—स्वामीज्यूले भन्नुभयो-''मैले धेरै मिहेनत गरी, वनैभरि खोज्दा पनि गुजारा हुनेसम्मको पनि ओडार पाइन, यसै क्षेत्रमा तप गर्न मन छ, म एक्लै कुटी बनाउन सक्दिन, तपाइँहरूले पनि सहयोग गर्नु पर्‍यो।'' युवक साधुका वाणीले के०सी०निकै प्रसन्न भए। ''यस्ता काममा सहयोग गर्न पाउनु हाम्रो भाग्य हो'' भनी तुरुन्त वरपर खबर गरेकाले ब्रह्मचारीज्यूलाई साथ लिई कुटी बनाउने ठाउँ हेर्नेहरूको धुइरो उकालो चढ्यो। अहिले मन्दिर भएकै ठाउँ नै सबै तहले ठिक ठानी सबैले कुटी बनाउन त्यही ठाउँ चुने। ब्रह्मचारीज्यूले त्यसपछि सबैका सामने आफ्ना विचार यसरी राख्नुभयो ''म गाउँमा बस्न आएको होइन, आजभोलि झरि परेको छ। कुटी नभई कहीं पनि रहन सकिन्न, ठाउँ त निश्चित भयो तर यो कुटी कसद्वारा कहिलेसम्म बन्ने भन्ने निधो भएन।'' अरुसंग सल्लाह गरेर श्यामबहादुरले भन्नुभयो—''बस्ने व्यवस्था ब्रह्मचारी गुरुज्यूलाई जनकबहादुर अधिकारीज्यूकहाँ मिलायौं, त्यहाँ गाईको गोठमा कोठा छ, चाहिएको कुरा दिनुहुन्छ। छ-सातदिन भित्र यसै ठाउँमा कुटी पनि तयार गर्ने कोशिस गर्छौं।

तबतक त्यहीं निर्वाह गरौं।'' यही सल्लाह दिई सबै घर-घर लागे। स्वामीज्यूको मन भने गाउँतिर जान-चाहेको थिएन। यिनीहरूको निर्णयको आदर नगर्दा चित्तमा ठेस लाग्न सक्छ भन्ने सोची जनकबहादुरका अघि लागेर केही तल उनैको लामदासीमा रहेको घरको गाई-गोठमा विश्राम लिनुभयो। आज ०२४ साल चैत्र २३ गते बल्ल दिब्रुङको धुरीमा तपस्या गर्ने कुटी बनाउने ठाउँको निर्णय भयो।

अर्को दिनदेखि बास बस्न लामदासी झरे पनि दिन भने यतै जङ्गलमा आई पाखा-पखेरा, खोल्सा-खाल्सी चाहारेर बित्थे। वास्तवमा साधुहरूलाई गाउँ-शहरमा कुनै पनि आकर्षण हुँदैन। हरिया रूखले भरिएको वन, भिराला पाखा, पंक्षीहरूको मधुर ध्वनि, रूखको घना-छायामनि जमिनमा छापिएका ठूला-ठूला ढुङ्गाका छपनिहरू सहितको शान्त एकान्त हिमाली वातावरण नै मनपर्छ। गाउँको बाल-बच्चाको कचाङ-कुचुङ, दुलहा-दुलहीको ठसाङ-ठुसुङ या खसाङ-खुसुङ, पँधेर्नीहरूको घुचेड़ा-घुचेड़, बाटा-बाटाका पर्खाल-बान्नाका टाउका-टाउकामा रहेको फोहरको पसारो, गाउँलेहरूका अनावश्यक चाटा-चाट र अति उग्र काटा-काट, सासू-बुहारीमा भएको घोचा-घोच र खाने बेलामा केटा-केटीको खोसा-खोस समेतले गर्दा गाउँको वातावरण असली साधुहरूलाई मन पर्दैन। किनकि त्यहाँ सही विचारले मन्टो उठाउने अवसर पाउँदैन। तीन रात जसरी-तसरी अधिकारीका गाईगोठमा सुतेर अर्को दिन बिहान चैत्र २६ गते उनको घरबाट कोदालो मागी अरुको बाटो नहेरी ''**स्वयं दासास्तपस्विनः**'' को सिद्धान्तलाई अघि बढाउँदै अस्ति निधो गरेकै ठाउँमा गई ठूलो ढुटे धोद्रे खर्सुका फेदमा जमिन सम्मो पारी गोठालाहरूसँग आगो मागी दाउरा जम्मा गरी धुनि जगाउनुभयो।

२०२४ साल चैत्र २६ देखि यहीं खर्सुको फेदमा खाली जमिनमा हरिया सेउला बिछ्याई खुला आकशमनि रहन थाल्नुभयो। रातिमा चीसा किरण र दिउँसोमा ताता किरणले वहाँको सत्कार गरिरहेका थिए। आकाशमा नौलाख ताराले भविष्यमा नौलाख (अत्यधिक) धार्मिक मानिसहरूको गुरु बन्ने व्यक्तित्त्वलाई माथिबाट आश्चर्यसाथ हेरिरहेका थिए। हिमाली हावाले बनैया फूलहरूको मीठो सुगन्ध ल्याई महात्मा बसेको परिसरलाई नै सुरभित तुल्याई रहेको थियो। बनका खर्सुहरूले अब आफ्नो खस्रोपन छाड़ी मस्याइलो र कमलोपन स्वीकार गरेको आभास भइरहेको थियो।

''महात्मा माथि डाँडामा गई जमीन सम्याउन थाल्नुभयो। केही छानो छैन। चौरमा खर्सुका छायामा, घाम-पानीमा थापिएर बस्नु भएको छ। हाम्रो इज्जत र धर्म दुबै गयो, चाँडो कुटी बनाऔं'' भनी जनकबहादुरले जता ततै हल्ला गरेपछि मानिसहरू जम्मा भई ११ हाते कुटीको घडेरी सम्याउन थाले। यस डाँडामा खर्सुका फेदमा १७ दिनरात बिताएपछि गाउँलेहरूले बनाउन थालेको कुटी पनि पूरा भएकोले २०२५ साल वैसाख ११ गते नयाँ कुटीमा प्रवेश गरी रहन लाग्नुभयो।

**दिब्रुङको त्यागमय तपोवृत्ति :—**

यसरी पहिलो रात अर्जेवा प्रधानका घर, दोस्रो, तेस्रो र चौथो रात दिब्रुङकोटमुनिको साँगुरा ओडारमा, पाँचौं दिन के. सी. का घर, छैठौं, सातौं, र आठौं दिन अधिकारीका गाई गोठमा गरी ८ रात बिताई त्यसपछिका सत्र रात वनबीचका खर्सुमुनि बिताई २५ औं रातदेखि ग्रामीण जनताद्वारा निर्मित कुटीमा रही तप साधना गर्न लाग्नुभयो।

धेरैजसो कुटीमा नै रही ध्यान गर्नुहुन्थ्यो। दैनिक कामहरूको समय बाँडिएको थियो। ठीक समयमा नै शास्त्रीय विधान अनुसार सबै काम सम्पन्न हुन्थे। लगिदिएका वस्तुलाई धेरै-थोरै, यो, ऊ, यस्तो-उस्तो कहिल्यै भन्नुभएन; कहिल्यै अन्नहरू नभए पनि वनमा कन्दमूल या समय-समयमा हुने फल, टुसा, मुना, झार पात, फूल मध्ये जे मिल्यो त्यसद्वारा

शरीर धारण गर्नुहुन्थ्यो। आज यो छैन या यो चिजको इच्छा छ भनी भनेको कसैले सुनेनन्। हिंड्दा-डुल्दा, देखे-चिनेका सबैलाई बोलाई हाल-खबर सोध्ने बानी थियो। उनीहरूले भन्दा पहिले नै आफैं उनीहरूलाई सोध्नुहुन्थ्यो। अभिमानको गन्ध पनि नभएका साधुको सुगन्ध छिट्टै नै टाढा-टाढासम्म फैलिन लाग्यो। पानी आउने, हिउँ पर्ने, जस्ता प्रश्नहरूको सधैं सबैलाई उत्तर नदिए पनि केही कतै भनेकोमा अवश्य पूरा हुन्थ्यो। यसरी भनेको पुऱ्याउनेहरूलाई नेपालमा प्रभुज्यू भन्ने चलन भएअनुसार यहाँलाई पनि सबै दिब्रुङका प्रभु भन्न लागे। प्यूठानको स्वर्गद्वारी झैं नै यस दिब्रुङको कुटीलाई धर्मद्वारी भन्ने नाम रहेकाले स्वर्गद्वारीका प्रभु भने झैं नै दिब्रुङका प्रभु भन्ने चलन शुरु भयो। चारैतिर प्रचार बढेकाले आउनेहरूको संख्या बढेर चामलआदि अन्न र अरु खाद्य सामग्रीको मात्रा बढ्दै गएकाले अब केही भाँडा जुटाई सत्सङ्ग सुन्न आउनेहरूलाई पर्व-पर्वमा भोज-भतेर लगाउन पनि थाल्नुभयो। भोजका दिन अर्को दिनलाई केही नराखी सबै गेडा-मुठा बडारेर पकाइन्थ्यो। यो थाहा पाएर जनताबाट सामग्री ओइरिन लाग्यो। गर्दा-गर्दै त्यस क्षेत्रका विचारशील व्यक्तिहरूले ब्रह्मचारीज्यूको शील र आचरण असल देखी मन्त्र दीक्षा लिन आग्रह गर्दै शिष्यत्व ग्रहण गर्नथाले। मन्त्र-दीक्षा वहाँले पहिले भगवान्को कुन रूपमा विश्वास छ भन्ने कुरा ठिक-ठिकसंग बुझी जुन् रूपमा आस्था थियो त्यसैको मन्त्र दिएर व्यापक र उदार मनोवृत्तिको परिचय दिनुभयो। यही कारणले गर्दा वैष्णव आदि सबै धर्मधाराका जनताले उहाँलाई गुरु माने। समाजलाई टुक्राउने काम वहाँबाट कहिल्यै नभएर एकै समूहमा बाँध्ने काम जीवनभरि भइरह्यो। यसै कारणले नै सबै समाजले निर्विवादरूपमा उहाँको महत्त्व स्वीकार गऱ्यो।

यसै ठाउँमा २०२५ सालको जेष्ठ महिनामा गाउँले भक्तहरू आएर कुटीनेर नै अहिले शिवालय रहेकै ठाउँमा शिवालय निर्माण गराउन स्वामीज्यूका हातबाट शिलान्यास गराए। त्यहाँ आफूलाई दर्शन भेटमा दुई, चार पैसा जो जम्मा भएको थियो सब त्यसै शिवालयको निर्माण गर्न प्रदान गर्नु भएकाले सबैको उत्साह बढेर पैसा जम्मा भई छिट्टै मन्दिर तयार भयो। सबै जनताको उद्धार गर्न भगवान् आउने हुनाले लोकेश्वर महादेव मन्दिर भन्ने नाम शिवालयलाई दिइयो। भेट दर्शन गर्दा जम्मा भएका पैसा सबै शिवालय निर्माणमा अर्पेको देखी के पर्छ? कसो पर्छ? केही पैसा आफ्नो पासमा जोगाइरहनपर्छ, यसरी जम्मै बाँडेर आफूले के गर्ने पछि? भनी भक्तहरूले अनुरोध गर्दा त्यसमा संझाउँदै भन्नुभयो— ''तपाइँहरूले जोगाएर राख्नुभएकै हुन्छ, तर तपाइँहरूलाई बेला मौकामा पैसाको खाँचो भइरहेकै हुन्छ र ऋण गर्नुहुन्छ। सर-सापट पनि लिनुहुन्छ, तर मलाई न संग्रह गर्न परेको छ न कहिल्यै पैसाको खाँचो परेको छ। खाली हात आयौं, खाली नै हात जान्छौं। किन सङ्गाल्नु पऱ्यो। सङ्गाल्नेहरूले सुखभन्दा धेरै दुःख नै पाएका छन्। मौरीले संगालेर नै दुःख पाएका हुन्, फेरि म साधु हूँ, साधुले धन संगालेर के गर्नै? सकेसम्म तपाइँहरू पनि त्यागी बन्ने कोशिस गर्नुहोस्। नभए पनि मलाई मेरै बाटो हिड्न दिनुहोस्। मेरो बाटो सोझिइसकेको छ, अलमल छैन।''

अब आबाल ब्रह्मचारीज्यूका अद्भुत व्यक्तित्वले झन्-झन् मानिसलाई आकर्षित गर्दै लग्यो। दिब्रुङ आसपासका भक्तहरू २०२५ सालको आरम्भदेखि नै गुरुसेवा र धर्मद्वारीको विकासमा तनमन दिई लागे।

यता गुरुभक्तिको प्रवाह उम्लदै आएकोले २०२५ कार्तिकमा स्वामीज्यू गुरुदर्शन गर्न झुलेनी गई केही दिन रही फिर्ता हुनुभयो।

फर्कंदा १९९६ मा जन्मी अर्लाङ्कोट गा.वि.स. वडा नं. ३ मा निवास गर्ने दुर्गादत्त सापकोटाको घरमा बास बस्नुभयो। यो परमेश्वरकै संकल्प थियो। विरक्त मनोवृत्तिका श्रीदुर्गादत्तज्यू यस प्रकार स्वामी परमानन्दज्यू घरमा आई सत्सङ्ग प्रदान गरेकोले धेरै कृतार्थ हुनुभयो। दिब्रुङका प्रभुको प्रचार त्यतापट्टि घर-घर भइसकेको थियो। वहाँ पनि दर्शन

गर्न जाने इच्छा रहँदा-रहँदै पनि फुर्सद नमिलेर त्यसै दुःखसंग घर रहनुभएको थियो। त्यस्तै धेरै बाध्यता हुन्छन्, गृहस्थलाई जसले गर्दा मनले धेरै चाहेको ठाउँमा पनि जान पाइँदैन। ज्ञान-वैराग्यका कुराले रात बित्यो, साधुसङ्गतिको धोका पुगेन। स्वामीज्यूलाई पनि दिब्रुङ्मा नवनिर्माणको चस्को लागिरहेको थियो। धर्मशाला बनाउने मन्दिरको प्रतिष्ठा समेतका धेरै काम टुसाएका थिए। दुर्गादत्तज्यूलाई आफ्ना गुरुको परिचय दिनुभयो। वहाँको त्यागवृत्ति सुन्दा गृहस्थ दुर्गादत्तज्यूलाई त्यस्तै त्यागवृत्ति लिएर बस्ने इच्छा जाग्यो। छिट्टै झुलेनी गई महापुरुषको दर्शन गर्ने मन लाग्यो। दिब्रुङको वर्णन सुन्दा त्यहाँ पनि जान पाएहुन्थ्यो भन्ने विचार जाग्यो तर एकाएक केही हुन सकेन। बडा श्रद्धाले दिब्रुङबाट आएका देवतुल्य महात्माको एकदिन सेवा गरी अत्यधिक प्रेम र श्रद्धाका साथ परसम्म गएर बाटो देखाएर माथि देखिञ्जेल हेरिरहेर बिदा गर्नुभयो। मनचाहीं झुलेनीबाट दिब्रुङ जाने जोगीले लगेर गएछन्। यहाँ त तन मात्रै रहेछ, दुर्गादत्तज्यूको। साधु दर्शनले जसको चित्त प्रसन्न हुँदैन, त्यसको उद्धार कहिल्यै पनि हुनेवाला छैन, विरक्त सज्जनप्रति भएको आकर्षण नै वैराग्यको मूल जरो हो। घर-गृहस्थीमा अत्यन्त आशक्त-कुवाका भ्यागुताले कहिल्यै पनि विरक्त साधु-सन्तको गहिरो स्वागत गर्न सक्तैन। जसको जुन वृत्तिप्रति श्रद्धा छैन त्यो वृत्ति लिएका व्यक्तिलाई उसले श्रद्धा नै गर्न सक्तैन।

यसप्रकार स्वामीज्यू दुर्गादत्तज्यूका हृदयमा संस्कारको रूपमा रहेको वैराग्य-भावलाई एकैरातका संसर्गले उकासी उहाँको मनलाई साथ लिएर दिब्रुङको कुटीमा पुग्नुभएको थियो। यही एकराते सत्सङ्गका प्रभावले वहाँ पछि सालिमे दहमा परमगुरु श्रीछविप्रकाशानन्दज्यू आएको सुन्दा बित्तिकै हामफालेर त्यहाँ पुगी वहाँको सेवासहित सत्सङ्ग गर्नुभएको थियो। यसै सत्सङ्गका प्रभावले घर छाडी गल्कोट डहरे ०२६ साल मार्गदेखि ०२७ सम्म र त्यसपछि गलेश्वर हरिहर गुफामा १८ महिना बसी ०२८ साल फाल्गुनमा दिब्रुङआई स्वामीज्यूका दाहिने हात भई रहन लाग्नुभयो। अहिले रामकोट बिहूँको मठाधीश पदमा रही ज्ञान-वैराग्यको प्रचार गरिरहनुभएको छ, चतुर्थाश्रमी बनी स्वामी दुर्गानन्द सरस्वतीज्यूको रूपमा। एकैदिनको साधु-सङ्गतिले मानिस कहाँबाट कहाँ पुग्दो रहेछ, यसको उदाहरण स्वामी दुर्गानन्द सरस्वतीज्यू बन्नुभयो।

यता २०२५ सालको शिवरात्रीमा लोकेश्वर महादेवको भव्यरूपले प्रतिष्ठा भयो दिब्रुङमा। अब दिब्रुङ वास्तवमा देवाराम-देवाधिदेव महादेवको आरामको ठाउँ बन्यो। प्रतिष्ठामा जम्मा भएका समाजले धर्मशालाको आवश्यकता देखी छिट्टै धर्मशाला बनाउने निर्णय गऱ्यो। ०२६ को मार्ग महिनासम्म धर्मशाला पनि तयार भयो। सराङनिवासी श्रीदेवीराम अर्याल समेतका व्यक्तिहरूको मन्दिर निर्माणमा विशेष योगदान रह्यो। दिब्रुङको रमझम झन्-झन् बढ्दै गयो।

### परमगुरु छविप्रकाशानन्दज्यूको झुलेनी त्याग र सालिमे निवास—

२०२५ साल कार्तिकमा दिब्रुङबाट भेट्न गएको बेला झुलेनीमा स्वामीज्यूले आफ्ना गुरुदेवसँग दिब्रुङ आउन प्रार्थना गर्नुभएको थियो। गुरुदेवले तिमी र म भिन्न-भिन्नै क्षेत्रमा रहने भन्ने विचार नै अघि सारी आफू नजाने निधो दिँदै भन्नुभयो-'वहाँ धेरै प्रपञ्च थालेका रहेछौ, जाऊ तिमीलाई बेर भयो होला' दिब्रुङको रस्ती-बस्ती आफ्ना गुरुको लागि अनुकूल हुने जानी ईश्वरीय प्रेरणाले नै स्वामीज्यू गुरुज्यूलाई दिब्रुङ ल्याउनै जानु भएको थियो। तर केही कष्ट भोग्नु थियो गुरुले र शिष्यले पनि। गुरुको शिष्यका साथ लाग्ने मन आएन। फर्कने बेला चरण छुँदै स्वामीज्यू 'एकदिन यो पनि छोड्नै पर्छ, यसमा पनि जिन्दगी बित्ने मैले देखिन' भन्दै बिदा हुनुभएको थियो।०२६ को वैशाखको अन्तिम दिनतिर झुलेनीका आसपासका गाउँहरूमा ठूलो असिना पऱ्यो। ठूल-ठूलै भएका मकै नराम्रोसँग थिल्चिए। त्यस भेगका गाउँमा मगर जातिका मानिस धेरै रहन्थे। गाउँलेहरूका मनमा असिना पारिदिने झुलेनीका बूढा जोगी नै हुन्' भन्ने पऱ्यो। रिसाएर



आएका गाउँलेहरूले कुटी घेरियो।' तिमीले असिना पारेका हौं, निस्केर अन्त जान्छौ कि, सकेको गरौं, भने पछि महात्मालाई निर्णय गर्न केही बेर लागेन। तुरून्तै दिब्रुङ्का लागि साइत गर्नुभयो। भएको सबै सामान आएकालाई बाँडेर भक्तहरूले ढोग्दा चढाएर जम्मा भएको पाँचसय रूपैयाँ त्यसै क्षेत्रमा आगो लागेर सर्वस्व जलेका मगरपरिवारलाई दिएर तुरून्त पश्चिमतिर लाग्नुभयो। 'एकदिन यहाँ पनि छोड्नै पर्छ' भनेर ब्रह्मचारीले भनेको दिन आजै रहेछ। अब ब्रह्मचारीले भनेको पुग्नलाग्यो, सिद्धि प्राप्त भएछ, भनेर गुरु प्रसन्न हुनुभयो। एकरात बीचमा बास बसेर दोस्रोदिन २०२६ वैसाख २५ गते आफ्रा प्रिय-शिष्यको आश्रममा दिब्रुङ पुग्नुभयो। यता शिष्य स्वप्नद्वारा झुलेनीको घटनाको अन्दाज लगाएर गुरुदेवको बाटो हेरेर बस्नु भएको थियो। पहिलेबाटै समाजमा आफ्रा गुरुको चर्चा गरिरहनुहुन्थ्यो। स्वप्नाको पनि चर्चा भएको थियो। सबै जम्मा भई गुरुदेवको भव्य स्वागत गरे। एकरात मात्र त्यहाँबसेर गुरुदेवले टाढै अन्यत्र नै रहन्छु भनेकोले बाध्य भई दोस्रोदिन दुईजना अरु मानिस लिई गुरुकासाथ स्वामीज्यू त्यहाँबाट पश्चिमोत्तर सालिमेदह आई ''म एक्लै नै यहीं खर्सुका धोद्रामा बस्छु, तिमी सबै जाओ'', भनेकाले गुरुदेवको वचन काट्न नमिली उसै दिन सबै दिब्रुङनै फर्कनुभयो। अर्को दिन मनले सुख नदिएर केही व्यक्ति र निर्माण सामग्री लिई स्वामीज्यू पुनः आई खर-पातको छाप्रो बनाई फर्कनुभयो। दिब्रुङ बस्ने प्रभुका पनि गुरुमहाराज सालिमेमा आई ठूला खर्सुका धोद्रा मा नै धुनी जगाई तपस्या गर्न लाग्नु भएको छ अरे! भन्ने हल्ला चारैतिर भएको हुनाले दुई कोश जति टाढा तल वर-पर पर्ने अर्लाङकोट, डाँसीकोट, ठूलाखर्क, ददल्का आदि ठाउँहरूबाट दर्शन गर्न मानिसहरू आउन लागे।

यसरी ती गाउँका श्रद्धालुहरूले तपोधन साधुको सेवा र सत्सङ्गत गरी आ-आफ्नो जीवन सफल पार्ने सौभाग्य पाए।

यता स्वामीज्यूले गुरु-सेवाका साथै समाज-सेवालाई पनि आफ्नो तपः साधनाको एक अंशका रूपमा स्वीकार्नु भएकाले दिब्रुङ्मा झन्-झन् जनसमुदाय जुट्न लाग्यो। दिब्रुङ्मा अब विविध निर्माण र स्वामीज्यूका प्रवचन कार्यक्रमहरू आयोजना गर्न थालिए। यसै सन्दर्भमा २०२७ सालको फागुनमा शिवमन्दिर बनिसकेकोले स्वामीज्यूले १२ दिनसम्म शिवपुराण महायज्ञको आयोजना गर्नुभयो। यसमा पनि अपार जन सहभागिता भयो। मानिसहरूको खोलो बिहान ८ बजे देखि उकालो चढ्थ्यो भने बेलुका फेरि तलै झर्दथ्यो। रङ्गी-विरङ्गी कपड़ाधारी मानिसका कारण दिब्रुङ्को डांडो झिलीमिली भयो। कहिलेकाहीं एक दुई मात्रै पुग्ने यस डाँडोमा यत्रो मेला लाग्न सक्ला भन्ने अनुमान कसैलाई पनि थिएन। साग-सब्जी, सीधा-सामान, दूध-दही, घ्यू, पात-टपरीको रास लागिरहेको थियो। कोही रित्तो जाँदैनथ्यो । राता-पहेंला अक्षता निधारमा लगाएका भावुक नरनारीहरू बेलुका चार बजेतिरबाट पञ्चामृत, मनभोग र फूलपाती हातमा लिई आबालब्रह्मचारी प्रभुको महिमा गाउँदै वहाँको दिव्य-स्वरूप मनमा चिताउँदै हर्षित भई तल झर्थे। अर्को दिन उहीं जाने तयारी बेलुकैदेखि शुरुहुन्थ्यो। घर कुर्ने को ? यज्ञमा जाने को ? यही सरसल्लाह घर-घरमा हुन्थ्यो। दिउँसो कथा, प्रवचन सुनेर पनि रातभरि फेरि भजन-कीर्तनको रमाइलो भइरहन्थ्यो। अतिथि भोजन शयनको व्यवस्था स्वयं स्वामीज्यूले पनि हेर्नुहुन्थ्यो। अतिथि-सेवाको महत्त्व स्वामीज्यूले सबैलाई बुझाउनु भएकोले कोही निराश फर्कनुपर्दैनथ्यो।

२०२८ सालमा अध्यात्म-रामायण प्रवचनको कार्यक्रममा पनि यसरी नै जनताको भीड उर्लेर आयो। अब त्यहाँ जे काम आँटे पनि सम्पन्न गर्न कुनै कठिनाइ नपर्ने स्थिति पैदा भएको थियो। स्वामीज्यूको प्रवचनमा मानिसले ठोस र अन्तरात्माबाट निस्केको गहकिलो विषय फेलापारी उनीहरूको घैटामा घाम लाग्दथ्यो। धेरै वर्ष शिखरहरूमा गरिएका, तपस्याले निर्मल भएका मनले खेलाएका कुरा मुखबाट निस्की कानबाट दिलमा पुगी दिललाई पखाल्दथे। संसारको नश्वरता, ईश्वरको दया,





धर्मको आवश्यकता आदि विषयको प्रतिपादन गर्दा स्वामीज्यू एकदम भावुक एवं संवेदनशील बन्नु-हुन्थ्यो। वेद, कर्मकाण्ड र हिन्दू-संस्कृतिको ह्रासबाट स्वामीज्यूका हृदयमा भएको पीडाको तस्विर वहाँका वाणीहरूले छर्लङ्ग देखाइदिन्थे। त्यस क्षेत्रका भक्तहरूले स्वामीज्यूका भावनालाई अत्यन्त आदर गरी उक्त कार्य पूरा गर्न भरमग्दुर प्रयास गरिरहेका थिए भने अर्कोतिर स्वामीज्यूको तपोमय जीवन र सामाजिक उन्नतिको भावनाले वहाँको तेज र प्रताप अझै दुगुना हुँदै भयो। टाढा-टाढासम्म स्वामीज्यूको प्रचार बढ्दै गएकाले अब दिब्रुङमा विशेष उत्सव या यज्ञ आदि नभएका दिनहरूमा पनि भेट. दर्शनका निम्ति आउनेहरूको घुंइचो झन्-झन् बढ्दै गयो। यता भक्तहरूद्वारा नयाँ निर्माणका कार्यहरू पूरा गर्ने इच्छा व्यक्त हुँदै गए। आँपचौर गाउँमा निकै धार्मिक व्यक्तिहरूको निवास थियो। त्यस समयमा घनश्यामज्यू त्यहाँका गाउँ पञ्चायत (गा. वि. स) का प्रधान हुनुहुन्थ्यो। वहाँले आफ्ना ग्रामवासीहरूसंग सल्लाह गरी दिब्रुङमा एक धर्मशाला बनाउने निर्णय लिई प्रमुख मानिसहरू सहित २८ सालमा दिब्रुङ् स्वामीज्यूका सान्निध्यमा गई आफ्ना विचार राख्नुभयो। स्वामीज्यूका आज्ञानुसारं उक्त निर्माणकार्य पूरा भयो।

## स्वामीज्यूद्वारा गुरुज्यूको अन्तिम संस्कार—

यसरी २०२८ साल श्रावणका कृष्ण द्वादशीको दिन आयो। यस दिनले सबै भक्तसज्जनलाई रुवायो। यसै दिन गुल्मीको सालिमेदह भन्ने घोर वनको बीचमा आजभन्दा असी वर्षपूर्व पर्वत जिल्ला पैयूँ धुवाँकोट भोक्सिङ् चितिमा उदाएको ज्योति श्रावण कृष्ण द्वादशीका राति ८ बजे अस्तायो। तपोमूर्ति परमगुरु छविप्रकाशानन्द अत्यन्त एकान्तप्रिय भएकाले शालिमेदहमा वहाँको तपोमय जीवन यसै अनुरूप बितिरहेको थियो। दर्शनार्थ गाउँबाट गएका भक्तहरूले वहाँबाट उपदेशहरू प्रसस्त पाए पनि कुटीमा बस्ने अवसर भने कत्ति पाउँदैनथे। दैवसंयोग एकदिन आफ्ना घरबाट साधुसंग सत्सङ्ग गर्न गइरहनेहरूमा पद्मानन्दज्यू (पदमपाणि) वहाँका इच्छानुसार सालिमेमै बस्नुभयो। परमगुरुको शारीरिक विशेष लक्षणहरू देखेर भक्तले अनुरोध गर्दा वहाँले भन्नुभयो-आज मेरो जाने दिन हो, एकतीस वर्षको वनवासमा कहिल्यै पनि दुईपटक बाहिर बस्न गइन। आज दुईपटक गएँ। पेटमा केही रहन सकेको छैन। पेट शुद्ध हुँदै छ, मुटु पनि दुखेको छ। कहिल्यै कसैको चाहना हुदैनथ्यो, आज ब्रह्मचारीलाई देख्न मन लागेको छ। तिमी त यहीं आयौ ठीक भयो, परमानन्द भएनन्। म राति नै जान्छु, अब बिहान विधि गर्न बोलाउनु, उनलाई संन्यासीका अन्त्येष्टिको विधि थाहा छ। म अरु कसैलाई गुरु नबनाए पनि आफै संन्यास धारण गरेको हुनाले संन्यास विधिद्वारा नै मेरो अन्तिम काम हुनुपर्छ।

यस्ता कुरा सुनी श्रीपद्मानन्दज्यू आत्तिनु भएछ। छाम्दा हात खुट्टा चिसा भैसकेका थिए। राति नौ बजेतिर ॐकारको जपगर्दै परब्रह्ममा विलीन हुनुभयो। बिहान दिब्रुङ् आई श्रीस्वामीज्यूलाई बोलाई १२ बजे दिउँसो अहिले राममन्दिर भएकै ठाउँमा गर्त (खाडल) बनाई भूमिमा आफ्ना गुरुलाई सजलनयनले स्थापना गर्नुभयो। ११ दिनसम्म त्यहीं रूद्राभिषेकद्वारा भगवान्‌को आराधना गर्दै सत्सङ्गका साथ बिताई स्वामीज्यूले १२ औं दिनमा विशाल भोज-भण्डारा गराई त्यहाँ भएको सबै वस्तु दीन-दुःखीहरूलाई वितरण गर्दै समाधिमा एक मन्दिर बनाउने र यस आश्रमको सञ्चालन हुने कुरा सबैलाई सुनाउनु भयो। यस अनुपम गुरुभक्ति र उदारताले स्वामीज्यूको प्रभाव समाजमा झन् बढ्दै गयो।

यस घटनासम्म स्वामीज्यूको गुल्मीमा धर्म प्रचारको कार्यक्रम प्रारम्भ भइसकेको थियो। दिब्रुङको धुरीमा स्थापित शिवालयको सुवास सबैतिर फैलिइरहेको थियो, स्वामीज्यूका निर्देशन अनुसार यस समाधिस्थलमा श्रीराममन्दिर निर्माण भई नित्यपूजा शुरू भयो। स्वामीज्यूद्वारा प्रेरित अर्लाङ्कोट निवासी काशीनाथ सापकोटा समेतका भक्तहरूले पहिला



अर्लाङ्कोटबाट बाग्लुङडहरे बस्दै गलेश्वर गई संन्यास ग्रहण गरेका स्वामी योगानन्दलाई सालिमे आश्रममा ल्याए। २०२८ कै भाद्रशुक्ल-पञ्चमीदेखि वहाँ त्यहीं रहन लाग्नुभयो। वहाँ त्यहीं बसेका बेला स्वामी परमानन्दज्यूका सत्प्रेरणाबाट लक्षहवन, शतरुद्री आदि धार्मिक कृत्यहरू सम्पन्न भए।

२०३० सालको भदौ महिनासम्म योगानन्दज्यू त्यहाँ रही भक्तहरूका अनुरोध अनुरूप अर्लाङ्कोट चौरालीमा आएर २०३२ भाद्रसम्म त्यहीं रही ब्रह्मलीन हुनुभयो। स्वामीज्यूकै आज्ञानुसार उहाँको अन्तिम सेवा र संस्कार भक्तहरूद्वारा भयो। पछि स्वामीज्यूले वहाँको समाधिमा मन्दिर निर्माण गराई नित्यपूजा चलाउनुका साथै बार्षिक तिथिमा भण्डारा चलाउने व्यवस्था पनि गर्नुभएको थियो जुन् परम्परा श्रद्धालुभक्तहरूद्वारा चलिरहेकै छ।

यसरी अरु साधु-सन्त, विद्वान्हरूको सम्मान बढ़ाउने काम समय-समयमा स्वामीज्यूबाट भइनै रहे किनभने सनातन वैदिक धर्मको सेवा गर्ने हरेक व्यक्तिहरूलाई वहाँले अत्यन्त आदर गर्नुहुन्थ्यो।

## प्रथम वेद-वेदाङ्ग गुरुकुलको स्थापना—

स्वामी परमानन्दज्यूको दिलमा वेद र वेदाङ्ग (व्याकरण, ज्योतिष आदि शास्त्र)को अध्ययन, अध्यापन नभए सम्म सनातन वैदिक धर्मको रक्षा नहुने कुराको विचार झुलेनी बस्दा देखिनै आउन थालेका थिए। एक जनाले तपस्या गरी उसले आत्माको उद्धार गर्न सक्छ तर लाखौं कु-मार्गमा लागेका बन्धुहरूलाई शिक्षित गर्न त संस्कृत विद्यालयको नै आवश्यकता हुन्छ भन्ने चिन्तन वहाँमा उत्तरोत्तर बढिरहेको थियो। यसको चर्चा पनि वहाँले त्यस समाजमा मौका-मौकामा गरिरहनु भएको थियो। अनुकूल अध्यापक नमिलेको कारणले संस्कृत विद्यालयको उद्घाटन भएको थिएन। विद्याप्रेमी स्वामीज्यूले चिताएको कुरा तुरुन्त पूरा हुने गर्थ्यो। परमेश्वरले २०२८ साल भाद्र ५ गते वृहस्पति बारका दिन १९६४ सालमा अर्घाखाँची जिल्लाको सुवर्ण खाल भन्ने ठाऊँमा जन्म भई आफ्नै क्षेत्रमा वेद, व्याकरण, ज्योतिषादि विद्याको विधिपूर्वक अध्ययन गरी वृन्दावन गई स्वनाम धन्य स्वामी श्रीशुकाचार्यज्यूबाट श्रीमद्भागवतको परिश्रमपूर्वक अध्ययन गरी भगवान् श्रीकृष्णको भक्तिमा लीन भएका गृहस्थ भएर पनि वैराग्यले पूर्ण एक भक्त पण्डितज्यू केवल एक धोती मात्र शरीरमा धारण गरेर दिव्वुङ्मा आउनु भयो। वासना रूपमा स्थिर रहेका जन्मान्तरका मित्रताले गर्दा विरक्त साधु र गृहस्थ साधुको परस्पर देख्दा बित्तिकै प्रेम र श्रद्धाको प्रवाह बग्यो। मानौं दुई मित्रहरूको घैरै दिनपछि भेट भइरेहको थियो। दुबैले दुबैको विचार बुझ्न केही बेर लागेन। स्वामीज्यूले भन्नु भयो-"मैले यहाँ वेद, व्याकरण पढाउने संस्कृत पाठशाला खोल्न चाहेको छु, भने जस्तो यहीं बसेर विद्यालय चलाइदिने साधु स्वभावको अध्यापक मिलेको थिएन। यो साधुको आश्रम हो। यहाँ परिवारको साथ बस्ने व्यवस्था मिलाउन सकिन्न, फुटकर रहन सक्ने गृहस्थ या विरक्त व्यक्तिको यहाँ खाँचो छ। त्यस्तै व्यक्ति मनले खोजिरहेको थियो। शायद परमेश्वर शिवले तपाईंलाई नै पठाइदिनु भयो कि जस्तो मलाई आभास भइरहेको छ।"

अत्यन्त खुसी हुँदै पण्डित सिद्धिनाथ पाण्डेयज्यूले भन्नु भयो-"मैले पनि संस्कृत पढाई बस्ने ठाऊँ खोजेको छु,हुन त अहिले मुक्तिनाथ जाने विचारले हिंडेको हुँ, पढाउन पाइन्छ भने फेरि जाँदै रहूँला।"

यसरी उत्साहपूर्वक पढ़ाई बस्न तैयार भएको देखेर स्वामीज्यूले आज्ञा भयो "पण्डितज्यू! हाल यहाँ केही व्यवस्था छैन, दुःख कष्ट हुन्छ, बस्न सक्नुहुन्छ? यस प्रश्नको उत्तर दिंदै पण्डितज्यूले भन्नुभएछ, "रुखका बोक्रा खाएर भए पनि म पढाउन तयार छु।" त्यस्ता अनुपम वाणी सुनेर स्वामीज्यूको मन अति प्रसन्न भयो।





पछि यिनै कर्तव्यनिष्ठ शिक्षाप्रेमी शिक्षकका रूपमा परिचित पं. सिद्धिनाथज्यूलाई दिब्रुङबाट घर-परिवारमा जाँदा आउँदा तीन दिन लाग्ने भएकाले साह्रै कठिनाइ भएको बुझी सबैका हरेक पीर-मर्काहरूलाई बुझ्ने व्यवहार-कुशल स्वामीज्यूले केही भन्दै नभनेको भए पनि वहाँसंग सर-सल्लाह गरी भक्त हरूले चरण पूजी चढाएको पाँच हजार पहिल्यै र शेष रकम पछि दिने गरी आश्रममुनि केही जमीन किनेर पण्डितज्यूको पढाउने ठाउँ र बस्ने ठाउँको धाइपाइ मिलाइदिनु-भएको थियो। त्यस समयदेखि अहिलेसम्म पनि स्वामीज्यूद्वारा शुरु गरिएका धार्मिक सामाजिक कामहरूमा र विशेष गरी स्वामीज्यूले स्थापना गरेका गुरुकुलहरूमा संस्कृत विद्या दान गर्दै अनेक स्नातकहरू जन्माएर आफ्नो विद्या-वंश फैलाई अहिले रामकोट, बिहूँ, बाग्लुङ्मा रहेको श्रीपरमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुलका प्रधान अध्यापकका रूपमा विद्या दान गरी आफ्नो जीवनलाई सार्थक तुल्याइरहनुभएको छ।

२०२८ साल भाद्र ६ गते देखि नै आश्रममा आसपासका छात्रहरूलाई बोलाई पण्डितज्यूद्वारा वेदवेदाङ्गको अध्यापन शुरु भयो। पछि यसै विद्यालयमा अरु दुईजना अध्यापकहरू नियुक्त भए। यसरी यस विद्यालयले पछि गएर 'श्रीपरमानन्द संस्कृत गुरुकुल' मध्ये पहिलो गुरुकुलका रूपमा ठूलो प्रसिद्धि पायो। स्थापनाकालीन अध्यापक तथा विद्यार्थीहरू निम्न थिए—

१. सर्वश्री पं. सिद्धिनाथ पाण्डेय (प्रधानाध्यपक), अर्घाखाँची
२. पं. गुणनिधि सापकोटा (सराङ्ग, गुल्मी)
३. पं. खिमानन्द गौतम (वलीवाङ, विशुखर्क)

प्रमुख छात्रहरू :-कमलप्रसाद सुवेदी, गंगाराम गौतम, भेषराज गौतम, काशिनाथ सुवेदी, बद्री गौतम, देवीराम भट्टराई, दुर्गाप्रसाद सापकोटा, चूडामणि भट्टराई, श्रीखिमानन्द ब्रह्मचारी (हाल विवेकानन्द सरस्वती) तीर्थराज आदि।

यहाँबाट निस्केका छात्रहरूले आज पनि यस आश्रमलाई अनेक तहबाट सहयोग गर्दैछन्। राजहंसले कहीं गए पनि मानसरोवर बिर्सन सक्तैन।

## भक्तवत्सल प्रभुज्यू घर-घर मा

स्वामीज्यूले ०२५ सालदेखि नै धर्मप्रचारको आवश्यकता महसूस गरी एकान्तमा गरिने जप ध्यानलाई सीमित गरी जनसंपर्कद्वारा धर्मप्रचार गर्ने कामको शुभारम्भ गर्नुभएको थियो। यो धर्मप्रचारको काम झन् झन् बढ्दै गयो। यद्यपि समय-समयमा दिब्रुङ्मा हुने यज्ञ महोत्सवहरूमा टाढा टाढासम्मबाट जनता आई स्वामीज्यूका अमूल्य भक्ति-ज्ञान-वैराग्यमय प्रवचन सुनी जीवन पथमा सुधार ल्याउने काम गरिरहेका थिए तर महायज्ञ या पर्वहरूमा आउन नसक्ने वृद्ध अपाङ्ग तथा विशेष स्थितिका भक्तहरूलाई कठिन परेको दयासागरले अलक्कै बुझी त्यहीं आउनेहरूसंग सल्लाह गर्नुभयो— तपाईंहरू यहाँ मबाट केही सुन्न यतिको परिश्रम गरेर घरका काम बिताएर आउनुहुन्छ, यति लामो बाटो आउन जान कठिन छ। यहाँ नै रहेर सुन्न पनि तपाईंहरूलाई अवसर मिल्न सक्दैन। अतः मैले विचार गरेको छु कि यदि तपाईंहरूको इच्छा हुन्छ भने म पर्व-पर्वमा पालापालीसंग गाउँमा आएर प्रवचन सुनाउँछु। उपकारको लागि साधु पनि ठाउँ ठाउँ घुम्नुपर्छ। वहाँ स्थायी बसोबास भने साधुको अनुकूल हुन्न। ठूलो समारोहमा यस प्रकारको दयामय वचन सुनी सबैका आँखा रसाए। यस अगाध दयाका अनुभवले एकछिन कसैको बोली निस्कन सकेन। धन्य दयालु गुरु! हाम्रो दुःखले स्वयं दुःखी बन्नु भए छ। गुरुदेव! अर्काका दुःखमा दुःखी भई दुःख हटाइदिन चाहनु त दया हो। दुई तीन कोशसम्मको उकालो चढी कथा सुन्न जानु

भनेको सानो श्रद्धा र भक्ति होइन। आजका नेताले भाषण सुनाउन, मोटर घर-घर पुऱ्याएर बोलाउँदै चाय र नास्ता समेतको लोभ-देखाउँदा पनि मोटरमा गएर मानिस बसेर सभामा पुगिदिएर भाषण सुनिदिंदैनन्। पहाड़ी जनजीवनका कृषकहरूले घर छोड्नु एक किसिमले प्राण छोड्नु नै हो। एकैदिनको छोड़ाइमा घर कति भताभुङ्ग हुन्छ, जो कुनै भुक्त भोगीलाई नै पूरै थाहा हुन सक्छ, अरुले अनुमान गर्न सकिन्छ।

कतिपय गर्भिर्णी र साना बच्चा हुने महिला, बूढाबूढीहरू अरु विविध कारणले माथि पुग्न नसक्नेहरूका आज हाड हाँसेका छन्। एककान दुईकान यो खबर घर-घर पुग्यो। स्वामीज्यूका महान् कृपाको प्रत्येक चेतनले प्रसंशा गऱ्यो।

अब औँसी, पूर्णिमा, एकादशी र संक्रान्ति जस्ता विशेष पर्वहरूमा अर्लाङ्कोट, मुसीकोट, ददल्का, खर्वाङ्ग सराङ्ग अर्जेवा, आँपचौर, भञ्ज्याङ्ग शान्तिपुर, वामी आदि ठाउँहरूमा पालैसंग पुग्ने र सकेसम्म प्रवचन गरी दिब्रुडमै फर्कने गर्न लाग्नुभयो। यसरी गाउँमा प्रवचन निम्ति जाँदा-आउँदा वहाँको वात्सल्यमय स्वभावलाई देखेर प्रत्येक बाटामा घर पर्नेहरूले आ-आफ्नो दैलो कुचाउने आग्रह गर्नलागे। दयालुबाट आग्रहप्रति अनुग्रह भयो। प्रत्येक घर पाउको स्पर्श पाएर प्रफुल्लित भए। कुनै-कुनै साहसीले ''आज यहीं बसौं'' जस्ता निवेदन पनि गरे। अति भाग्यवान्हरूले घरमै राखी सेवा गर्ने सौभाग्य पनि पाउन थाले तर दिब्रुङ गई लोकेश्वर भगवान्को दर्शन गरेर मात्र प्रसाद भोजन गर्ने वहाँको विशेष इच्छा रहन्छ भन्ने थाहा पाउनेहरूले दिब्रुङ नै पुऱ्याइदिने गर्थे। परमार्थमा निपुण भएको व्यक्तिलाई लौकिक व्यवहार बुझ्न केही कठिन हुन्न। अंश-बण्डा आदिलाई लिएर हुने पारिवारिक झै-झगड़ा र वर्षौं अड्डा-अदालतमा झुण्डिएका मुद्दा-मामिलाहरू पनि वहाँबाट सुल्झिन थाले। यसरी वहाँ सवैलाई आफन्त पार्नुभयो। जबतक मानिसले आफ्नो सम्झन्न तबतक उसका पासमा आउन्न। ऊ नजीक नआएसम्म उसको अज्ञान हटाउन सकिन्न।

अँध्याराको नजीक लान नसकिने उज्यालो उज्यालै होइन। जब ऊ अँध्याराको सामना गर्न हिच्किचाउँछ, तब उसको प्रयोजनै खै के रह्यो त! अज्ञानीका छायाले नै डराउने ज्ञानीका ज्ञानको के मतलब? अँध्यारो हटाएर उज्यालो दिनेलाई नै त गुरु भनिन्छ। अज्ञान-अन्धकार नै त हो गुरुको भोग्य वस्तु। त्यो गृहस्थाश्रममा महाभारले दबिएका, केही शिक्षादीक्षा नभएका, तृष्णारूपी जलका अज्ञानमय तरङ्गहरूलाई कामदेवरूप वायुले हल्लाइरहिएका, पत्नीरूपी भुमरी र भाइ-छोरा रूप ग्राहहरूले भरिएको संसाररूप महासागरमा डुबेका अज्ञानीहरूको अज्ञान नै त हो गुरुको भोज्य पदार्थ! आफ्नो भोज्य पदार्थ खोज्न हरेकले प्रयास गरेकै हुनुपर्छ। यही प्रयास गुरुवर स्वामीज्यूले गर्नुभयो।

प्रवचन गर्न पर्व-पर्वमा गएका ठाउँहरूमा धर्मको मर्म बुझाउनुका साथ स्वामीज्यूले समाजसुधारका कामहरू पनि गर्न थाल्नु भयो। जस्तैः त्यस युगमा 'मर्दका दशवटी' भन्ने परम्पराको अवशेषरूप दुई तीन पत्नी संग्रह गर्ने चलन पनि थियो। यसको खण्डन स्वामीज्यूले गर्नुभयो। जूवा, तास, मद्यपान, धूम्रपान आदि कुरीतिहरूको खण्डन स्वामीज्यूका प्रवचनबाट हुन लागे पछि (समाजसुधारक हामी) हौं भनी मख्ख परेकाहरू पनि दङ्ग परे। आफूलाई समाजसुधारक घोषित गर्नेहरुका बोलीमा शक्ति थिएन तर स्वामीज्यूको बोलीमा अद्भुत शक्ति थियो जसले गर्दा श्रोताहरूले स्वामीज्यूको आज्ञा मानी असामाजिक कामहरूबाट स्वयं बिरत भई, हजूरका अमुक दिनका प्रवचनबाट प्रभावित भई हामीले यो-यो लत छोड्यौं—भनी स्वामीज्यूसंग निवेदन गर्न आउन लागे। घरमा महिलाहरू पिटिन छाडे। जहाँ-तहाँ तासहरूको धूवाँ उड्यो। ठाउँ-ठाउँमा बाटाघाटाको निर्माणभयो। बाटामा आई फोहर फाल्ने चलनले पनि बिदा लियो। अपाङ्ग, अनाथ, असक्त प्रति दयाको भाव सिर्जियो। जग्गा-जग्गामा पुल, पाटी-पौवा मन्दिरहरूका निर्माण हुनथाले। तीर्थव्रत, जपतप,

यज्ञयाग, पूजापाठहरूका प्रति आस्था र विश्वास बढ्यो। मानिसहरूले आफ्ना क्षेत्रबाट बिदा हुन ठीकठाक भएको वेद-ध्वनि फेरि सुन्न पाए। गाउँ-गाउँमा दिब्रुङका वैदिक द्विज बटुहरू पुगेर वेदध्वनि घन्काउनथाले। ग्रामीणहरू आफ्नो लगानी फुले-फलेको देखर प्रसन्न बने, मानौं त्यसबेला पूरै युगले नै काँचुली फेरेको थियो। मानिस अँध्यारोबाट उज्यालोतिर, अज्ञानबाट ज्ञानतिर, असत्यबाट सत्यतिर, मरणबाट जीवनतिर लम्किरहेका थिए।

**''ॐ असतो मा सद्गमय, तमसो मा ज्योतिर्गमय, मृत्योर्मा अमृतं गमय''**

भनेर लाखौं वर्षबाट गरिएको प्रार्थनाले साकाररूप लिइरहेको थियो।

## स्वामीज्यूको रेसुङ्गा यात्रा र त्यहाँको सुधार—

२०२५ सालबाट अहिले २०२८ सालसम्म स्वामी परमानन्दले दिब्रुङ्बाट धेरै टाढा नभई वर-पर दिनभरिकै बाटो भित्र घुमी-घुमी धर्म-प्रचार र बीच-बीचमा दिब्रुङमा रही तपस्या पनि गर्दै रहनुभएको थियो। अब केही टाढा गएर पनि तीर्थ-स्थल र आश्रमहरूको सुधार गर्ने संकल्प लिई स्वामीज्यूले नेपालको ऐतिहासिक ठाउँ ऋष्यशृङ्ग-आश्रम रेसुङ्गा जाने विचार गर्नु भयो। त्यहाँ पहिलेदेखि अखण्ड जलेको धुनी विगत ८ वर्षदेखि बन्द भएको र आश्रमको स्थिति पनि दयनीय भएको खबरले धर्मावतारलाई चिन्ता बढेको थियो। यहाँको जिम्मा कसलाई दिने भन्ने चिन्ता पनि वैराग्यवृत्तिलें परिपूर्ण भएका स्वामी दुर्गानन्दको शुभागमनले मेटिएको थियो। हुन त त्यसभन्दा पहिलेदेखि नै विरक्तरूपमा नै श्रीखिमराजज्यू (स्वामी विवेकानन्द) पनि त्यहीं निवास गर्दै हुनुहुन्थ्यो तर छात्रावस्था भएकाले सबै कामको भार वहाँलाई बोकाउन मिलेको थिएन। घरमै रहेर पनि आश्रम-सेवा गर्ने त्यसै क्षेत्रका व्यक्तिहरूमा प्रमुख दुई जना हुनुहुन्थ्यो, सराङ्का श्रीदेवीराम खराल (स्वामी विद्यानन्द सरस्वती) र भञ्ज्याङ्गका श्रीखिमानन्द गौतम (स्वामी खिमानन्द सरस्वती)। यी दुबै जनाले स्वामीज्यू दिब्रुङ् आएदेखि नै आवश्यक सेवा गरिरहनुभएको थियो। स्वामीज्यूका संगतिका प्रभावले दुबैमा घर-परिवारको आसक्ति कम हुँदैगएको थियो। विरक्त साधु-सन्तको सेवा एवं सत्संग नभएसम्म कसैलाई पनि संसारबाट वैराग्य हुन सम्भव छैन।

श्रीदेवीरामज्यू र खिमानन्दज्यू साधुसेवामा भए पनि घरदेखि छुट्टी लिइ नसक्नुभएको हुनाले वहाँहरूको जिम्मामा आश्रम छोडेर हिड्न मिल्दैनथ्यो। अतः दुर्गानन्दज्यूको आगमनपछि नै स्वामीज्यूले रेसुङ्गा आश्रमको पुनरुद्धार गर्न जाने विचार गर्नुभयो।

२०२९ सालको वैशाखमा पुरुषोत्तम महिना (अधिकमास) भएकाले यसै अवसरमा मुसीकोटको बाटो रेसुङ्गा पुग्नुभयो। स्वामीज्यूभन्दा पहिले नै वहाँको कीर्ति त्यस क्षेत्रमा पुगिसकेको थियो। 'रेसुङ्गाको उद्धार गर्ने विचारले दिब्रुङका प्रभु यस क्षेत्रमा आउनुभयो भन्ने खबर जताततै फैलिएकोले चारैतर्फबाट मानिसहरूको भीड रेसुङ्गाका आश्रममा ओइरियो। त्यस क्षेत्रका जनतालाई यो प्राचीम आश्रम सेलाउँदै गएकोमा निकै कष्ट थियो। यसै काम निम्ति नै दिब्रुङका प्रभुको शुभ आगमन भएको बुझी सबैको हृदयमा आशाको अङ्कुर पलायो। यज्ञ शुरू भयो। प्रवचनमा स्वामीज्यूले पौवाको जीर्णोद्धार गर्ने र यो पहिल्यैदेखि अखण्ड बलिरहेको धुनी पुनः प्रज्वलित गर्ने प्रस्ताव सबै श्रद्धालु समक्ष राख्नु भयो। सबैले समर्थन गरे। सबैका हृदय खुशीले गद्गद भए। त्यहाँ माघसम्म स्वामीज्यूको निवास भयो। यसै बीच त्यस क्षेत्रका जनतामा धार्मिक जागृति ल्याउने धेरै कामहरू स्वामीज्यूद्वारा भए। निभेको धुनी फेरि जल्यो, पौवाको छानो बदलियो, अरु पनि त्यहाँका मठ-मन्दिरहरूको जीर्णोद्धार भयो। यी सबै कामहरू गरी स्वामीज्यू आफ्नैतर्फबाट यहाँको काम संभाल्ने व्यक्ति पठाउने



आश्वासन समेत दिई 'दिब्रुङ' फर्किनुभयो। यहाँ दिब्रुङ्मा पनि विकास-निर्माणका कामहरू रोकिएका थिएनन्। विसुखर्क गा. वि. स. को सक्रियतामा-०२६ सालमा बनेको साधारण खालको मन्दिरका ठाउँमा स्तरीय मन्दिर बन्ने काम आरम्भ भइसकेको थियो। शिवालय, आश्रम सबै दुर्गानन्दज्यूको जिम्मेवारीबाट चलिरहेको थियो। गुरु सिद्धिनाथ पाण्डेयज्यूले अखण्ड विद्यादान निःस्पृह भएर गरिरहनुभएको थियो। स्वामीज्यूका शुभदृष्टिले नै दश महिनापछि आउँदा दिब्रुङ्मा पनि चौतर्फी विकास भइरहेको थियो।

उता रेसुङ्गामा विकास निर्माणका कामलाई पूरा गर्न योग्य व्यक्ति आफ्नै तर्फबाट पठाउन स्वामीज्यूमा अनुरोध भए अनुसार यसै माघमा श्रीदुर्गानन्दज्यूलाई रेसुङ्गा पठाई स्वामीज्यू दिब्रुङ्मा नै यज्ञ समितिलाई निर्देशन दिंदै निवास गर्नुभयो। स्वामीज्यू आएको थाहा पाई एक्कासी दुबै पाखाका मानिसको खोलो उकालो चढी भिराला धुरीमा थिउरियो। दर्शनीय एकजना, दर्शनार्थी हजारौं तर प्रेम र शिष्टताले झगडा हुन दिएन। भेटमा आएका वस्तुहरू फेरि उनीहरूकै हातमा प्रसादको रूपमा अरु धेरै भएर गए। आफूले एक थरि उपहार ल्याएर आइएको थियो तर बिदाइमा धेरै थरि प्रसादी भएर फर्क्यो त्यो उपहार। ठीकै हो, सूर्यले पृथ्वीबाट लिएको रस हज्जार गुना बनाएर फर्काउँछन्।

## सामाजिक धान्याचल प्रवर्त्तकका रूपमा स्वामीज्यू :—

विभिन्न ठाउँबाट आएका भक्तहरूले आपसी सल्लाह गरेर स्वामीज्यूलाई विनम्र अनुरोध गरे—यहाँ विद्यार्थीहरू धेरै छन्, पाउना पनि खुबै लाग्न लागे, यहीं रहेर जप-ध्यान गर्न चाहने साधु सन्त र ब्रह्मचारीहरूको सेवा पनि आवश्यक छ। यहाँ स्वेच्छाले ल्याएका सिधा-सामानले काम त चलिरहेकै छ, कहीं यस आश्रमको गुठ-खेत पनि आवश्यक देखिन्छ, यस विषयमा कसो गर्दा उचित होला ?

त्यहाँ रूपाकोट, जुहाङतर्फका केही पण्डितज्यूहरू पनि हुनुहुन्थ्यो। यसरी विभिन्न गाउँबाट आउने व्यक्तिहरूले यस आश्रमको भविष्यप्रति चिन्ता गरी आश्रमका लागि गुठीको प्रसंग चलाएकोले सबै प्रसन्न भए तर स्वामीज्यू भने नजाने के सोचेर केही गम्भीर बन्नु भयो, केही छिन पछि आज्ञा भयो-'हेर्नुहोस्! हामी साधु हौं—हामीले केही संग्रह गर्नु साधुस्वभावको विपरीत हुन्छ। गृहस्थले झैं आश्रमले पनि जमीन किन्ने, पैसा थुपारी व्याज लगाउने गर्न थाल्यो भने उसको स्वरूप बिग्रन्छ, साधुका लागि मधुकरी-वृत्ति उत्तम बताइएको छ। भँवराले जस्तै कुनै फूललाई नोक्सान नपारी आफ्नो पेट भर्छ त्यस्तै साधुले पनि सात घरको अन्नले छाक टार्नु वेश हो। खेती गर्नेले छोडेको शिला या खेत-बारी या खलामा खेती सह्यारी सकेपछि खसेका दाना टिपेर त्यसैबाट एक छाक खाएर पनि साधुले जीवन बिताउँछ। साधुलाई गुठी किन्ने आवश्यक छैन। जग्गा जमिनले तेरो-मेरोको भाव ल्याई अहंकारी बनाउँछ, जुनकुरा छाडेको हो त्यही फेरि आउँछ, मैले स्वयं पैत्रिक सम्पत्ति ल्याई गुरुपुत्रलाई दान दिइसकेको छु। मलाई संग्रहको रहर छैन, मलाई त यो धर्मशाला, मन्दिर समेतको पनि आवश्यक छैन। ज़सले मन-मन्दिरमा परमेश्वरलाई पूजा गर्न सिकिसकेको छ त्यसलाई बाहिरी फूल-पातीको पूजा चाहिंदैन, घाम-पानी छेल्ने कुटी, गुफा बाहेक मेरो निम्ति केही आवश्यक छैन।

सबैले पुनः निवेदन गरे-''हजुरका लागि हामीले गुठीको आवश्यकता देखाएका होइनौं, हाम्रा घरबाट आएर यहाँ पढ्ने विद्यार्थीलाई हामीले दिनदिनै खर्च बोकी ल्याउनुभन्दा यसै आश्रममा गुठ भए ठीक हुन्थ्यो कि! भन्ने हाम्रो विचार हो। यहाँ पाहुना भई आउने साधु, सन्तहरू, टाढाबाट भेट दर्शन गर्न आउने गृहस्थ भक्तहरू र यी छात्रहरूको भरण-पोषण गर्नु हज़ुरको कर्तव्य नभएर हामी ग्रामवासी गृहस्थहरूको कर्तव्य हो, यसै कामका लागि हजुरका आज्ञाबाट पैसा जम्मा पारी गुठ किन्ने भनेका हौं। प्रभुको जो इच्छा।''

ग्रामवासीहरूमा भएको कर्तव्यको बोधले स्वामीज्यू अत्यन्त प्रसन्न हुँदै भन्नु भयो-'मैले यस आश्रमको गुठ नबनोस् भन्ने धारणाले यो कुरा भनेको होइन, मेरो आशय त के भने-पैसा जम्मा गर्ने, जमीन खोज्ने, किन्ने, खेती गराउने ल्याउने र यहाँ बस्नेलाई खुवाउने जिम्मा साधुको हुन्न, गृहस्थको नै हुन्छ। यो सबै जिम्मा तपाइँहरू लिन सक्नुहुन्छ भने मलाई गुठ किनेर कुनै आपत्ति छैन।''

''सबै जिम्मा हामीले लिन सक्छौं, तर यस कामको योजना मिलाउने खुपी हामीसंग छैन, यहाँको आज्ञाअनुसार गर्न हामी तयार छौं।'' गाउँवासीहरूको संयुक्त ध्वनि निस्क्यो।

''त्यसो हो भने आज मेरो मनमा एउटा नयाँ विचारले जन्म लिएको छ, त्यो सुनाउँछु-यहाँ पण्डितज्यूहरू पनि हुनुहुन्छ। हाम्रो वैदिक धर्ममा यज्ञ र दानको ठूलो महत्त्व छ, यज्ञबाट निस्केका धुवाँले शुद्ध भएका बादलले पारेका अमृतमय पानीबाट फलेको अन्न खानाले सद्बुद्धि पैदा भएर समाजमा सुख र शान्ति हुन्छ, यस जन्ममा दान नगर्नाले मानिस पछि दरिद्र भएर जन्मन्छ, यसकारण दान र यज्ञको आवश्यकता छ। दानमा अन्नदान बराबरको कुनै दान छैन। कलियुगमा प्राणहरू अन्नमा नै गएर बसेका हुन्छन्, अन्नदान प्राण-दान नै हो। अन्नमा प्रधान धान नै हो। हाम्रा पुराणहरूमा अन्नपर्वत बनाएर दान गर्ने विधि लेखेको पाइन्छ। हामीले यहाँ धान्यपर्वत गरौं। आजसम्म धान्यपर्वत कुनै एक धनी व्यक्तिले पण्डित ब्राह्मण भेला गरी यज्ञ गरेर आफूभरिको मौलो बनाई त्यसमा धानभरी जम्मा भएका धान तिनै यज्ञका ब्राह्मणहरूलाई विभाजन गरी दान गर्दथे। अब हामीले यहाँ सबै मिलेर धान्यपर्वत यज्ञ गरौं, अरु उठेका सामानले यज्ञ चल्दछ, जम्मा भएका पैसाले दक्षिणागरी, रहेका धान सबै यिनी छात्रहरूकै निम्ति राख्ने। त्यो धान सधैं राख्न नसकिने हुँदा बेची आएका पैसाद्वारा धान फल्ने खेत किन्ने, यसरी अन्नदान पनि हुन्छ, गुठ खरीद पनि गर्न सकिन्छ।''

सबै श्रद्धालुहरूले यस प्रस्तावको सहर्ष समर्थन गरे। यस यज्ञको रूप-रेखा पण्डितज्यूहरूका रायले स्वामीज्यूले त्यसै समयमा निश्चित गरी सुनाइदिनु हुँदै मूल-मूल व्यक्तिको धान्याचल महायज्ञ सम्पादन मूल समिति नै गठन गरी तुरन्त आ-आफ्ना काम जिम्मा लगाइ दिनुभयो।

आगामी मंसीर महिनामा यहीं दिब्रुङ्मा जतातितैका ठूला विद्वान् वक्ताहरू जम्मा गरी धान्यपर्वत लगाउने, शतरुद्री, गायत्रीद्वारा लक्ष-हवन, घृतधारा, श्रीमद्भागवत, शिवपुराण आदि पनि गर्ने निर्णय त्यसै दिन सर्वसम्मतिद्वारा भयो। ठाउँ-ठाउँका मानिस आ-आफ्ना क्षेत्रमा प्रचारको जिम्मा लिएर घर-घर लागे। गाउँ-गाउँमा पुग्दा नपुग्दै जता-तातै प्रचार भइसक्यो। सबैले आफ्नै अन्तरात्माका प्रेरणाले यज्ञको महिमा गाउन लागे। कतिले त दिब्रुङ्मा हुने यज्ञका सम्बन्धमा कविता बनाएर घर-घर प्रचार गर्न लागे। अनि क-कसका गाउँबाट कति धेरै व्यक्ति दिब्रुङ पुऱ्याउन सकिन्छ भन्ने होड-बाजी ठूलाबडैबाट शुरु भयो। ठाउँ ठाउँमा यज्ञ सहयोग समितिको गठन भई काम अघि बढ्दै थियो, समय-समयमा दिब्रुङ गई स्वामीज्यूलाई आ-आफ्ना क्षेत्रमा भएको प्रगति भक्तहरू सुनाउन थाले। त्यस क्षेत्रका छोरीहरूले घरम्ले सम्झाए भने बुहारीहरूले माइती ताने, ''कहिल्यै नभएको सामाजिक धान्याचल प्रभुज्यूका कृपाले दिब्रुङ्मा देख्न पाउने भयौं'' भनी सबैले छ महिना पहिलेदेखि नै यज्ञमा लैजाने सर-सामान जोर्न थाले। कति घरमा त उहीं यज्ञ भरी यजमान भएर बस्ने विचार उठ्यो, पत्नीहरूले पनि साथै जाने आग्रह गर्न थाले। यज्ञमा चाहिने सबै सामानको आपूर्ति दुई तीन महिना पहिलादेखि नै जनताले गर्न थाल्यो। बिहूँ बाग्लुङ्तर्फ पनि यो हुइँको पुग्यो। पैयूँ धुँवाकोट, पर्वतबाट पनि यज्ञको खबर सुनी पण्डितहरू आउनुभयो। भेडा-वाख्रा चराउने अनपढदेखि लिएर केटा-केटी पढाउने शिक्षित व्यक्तिसम्म र गाउँलेहरूका थाङ्ला सुजेनीदेखि लिएर पाहुना पाल्ने मुखेनीसम्मका आइमाइहरूसम्मले पनि यस महायज्ञको प्रचार गर्न लागे। घर-



गोठ, मेला-पात जता-ततै गोठाला-खेताला, धनी-गरीब सबैले यस धान्य-पर्वतको प्रचार गरे। सबै गाउँमा ''कहिले मुंसिर लाउला र दिब्रुङ् गई अपूर्व महोत्सवको दर्शन गरौंला'' भन्ने अभिलाषा पालेर हरेक घरका मानिसले दिन बिताइरहेका थिए।

## परमानन्दीय प्रभावले नास्तिक, आस्तिक बने—

उत्सुकता सहित यज्ञको तयारी हुन लाग्यो। सम्भावित भीडलाई लक्ष्य गरेर ठाउँ-ठाउँका जनताले ओढ्ने-ओछ्याउने कपडा, गुन्द्री र चित्राहरूको व्यवस्था गर्दै थिए भने कतिपय गाउँका मानिसहरू गएर जग्गा सम्याउन लागे। लामा खण्डै-खण्ड भएका छाप्रा या टहरा बनाउँदै थिए। एकातर्फ बाँस ल्याउने, भाटा चिर्ने, चुया काढ्ने, छाना भट्याउने, छाउने, धुरी मार्ने समेतका कामहरू भटाभट भइरहेका थिए भने अर्कातर्फ काठ चिर्ने, ताछ्ने, मसिन्याउने र बुटा भर्ने काम पनि भइरहेकै थिए। प्रत्येक गाउँ र टोल-टोलमा पनि यज्ञ-सहयोग समितिको गठन भइसकेकाले ठाउँ-ठाउँमा बैठक सर-सल्लाह आफैं गरिरहेका थिए। ''कुन गाउँले कति सहयोग जुटाउने'' भन्ने खालको एक किसिमको होडबाजी जस्तो जता-ततै चलिरहेको थियो। सहयोग पुऱ्याउने क्रममा गाउँ-गाउँमा धनीले धनीलाई र गरीबले गरीबैलाई जिन्न खोजिरहेका थिए। आ-आफ्नो श्रेणीमा अग्रगण्य बन्ने इच्छा सबैमा जुर्मुरिएर आएको थियो। यस्तो यज्ञप्रति समग्र जनताको आकर्षण देखेर नास्तिक प्रवृत्तिका यज्ञविरोधीहरू हैरान हुँदै भन्दै थिए—''यी बिहूँकोटे जोगीले के जादु जानेका रहेछन् के? हेर! यी मानिस मोडिएको, हामीले घर-घर गएर धर्म-कर्मको अन्धविश्वास हटाउने कति कोशिस गर्छौं कसैले टेर-बतास लगाउन्न, यी जोगी दिब्रुङका डाँडामा बसेर के मन्त्र फुकेका छन् कुन्नि! सारा गाउँबाट मानिसहरु खनिएका छन् अस्ति 'धान पोल्ने ठाउँमा केही सहयोग नगर्ने' भनेर धेरै पटक मिटिङ् गरी लेखा-पढी समेत भयो तर तिनै मानिसहरू अहिले यज्ञको समितिमा बसेर यज्ञको प्रचार गर्दै हिंडिररहेका छन्। घरमा अक्षताको दुमो समेत नभएका व्यक्तिले पनि के सारो एक-एक मुरी धान दिने कवल गरेका!! यो धर्मको नशा त यस्तो पो रहेछ, आफ्नो औकात कसैलाई थाहा नै छैन, त्यसै होशै नपाइकन हुम्मिएका छन् जनता। खै! यस्ता जनताको बुद्धि कसरी फिर्ने हो? यज्ञको विरोध गरेर गाउँमा त के घरमा पनि बस्न नहुने भइसक्यो। आइमाई, बूढाबूढी सबैको यज्ञमा नगए पाप लाग्छ भन्ने धारणा छ। तल हेड सरकी दुलहीले सरसंग भनिछन् 'तिमीले लोग्ने र आइमाईको हक बराबर छ भन्थ्यौ, यज्ञमा केही लान पाइन्न भने देऊ मेरो अंश, उहीं दिब्रुङ लगेर दान गर्छु, विचरा सर चूप-भएर दुलहीका सल्लाहमा गएछन्, भोलि दुलही लिएर जोगी भेट्न दिब्रुङ जाने भए रे! त्यस्ता पढे लेखेका मान्छेको त यो हाल भयो अरुका त के कुरा? फेरि ती जोगीको लोभ भन पटक्कै रहेनछ, दुई पैसा जम्मा भए पनि समाजका हातमा फालिदिने, जनहितका काम गर्न पनि निकै चाख लिँदा रहेछन्। यिनले नूनडाँडामा पानी ल्याइदिन्छु भनेका छन् रे! के गर्नु धर्मको झमेलामा नफसाउने भए त यस्ता जोगी चाहिने हुन्। अब जोगीको यज्ञ खल्बलिन्न, त्यहाँ चढेर जम्मा भएका पैसा कुन शोषकका हात पर्छन्, त्यसको ख्याल राख्नुपर्छ, डाँकाहरूले केही तल-माथि पारेछन् भने अनि बल्ल पो क्रान्ति होला यहाँ, अरुका कुरा जानिन्न, यहाँका माउ जोगी चाहीं पक्के भ्रष्टाचारका विरोधी नै रहेछन्, यो निधो छ। के गर्ने त अब विरोध गरेर पार लाग्ला जस्तो छैन, बरु यज्ञ भित्रै पसौं, तब पो यिनको आँत पाइन्छ, भेद बुझिन्छ; त्यसपछि जसो गर्नु पर्ला उसै गरौंला।''

यसरी स्वामीज्यूका प्रताप र उज्ज्वल चरित्रका सामने निस्तेज भएका नास्तिक व्यक्तिहरू पनि पालैसंग यज्ञमा सहयोगी बन्दै आस्तिकताका परिधिभित्र प्रवेश लिए। यसरी मानव बुद्धिमा परिवर्तन गराउने सिलसिला वहाँमा जीवनको अन्तिम क्षणसम्म रह्यो।





चर्को मतभेद ल्याएर आउने व्यक्ति पनि अलि अलि गर्दै वहाँको पक्षधर हुन पुग्दथ्यो। यसरी परमानन्दीय भावधारा रुपिणी अजस्र स्रोतस्विनीका प्रवाहमा कोही पनि अडिइरहन सकेन। सबै यसै विचारधारामा बगे। यो कुरा अलग हो कि कोही माथि माथि सतहमा थिए भने कुनैकुनै भित्री गहिराइसम्म पनि पुग्न सफल भएका थिए।

२०३० साल मंसीरमा बहुप्रचारित चिरप्रतीक्षित सर्वप्रथम सामाजिक धान्याचल महायज्ञ आरम्भ भयो। भाँडा, कपडा, खाद्य, इन्धन, प्रचार, अतिथि-सेवा, ब्राह्मण-सेवा, अर्थ, आवास, पानी, सफाई, पूजा सामग्री, भोजननिर्माण, भोजनवितरण, पात्रशुद्धि, शौचालय, व्यवस्थापन, आदि विषयमा पृथक् पृथक् समिति बनाई अत्यन्त व्यवस्थित रूपमा यज्ञको सञ्चालन भइरहेको थियो। विशिष्ट साधु, सन्त, महन्त, संन्यासी, जोगी, जलन्धरी र विद्वान्देखि गरीब-गुरुवा, अशक्त दीन दु:खी आदिसम्मको इच्छा माफिक भोजन गर्ने व्यवस्था थियो, स्वामीज्यूले कोही भोका नरहून् भन्ने अनुरोध पटक पटक आफ्ना प्रवचनमा समेत गरिरहनुहुन्थ्यो। दशौं हजारका भीडले सुव्यवस्थित रूपमा स्वेच्छा अनुरूपको भोजन गर्न, जाडाको समयमा न्यानोसंग सुत्न पाउने समेत व्यवस्था त्यस युगमा त्यस्ता दुर्गम ठाउँमा अत्यन्त आश्चर्यको कुरो थियो तर महापुरुषको सत्सङ्कल्पले दुर्लभलाई सुलभ र दुर्गमलाई सुगम बनाउँदो रहेछ। अर्लाङ्कोट, ददल्का, डाँसीकोट, ठूलाखर्क, छिस्ती, छिस, रिस्मी, ठान, तोरीखोला, बिहूँ, रूपाकोट, आँपचौर, वामी-टक्सार, मुसीकोट, खर्बाङ्, जुहाङ् आदि विभिन्न गाउँका श्रद्धालुहरूको अपूर्व मेला त्यस उँचो पहाडमा लागेको देखेर कसको मन प्रसन्न भएन होला? विभिन्न ठाउँबाट आएका विभिन्न राग र ताल एवं सीप र शैलीका भजन कीर्तनहरू आ-आफ्नै गाउँबाटै प्रारम्भ गरी बाँसका लिङ्गा फूल, उनिएका तोरणहरू, उखुका लाँक्राहरू आदि यज्ञीय सामग्री लिएर भीडका भीड मानिसहरू खुशीका लहरमा उकालो चढेको पनि थाहै पाएका थिएनन्।

## ऐतिहासिक महायज्ञको उपलब्धि—

यसरी यो ऐतिहासिक महायज्ञ भव्यहरूपले सुसम्पन्न भयो। यस यज्ञको अन्तमा स्वामीज्यूसंग दिब्रुङ परिसर-बासीहरूले निवेदन गरे—'अब हामीले यज्ञ गर्ने शिक्षा पायौं, अझै एउटा यज्ञ यसभन्दा पनि राम्रो गरी गर्ने हाम्रो इच्छा छ।'

यस महायज्ञले धर्ममा विश्वास नभएकाहरूलाई धर्ममा विश्वास बढ्यो। नास्तिक आस्तिक भए। सदाचार नसिकेकाले सदाचारको बाटो लिए। जुवा, तास, मादकपदार्थ सेवन जस्ता कुराबाट हुने हानिको ज्ञान सबैलाई गराइयो। वेदवेदाङ्गको आवश्यकता जनताले बुझे। ईश्वर र परलोकप्रति विश्वास भयो। यस महायज्ञले यस क्षेत्रमा ठूलो वैचारिक परिवर्तन ल्यायो। यसरी धार्मिक काम भव्यरूपमा सम्पन्न गरेर जनता जनार्दनलाई सन्तुष्ट पारेर बचेको यज्ञशेषले संस्था चलाउन सकिने रहेछ भन्ने विश्वास सबैलाई भएकाले आफ्ना संस्थाको विकासका लागि यस्तै सामूहिक रूपका यज्ञहरू गरी संस्थाको विकास गर्नु पर्छ भन्ने भावना सबैमा जाग्यो।

सामूहिक धान्याचल महायज्ञ यसरी प्रारम्भ भई आज यो नेपाल भरि नै प्रसिद्ध भइसकेको छ। सबै धर्मधाराका साधु सन्त विद्वान्हरूले यसै परम्पराको अनुकरण गरी स्पष्ट रूपमा स्वामीज्यूको अधमर्णता स्वीकार गरेका छन्।

## दीनदयालुताको चरम सीमामा-

बाल्यकालदेखिं नै आर्थिक दृष्टिले कमजोर परिवार या व्यक्ति प्रति स्वामीज्यूको ज्यादै सहानुभूति रहन्थ्यो। दिब्रुङ् आश्रमका नजिकै एक गरीब परिवार रहन्थ्यो। यद्यपि उनीहरू हातमा हात खप्टेर बस्नाले गरीब बनेका थिएनन्, न त कुनै अशिष्ट, दुर्व्यसन, गरेर गरीब भएका थिए। दशनङ्ग्री खियाएर ताता पसिना बगाउँदा-बगाउँदै पनि वर्षमा

४/५ महिनाभन्दा उनको पेट पूजा गर्ने व्यवस्था हुँदैनथ्यो। घरमा भएका सानासाना बालबच्चाहरूको कहिल्यै राम्रोसंग पेट भरिन्नथ्यो, आश्रममा आइरहन्थे। हिम परेको बेला जाडोमा कठाङ्ग्रिएर उनीहरूका दात बजिरहेका हुन्थे। संकोच, डर, लाज र भोकको ज्वालाले एकसाथ पिसिएका ती बालबालिकाका शरीरमा गर्मी दिने कपडा त परै जाओस् लज्जा ढाक्ने कपडाको पनि अभाव देखिन्थ्यो। त्यसैले पनि उनीहरू सबैले यथेष्ट खान पाइरहेका दशैं, तिहार जस्ता पर्वहरूमा पनि आश्रमका भोजनालय सामुन्ने आउन हिच्किचाउँथे। करेसोतिरबाट नभएको काँसो झिकेर या दाउरा भाँचेर आफ्नो पेटमा भोकका मुसा कुदिरहेको प्रकट गरिरहेका हुन्थे। दयासागर स्वामीज्यूलाई नमालूम कसरी यिनीहरू घरबाट आश्रममा आउन हिँड्दा बित्तिकै थाहा हुन्थ्यो र उनीहरूको संकोच बुझेर बोलाई लत्ता, कपडा काँचो पाकेको जे छ खानेकुरा दिएर पठाउनुहुन्थ्यो। कहिले त्यहीं बसालेर पेटभरी थपी थपी खुवाएर पैसा समेत दिएर मानौं दरिद्रनारायणको पूजा गरेको अनुभूति हुन्थ्यो। यो क्रम वर्षौं वर्षसम्म चलि नै रह्यो। उही जाडो, उनै नाङ्गा-भोका केटाकेटीका सेप्रिएका पेट, कठाङ्ग्रिएका हात, कलेठी परेका ओठ, उही दयनीय दशा। फेरि यता उनै दयालु स्वामीज्यू उही जे भेट्टाए पनि खन्यादिइजाने बानी, आश्रमबासी पनि हैरान भए। भन्नु के भन्नु! स्वयं मूलीलाई! घ्यू, गुड, चामल, चिनी, नारियल केही कुराको सोच नरहने भयो। अरु श्रद्धालुलाई दिने प्रसादको अभाव भयो। यो चिज नभई हुन्न भन्ने सन्त महन्तहरू पनि आश्रममा आउँछन्। व्यवस्थापकलाई अप्ठ्यारो पर्‍यो। स्वामीज्यूका लागि ती हठी साधु र ठूला-बडा भक्तभन्दा यी बालबालिका अत्यन्त प्रिय थिए, किनभने यिनीहरू कहीं गई कसैसंग केही माग्न सक्दैनथे। पेटभरि खान नपाएर मानौं यिनको आत्मा मृतप्रायः बनिसकेको थियो। विचरा यी अनाथ शिशुहरूको स्वामीज्यू बाहेक अर्को कोही सहायक थिएन। आश्रमवासी अन्यभक्तहरूलाई आश्रमको इज्जत जाला भन्नेत्रास थियो भने स्वामीज्यूलाई सबैका हृदयमा बस्ने साक्षी नारायणले के भन्लान् भन्ने डर थियो।

ती वालकहरूका बा-आमासंग एकदिन स्वयं गएर कुरा गरी उनीहरूको संकोच मेटाइदिनु भयको थियो स्वामीज्यूले। धेरै दिनसम्म ती बाल-बालिकाहरू आश्रममा नआए पछि अर्काका मनको पनि कुरा सहजै जान्न सक्ने दयालु स्वामीले उनीहरूका माता-पिताले ''आश्रममा लैजाने ठाउँमा तिमीहरू सधैं गएर खान्छौ, अबदेखि नजाने गर'' भनेका बुझी, गरीब ब्राह्मण दम्पतिलाई स्वामीज्यूले घरमै गई भन्नुभयो-''तपाईँहरू कुनै गाह्रो नमान्नुहोस्, आश्रमको हरेक वस्तु घरमा केही खाने व्यवस्था नहुने व्यक्तिको हो, जग्गा यस्तो भिरालो छ, वर्षे पिच्छेको बाढीले सारा मल-माटो बढारेर लगिरहेको छ, खेती हुँदैन, बाल-बच्चा साना छन्, घरमा अन्न छैन, आश्रम नजीक छ, त्यहाँ दुई चार जनाले खाँदैमा सकिन्न, कुनै संकोच नलिनुहोस् केटा-केटीहरूलाई आश्रममा पठाइदिनुहोस्, यिनीहरू सधैं यस्तै रहिरहने छैनन्, यिनीहरू पनि बढ्ने छन्, आ-आफ्नो भाग्य लिएर आएका छन्, आ-आफ्नो भाग्य अनुसार कमाउँलान्, लक्ष्मी चञ्चल हुन्छिन्, अहिले तपाईँहरूसंग छैनन्, भोलि आउँछिन्, दुःखी भई मन खिन्न नपार्नुहोस्, तपाईँहरू पनि भोकै नबस्नु, मसँगआउनु होला, आश्रममा भएसम्म दिने छु, तपाईँहरूकै इष्टमित्रले श्रद्धा गरी ल्याएको चिजबीज त हो नि! जोगीको आश्रममा के छर? म केवल एक कमण्डलुसँग मात्र त आएको हूँ, आश्रममा भएको मेरो होइन, भोका, नाङ्गा, असहाय र गरीबहरूको हो, तपाईँहरू ईश्वरभक्त हुनुहुन्छ, भक्तलाई आश्रममा आउन कुनैअप्ठ्यारो हुँदैन, संसार परिवर्तनशील छ, भोलि तपाईँहरूका घर अवश्य लक्ष्मी बस्नेछन्, चिन्ता नगर्नुहोस्।''

''तिमीहरूका केटा-केटीले हैरान गरे आश्रममा नपठाओ'' भन्न आउनु भयो कि! भन्ने शंकाले थर्थराएका दुःखी ब्राह्मण दम्पति स्वामीज्यूका मुखारविन्दबाट वर्षेका यस्ता कारुणिक शब्दहरू सुन्न पाउँदा कुन स्थितिमा पुगे होलान्! त्यसको

यथार्थ चित्र उतार्ने शक्ति शब्दमा छैन। न उनीहरू केही बोल्न सके न केही नबोलेर बस्नै सके। कस्तो कस्तो अवर्णनीच आनन्दमय दशा!! जसमा हाँस्न या रून दुबै मिल्दैन। उनीहरूले स्वामीज्यूको उच्चकोटिको दयालु हृदयलाई प्रशंसा गरेर होच्याउने साहस गर्न सकेनन्। केटाकेटीहरू चारै तिर बाट घेरेर अपनत्व देखाउँदै सुँक्क सुँक्क सिंगान तान्दै नजीकै आइरहेका थिए। चूपचाप ध्यान लगाएर कुरा सुनिरहेका बच्चाहरूका आँखाहरू कृतज्ञताको प्रकाशन गरिरहेका थिए। बच्चा भनेर के गर्ने? उनीहरूले तझन् दयालु आँखा र रूखा आँखा परैबाट छुट्याउँछन्। बाबु आमालाई भने आरम्भमा डर थियो कि महात्माले के भन्नुहुन्छ भनेर तर बालबालिकालाई थिएन। कति चोटी अरुका आँखा छलेर इशाराले बोलाएर पनि उनीहरूको पोल्टो भरिदिनु भएको थियो। कति चोटी सडेको चीज पुऱ्याएको बहानाले उनीहरूले खानेकुरा पाएका थिए। दुबै छाक खान पाउने घरका केटाकेटी पनि लोभले आश्रममा आउँथे। आश्रमका विद्यार्थीहरू पनि खाएर नथाक्ने उमेरका नै थिए। सबैलाई बाँड्न लागेमा यी गरीब भोका बच्चाहरूका हिस्सामा केही पुग्ने थिएन। तसर्थ यी बच्चाहरू र स्वामीज्यूको भाषा भिन्नै थियो इशाराको अरुले नबुझ्ने।

अन्तमा अब म जान्छु भन्ने शब्द सुन्दा बित्तिकै त्यसै गद्‌गद बनेका गृहस्थ बाले साधुका दुबै चरण जोडी पैतालामनिहात राखेर शिर झुकाएर थुपुक्क धैरैबरे सम्म ढोग्नुभयो। आँखका चीसा पानीले दुबै चरण धोइएका थिए। त्यस घर की आमाले भेन केही नजीक आएर निकै झुकी जोडिएका हातमाथि शिर राखेर ढोग्नुभयो। वहाँमा रोकिएका आँसूले निकै स्वाँफ्वाँ बढाएका थिए। गरीब भए बापत तिरस्कार र अपमान मात्रै पाएका आत्माले संसारले मानेका आबाल ब्रह्मचारीबाट यत्रो सत्कार पाएको ती अबलाका दुर्बल आत्माले पचाउन नसकेर हो कि किन हो? ती आँबै चाहीं स्वामीज्यूका बिदाइमा बाहिर निस्कन पनि नसकी यतिकै भुइँमा लड्नुभयो। आजसम्म कुनै गण्यमाण्य मानिसले यस्ता गरीब परिवारको हेरचाह गरेको थिएन। धेरैजसो पण्डित, विद्वान्, धनी, टाठाबाठा, यहाँतक कि साधुसन्त भनिने पनि दुखे-काटेमा मलमपट्टी लगाउने भन्दा चुसचुस घोचेर दुखाइ दिने नै हुन्छन्। यस्तो देवता घरमै आएर भनेको "सधैं एकैनास रहन्न........तपाइँको घरमा पनि भोलि लक्ष्मी आउँछिन्, नआत्तिनुस्" यो अमृत शब्द निकै टड्कारो भएर मास्तिष्कमा घुमिरहेको थियो। नानीहरूले उकालो चढिरहेका महात्मालाई आँखाले भ्याएसम्म बाख्राका खोरनिबाट हेरिरहेका स्वामीज्यूले देखिरहनु भएको थियो। हृदयमा श्रद्धा र भक्तिको भक्कानो बसेर बोल्न नसकेकी गृहिणीलाई, गृहपतिले सम्झाउँदै भने—"उठ, यी मान्छे होइनन देवता हुन्"

## दरिद्रनारायणको विधिपूर्वक सेवा—

यो घटना रेसुङ्गाबाट आउँदा बित्तिकै भएको थियो, अर्थात् २०२९ साल फागुनको। समय बित्तै गयो। त्यसै पछिको मुंसीरमा भव्य रूपले महायज्ञ सम्पन्न भयो। अब माघ आयो। ती गरीब लाई साहुले घेरे। उनले कति नै ऋणबाट जोगिन भोकभोकै बस्दा पनि कतिपय आवश्यक कामले ऋण लाग्यो। साहुलाई थाहा थियो कि यसले ऋण तिर्न सक्दैन तथापि हरवर्ष घर गएर मलाई नभई भएन भनी पैसा माग्थे। विचरालाई बाध्य भएर 'साँबा व्याज जोडेर तमसक फेर्नुहोस्' भन्नुपर्ने हुन्थ्यो। पृथिवीमा नदेखिइकन रातदिन अनन्त समयासम्म बढिरहने वस्तु हो साहुको ऋण। ऋण र रोग आरम्भमा नै नपन्छाउने हो भने तिनको पञ्जाबाट छुट्नै सकिन्न। कतिपय साहुको त चक्रवृद्धि व्यजद्वारा सय रुपया भित्रैको ऋणले हजार नाघेको थियो। यस्तै धेरै थिए साहुहरू। सबै जम्मा भए। साहु बुझाउँने आयस्रोत जमीनबाहेक केही छैन। आसामीले भन्नै पऱ्यो 'मेरो भएको यही हो, तपाइँहरूले मिलेर लिनुहोस्' मेरा तमसुक च्यातीदिनुहोस्। जमीनको उचित दाम दिए पनि सबै ऋण चुक्ता हुने भएना दामासहीले पैसा बुझी तमसुक च्यातिदिनुपऱ्यो। जमीनको दाम निश्चित भएको थिएन सबैले सस्तोमा लिएर फाइदा लिन खोजिरहेका थिए सल्लाह मिलिरहेको थिएन।



आपसमा साहु-साहु बाझिरहेका थिए। यो झ्याङ्लालाई लिएर ८/१० वटा कचहरी बसिसकेका थिए। फैसला भएको थिएन। सबै श्रीसम्पत्ति साहुलाई बुझाएर बालबच्चा लिएर निस्कन तैयार हुँदा पनि सुख पाइएको थिएन। यो संकट स्वामीज्यूले आश्रमबाट बुझिरहनुभएको थियो। एकदिनका कचहरीमा अकस्मात् पुगी छलफल नटुंगिने बुझेर भन्नु भयो-''जमीन मैले आश्रमलाई लिइदिन्छु, तपाईँहरूले कतिकति लिनु पर्छ, मसंग लिनुहोस्। यो सुनेर सबै सन्न भए। गरीब प्रति स्वामीज्यूको दया स्पष्ट झल्किरहेको थियो। स्वामीज्यूको सहानुभूति देखेर साहुहरू पनि पग्ले। जमीनको उचित मूल्य निश्चित भयो। दामासहीले (आफ्ना रूपैयाँको अनुपात अनुसार) सबैले स्वामीज्यूबाट खुशी भएर पैसा बुझे। तमसुक च्याते। त्यस गरीब-परिवारका ऋणमुक्त भई श्रद्धावनत बनेका आँखले स्वामीज्यूप्रति अनन्त आशिक वर्षाइरहेका थिए। गरीबीले हताश हुँदै दबिएका आत्माले निर्हेतुक करुणा पाएर दयासागर स्वामीज्यूको अनन्त मङ्गलाशासन गरिहेका थिए। उनका उपकृत अन्तश्चेतनाबाट यी साधुले आँटेका सबै काम छिटै पुगून्, यी दुनियाका आँखाका तारा बनून्, जुगजुगसम्म जनताले यिनलाई नबिर्सुन्, यस्तै यस्तै कति कति शुभकामनाको बाढी उर्लीरहेको थियो।

दयाधर्मको परीक्षा गर्न हामी सामु ईश्वर गरीबको रूपमा प्रकट हुनुहुन्छ। तपस्याद्वारा बुद्धि शुद्ध भएका महात्मा हरू ईश्वर ठानेर गरीबको पूजा गर्छन्, अशुद्ध-बुद्धिवाला दुरात्माहरू गरीबलाई पूर्वजन्मका पापी, अकर्मण्य र भाग्यहीन भनेर हेला गर्दछन्।

अन्तमा सबैलाई शीतल गर्दै स्वामीज्यूको दयामय अमृतवाणी बर्सियो-'तपाईं साहुहरूले भागपुग्दो पैसा बुझी दया गरेर यिनी गरीब बालाई मुक्त गराइदिनु भयो। यो घरगोठ, जमीन कुनै एकजनाले बेहोरी आश्रमका पैसा दिनुहोस्। मैले घरबासहीन भएका यिनी बालाई तराई पठाउन केही खर्च पनि दिन्छु। रित्तै कहाँ जानुहुन्छ ? स्वामीज्यूको आज्ञा अनुरूप कसैद्वारा घरबारी व्यहोरिएर आश्रमका पैसा केही दिनमा फर्के। स्वामीज्यूबाट केही खर्च र धेरै आशीर्वाद पाएको यो परिवार आज तराई क्षेत्रमा आई उत्तरोत्तर लक्ष्मीको कृपापात्र बन्दै गएको छ।

**बिहूँतर्फको प्रतियात्रा :—**

२०३० सालको प्रारम्भमा नै छिस्ती हुलुवाकी भक्तिनी आमाद्वारा तोरीखोला, बाग्लुङमा आयोजित आत्मपुराणको प्रवचन गरेको बेलामै स्वामीज्यूले बिहूँका धुरीलाई तपस्याका निम्ति निकै उपयुक्त रहेको विचार व्यक्त गर्नुभएको थियो। देहारम्भस्थलप्रति पनि केही कर्तव्य पूरा गर्ने इच्छा मनमनै पलाउन थालेको थियो। ०३१ सालका केही दिनहरू बिती साउनले पाउ राखेको थियो। श्रावण शिवाराधनाको लागि उत्तम महीना भएकाले काशीराम गैरे समेतका [illegible]हरूले ब्रह्मोत्तरखण्ड-पुराणको प्रवचननिम्ति स्वामीज्यूलाई तोरीखोला ल्याए। जतातैबाट मानिसहरूको धारो लाग्यो गतसाल दिब्रुङमा सम्पन्न भएको नौलो धान्यपर्वत समेतको यज्ञले चारैतिर सुवास फैलाएको थियो। टीकाका लागि ढुंग्रामा चामल राख्ने लेखमा सयौं मुरी धानको रास ठडिनु भनेको लरतरो कुरो थिएन। यो मानिसले गर्न सक्ने काम होइन भन्ने विश्वास प्रत्यक्षदर्शीमा परेको थियो। बिहूँबाट पनि यस यज्ञमा धेरैको उपस्थिति रह्यो। देवालय, मठ, मन्दिरका नाममा पूरै बिहूँका मौजामा पाठा खाने खड्गदेवता र अलैंचे आदिका बाजेबज्यैका स्थान जस्ता रक्तरञ्जित केही ठाउँबाहेक अरु केही थिएनन्।

त्यस अन्धकारमय युगमा पनि ठाउँठाउँमा केही मठ मन्दिर स्थापित र सञ्चालित पनि भएका थिए। जस्तै त्यहीं जोडिएकै मौजा लेखानीमा ०१८ सालदेखि नै शिवालयको स्थापना भई पूजा चलेको थियो। बिहूँका पुराना मन्दिरहरू





भक्तिइसकेका थिए। भारद्वाज (कण्डेल, सुवेदी) कौण्डिन्य (सापकोटा न्यौपाने) मौदगल्य (न्यूरे) धनञ्जय (रिजाल, पंगाली) कश्यप (बाँकी सबै) ऋषिहरूका सन्तानले भरिएको बिहूँ आज घोर अज्ञान, अन्धकारका महानिशामा सुतेर पुनर्जागरण गराउने व्यक्तिको बाटो हेरिरहेको देखिएको थियो।

बिहूँवासी शिक्षाप्रेमी प्रजापति कण्डेल समेतका नवयुवकहरूमा प्रजातन्त्रको मिठासले छोइसकेपछि कताकता यसमा स्वदेशीपनको रङ्गचढाएर राष्ट्रिय संस्कृतिलाई अघिसार्ने रहर पनि पलाई रहेको थियो। त्यागी आबालब्रह्मचारी परमानन्दका गतिविधिको पत्तो लगाइरहिएको थियो। आफ्ना आबाल ब्रह्मचारीज्यूको प्रभाव गुल्मीमा चरम सीमामा पुगेको थाहा पाई यो वर्ग अत्यन्त उत्साहित थियो। एकदिन त बिहूँमा पनि दिब्रुङ्मा जस्तै.....का मीठा कल्पनाले यी बिहूँलेहरूको हृदय रसाइरहेको थियो तापनि हाम्रो बिहूँ ल्याउने प्रस्तावको खन्डन, साधुबाट "जन्मभूमिमा म रहन हुन्न" भनेर हुने हो कि भन्ने आशंकाले हतपत बिहूँ ल्याउने प्रस्ताव साधु सामु राखेका थिएनन्। अनुकूल अवसरको प्रतीक्षा गरिरहेका थिए। उनीहरू शिवधुरी या रामकोटलाई केन्द्र बनाई यस क्षेत्रमा आफ्नै धर्ती माताका यशस्वी उत्पादनका नेतृत्वमा धार्मिक पुनर्जागरण ल्याउने दाउ हेरिरहेका थिए। खास स्वामीज्यूलाई जन्माउने पौवा डाँडालाई भने यस गुप्त-योजनाको सुईकोसम्म पनि हुन दिइएको थिएन। विचरा पौवाको डाडो के गरोस् यौटा गहकिलो सन्तान हराएको पीरमा बेलाबेला आँसु बगाउँथ्यो। अनि "नमरेर बाँचे कालले साँचे" एकदिन त भेट होला नि!" को मीठो तर धमीलो आशाले तिनै आँसू पुछ्दै "आफै रोयो आफै मन बुझायो" को लोकोक्ति सार्थक बनाइरहेको थियो।

बिहूँ र शिरबारीको ओहोर-दोहोरमा ममतामयी माताका मायालु मनले रामकोटतिर हेर्दै भन्थ्यो-"यहाँ पनि त छ नि त बन यहीं बसिदिए पनि त कहिलेकाहीं आफ्ना दुःखले उब्जाएको चीजबीज हात पारिदिन पाउथें होला, सानैमा पनि मेरो नानु बिमारो भएर दुःख पाए, केही मीठो चोखो ख्वाउन पाइन, सबै कुराको साङ्गो, ठूलो जहान, बेटाकेटीको थान मेलो-मेसो नै थिएन। त्यसै दुखै दुखमा हुर्के मेरा बाबु! त्यस्ता देउतालाई राम्रोसंग स्याहार गर्न पनि पाइन। दशवर्ष भएपछि त फेरि देउतैका कुरा, पूजैका कुरा, रामायणै पढ्ने, खानको खबरै नगर्ने। जो-जो पहिला आए उनै उनैले खाए। पछि बाँकी रहेका देउताको त त्यत्तिकै भोकै पनि दिन बिते। आमालाई दुःख हुन्छ भनेर मलाई आज भोक छैन आमा! भनेर गाई फुकाएर हिंडे मेरा देवता; किन अल्छी गरे हुँम्ली यसरी घरै छोडेर जान्छन् फेरि देख्न पाइन्न भनेर थाहा पाएको भए त किन भोकै राख्दी हूँ। जसरी लतारिएर भएपनि बनाएर ख्वाउने थिएँ।"

बुबाले उँधौली-उँध्यौलीमा अलैंचेमा बाजेबज्यै पूज्न जाँदा "पाठा नमारी पूजा हुन सक्दैन र बा?" भनेर सानामा प्रश्न गरेको झलक्क सम्झदै चढाउन ल्याएका बोकातिर पुर्लुक्क हेर्नुहुन्थ्यो। अरु छोराहरू लाउने खाने कुरामा झगडा गर्दा घर छाडी साधु भएका उही साइलाको शान्त सुशील अनुहार बुबाका सामु झुल्कन्थ्यो, कहिलो कांही खाने लगाउने कुरामा खोसाखोस गरिरहेका छोराहरूप्रति खिन्न हुँदै भन्नु पनि हुन्थ्यो "घरमा यी झगडालुहरूले मेलो बाटो छैन, राम्रो शील स्वभाववाला उही यौटो थियो, त्यस्तालाई बाघ भालुका मुखमा घुचेटेर आज यी यस्ताको फुक्लो चाकरी गरेर बस्न परेको छ" इत्यादि गनगनाउँदा-गनगनाउँदै स्नेहार्द्र बुबाको आवाज थर्थराउँथ्यो सास बढ्थ्यो अनि आँखा वर्षिन्थे घरमा वरापरी फेर्दा, कसैलाई कुनै व्यथा लागेको देख्दा पिताका आँखा रसाउँथे भने हरेक चाड पर्व, दशैं तिहारमा र घर पूजा-पाठ लगाउँदा आमाको मन भरिएर आँखाबाट छातीमा पोखिन्थ्यो। बिहूँकोट र शिरवारी का बनैया साथीहरूले अब गाई चराउने उमेरले डाँडो काटेको भएपनि बेलामौकाले जोगी हुने साथीसंग घुम्ने-खेल्ने, वन, चौतारी, पानीकाकुवा, धारा, पूजा गरेर प्रसाद बाँडेका थुम्का या ठूलाठूला छपनीहरूका छेउमा पुग्दा 'हामी यहां छौं उनी कहाँ छन् होला'को संझनाले व्याकुल बन्दै तिनै ठाउँहरूमा पुगेर एकछिन बिसाई आफ्ना बाल्य जीवनका मीठा अल्झनमुक्त क्षणहरूको संझना गर्थे।

महिलाहरूले मेलापातमा 'घरमा आमाबाबु रोइरहेका, छोरा जोगीसंग जंगल पसेको गीत बनाएर गाउन लाएका थिए। त्यही भावलाई छोपेर गन्धर्वले गीत बनाई सारङ्गीमा संगीत भरिरहेको थियो। मुसुङतिर छँदा त यहाँ छन् भन्ने थाहा थियो तर ०२४ सालबाट पश्चिम लागेपछि त केही वर्ष गुप्तवास जस्तै भएको थियो साधारण बिहूँकोटेको लागि। ०३० सालको दिब्रुङका धान्याचलले बल्ल श्रीपरमानन्दलाई पुन: यतापट्टिको समाजमा प्रकट गरायो।

यसरी स्वामीज्यूले व्यावहारिक ढंगबाट बिहूँलाई बिर्से पनि बिहूँले वहाँलाई बिर्सन सकेको थिएन। मानौं बिहूँ, 'कसो माया मार्नु होला र! देउता-पितृले पनि ल्याउलान्, तान्लान् नि!' यस्तो पुनर्दर्शनको विश्वासमा नछट्पटाई ढुक्क भएर पुनरागमनको बाटो हेरिरहेको थियो। श्रीप्रजापति कण्डेलको सक्रियतामा केही व्यक्तिहरूको टोली तोरीखोलामा भइरहेको ब्रह्मोत्तर खण्डको प्रवचन सुन्न श्रीकाशीरामज्यू का घरमा पुग्यो। आबाल ब्रह्मचारीका आँखा २०२४ सालको फागुनमा सर्वप्रथम उकालोमा भोकै दौडिरहेको बेला मही पिलाउने व्यक्तिका आँखासंग जुधे। आँखाले आँखासंग कुरा गरे। ब्रह्मचारीले बुझ्नुभयो—''यिनीहरू मलाई बिहूँ लान आएका हुन्''। टोलीनायकले पनि करै लगाएमा बिहूँ लान सकिने कुरा बुझे। प्रवचनपछि रातभरि व्यापक कुराकानी भए। त्यस टोलीले बिहूँ आउने वचन फुकाल्यो। यसै भदौको अधिकमासमा पुरुषोत्तम पुराणको प्रवचन आबाल ब्रह्मचारीबाट सुन्ने निर्णय भयो। यज्ञको रूपरेखा र व्यापक प्रचारको जिम्मा ब्रह्मचारीज्यूले टोलीलाई दिंदै भन्नुभयो—''तपाइँहरू यस कार्यका अन्तमा लिन आउनुहोस्, म धेरै दिन गाउँमा बस्दिन। रामकोट वनको बीचमा बनेको शिवालयमा व्यवस्था मिलाए ठीक होला।''

यस टोलीले बिहूँ आई व्यापक रूपमा बिहूँ रामकोटमा पुरुषोत्तम महिनामा, आबाल ब्रह्मचारीको उपदेश हुने भन्ने कुराको प्रचार गर्‍यो। रामकोटमा बिहूँकै फापरचौर सिमला रूख बस्ने जयलाल कण्डेलले २०२९ सालमा साधारण शिवालय बनाई शिवलिङ्ग स्थापना गरी पर्वपर्वमा पूजा-पाठ, चलेको थियो। यो ठाउँ बिहूँको मध्यभाग हुनाले र खोलो पैराको केही डर नभएको हुनाले स्थायी सामाजिक निर्माणका लागि अत्यन्त उपयोगी थियो यसै ठाउँमा आबाल ब्रह्मचारीज्यूद्वारा प्रवचन गराई दिब्रुङकै शैलीमा यसको विकास गर्ने कुरामा सबैको एकमत भएको हुनाले रामकोटमा अस्थायी वासहरूको निर्माण शुरु भयो। पूर्व सल्लाह अनुसार केही व्यक्तिहरूले तोरीखोला गई आदरपूर्वक कर्लिमको एक प्राथमिक स्कूलमा चलिरहेको चौमासा यज्ञको एकादशी जागरणमा स्वामीज्यूलाई ल्याए। खचाखच दर्शनार्थीहरूको भीड़ लागेको थियो। अर्को दिन वहाँ बृहत् समूहका साथ रामकोटको चौकिल्ला हेर्दै शिवालय बनेका ठाउँमा पुग्नुभयो। यो टापु भिरालो थियो। यसको तल उत्तरी भागमा एक ठूलो चौर छ। यसै चौरमा २०१६ सालमा नेपाली जनताद्वारा निर्वाचित प्रथम प्रधानमन्त्री स्व. वी. पी. कोइरालाज्यूलाई साथ लिएर स्व. श्री ५ महाराजधिराज महेन्द्र सरकारको अधिराज्य व्यापी पैदल भ्रमणको कार्यक्रममा मौसूफको रात्रिनिवास भएको थियो पैले यहाँ साधुहरू बसी राममन्दिर बनाएको हुनाले यसलाई रामकोट भनिन्थ्यो भन्ने जनमानस छ।

**बिहूँमा प्रथम प्रवचन :—**

आबाल ब्रह्मचारी परमानन्दज्यू यसरी बिहूँमा पादार्पण गर्दा समस्त बिहू नै प्रफुल्ल थियो। वहाँको मधुर हृदयमा गड्ने खालको प्रवचन शैलीलाई अरु ठाउँले झैं बिहूँले पनि निकै मन परायो। भन्न खोजेको कुरा मानिसलाई बुझाउने यत्तिको क्षमता भएको व्यक्ति अर्को कुनै नपाएको कुरा सबैले स्वीकारे। पुरुषोत्तम महात्म्यलाई आधार बनाई वहाँले वैदिक धर्मको राम्रो व्याख्या गर्नुभयो। त्यस क्षेत्रका पण्डित कहलाइएकाहरू पनि पहिले पहिले परीक्षाको निम्ति आए, तर पछि पछि यी सबैले स्वामीज्यूको अनन्य शिष्यता स्वीकार गरे।





वहाँका प्रवचनका मुख्य सार वस्तु यी थिए—''सबै द्यौताका उपासकहरूले परस्परमा समन्वय राख्नुपर्छ। प्राणी हिंसा गर्नु महापाप हो। द्यौता पितृ कसैको पनि पूजा गर्दा पशु बलिको आवश्यकता छैन। आफ्नो स्वरूप ज्ञान नभए सम्म संसारबाट मुक्त भइन्न। सुकर्म र ईश्वरको अनुग्रह नभई आफ्नो स्वरूप चिन्न सकिन्न। वेदवेदाङ्ग नपढाएसम्म हाम्रो हिन्दूधर्म रहन्न, हिन्दूधर्म नरहे हिन्दुराष्ट्र मेटिन्छ, हिन्दुत्व मेटिए हामी पनि मेटिन्छौं।

स्वामीज्यूको प्रवचन सुनेर घर जाने व्यक्ति अर्को दिन अरु १० जना सहित आयो। यसरी दिन प्रतिदिन स्वामीज्यूको प्रवचन सुन्ने हरूको संख्या बढ्दै गयो। प्रवचनमा सबैले निकै चासो लिए। टाढा-टाढाबाट पनि मानिसहरू दर्शन गर्न आए।

त्यसबेला स्वामीज्यूले आफ्ना चरणमा र यज्ञमा चढेको सबै पैसा एक समिति गठन गरी त्यसैका जिम्मा दिई छोड्नु भयो

यसै पुरानो मन्दिरका ठाउँमा एक नया भव्य मन्दिर बनाउने सल्लाह भयो। दिब्रुङ्को मन्दिर निर्माण गर्ने मिस्त्री पठाइदिने आश्वासन पनि स्वामीज्यूले दिनुभयो। अब बिहूँले एक मार्ग निर्देशक प्राप्त गर्‍यो। सबै दलका मान्छेले दलीयतालाई त्यागी स्वामीज्यूको उच्च नैतिकताको प्रशंसा चारैतिर गरे। बिदाइमा धेरैका आँखाबाट झर्दै रहेका आँसुले फेरि छिटै आउने प्रार्थना गरिरहेका थिए। स्वामीज्यूका साथमा पं. सिद्धिनाथ तथा अन्य केही व्यक्ति आएका थिए। यहाँबाट पनि दिब्रुङ दर्शन गर्न केही मानिस समेत साथ लिई स्वामीज्यू २०३१ सालको असौजमा दिब्रुङ फिर्ता हुनुभयो। बाग्लुङ् यात्रा केही लामो भएकोले गुल्मी व्याकुल भएको थियो। स्वामीज्यूका दर्शनले गुल्मीवासीलाई खडेरीमा पानीको काम गर्‍यो।

प्रथम धान्याचल यज्ञसम्पन्न गरेर बचेका धनले शान्तिपुर को आसपास १२ मुरी धान हुने खेत शिवालयको गुठ निम्ति खरीद गरिएको थियो। आश्रम र विद्यालयको व्यवस्था गर्न आर्थिक पक्ष अझै दह्रो चाहिने भएकाले अर्को धान्यपर्वत तुरुन्त गर्ने आश्रमवासी र स्थानीय भक्तहरूले प्रथम धान्याचलकै समाप्तिबाटै विचार बनाइरहेका थिए।

गुल्मीले स्वामीज्यूलाई हाम्रा प्रभु भनेर गौरव गर्दथ्यो।''यहाँको आश्रम यही मात्र हो। अब आफ्नो जीवन यहीं बिताउनुहुन्छ, अन्यत्र कहीं मन्दिर या कुटी बन्दैन, २।४ दिन गएपनि यतै फर्की जानुहुन्छ भन्ने विश्वास लिएको गुल्मीलाई यसपटक बिहूँमा मन्दिर, कुटी, संस्कृत विद्यालय समेत सबै बनाउने स्वामीज्यूकै प्रस्ताव भएको बुझी चिन्ता लाग्नु स्वाभाविकै थियो। बिहूँमा मन्दिर बनेको चिन्ता लागेको होइन कि मन्दिर बनाउन जाँदा स्वामीज्यूको विरह व्यथालाई कसरी सहौंला भन्ने चिन्ताले गुल्मेली पीडित भएका थिए।

**सामाजिक समरसता को संस्थापना :—**

अब गुल्मीले आगामी ०३२ को धान्यपूर्णिमामा धान्याचल गर्ने निर्णय बृहत् भेलामा गर्‍यो। यस वर्ष पनि प्रवचनका निम्ति स्वामीज्यूलाई विभिन्न ठाउँमा लैजाने क्रम जारी नै रह्यो। त्यतिखेर नेपालमा विभिन्न राजनैतिक विचारधाराहरू पनि सग्बगाइरहेका थिए। अमेरिकाको सहयोगमा २०२५ सालमा नेपालले नयाँ शिक्षा लागू गरेको थियो। यसरी धार्मिक मान्यताप्रति सन्देहात्मक दृष्टि राख्नेहरूको तैयारी सरकारबाट नै स्कूल क्याम्पस खोली भएको थियो। २००७ साल फागुन ७ मा १०४ वर्षको जहानिया राणाशासन राजा-प्रजाको संयुक्त प्रयासबाट छुटे तापनि त्यस पछि ०१८ सालसम्मका अल्पकालीन जनसरकारहरूले पनि राष्ट्रहितको कार्य सम्पन्न गर्न सकेनन् भनी २०१८ साल पुष १ गतेदेखि थालिएका निर्दलीय पञ्चायती व्यवस्थाले राजाको अधिकार फिर्ता ल्याएको थियो तर उसको सारा शक्ति दलीय व्यवस्था समर्थकहरूको दमनमा मात्र खर्च भएकाले देशको गरीबी झन् बढ्दै गएको जनताले बुझेका थिए। जनता हताश थिए। सरकारी बजेट



माथिबाट निकासा भइहाले पनि विभिन्न पञ्चायतहरूको बाटो गरी चुहावट हुँदै आउँदा उद्दिष्ट ठाउँमा पुग्नै पाउँदैनथ्यो। पुगिहाले पनि त्यतिबाट विकास निर्माण हुन सम्भव थिएन। जन स्रोत जुटाई काम गर्न अत्यन्त गाह्रो थियो। निर्दलीय व्यवस्था विरूद्ध आचरणलाई अराष्ट्रिय घोषित गरिए पनि निर्दलीयतासमेत अराष्ट्रियताका चंगुलमा फँसिसकेको जनतालाई आभास भएको थियो। सरकारबादी निर्दलीयताका पक्षधरहरू माथि ''राजाको र व्यवस्थाको स्तुति मात्र गरेर आफ्नो दुनो सोझ्याउने तरखरमा मात्र रहेको'आक्षेप आएको थियो भने यता बहुदलीयताका पक्षधरहरू पनि सरकारी असफलता र देशका दुर्गतिको व्याख्या गरेर नै आफूलाई कृतकृत्य मानेका थिए। बहुदलभित्रै पनि विभिन्न दलको विरोधपूर्ण स्थितिले गर्दा अनेकता छँदै थियो। गाउँमा कहीं केही जनहितको काम गर्नु पर्दा सबैले विश्वास गरेको नेतृत्व गर्न सक्ने मध्यस्थ व्यक्ति मिल्दैनथ्यो र समाजमा कुनै पनि सामाजिक काम हुन सक्दैनथ्यो। जनतामा सरकारका पक्ष विपक्ष दुवैका प्रति अविश्वासका स्थितिको सिर्जना भइरहेको थियो।

यस्तो परिस्थितिमा सबैका साझा र नेतृत्वमा कुशल स्वामीज्यूको जनताले हृदयदेखि नै स्वागत गऱ्यो। स्वामीज्यूले पनि क्रमशः जनहितकै निमित्त शिक्षा, स्वास्थ्य, खानेपानी, यातायात दुर्व्यसन निवारण र नैतिकता एवं आध्यात्मिकताका क्षेत्रहरूमा विशेष योगदान पुऱ्याउनुभयो। समाजसुधार र धर्म दुबैको एकै मञ्चबाट व्याख्या सुनी जनताले आफूलाई कृतकृत्य माने।

स्वामीज्यूले सर्वप्रथम बाटबाटामा मलमूत्र त्याग गर्ने कुप्रथालाई हटाउन घर-घर शौचालय बनाउने सल्लाह दिनुभयो। जनताले त्यो माने। त्यसबाट भएको प्रत्यक्ष लाभ अनुभव गरे। बिड़ी, सिगरेट, कक्कट, भुसाहा, सूर्तीका अम्मलले टी. बी., दम आदि रोगहरूको शिकार भइरहेका जनताले स्वामीज्यूको उपदेशका प्रभावले यी सबै अम्मलहरूको त्याग गरी स्वास्थ्यमा सुधार भएको अनुभव गरे। त्यसबेला गाउँघरमा विद्यालय नै थिएनन्। भए पनि केही प्राथमिक विद्यालयहरू केही टाढा खुलेकाले'शिक्षाले नै ज्ञानको दीप बाल्न सक्छ'भन्ने स्वामीज्यूले आफू गई सदुपदेश गरेका ठाउँका भद्र-भलाद्मीहरूलाई प्राथमिक विद्यालय खोल्ने प्रेरणा हौसला एवं सहयोग समेत प्रदान गर्नुभयो। साथै वैदिक धर्मको संरक्षणका लागि आफूले बनाएका मठमन्दिरहरूमा वेदवेदाङ्ग विद्यालयहरूको स्थापना गर्नुभयो। पहाड़का दुर्गम ठाउँमा टाढाटाढाबाट पानी ल्याई खानुपर्दा जनतालाई साह्रै कष्ट भएको थियो। कहिल्यै एकमत नहुने जनतामा एकमत बनाई, कुलो खनाई, कतै नाला बिछ्याई ठाउँठाउँमा पानी ल्याउने व्यवस्था गर्नुभयो। वर्षौं देखिका सामाजिक र व्यक्तिगत वैर भावहरूलाई मेटाउँदै सामञ्जस्य स्थापित गर्न स्वामीज्यू सिद्धहस्त हुनुहुन्थ्यो। ''सरकारले मात्र सबै काम गर्न सक्दैन आ-आफ्ना ठाउँलाई विकसित तुल्याउन आफै जागरुक हुनुपर्छ'' भन्ने स्वामीज्यूले व्यक्तिदेखि समाजसम्म रहेका अनेक विषमतालाई समतामा परिणत गर्नुभयो। व्यक्तिवाद, दलवाद आदिबाट पिल्सिएका जनताले यस्ता सर्वदलीय सर्वपक्षीय, स्वामीज्यूको ठूलो आदर गऱ्यो। यसरी सामाजिक संरचनामा समन्वयवादी स्वामीज्यूले वैदिक धार्मिक मान्यतामा रहेका शैव, वैष्णव, गाणपत्य, शाक्त र सौर आदि विविध धारामा विभाजित वैदिक धर्मानुयायीहरूलाई पनि समन्वयकै सूत्रमा अनुस्यूत गरी दैनिक पञ्चायतन देवपूजा, दुबै नवरात्रमा शक्ति-उपासना, शुद्धि-सात्विक आहार-विहार का साथै रामनवमी, कृष्णजन्माष्टमी, महाशिवरात्री, एकादशी आदि सबै देवदेवीहरूका व्रतोत्सवहरू हरेक गृहस्थले यथासम्भव मान्नुपर्ने कुरा अवगत गराउनु भयो।

वहाँले बाल्यकालमा गाई चराउँदा बनमा ठूलो दार बाझका फेदमा झकाएको बेला भगवान् शिव र श्रीरामको दर्शन पाउनुभएको थियो। शिवजी वहाँका नजीक र राम केही पर हुनुहुन्थ्यो, पहिले स्वामीज्यूले शिवको मात्र दर्शन गर्नु





भएको थियो। शिवले वहाँलाई इशारा गरी राम भएको ठाउँ देखाउनुभयो। रामको भव्य मूर्ति देखेर वहाँलाई सन्देह भएछ—"कुनलाई पहिला ढोगौं।" त्यसपछि शिवले रामतिर इशारा गर्नु भएछ। यस स्वप्नलाई वहाँले रामभक्ति तर्फ लाग्न शिवको प्रेरणा भएको सम्झी शिव र विष्णु दुबै भगवद्रूपमा समान श्रद्धा र निष्ठा राखेर जीवन भर यसै माफिक रही सबैमा त्यही उपदेश गर्नुभयो। जीवनको अन्त्य समयमा देवघाटमा भव्य ऐतिहासिक हरिहर भगवान्को स्थापनाले पनि यही अभिन्नोपासनाका जीवनभरका साधनाको परिपूर्ति देखाएको छ। कुनै ठाउँमा रामानुज सम्प्रदायका श्रीवैष्णव भक्तहरूको सक्रियतामा मन्दिर बनी पूजा चलिरहेको थियो। वहाँहरू नै त्यहाँका पूजारी रहने प्रचलन थियो। त्यसै ठाउँमा स्वामीज्यूको तत्त्वावधानमा बृहद् धान्याचल महायज्ञ सम्पन्न हुँदै थियो। पाँचवटै वैदिक सम्प्रदाय भित्र आचार-विचार राम्रो भएको प्रमाणित भएमा सबैको मठ-मन्दिर या घरमा स्वामीज्यूले भोजन ग्रहण गर्नुहुन्थ्यो। भक्ति श्रद्धा र स्वयं आचार शून्य रहेर पनि जहाँ पनि स्वयंपाकी बन्ने बनाउने प्रवृत्तिलाई वहाँले कडा आलोचना पनि गर्नुहुन्थ्यो। तर सबैतिर एकैनासे आचरण छ र देखावटीका निम्ति मात्र स्वयंपाकी बनेको छैनभने त्यसको समुचित कदर पनि गर्नुहुन्थ्यो।

यसरी सबै धर्मधारा, घर, गाउँ र देशलाई समन्वयको सूत्रमा उनी विचित्र रमणीय वैदिक सनातन धर्ममाला बनाउने उदार आदर्श महापुरुषको जति गुणगान गरे पनि पुग्दैन।

### दिब्रुङमा दोस्रो महायज्ञ र आध्यात्मिक, नैतिक र स्वास्थ्य शिक्षा–

दिब्रुङमा २०३२ सालको मंसीर २० गते देखि २५ सम्म भव्यरूपमा दोस्रो धान्याचल महायज्ञ भयो। मुख्य आचार्यत्व जुहाङ गुल्मी निवासी पं० रविलाल न्यौपानेज्यूको रह्यो। पहिलो धान्याचलमा पैंयुँ, धुवाकोटका पण्डित ताराप्रसादज्यूलाई मुख्य आचार्यत्व प्राप्त भएको थियो। सहायक आचार्य र ऋत्विग्हरूको संख्या १०८ नाघेको थियो गायत्रीद्वारा लक्षहवन, शतरुद्री, घृतधारा, प्रमुख पुराण-पारायण, संकीर्तन, प्रवचन, शङ्का-समाधान, सत्सङ्गहरू नियमित ढङ्गबाट चलिरहेका थिए। दोस्रो पटकको महायज्ञ हुनाले पहिले भन्दा पनि सुव्यवस्थित रूपमा सञ्चालित भइरहेको थियो।

यस पटक झन् निकै टाढा-टाढासम्म प्रचार भएकाले जनताको उपस्थितिमा वृद्धि भएको थियो। लेखका उकालो चढिरहेका मानिसका खोलाको भेलमा लटपटिएर सबै व्यक्तिको धुरीतर्फ बगे। त्यसै भेलले आज त जान्न भोलि....भनेर बसेकाहरूलाई पनि उमाल्यो, उत्कट इच्छा र श्रद्धाको बाढीले घचेट्दै त्यसै खोलामा बुढा-बुढीहरूलाई पनि तेर्सायो। परिचयको आवश्यकता थिएन र दिब्रुङका प्रभु परमानन्दले आँटेको यज्ञमा हिंडेका भनेपछि आफन्तीभाव भइगयो। केही बलियाहरूले त कमजोरहरूका भारी सह्यारी दिए। कतिपयले, चिन्दै नचिनेका बूढा-बूढी डोराइरहेका थिए। कतिपयले धानका थैलामा दुईतीन वर्षका बालक बसालेर उकालो चढिरहेका महिलाहरूका बच्चाहरू बोकी उपकार गरे, कतिले उकालामा हात र पात भएकाहरूका ठेका-ठेकी बोकी यज्ञको सहयोग गरे। केही दिन पहिलेदेखि नै गाउँ-गाउँबाट लेख चढ्ने बाटाहरू सफा र फराकिला पारिरहेका थिए। बाटाका गेगर पन्छाउन जहाँ-तहाँ प्रयास भइरहेका थिए। उकालो चढ्नेहरूको तिर्खा मार्न मही, पानीको व्यवस्था पनि ठाउँ-ठाउँमा नभएको होइन तर जसरी भए पनि यज्ञमै पुगिजाने हतारमा कसैले बीचमा बिसाएर तिर्खा-मेटन खोजेन, कतिखेर पुगेर यज्ञको दर्शन गरौंला भन्ने उत्साहले उकालो चढेको पनि थाहै नपाई सबै श्रद्धालुहरू आनन्दसंग दिब्रुङ आश्रममा पुगे।

यस दोस्रो महायज्ञले स्वामीज्यूको प्रभावलाई झन् विस्तृत बनाएकाले सामाजिक सेवाको क्षेत्रमा पनि स्वामीज्यूको आवश्यकता सबैले अनुभव गर्न थाले।

गुल्मीको दिब्रुङ आश्रमको निकटमा पर्ने गाउँहरूले आ-आफ्ना गाउँमा स्वामीज्यूलाई पादार्पण गराई सत्सङ्ग गराउने काम गर्दै रहे। स्वामीज्यू निष्क्रिय भई कहिल्यै रहनुभएन। भक्तहरूले बोलाउन आएमा, दुःख-विमार, गर्मी सर्दी केही भन्नुभएन। ''यस नश्वर शरीरबाट अलिकति पनि लोकोपकार हुन सक्यो म भने आफ्नो अहो भाग्य ठान्छु'भन्दै भक्तहरूका अगाडि लागी गाउँतर्फ हिंडिजानुहुन्थ्यो। अनन्तकाल देखि ज्ञानको गन्ध पनि नपाएर आफ्नो स्वरूप नचिनी भव सागरमा झन् झन् उँधै गाडिँदै गएका प्राणीहरूलाई केही प्रकाश दिन सक्नु नै मेरो पुरुषार्थ हो, भन्ने अनुसन्धान गर्दै वहाँले दुर्गम बाटाहरूको यात्रा गर्दै घोर अज्ञान र अभावले एक साथ अँचेटिएका मानवताको उद्धार गर्न अनवरत अथक प्रयास गर्दै रहनुभयो।

आध्यात्मिक र नैतिक शिक्षाको साथ-साथै वहाँले स्वास्थ्यको शिक्षा पनि समाजमा प्रदान गर्नुभयो। पारस्परिक सहयोगको आवश्यकता बताउँदै मानव-मानवलाई एक अर्काको सहयोगी बनाई सामाजिक समरसताको शुरुवात गर्नु-भयो। मानिस एकदमै व्यष्टिवादी बनिसकेको थियो, एक घरको अर्को घरसंग कुनै मतलबै थिएन, गाउँ-गाउँको पारस्परिक सम्पर्क त एकदम नै टाढा-टाढा पुगिसकेको थियो। स्वामीज्यूका शिक्षाले मान्छे-मान्छे, घर-घर र गाउँ-गाउँ पनि एक आपसमा सम्बद्ध र घनिष्ठ हुँदै गए। एक आदर्श राष्ट्रमा समांजको लागि आवश्यक सामाजिक-संरचनाको थालनी स्वामीज्यूद्वारा नै विक्रमका एक्काइसौं शताब्दीका तेस्रोदशकबाट गुल्मीले गऱ्यो। स्वामीज्यूका आश्रमद्वारा आयोजित कार्यक्रममा प्रशासकवर्ग, सर्वशास्त्र-विशारद विद्वान्, साधारण पुरोहित, ग्रामीण अशिक्षित जनता, सबै एक साथ स्वयं-सेवक थिए। सबैको स्तर समान थियो। आश्रमबाट पनि सबैले बराबर सम्मान पाइरहेका थिए भने उनीहरू पनि परस्परमा समानताको व्यवहार गर्न बानी परिसकेका थिए। कुनै पनि जाति, वर्ग या पेशामा रहने व्यक्तिले आफ्नो या आफ्ना वर्गको उपेक्षा भयो भन्ने अनुभव गर्ने मौका पाएन। यसरी व्यावहारिक अद्वैतवादको मधुरता भेट्टाएका परमानन्दीय भावधारामा रहने समाजलाई कहिल्यै पनि आपसी कटुताको नमीठो पन चाख्न परेन। स्वामीज्यूसंग सम्बद्ध समाजमा वहाँका हृदयको स्वच्छता, निश्छलता र अभेद-भावना स्पष्ट रूपमा देखा परेका थिए।

### रामकोटमा-द्वितीय सामाजिक महोत्सव—

यता विहूँतिर यस्तै-यस्तै कार्यक्रमका साथ वि. सं. २०३१ साल बाहिरी ढोकामा पुग्न लागेको थियो भने २०३२ सालले पनि ३१ सालको बहिर्गमनको बाटो हेर्दै भित्रिन तम्सिएको थियो। ०३१ को चैत्रान्तमा बिहूँकोटेहरू स्वामीज्यूलाई लिन आएकाले वहाँ भइसकेको मन्दिर निर्माण समेत कामको निरीक्षण-परीक्षण गर्नुका साथै आगामी कार्यक्रमको तर्जुमा गर्न स्वामीज्यू बिहूँकोटतर्फ लाग्नुभयो।

वि. सं. २०३१ भदौ झैं नै यो ०३२ को वैशाख पनि बिहूँमा एक सामाजिक महोत्सवको रूपमा प्रस्तुत भयो। मन्दिरको निर्माण गरी दिब्रुङ क्षेत्रबाट गएका शिल्पीहरू फर्किसकेका थिए। केही व्यक्तिको निवासार्थ सामान्य कुटीहरूको निर्माण पनि भएको थियो। यसपटक स्वामीज्यू सीधै रामकोट नै पाल्नुभयो। आउने दिनको खबर समय मै हुनुपर्ने समाजको माग अनुसार स्वामीज्यू दिब्रुङबाट बिहूँ पुग्ने दिन प्रचारित भइसकेकाले घोडा बाँधेकै धुरीदेखि नै दर्शनार्थीका ताँतीले स्वागत गरिरहेको थियो। प्रत्येक मानिस भित्री निजी प्रेरणाकोअरोट मानेर उपस्थित भएकाले प्रत्येक दृष्टिबाट निस्केका श्रद्धा र भक्तिका तरङ्गहरूले वातावरण नै प्रेममय बनाएका थिए। कोही कसैसंग सल्लाह गरी संगठित भई समूहमा आएका थिएनन्, आ-आफै एक्ला-एक्लै कृष्णका पास आएका गोपीहरू झैं नै आएका मानिसहरूको स्वामीज्यूका समक्ष ठूलो भीडभयो। केही साधु सन्तको महिमालाई नबुझी टाढा-टाढा रहनेहरू पनि आज जनसाधारणको





यत्रो झुकाव देखी तेसैं अकमकिएका या अल्मलिएका झैं देखिइरहेका थिए। अब उनलाई पनि 'कुनै दिन हामी पनि यिनैका पछि लाग्ने बन्ने त होइनौं' भन्ने डरले छोइसकेको थियो।

दोस्रो पटक पनि स्वामीज्यूलाई ल्याउन सकेकोमा बिहूँले आफूलाई धन्य सम्झेको थियो।

रामकोटमा वैशाखका आरम्भका साथ स्कन्द पुराण अन्तर्गत ब्रह्मोत्तर खण्डको प्रवचन प्रारम्भ भयो। साथमा दिब्रुङ विद्यालयका प्रधानाचार्य ऋषिकल्प पण्डित श्रीसिद्धिनाथ पाण्डेयज्यू पनि केही छात्रहरूका साथ स्वामीज्यूको अनुगमन गर्नुभएको थियो। वहाँले नै कर्मकाण्ड र पाठको जिम्मा लिनुभयो, स्वामीज्यूका भागमा दिउँसो ११ बजे देखि ४ बजेसम्म गरिने प्रवचन पऱ्यो। डिंगाको पुच्छर छाडेर कुटी पसेका डाँडेका छोराले खै! कसरी कथा भन्लान् भन्ने व्यक्तिहरू पनि कुनाकाप्चामा बाँकी नै थिए। स्वामीज्यूले शास्त्रीय वेदान्तमय प्रवचन गर्नु एक आठौं आश्चर्य थियो। जसले अक्षर चिनाउने गुरु या पाठशालाको मुख पनि देख्न पाएन; जसलाई भर्ना गर्न या पढाउन कहिं कसैसंग लगिएन, जो घरबाट पढने पण्डित बन्ने धन कमाउने समेतका समस्त आशा र आकाङ्क्षाहरूलाई भित्रैदेखि तिलाञ्जलि दिएर विनाशी लेखे छापेका लिप्यात्मक अक्षरहरू होइन, अविनाशी अक्षर-परमेश्वरलाई मात्र चिन्न, माता-पिताको वात्सल्य र बन्धुहरूको माया-ममतालाई गलत्याएर घर परिवारको बलियो डोरीलाई एक्कै झट्कामा झड्याङ्झुडुङ पारी आफ्ना असली आफन्तको फाल सुंदै-सुंदै मुसुङको धुरीमा पुगेर भेट्टाई आनन्दले दिन बिताइरहेको थियो, जसलाई माताज्यूको ममता र पिताज्यूको स्नेहिलो छत्र-छाया छोड्दा कारागारबाट छुटेको महसूस भइरहेको थियो, जसले मुसुङ र सोलीघोप्टे समेतका विकट निर्जन ठाउँहरूमा पुगेर रूखका बोक्रा र घाँस पातका टुसा मुना खाएर पनि बाँच्ने प्रशिक्षण लिइसकेको थियो, जो त्रिकाल सन्ध्या जप-ध्यान अनुष्ठान समेतको योग-साधनाका कठिन खुड्किलाहरू पार गर्दै असंप्रज्ञात समाधिको सुरम्य सर्वोच्च शिखरमा पुगेर एकसाथ जताततै हेर्ने खुबी हाँसिल गर्ने तरखरमा अघिबढिरहेको थियो, उसले वेद-वेदाङ्गको पुस्तक लिएर गुरुका पास गई पाठ लिने र बुझाउने फुर्सद कहाँ पायो, वेदान्तको तर्क-कर्कश र अटपट शैली सम्झन फुर्सद कहाँ पायो होला, फेरि समाजमा फर्की प्रवचन आदिद्वारा जनसमक्ष प्रस्तुत भई सुकरीविष्ठा सदृश प्रतिष्ठाको चाहाना पनि त थिएन।

वहाँले पढेर समाजमा ओर्लन चाहनुभएको पनि होइन, विद्याका अधिष्ठाता भगवान् शिवले सरस्वतीलाई 'जाऊ बालतपसीका मुखमा बस, यिनी जे बोल्छन् ब्रह्मसूत्र गीता र उपनिषद्‌को व्याख्या बनोस्, यिनका वाणीका प्रवाहका समक्ष मन्दाकिनीको अमन्द-वेग पनि मन्द बनोस्, तपस्याले उज्वल अन्तःकरणलाई तिमीले स्पर्श गर्दा बित्तिकै समस्त विद्याहरू सुतेर उठे झैं गरी सक्रिय बन्नेछन्, यिनबाट समाजको उद्धार गर्नुछ, सनातन धर्म विद्याको रक्षा यिनीद्वारा गराउनु छ जाऊ, यिनलाई आत्मसात् गर' भनी पठाउनुभएको थियो। नत्र ब्रह्मध्यानका प्रबल-प्रभाले कर्म बन्धनबाट छुटकारा पाई जीवनमुक्त कोटीमा पुगेका वीतराग महात्मालाई जनसम्पर्क संगको के मतलब! आबाल ब्रह्मचर्यको अखण्ड व्रतका अनुष्ठातालाई अनेक घर-घरका बालकहरू बटुली उनको रोटो-भोटोको चिन्तामा पिल्सिनु किन परेको थियो? पाँच सात जनाको परिवारको अगुवा हुन पनि डराएका व्यक्तिले हजारौंका समुदायका अगुवा हुने साहस कसरी लिन सकिन्थ्यो? अवश्य पनि यो ईश्वरको विशेष अह्रोट हो, यो प्रारब्धको चपेट हैन, कहिलेकाहीं ईश्वरले त ब्रह्मज्ञान-परिपूर्ण व्यक्तिलाई पनि प्रपञ्च अन्तर्गतको कुनै खास अरुंबाट बन्न नसक्ने काम गराउनुपरेको हुन्छ। यस्तै यस्तै काम गर्न यदा-कदा स्वयं ईश्वरको अवतार पनि हुने गर्छ। जसरी ईश्वरले **न मां कर्माणि लिम्पन्ति** "मेरो अवतार कर्म फलको भोगका निमित्त होइन, तैपनि अधर्म परिहार र धर्म स्थापनाका लागि अवतार लिन्छु।" भन्नुहुन्छ, यही न्याय कर्मबन्धनलाई खुकुल्याइसक्नुभएका जीवनमुक्त महात्माहरूका विषयमा पनि सम्झन सकिन्छ। ईश्वराज्ञाले संसारमा ईश्वरोक्त काम गर्नु र मुक्त हुनुमा वहाँहरूलाई खास केही अन्तर हुँदैन।



अँ त, बिहूँ र त्यसका आस-पासका पण्डित, पुरोहित, आचारी विचारी मध्ये केहीले यी लेकमा बसेर जाडो खाएर, झरेका महात्माले के पो भन्लान्! भनी सन्देहपूर्ण दृष्टिले स्वामीको मुख ताकिरहेका थिए। स्वामीज्यूबाट अध्यात्म-प्रधान वेदान्तमय व्यावहारिक उदाहरणले सुबोध्य बनेका व्याख्यानको अविरलधारा जब कर्ण-कुहरमा झपाझप वर्षन लाग्यो, अनि त साधुवाणीश्रवणबाट जन्मेका महान् पुण्यका प्रतापले अन्तःकरणको सन्देहरूप अन्धकार पन्छाउँदै श्रद्धा र विश्वासको तेजस्वी सूर्यको उदय भइगयो।

उनै शब्द हुन् जुनले अरुले प्रयोग गर्दा त्यो मिठास र गम्भीरता दिंदैनथे, कसैको कलेजोमा चोट पुऱ्याउन पनि सक्थे तर स्वामीज्यूको मुखबाट निस्कने सौभाग्य पाउँदा उनै शब्द मीठा, गहिरा र सर्वमनोहर बने।

एउटै प्रवचनले सबैका मनले वहाँको शिष्यत्व स्वीकार गऱ्यो। दृष्टि नै बदलियो, बोलचाल, ढोग-भेट सबैमा एक्कासी आश्चर्यजनक परिवर्तन आयो। भित्र पलाएका श्रद्धाका अंकुरले पनि बाहिरी व्यवहारमा तुरुन्त गहकिलो परिवर्तन ल्याउँछ।

ज्ञान महायज्ञको पूर्णाहूति र नवीन मन्दिरमा भगवान् शिवको प्रतिष्ठा एक साथ भयो। बिहूँ र आस-पासका गाउँहरूले रामकोटको टापुमा बनेको मन्दिरमा भगवान्‌को प्रतिष्ठाको महोत्सव सम्पन्न भएपछि, यस ठाउँलाई साक्षात् कैलाश सम्झन थाले। भक्तवत्सल भगवान भक्तहरूले बोलाइएका ठाउँमा कृपापूर्वक सवारी भई उनीहरूको सेवा स्वीकार गर्दै धर्म, अर्थ, काम, मोक्षरूप चारै पुरुषार्थ प्रदान गर्नुहुन्छ, स्वतन्त्र हुँदाहुँदै पनि भक्त पराधीनता स्वीकार गरी, सुताउँदा सुत्ने, उठाउँदा उठ्ने, दिए खाने, नभए भोकै रहने गरेको देखाउनुहुन्छ, यो अर्चा विग्रह पनि परमेश्वरको एक किसिमको अवतार हो। कृष्णादि अवतारका वसुदेव देवकी आदि झैं अर्चावतारका पनि मन्दिर बनाउने, बनाई पूजा चलाउनुपर्छ भनी मन्दिरको बीउ रोपी प्रतिष्ठा गराउने आचार्य यस अवतारका पिता हुन् भने आचार्यको उपदेशावली प्राप्त गरी त्यसको विस्तार गर्दै मन्दिर धर्मशाला आदि निर्माण गरी गूठ किनी मूर्ति ल्याई प्रतिष्ठाको व्यवस्था मिलाई पूजा चलाउने व्यक्तिहरूले भगवान्‌की आमा बन्ने सौभाग्य प्राप्त गर्दछन्।

यसरी बिहूँले आज एक महान् आनन्दको अनुभव गरिरहेको थियो। यसै माटा-पानीको उत्पादनले आज चारै दिशामा प्रसिद्धि प्राप्त गर्न सफल भएकाले यो गाउँ आफूलाई परम भाग्यमानी सम्झिरहेको थियो। अब कतै नगइदिए हुन्थ्यो भन्ने आशाले सारा नजरहरू यतै हेरिरहेको स्वामीज्यूले दिनदिनै पढिरहनुभएको थियो, तर के गर्नु, हिड्ने बेलामा डबडबाएका दिब्बुडतर्फका आँखा पनि बिर्सिसक्ना थिएनन्। यता भक्तवत्सल स्वामीज्यूमा समय-समयमा नपुग्दा भक्तहरूको चित्त दुख्छ भन्ने चिन्ता पलाइरहेको थियो भने उता निजी अन्तरङ्ग आत्माले भने अझै उही शान्त एकान्त गिरि-शिखरको निर्जनता र निर्द्वन्द्वताका पुनर्मिलनको अवसर खोजिरहेको थियो। घरी-घरी विचार सागरका लहरहरू उर्लेर सब चाट-चुट छाडेर अझै गुफा कन्दरातर्फ उकालो लागौं कि! भन्नेहुन्थ्यो तर दया र इमान्दारिताले मिलेर त्यो यात्रा-बदर बनाइदिन्थे। इमान्दारिताले साधु सन्त जस्ता धार्मिक शिरोमणि व्यक्तिले पनि आफैं उठाएको कदमलाई लात मारेर पन्छिने हो भने अब इमान्दार खोज्न कहाँ जाने, भन्थ्यो भने, दयाले भने म भागेपछि यी भक्तहरूलाई कति पीर पर्ला भन्दै बाटामा तेर्सिएर उकालो लाग्न रोक्थ्यो।

### उच्चतम धुरी घुम्टे (घनाटवी)मा :-

वैशाख-पूर्णिमामा (चण्डी-पूर्णिमा) घुम्टेको धुरीमा मेला लाग्दछ। यो मध्य-नेपालको सर्वोच्च धुरी हो। यसको दर्शन गर्ने इच्छा स्वामीज्यूमा जाग्यो, भक्तसहचरहरूलाई डर लाग्यो-गुरुदेव उहीं रोकिनुभए के गरौंला? उनीहरू

डर साथ सन्देह प्रस्तुत गरे। स्वामीज्यूले यस देहलाई जन्माउने कुल र ठाउँको केही ऋण तिर्नु छ, यो काम नसकी लामो समय टाढा गएर बिताउनेछैन भन्ने,कबल गरे पछि सबै प्रसन्न भई घुम्टे यात्रा शुरु भयो, साथमा पच्चीस जनाको टोली पनि रामकोटबाट घुम्टे जान तम्सियो। दुर्गानन्दज्यू र पं. सिद्धिनाथज्यू पनि साथै रहनुभयो। बिहूँबाट बिहानै हिंडेका यस टोलीले काँक्राखोर पुगेर बाँसखोले सापकोटा नन्दलालज्यूका घर बिसायो। नन्दलाल र उनका आफन्तहरू गद्गद बने। आवश्यक कपडा भाँडा समेत श्रीनन्दलाललाई पनि मार्गदर्शकका रुपमा साथ लिई यस टोलीले भजन कीर्तन र हर्षोल्लासका साथ घुम्टेको धुरीभन्दा केही तल रहेको बिरौटा थरीमा पुगी खरको छाप्रोमा बिसायो। बिहान नित्य कर्मपछि यस यात्रीदलद्वारा घुम्टे शिखरमा पुगी सिद्ध र वराहको दर्शन गरी रुद्राभिषेक र ब्रह्मोत्तरखण्डका सामूहिक पाठको आरम्भ भयो। कार्यक्रम पहिलेदेखि नै निश्चित भएकाले पाठ कर्ताहरू, पुस्तक-पूजा सामग्री सबै साथमा थियो। बिहूँका मालिगैरे कण्डेल पनि पशुपालनको पेशा लिई त्यस क्षेत्रमा रहन्थे। उनको मूल घर बिहूँ नै थियो। उनका दलले बिहूँलेहरूको यस टोलीलाई स्वागत गऱ्यो। भव्यरूपले रूद्री र पुराणको पाठ हवन समेतका सत्कर्म सम्पन्न भए। यस्तो सुरम्य उच्च शिखर भेटाएर स्वामीज्यूको मन भने भित्र-भित्रै कल्पन लागको थियो। तर अरु गृहस्थ यात्री भने यहाँ बस्ने व्यवस्था छैन छिटो तलै झरौं, बेर नगरौं भनी हडबडाएका थिए. स्वामीज्यूले आफ्नो वचन झूठो पार्नुहुँदैनथ्यो, के गर्नु, नाचा-बन्धनमा बस्नुपऱ्यो। उही बिरौटा थरी झरी, उहीं बास बसियो। यतिखेर मन परेको ठाउँमा केही दिन बसी ब्रह्मानुभव गर्न नपाउँदा स्वामीज्यूको मन अकुल्याएको थियो। वहाँले समाज समक्ष आफूले हारेको अनुभव गरिरहनुभएको थियो भने समाजले जन-तन स्वामीज्यूलाई फिर्ता ल्याउन सफल भएकोमा आफ्नो साइत परेको सम्झेको थियो।

**शिवधुरीको नयाँ न्वारन :-**

बिहूँमा ब्रह्मोत्तर खण्डको प्रवचन चलिरहेकै बेला एकदिन स्वामीज्यूको इच्छा अनुसार बिहूँलेहरूले वहाँलाई बिहूँको धुरी 'सुँगुर काँजा'मा लगेका थिए। यो धुरी बिहूँ गाउँका ठीक टाउकामा पश्चिमतर्फ उभिएको छ। बिहूँलाई हरियो-भरियो पार्न यस धुरीको विशेष योगदान छ। पूर्वतर्फबाट उडेको पानी पार्ने बादल यसैमा ठोकिनाले धेरै जसो बिहूँमा पानी परेको देखिन्छ। अन्य धुरीहरूमा बादल र बिजुलीले नचरी लगाउँदा बिहूँमा वर्षा नहुन पनि सक्छ तर जब यस धुरीमाथि गहिरो, चिल्लो कालो रङ्ग लिएको बाक्लो बादल गम्भीर मधुर ध्वनिमा आफ्नै अनुपम भाषाले गीत घन्काउन थाल्दछ, तब नटी बिजुलीहरू चम्किएर नाच्न थाल्दछन्; तब आनन्दमय अमृतका बूँदहरू टप्कँदा बीच-बीचमा ताल फर्काउँदा भएको आरोहलाई नै दुनियाँले चडकनी या वज्र परेको भन्दछन्। यो बादल र बिजुली नामधारी गन्धर्व र अप्सराहरूको नृत्य-गीत हो भन्ने दुनियाँले थाहै पाएको हुन्न। ईश्वरीय प्रकृति देवीको भित्री रहस्यलाई देख्ने आँखा पनि त जो-तैलाई कहाँ मिल्दछन् र! केही बेरपछि हलुङ्गिए उजेलिएको बादल मानौं पश्चात्तापका कारण टाकुरा-टाकुरामा पहरा-पहरामा टाँस्सिएर तपोमय जीवन बिताउनेतर्फ अग्रसर हुन्छ। यता बादलमा तमक चढेको देखी चम्केर नाँच्ने बिजुलीहरू पनि बादलमा आएको आकस्मिक परिवर्तनले मानौं लज्जित हुँदै आफैंमा खुम्चिएर त्यसै कता-कता अलापिन्छन्। यो सारा प्राकृतिक खेलको आयोजना आफ्नो थाप्लामा गर्ने बहादुर धुरी यही हो। यसलाई सुँगुर-काँजा किन भनियो यसको पत्ता लगाउन नृवंश-शास्त्र र भाषाशास्त्रका अभिज्ञहरू आउनेछन् तर बिहूँलेहरूका साथ रामकोटबाट २०३२ को वैशाखमा यस धुरीको यात्रा गरिरहेका स्वामीज्यूलाई भने बाटैमा 'सुँगुर काँजा' पुग्ने मन मऱ्यो। स्वामीज्यूले जति व्यक्ति रामकोटबाट लिई हिड्नुभयो त्यसको तीन गुना धेरै बाटामा पछि लागेका व्यक्तिहरू पुगेका थिंए। यस प्रकार एक ठूलो समूहले स्वामीज्यूका पाइला पछ्याउँदै घोडाबाँधेबाट केही माथि पुगिसकेको थियो। जुम्ल्याहा भएर उभिएका खर्सुका रूखहरूका फेदमा छाती फुकाएर उत्तानो



सुतेका भाग्यशाली ढुङ्गामा गई स्वामीज्यूले 'सुँगुर काँजा 'लाई पिठ्यू फर्काई बस्नु भयो। उत्तरमा पर धवलागिरि र माछा-पुच्छ्रे देखिइरहेका थिए, सोलीघोप्टे, झुलेनी मुसुङ् समेतका शिखरहरू उत्तर-पश्चिमतिर तिनै हिमशैलका काखमा खेलिरहेका प्रतीत भएका थिए। यता बिहूँको ठीक पूर्वमा केही पर कृष्णा गण्डकीको पवित्र दर्शन भइरहेको थियो भने, बिहूँका पौवा डाँडा, कोट र रामकोटले पनि स्वामीज्यूलाई आ-आफ्ना मुख देखाएका थिए। पौवाडाँडाले यति खेर केही बोलेजस्तो लागेन, तर बिहूँकोट र रामकोटमा झल्झली देखिइरहेका दुईथरि देवालयहरूले भने परस्पर विरोधी माग प्रस्तुत गरेका थिए।

पहिले लडे पनि यति खेर रामकोटका विरोधमा तल्लो र उपल्लो दुबै कोटको मन-पेट मिल्यो, एकमत भए, उनी दुबै कोटलाई रामकोटका झल्किरहेको मन्दिरले सातो-पुत्लो उडाएको थियो। दुबैले संयुक्त गुप्त भाषामा स्वामीज्यूलाई माग गरे—'हेर ! ब्रह्मचारी नानी ! तिमी बुझ ! बुद्धिमा तिमी छिपिएका छैनौ, तिम्रा पूर्वजहरूले हामीलाई उभ्याए, हाम्रो मान भाउ राखे, हामीले उनको देख-रेख गऱ्यौं, आज हाल-सालै बनेका त्यस रामकोटका शिवालयले हामीसंग पौंठे-जोरी खेल्न खोजिरहेको छ, सुल्डाँडादेखिका सधैं यहाँ आइरहेका मानिस यता हेर्दै नहेरिकन पूजा-सामग्री लिएर चाडपर्वमा रामकोटजाँदा हाम्रो मरेको थानको भएको छ'। बोका-परेवा नकाट्नेहरूको संख्या अहिले शिवालयले निकै बढाइरहेको छ। यही क्रम चलिरह्यो भने छिट्टै नै हामीतर्फ आउनेहरू शून्य संख्यामा पुग्ने छन्।

रामकोटमा बसेर छानो टल्काइरहेका शिवालयले यता भनिरहेको थियो-''यी अर्काको रगत चुस्न पल्केका कोटका पुजारीहरूले र केही विधान नै नजानिकन मन-मानी पुरेत्याइँ गर्नेहरूले भित्र-भित्रै यस शिवालयलाई रुचाइरहेका छैनन्। किनकि शिवालयले पशु-पक्षी वध र मांस-मक्षण नगर्ने उपदेश दिन्छ। साथै शास्त्र-विधान राम्रोसंग जान्ने विद्वान् पैदा गराएर मनपरी कर्मकाण्ड गराउनेहरूलाई क्रोधित पारेको छ स्वामीज्यूले छोड्ने हो भने हाम्रा सारा उद्देश्यहरू विफल हुनेछन्, धेरै टाढा गएर लामोसमयसम्म बिताउँन भएन।''

यी त भए बिहूँका पुराना पाठे कोटले र रामकोटका शिवालयले स्वामीज्यूसंग गरेका गन्थन र गुनासाहरू एक्कासी उकालोमा लम्किरहेका स्वामीज्यूका कदमलाई रोक्ने विषय अर्कै थियो। साधुले भक्तहरू लिएर 'सुँगुर काँजाको' यात्रा गरिरहेका स्वामीज्यूका चित्तले सहेन, वहाँले व्यक्तरूपमा सबैसंग भन्नुभयो-'एउटा सल्लाह नमिलाइकन मलाई माथि जान मन लागेन; 'सुँगुर काँजा' नाम परिवर्तन गरेर मात्र माथि जाऔं। यो कुरा सुनी सबैले नाम परिवर्तनको आवश्यकता स्वीकार गरेकाले स्वामीज्यूले घोषणा गर्नु भयो—अब हामी 'सुँगुरकाँजा' भन्ने नामले यस धुरीलाई कहिल्यै भन्ने छैनौं प्रत्येक यी हाम्रा गिरिशिखरहरू, हिमालयका नै पादपर्वतहरू हुन्, अतः यी सबैमा भगवान् शिवको नै निवास छ, अब यसको नाम शिवधुरी भयो। हामी कसैले पनि अब उप्रान्त पुरानो नाम यस धुरीलाई दिने छैनौं।

यसरी 'सुँगरकाँजा' जान हिडेका यात्रीहरू, अब एकाएक नाम बदलेर 'शिवधुरी' जाने बंमे। वहाँ पुगेर यस टोलीले महान् आनन्दको अनुभव गऱ्यो। अग्लो शिखरबाट बिहूँ र उसका आस-पासका सबै गाउँहरूका दाहिने बायाँ पारवाहरू स्पष्ट देखिरहेका थिए। शिवलिङ्गका आकारमा एक शिलालाई पर्वतको धुरीमा स्थापना गरी रुद्रीका मन्त्रहरूले संक्षिप्त आराधना गरी शिवधुरी नाम सार्थक बनाई उसैदिने सदलबल स्वामीज्यू रामकोट फर्कनुभएको थियो। यस पछि बिहूँ लेहरू शिवधुरीमा स्वामीज्यूको निवास भई रामकोटलाई पनि संरक्षण प्राप्त हुने भयो भनी प्रसन्न भए। यसपछि स्वामीज्यूको पनि त्यही रही तपस्या गर्ने इच्छा भित्रभित्रै बढिरहेको थियो। यसरी शिवधुरीको नयाँन्वारन संपन्न भयो।

**शिवधुरीमा बधिनी वहिनीका घर साधु दाइ—**

घुम्टेको यात्रा गरी फिर्ता भएर उही विरउटा थरीमा त्यो टोलीले निवास गऱ्यो, खाली एकजना दुर्गानन्दज्यू मात्र

दिब्रुङ निम्ति घुम्टेबाट नै प्रस्थान गर्नुभयो। अर्कोदिन त्यही बिहूँबाट आएको अर्को टोलीले स्वामीज्यूलाई शिवधुरी जान आग्रह गरे अनुसार स्वामीज्यूले स्वीकार गर्नुभएको थियो तर त्यहींनेरको ताराखोला-हिलमा ब्रह्मोत्तर खण्ड प्रवचनको कार्यक्रम तुरुन्तै बनाएर 'लक्ष्मी मगर्नी' को नेतृत्वमा हिलेलीहरू त्यहाँ आएर केही दिन पुराण-प्रवचन गर्ने आग्रह गरेकाले हिलं गई पाँचदिन प्रवचन गरी सबैका अन्त:करणका कल्मष पखालेर बिहूँलेहरूको साथ काँक्राखोर हुँदै बिहूँको सिरपाली माथिको नेटो लटेखोरियामा आइपुग्नुभयो। यहीं आएर सहयात्री बिहूँलेहरूलाई भन्नुभयो—'तपाइँहरू घर-घर जानुहोस्, मलाई पनि आफ्नो घर शिवधुरी जान दिनुहोस्।' एक दिन गाउँमै बसी अनि शिवधुरी जाउँला भन्ने बिहूँलेहरूको प्रार्थना स्वीकार गर्नुभएन। हरको लुगा एक चादर र लोटा बाहेक वहाँसंग केही थिएन। यता सबै आ-आफ्ना घर आएर परिवारले बनाएको तातो-पिरो खाएर आफ्ना कोमल बिस्तरामा निदाए; उता स्वामीज्यू भने एक्लै घाम डाँडामा बस्ने बेला शिवधुरी पुगी तल खाल्टेको पानी पत्ता लगाई लोटामा पानी ल्याई पूर्व स्थापित शिलामय शिवमूर्तिका साम्ने संन्ध्योपासना गरी त्यसै लोटाको जल पिई बाघ भालुले घेरिएको धुरीको चुचुरोमा फगत एक्लै खर्सुका रूखका फेदमा रातभरि शान्त भएर ब्रह्मचिन्तन गर्दैरहनुभयो। जहाँ लौकिक व्यक्तिहरू सुतिरहेका हुन्छन् त्यहाँ संयमी साधुहरू जागिरहेका हुन्छन्। विरक्त र अनुरक्तका दिन र रात अलग हुन्छन् एउटाको रात अर्कालाई दिन हुन्छ।

स्वामीज्यू हिजो साँझ लटेखोरियाको धुरी-धुरी शिवधुरीतर्फ लागेको खबर संक्रामक भएर फिजिंदै चारै दिशामा व्याप्त भयो। अर्को दिउँसोसम्म शिवधुरीको डाँडो मानिसहरूले पुरियो। 'यहाँ यसै बस्न सकिन्न, कुटी बनाइसके पछि मात्र आउनु पर्छ' भन्ने कुरो सबैतिरबाट आइरहेको थियो। स्वामीज्यूले अन्तिम निर्णय सुनाउँदै ''म यहीं यसै झोरमा बस्छु, मलाई कुनै वस्तु या व्यक्तिको आवश्यकता छैन'' भनेपछि एकछिन समाज मौन रह्यो। धेरै जना त अब हामीले भनेको निश्चय पनि लाग्दैन भनी शान्त रहे तर केही आँटीहरूले प्रत्युत्तर गरे—'यहाँ निकै बन-जन्तु लाग्छन्, डरलाग्दा बाघ छन्, एक्लै घर नभई खुलाठाउँमा बस्न हुँदैन।' तर स्वामीज्यूलाई आफ्नो निर्णयबाट हटाउन कसैको केही लागेन। बाध्य भएर सबैले त्यहाँबाट हिड्नुपर्‍यो। एउटा व्यक्तिको उपस्थिति पनि ब्रह्म-चिन्तनमा बाधक हुने कुरा सम्झाई साँझसम्म साथ दिनलाई अरुलाई पठाएर पनि लुकेर बसेका गुरुभक्तहरूलाई पनि त्यहाँबाट हटाउन सफल हुनुभयो।

त्यहाँ एक पहिला खानी खन्दा परेको जस्तो सानो झोर थियो। त्यो धेरै भित्रसम्म पुगेको थियो। त्यहाँ बाघ बस्ने गरेको कुरा पछि ज्ञात भयो। स्वामीज्यू त्यसैमा रहन थाल्नुभयो। स्याउलाको बिछौनामा त्यही सानो गुफामा १५ दिन बिते, प्रथम रातमा नै बघिनी आएर गर्जिएकी थिई; त्यसै गुफाभित्र त्यसका शिशुहरू (डमरुं) रहेछन्। बाहिर दाउरा जम्मा गरी जङ्गी धुनी जगाई स्वामीज्यू बस्नुभएको थियो। गुफाका मुखमा धुनीको कड्कुलो लागेको थियो, गुंफाको केही भित्री भागमा स्वामीज्यूले ध्यान गरिरहनुभएको थियो। गुफाका निकै भित्रीभागमा बाघका बच्चाहरू बिलम्बतक आमा नआएको र आमा आउने बाटोमा आगो दन्किएकोले निकै छटपटाइरहेका रहेछन्। भित्र गुफामा केही जन्तुहरू भएको कुरा स्वामीज्यूलाई पनि ज्ञान भइरहेको थियो, तर यस रात्रीमा ठाउँ बदल्नु पनि सम्भव थिएन। साँझैदेखि बघिनी आगो निभ्ने र मानिस हट्ने प्रतीक्षा गर्दै बाहिर-बाहिरै चक्कर काटिरहेकी थिइन्। झण्डै नौ बज्ने बेला भयो, मानिस पनि सुतेनन्। आगो त झन् ठूला-ठूला मूढालाई खरानी पार्न कस्सिइरहेको थियो, विकरालरूप धारण गर्दै। बघिनी भित्र भोक-प्यास र डरले छट्पटाइरहेका शिशुहरूका कष्टको अनुभवले छट्पटाई। पहिले कहिल्यै नदेखेको यत्रो ठूलो आगो देखेर ऊ स्वयं पनि भयभीत बनिरहेकी थिई। आज उसको घर-परिवारमा एक ठूलो आपत्ति आइपरेको थियो। प्राणी मात्रका रक्षक एक साधुको यहाँ पादार्पण भएको त्यस अबोधलाई थाहा थिएन, हो न हो उसलाई त 'तिनै मेरा शिशुहरूका

हत्याका लागि यो मानिस यहाँ आगो जलाई बसिरहेको छ-यही प्रतीत भएको थियो। मानिसलाई त ऊ केही गर्न्रे थिइन, बीचमा दन्केको आगोले उसलाई रोकेको थियो। मानिस त घर आगो लागेको स्थितिमा साना शिशुलाई छोडी आफ्नो ज्यान जोगाउनतर्फ लाग्छन् भने बघिनीले कसरी ज्यानको माया मार्न सक्थी। त्यसै उसको मुटु कोक्याइरहेको थियो, आगामा हुमिन सकेकी पनि थिइन; त्यहाँबाट टाढा जान सकेकी पनि थिइन। उसले आफू यहाँ भएको संकेत दिएकै थिई तर बीचमा आगोको दन्दन र चट्चट भएको र स्वयं पनि अधिकतर ध्यान दशामा रहेकाले बघिनीको सामान्य संकेत ध्यान भंग गर्न सफल भएको थिएन। अब रात धेरै भएकाले असह्य भई बघिनी गुर्जन थाली। स्वामीज्यूको ध्यान खुल्यो, उभिएर सारा भित्र-बाहिरको स्थिति बुझ्दा सम्पूर्ण रहस्य खुलस्त भयो। बाहिर दन्केका आगाले अल्मलिएर पिरोलिएकी बघिनी स्पष्ट देखिई। उसका बाहिरबाट गएका ध्वनिले ललालुलु भएर निश्चेष्ट लडेका बाघका छाउरालाई मृत-सञ्जीवनीको काम गर्‍यो र उनीहरू पनि आमाको स्वरमा नै गुर्गुराउन थाले। डमरुहरूको आवाज सुन्दा झन् बघिनीको आवाज चर्कियो। साधुलाई अरु डरभन्दा साना बाघका बच्चाले खान नपाएर पाप भयो भन्ने डर विशेषरूपले भयो। तत्काल दन्केकोआगो निभाइदिई आफू अन्त कतै गई बसिदिनुभएकाले बघिनी भित्र गई आफ्ना डमरूहरू लिई गुफाका मुखमा आई एकपटक डुक्रेर नजाने कुन दिशा लागी थाहाभएन। गुफाबाट निस्केर डुक्रँदा उसले मानौं 'मैले खाली गरें अब हजूर बस्नु होस्' भनिरहेकी थिई। केही पर गएपछि पनि फेरि डुक्री। मानौं ऊ यस तपोभूमिदेखि टाढै गइरहेको सूचना दिइरहेकी थिई। माठो-माठो स्वामीज्यू गुफामा आउनुभयो। निभाएको आगो फेरि उस्तै दन्कन थालेको थियो। उसका साथी लेकाली हावाले उसलाई चूपचाप सुत्न नदिएर जगाई रहेको थियो। आगो र हावा सर्सर र हर्हर का गफ गरिरहेका थिए। हावाले यताउताको परस्याउला ल्याएर त्यस महान् अग्निका मुखमा घरी-घरी राखिदिने गर्थ्यो, त्यो हात्तिको मुखमा जीरो भइरहेको थियो,तर मित्रले सच्चा श्रद्धाले ल्याइदिएको जे जस्तो भए पनि, भोक नमेटिए पनि, नच्याठिई लिनु कर्तव्य सम्झी अग्निदेव प्रसन्न नै थिए। डमरुकी आमाले सुशिक्षित सभ्य मानिसको व्यवहार गर्दै साधुका कुटीमा कुनै पनि वस्तु कत्ति नबिगारी यहाँ तक कि! बिस्तरामा पाइलो समेत नपारी आदर्श शिष्टताको साथ आफ्ना चाउ-माउ सह्यारी साधुलाई तपस्या निम्ति आफ्नो पिँढी-दर पिँढीबाट भोग चलन गर्दै ल्याएको घर छाडिदिइएकी थिइन्। महर्षि पतञ्जलिले योगसूत्रमा लेख्नुभएको छ-'अहिंसा व्रतको परिपूर्ण पालना गरिएमा हिंस्रक प्राणीहरूले पनि हिंसा-वृत्ति छाडेर मानिससंग मात्रै होइन अरु आफ्ना विरोधी पशुहरूसंग पनि मित्रता गरेर बस्तछन्। यही पातञ्जल-नियम यहाँ पनि लागू भएको थियो; भलै दानवको रूप लिएका मानवले साधुको महत्त्व न बुझोस्,किन्तु पशु-पक्षीले वैर विहीन साधुताको कदर गर्न जानेका हुन्छन्। तपस्यार्थी साधुको निम्ति आफ्नो बसिरहेको घर छाडी हिड्न सक्ने बालकका आमाहरू पाउन आज कठिनै छ तर यी बुद्धिमती डमरुकी आमाले भने खुशीसाथ साधुका लागि रातिमा घर छाडी साना बचरा लिएर वन पसिन्। हृदयको स्वच्छता बाघ-भालुले पनि बुझ्छन्, मानव नै बरु यस पवित्र काममा स्वार्थवश पछि सर्दै गएको छ। अवश्य पनि सामान्य व्यक्तिलाई बघेनीले पछ्याएर भए पनि समाप्त नै पार्ने थिई। नाटककार समले 'प्रह्लाद नाटकमा लेखेका छन्-'जसै डमरुमा प्रश्न गिर्न आउँछ मृत्युको। अवश्य बघिनी हुन्छन् बाघभन्दा भयानक'। तर यहाँ यी बघिनी बहिनी बनी साइला साधु दाइलाई जप ध्यान गर्न सग्लो घर छाडी उनका भाञ्जाभाञ्जी लिएर वल्लोपल्लो घरतर्फ लागिन्।

उनी यहाँ भयानक भइनन्। यों उनको विवेक भनौं या स्वामीज्यूको प्रारब्ध शेष रहेको भनौं या हामीमाथि ईश्वरको अनुग्रह भनौं, तपश्चर्याको प्रभाव भनौं या अहिंसाको प्रतिष्ठाले भएका वैरत्यागको प्रत्यक्ष सजीव उदाहरण नै भनौं; जे भने पनि यो घटना अत्यन्त आश्चर्यजनक एवं रोमाञ्चकारी रह्यो।

## व्योमकूट ( बिहूँकोट ) शब्दको भाषा वैज्ञानिक विश्लेषण—

असली व्योमकूट यही शिवधुरी नै हो। आकाशसंग मितेरी लागाइरहेको उँचो कूट (धुरी) हुनाले यसलाई संस्कृतको प्रभाव भएको जमानामा 'व्योमकूट' भनियो। पछि-पछि शिक्षा शास्त्रको अध्ययनका अभावले शब्दोच्चारणकर्ताहरूको शक्ति ह्रास हुँदा व्योम शब्द दोस्रो अक्षर 'य्' को संप्रसारण 'ई' भई तृतीय अक्षर 'ओ' ह्र स्वरूप 'उ' मा परिणत भई 'व्योम' शब्दको पञ्चमवर्ण 'अ' का ठाउँमा व्यत्यय भएकोले 'बिनुकूट' यस्तो शब्द बन्यो। कहीं 'ओ' को ध्वनि 'ऊ' को रूपमा परिवर्तित हुने र कहीं 'उ' नै 'ओ' हुने ध्वनि विज्ञानको नियम रहे अनुसार दोस्रो शब्द 'कूट' को दोस्रो अक्षर 'ऊ' को 'ओ' रूपमा परिवर्तन भएकोले विमुकोट शब्द बनेपछि केही दिनमा जनजिब्रोले अझै उच्चारणको सुविधा खोज्दै जाँदा द्वितीय शब्दमा आदि अक्षर 'क' ले पूर्ववर्ती निकटतम व्यञ्जनका स्थानमा आफ्नो जस्तै स्थानबाट हुने ऊष्म वर्ण 'ह' को आदेश गरे तापनि व्योमको 'म' को अवशेष अझै पनि बिहूँकोट को 'ऊ' ध्वनिलाई अनुनासिक 'नाके स्वर' वाला बनाएर बचाइरहेको छ।

यसरी 'व्योमकूट' शब्द पौराणिक कालदेखि नै 'शिवधुरी' को वाचक थियो। 'व्योमकूट' (बिहूँकोट) पर्वतको चरण धुन फेदीमा काँठे र भुमदी दुबै खोलाले हातेमालो गरेका छन्। पूर्वतर्फ पूर्वोत्तर फर्केर माछापुच्छ्रे र धवलागिरिसंग बातचीत गर्ने यस पर्वतका दायाँ र बायाँ क्रमशः लेखनाद्रि (लेखानीको धुरी गाज) र मेघाद्रि (म्याग्दी) सोलीघोप्टे नामका दुई पर्वतहरू ब्रह्मा र विष्णुको रूपमा खडा छन्। यस ब्रह्माण्डका नियामक ब्रह्मा, शिव र विष्णुका रूप लिएका क्रमशः गाज, शिवधुरी र सोलीघोप्टे प्रायः हाराहारी लगभग बराबरी उचाइमा उभइरहेका छन् भने यिनीहरूको पछि घनाटवी (घुम्टे) ले यी सबै भन्दा ऊँचो भै अनन्तकोटि ब्रह्माण्डनायक आनन्दघन परब्रह्म परमेश्वरको रूप लिएर अवस्थित छ।

## शिवधुरीका साधुप्रति समाजको श्रद्धा—

यस शिवधुरीका (व्योमकूट) पूर्वमा 'बिहूँ' दक्षिणमा 'घोडा बाँधे' 'खोल्टे' आदि र पश्चिममा 'तोरीखोला' डहरे 'ठान' एवं उत्तरमा माझखर्क, अर्गल, भुस्कात, फापरखेत आदि पर्छन्। यो ठाउँ बिहूँ, माझखर्क र तोरीखोला गाउँका बीचमा पर्ने हुनाले तीनै गाउँका सहयोगले त्यहाँ राम्रो तरिकाको कुटी बनाइन थाल्यो। जनताको रुचि अत्यधिक बढेकाले जहाँ तहाँबाट ल्याएको वस्तुको पनि विस्याहार भइरहेको देखेर स्वामीज्यूले आफूमात्रको लागि विस्तृत भवनको जरुरत नभए पनि सबैको श्रद्धाले ल्याएको वस्तु सुरक्षित राखी फेरि उनैका हातमा प्रसादीको रूपमा राखिदिन एवं आएका भक्तहरूको निम्ति पनि भरपर्दो ओतिलो घरको आवश्यक बुझी 'हजूरहरूको इच्छानुसार बनाउनुहोस्' भनी आज्ञा दिनुभएकाले बिहूँका कामदारको (मिस्त्री र लेवर) तोरीखोलाले छाउने ढुँगाको, र माझखर्कले काठको व्यवस्था मुख्य रूपमा जिम्मा लिई कुटी निर्माणको आरम्भ भयो। जंगलको बीचमा साधन-सामग्री जुटाउन अत्यन्त कठीन थियो,तथापि जतातातैका जनताको श्रद्धा जुटेकोले फटाफट काम हुन थाल्यो। स्वामीज्यू स्वयं निर्माण सम्बन्धी जुन काममा पनि तत्परता पूर्वक सहयोग पुऱ्याउन लाग्नुभयो। त्यहाँ परस्पर सहयोगको वातावरण सिर्जना भयो। यसको यो काम भनेर तोक्ने व्यवस्था नभएर 'सबैको सबै काम' को सिद्धान्त अनुसार आफूले सक्ने काम सबैले गर्न थाले। बिहूँकोटे सूचीकार लौहकार बन्धुहरूले डकर्मी सिकर्मी बनेर आफ्रा शिल्पकलाको परिचय दिए। उनीहरूले अघिपछिको केही मतलब नराखी हाम्रा (बिहूँका) प्रभु भनेर सहयोग गर्न गएका थिए। माझ खर्कका अधीनस्थ वनभागबाट चाहिने दार उपलब्ध गरिए। तोरीखोले बन्धुहरूले छाउने ढुंगा काट्ने र बोक्ने काममा ध्यान दिए। ढुँगा, पानी बोक्न, माटो मुछ्न र दार ताछ्न सबै काममा स्वामीज्यूले बेला मौकामा हात राख्नु भयो। यो कसैलाई राम्रो लागेन। हामी यतिका छँदाछँदै प्रभुलाई किन यो कष्ट! भनेर प्रतिक्रिया जनाउन थाले। स्वामीज्यूले



भन्नुभयो–''प्रत्येक व्यक्तिका हात पाउ छन् र शरीरमा बल पनि छ। त्यसो भएकाले सबैले काम गर्नुपर्छ। मूलरूपमा आत्मा सबैको एकनासे छ। तत्वदृष्टिले हर्दा कोही तल्लो माथिल्लो या ठूलो सानो छैन। आज काम नगर्नु श्रेष्ठताको लक्षण भइराखेको छ, अब प्रत्येक व्यक्तिले काम गर्नुपर्छ। काम गर्दा कसैको इज्जत जान्छ भन्ने सम्झनु ठूलो गल्ती हो। हरेक व्यक्तिले मानव समाजमा आइपर्ने सबै काम गर्न सिक्नुपर्छ। केही व्यक्तिले मात्र श्रम गर्ने, बाँकीले बसेर तिनैलाई अह्राउने हो भने यस ठाउँको कहिल्यै पनि उद्धार हुन सक्दैन। काम नगरी बसी बसी खान खोज्नु हिन्दु धर्मका दृष्टिमा अपराध हो। पृथ्वीतलमा आएपछि परमेश्वरले पनि कर्म गर्नुभयो, फलको आशामा नबाँधिई गरेका कर्मले नै सिद्धि दिन्छन्। हामीले जो यी दशऔंला सहितका हात पाएका छौं सारा सीप–कला यिनैमा छन्। ईश्वरले दिएका वस्तुहरूमा हात पनि ठूलो वस्तु हो। यस्ता ईश्वरले सत्कर्म सम्पन्न गर्न दिएका कलाकार हातलाई निष्क्रिय राख्नु ठूलो गल्ती हो'' यस्तो व्याख्यान दिएर अर्को दिन डहरेको खानीबाट छाउने ढुँगा लिन आफू पनि जाने घोषणा गर्नुभयो। अर्कोदिन सबैतिरका मानिस उत्साही बनी डहरे पुगी ढुंगा बोकेर ल्याउन लागे। स्वयं स्वामीज्यूले धर्मोपदेश प्रदान गर्दै १६ बटा ढुँगा बोकी लगभग १ कोश उकालो चढिरहनुभएको देखी 'साहू बन्यौं' भनी काम छाडी बसेकालाई पनि काममा मन लाग्न लाग्यो।

वर्षा लागिसकेकाले नियमित रूपमा निर्माणकार्य पूरा गर्न निकै समय लाग्यो। कहिले गारो लड्यो त कहिले मिस्त्री आउन सकेनन्। जनतन छानां पऱ्यो। अब स्वामीज्यू बाघको खोर छाडी कुटीमा बस्न लाग्नुभयो। त्यस बाघ बस्ने गुफामा ११ रात बिताए पछि सामान्य छाप्रो बनाई बस्न लाग्नुभएको थियो। यसरी एकमहिना शिवधुरीमा कठिन तपस्या गर्दै ब्रह्मचिन्तन गर्नुभयो। दिब्रुङको धर्मशाला निर्माण र गुठको खेत रोपाउने जस्ता अत्यावश्यक काम सम्पन्न गरेर श्रीदुर्गानन्दज्यू गुरु दर्शनले तिर्खाएर फेरि शिवधुरी नै आइपुग्नुभयो। कुटी पनि वर्षाको कारणले ठीकसंग बन्न नसकेकाले ब्राछिटे पानीले हरहमेशा दुःख दिने गर्थ्यो। पानी टाढा थियो। त्यहाँ शिवधुरीमा रहन लागेको एक महीना भइसकेका थिए। दुर्गानन्दज्यूले स्वामीज्यूसँग निवेदन गर्नुभयो–दिब्रुङ तर्फका भक्तहरू निकै आत्तिएका छन्, यहाँ हजूरलाई निकै कष्ट छ, म यहाँ बस्छु हजूर उहीं गएर तपस्या गर्नुहोस्। प्रिय शिष्यको अनुरोधलाई स्वीकारगरी २०३२ को साउनमा श्रीदुर्गानन्दज्यूलाई त्यहाँ छाडी स्वामीज्यू दिब्रुङ जानुभयो।

### रामकोटमा प्रथम धान्याचल महोत्सव :

वि. सं. २०३२ माघमा स्वामीज्यू दिब्रुङबाट शिवधुरी आउनुभयो। त्यसपछि चैत्रमा शिवधुरीबाट मगर साधुका निमन्त्रणमा तीनचुले पुगी शिवालयको प्राणप्रतिष्ठा गर्नुभयो। ०३३ को वैशाखमा शिवधुरीमा भव्य आत्मपुराण लगांई आगामी मुंसीरमा बिहूँ रामकोटमा बृहत् धान्याचल गराउने समेत सल्लाह भयो। यस सत्संग प्रधान यज्ञमा बिहूँका पनि धेरै मानिस भेला भए। त्यसै सालको जेठमा स्वामीज्यू दिब्रुङ जानुभयो र रामकोटमा हुने यज्ञको तैयारीका लागि पं. सिद्धिनाथज्यूलाई दिब्रुङबाट पठाइदिनुभयो। बिहूँमा प्रथम विश्वशान्ति धान्याचल महायज्ञको दिब्रुङकै शैलीमा भव्यरूपले तैयारी शुरु भयो।

दिब्रुङका दुईवटा धान्याचलबाट धेरै अनुभव संगाल्नुभएका पं. सिद्धिनाथज्यूले अग्रिम यज्ञका निम्ति प्रशिक्षण दिनथाल्नुभयो। वहाँबाट बिहूँलेहरूले अतिथि सेवा र प्रचार–प्रसार आदि विविध विषयमा धेरै शिक्षा पाए। बिहूँ नजिकैका माझखर्क, तोरीखोला, अर्गल, फापर खेत, धम्जा, भीमपोखरा र लेखानी समेतका गाउँहरूमा सहयोगी तैयार भए। गुल्मीले पनि ज्ञानको ज्योति प्रकट भएको ठाउँमा हुने यज्ञलाई आदर्श र सर्वोत्कृष्ट बनाउन प्रचार प्रारम्भ गऱ्यो। डाँडा पारी पर्ने दमेक गाउँमा पनि बिहूँमा हुने विश्व–शान्ति धान्याचल–महायज्ञको प्रचार थालनी भयो। बिहूँमा हुने यस अपूर्व यज्ञको

प्रचार-प्रसार बिहूँलेहरूको उठ-बस भएका रातामाटा, भान्सा, कुँडुले, बान्द्रे, गैरागाउँ र कालीपारमा नाङ्लीबाङ पाङ समेतमा फैलियो।

अब प्राचीन सिंगाना राज्यमा पर्ने गाउँहरू आत्तिन थाले। बिहूँको यस अभूत-पूर्व विश्वशान्ति महायज्ञमा हामीले भाग लिन पाइने कि नपाइने? यज्ञको नाम नै विश्वशान्ति भएपछि विश्वका कहींका पनि व्यक्तिले यहाँ सहयोग पुऱ्याउन पाउनुपर्छ। हामी वल्ला-पल्ला गाउँको पुस्तौं पहिलेको झगडा त शान्त नभएर पानी बाराबार चलिरहेकै छ भने कसरी विश्वशान्ति हुन्छ? इत्यादि चर्चा सिंगानामा चल्न लागे, किनभने-बिहूँकोटेहरूले आफ्ना ब्रह्मबाजे र कृष्णा बज्यैके आज्ञा-अनुसार सिंगानाको अन्नपानी खान आजसम्म पनि डराउँदथे। बिहूँले बुद्धिजीवीहरूको बुद्धि पनि यस प्रश्नले खलबलाइरहेको थियो। गाउँघरका बूढा-पाकाहरूले आ-आफ्नै बुद्धि अनुसार तर्क-वितर्क गरिरहेका थिए। केही कट्टरपन्थीहरूले सिंगानाको अन्न-पानी हामीहरूलाई नचल्ने हुँदा हाम्रो ठाउँमा हुने यज्ञमा सिंगानीहरूद्वारा ल्याइएको फूलप्रसाद चढ्दैन भन्थे भने केही उदारवादीहरूले वर्षौंदेखिको पुर्खाको झगडालाई सम्झेर अहिलेसम्म पनि पानी बाराबार हुनु राम्रो होइन, ईश्वर सबैका हुन्, त्यसकारण यज्ञरूप ईश्वरमा सबैले चढाएको फूलपाती चढ्दछ र चढ्नुपर्छ भन्ने भनाइ अघि सार्थे, साथै मध्यमार्गीहरू भने के गर्दा ठीक हुने हो? भनी अलमल्लै परिरहेका थिए।

यता सम्पूर्ण सांसारिक बन्धनहरूलाई तोड्ने प्रेरणा दिनुहुने स्वामीज्यूले पनि सिंगानीहरूले प्रश्न उठाउनु भन्दा पहिले नै यस विषयलाई हृदयमा लिइरहनुभएको थियो र त्यसै सालको शारदीय नवरात्रमा बिहूँ रामकोटमा भएको यज्ञका अवसरमा आफ्ना कुलका सम्पूर्ण गण्य-मान्य बूढा-पाका विद्वान् तथा बिहूँलें भद्र-भलाद्मीहरूलाई भेला गराई 'आगामी यज्ञमा सिंगानी बन्धुहरूको सर-सामाग्री चढ्नुपर्छ' भन्ने कुरामा मतैक्य बनाइसक्नुभएको थियो।

यसै सल्लाह अनुसार बिहूँकोटे प्रबुद्धवर्गको नेतृत्व गरी स्वामीज्यू ०३३ कार्तिकमा सिंगाना पुग्नुभयो। वहाँ स्वामीज्यूको दर्शन गर्न मानिसहरूको भीड लागेको थियो। राती सत्सङ्ग पनि भयो। बिहान शिवाराधना, पितृ-पूजन समेत गरी सबैले प्रसाद ग्रहण गर्नुभयो। यसरी खुल्ला रूपमा धेरै वर्षपछि बिहूँका कण्डेल वंशले सिंगानामा आएर आगामी महायज्ञमा बाजेबज्यैका उद्धारार्थ विधिपूर्वक श्रीमद्भागवतको पाठ लगाइदिने र अलैंचेमा पनि बलिप्रथा हटाई मन्दिर निर्माण गर्ने समेत सङ्कल्पका साथ त्यहाँ अन्न जल ग्रहण गर्ने निर्णय गरिएको थियो। यद्यपि यो कुरा बाहिरबाट हेर्दा मामूली प्रतीत हुन्छ तर यो विषय गम्भीर थियो। पिशाच योनिमा प्राप्त भएका बाजेबज्यैको शक्ति निकै नै थियो। निषेधित क्षेत्रमा प्रवेश भएर केही खाँदा बित्तिकै मानिसको मुटु दुख्न लाग्थ्यो। फेरि बाजेबज्यैको खर्चिलो रक्तमय पूजा नगरेसम्म बाँच्ने कुनै उपाय नै थिएन। बीच-बीचमा मानिसले यस परम्परागत नियमलाई अतिक्रमण नगरेका पनि होइनन्, तर ती अतिक्रमण कर्ताहरूले उग्र दण्ड पाएर फेरि जीवनभरि अतिक्रमण गर्ने साहस नै गर्न सकेनन्। यिनीहरू त झन् यस परम्पराका संरक्षक भए। स्वामीज्यूलाई यी सबै कुरा अक्षरशः अवगत नै थिए। तथापि जनताको कष्ट देखेर यो कालकूट विष स्वामीज्यूले खुशीसाथ पान गरिदिनुभयो। साथमा गएकाले त्यसैको अनुकरण गरे। 'वायु रुख पल्टाउन समर्थ भए तापनि पहाड हल्लाउन सक्दैन' भने झैं ती प्रेतले स्वामीज्यूलाई कत्ति पनि प्रभावित गर्न सकेनन्। यस प्राचीन सिंगाना राज्य अन्तर्गत पर्ने क्षेत्रलाई नै निम्ता पुऱ्याउन त्यहाँ पनि यज्ञ सहयोगी दल खडा भयो। स्वामीज्यू भजन-कीर्तन सहित सिंगानीहरूलाई साथ लिई बिहूँ फर्कनुभयो। नयाँ पीढी अत्यन्त प्रसन्न थियो, केही बूढापाकाले भने यिनले पितृको भाग पनि खोस्ने भए, अब बिहूँमा के के हुन्छ, यी सिंगाना गएर खानेहरूको अपुतालि पर्न सक्छ भनी हल्ला मच्चाइरहेका थिए। सिंगाना गएर अन्नपानी खाई घर फर्कने बूढा-पाकाहरूका घर-परिवार पनि निकै चिन्तित थिए। यसपटक केही त्यस्तो

नराम्रो घटना घटेन। सबैलाई प्रभु परमानन्दले लगेर गएका हुन्; अरुलाई केही नभए पनि उनको यज्ञमा के के हुने हो भन्ने हल्ला फेरि शुरुभएको थियो। स्वामीज्यूका शक्तिमा पूर्ण विश्वास राख्नेहरू यस हल्लाको प्रतीकार गर्दै थिए। विशेष गरेर गाउँ-गाउँमा हुने धार्मिक कार्यमा पनि यही चर्चा हुने गर्थ्यो। सिंगानाको धूप-अक्षता ल्याएर बिहूँका यज्ञमा मिसाई सबै बिहूँकोटेले फूल-प्रसाद लिएपछि पनि यज्ञमा कुनै विघ्न नपरी भने जस्तो यज्ञ भयो भने परमानन्दलाई मान्छे भन्नु पर्दैन भन्ने कुरामा भने सबैको एकमत थियो।

बिहूँको यज्ञ शुरु भयो। गुल्मी, म्याग्दी, पर्वत र चितवन समेतका जिल्लाहरूबाट पनि मानिसहरू धमाधम आउनथाले। बागलुङ त यजमान नै भयो। रामकोटको डाँडो भिरालो थियो। टाकुरामा शिवालय बनेको थियो। बिहूँका प्रत्येक वडाका सहयोगले दुई महिनामा पूरै डाँडो समतल बनेको थियो। त्यसै पटक सम्याएका ठाउँमा आज दुई धर्मशाला, मन्दिर, यज्ञशाला, प्रवचनालय, पानीटंकी, तलाउ, विद्यालय आदि समेत देख्न पाएका छौं। मानिसहरूमा अभूतपूर्व उत्साह थियो। कसैले कसैलाई कर लगाउन पर्दैनथ्यो। स्वयं प्रेरित रूपमा सबैले काम गरिरहेका थिए। विविध व्यवस्थाका सम्पादनार्थ विविध समिति उप-समितिहरूको गठन भएको थियो। समितिमा नपरेको व्यक्तिले पनि समितिमा छैन भनेर पन्छिने काम गरेन। प्रचार-प्रसारको, अतिथि-सेवाको, पूजा पाठ हवन आदिको पद्धति दिब्रुङ नै निश्चित भइसकेकाले कार्यकर्ताहरूलाई नयाँ प्रक्रियाका आविष्कारको आवश्यकता परेन। वहाँबाट आउनेहरूले सारा प्रक्रिया बताए। बरु यहाँ अझै परिष्कृत र गहकिलो रूपमा महायज्ञ सम्पन्न भयो। आशातीत धानको रास देखेर मानिसहरू अत्यन्त चकित भए। कतै पाठ, कतै हवन, कतै प्रवचन, कतै भोजन भइरहेको थियो। सत्संग-कथा प्रवचन सुन्न आउनेभन्दा त्यहाँ अपूर्व मेला हेर्न आउने धेरै भए। यस क्षेत्रमा ५ दिनसम्म लगातार यति धेरै मानिसको भेला भएको यसरी कहीं कसैले देखेको थिएन। चैते दशैंमा बाग्लुङ कालिका स्थानमा मेला जरुर लाग्थ्यो तर त्यो यति दिन चल्दैनथ्यो। यहाँ त रातदिन मानिसहरूको भीड रहिरह्यो। लगभग ३०० रोपनीको रामकोटको वन-परिसर भरिएको थियो। पकाउने ख्वाउनेहरूको संख्या नै अनगिन्ती थियो भने खानेहरूको संख्या कस्ले गनेर सक्नु! घ्यू, दूध, दही, मही, साग, फलफूल, अन्न आदि खाद्य पदार्थहरूको चारैतिरबाट ओहिरो लागेको थियो भने अर्कातिरबाट तिनै सामानहरूको पाकशालातर्फ पहिरो छुटेको थियो। ठाउँ-ठाउँबाट आई कुराउनी घ्यू आदि सामान लिई स्वामीज्यूलाई भेट्ने भक्तहरूले स्वामीज्यूलाई नै बाहिर निस्कन गाह्रो पारिरहेका थिए। यहाँ घृतपान, दुग्धपान, फलाहार, दाल-भात, खीर-रोटी समेत जे-जस्तो खान चाह्यो त्यही मिलिरहेको थियो। स्वयंपाकीहरूले पनि वनैभरि चुल्हा लगाएका थिए। जति चाह्यो उति सामान पाएर सबै प्रसन्न थिए।

स्वामीज्यूले कार्यकर्तालाई केवल यही कुरा बार-बार संझाइरहनुभएको थियो—केही चीज नअड्कल, भोलिलाई भनेर केही नसाँच, कसैले कुनै कुराको नोक्सान गर्छ भने पनि विवाद नगर। मागेर, खान नसकेर फाल्दछ भने पनि चिन्ता नलेऊ, भोक लागेका बेलामा अड्कल्न सकेन, अघाएपछि खान सकेन, त्यसलाई नहप्काऊ। यो जम्मा भएको चीज परमेश्वरको नै हो। यसमा हाम्रो भन्ने बुद्धि आएपछि अभिमान हुन्छ। चार हातवाला नारायणले दिएपछि दुई हात हुनेले कति नै उडाए पनि सकिन्न।

वेदादि शास्त्रलाई राम्रोसंग जानी तिनै शास्त्र अनुसार आचरणगर्न प्रयास गर्ने सबै ब्राह्मणहरूलाई निष्पक्ष उचित सत्कार दिने उत्तम परम्पराले स्वामीज्यूबाट पनि सत्कार प्राप्त गऱ्यो। सनातन धर्म संस्कृतिको मेरुदण्ड स्वरूप ब्राह्मणतामा

नै आपसी कुलाभिमानको क्षयरोग लागेर ठाउँ-ठाउँमा सनातन धर्म नै ढल्ल लागेको देखेर त्यस क्षयरोगका कीटाणुहरूलाई पन्छाउन प्रयास गर्ने विवेकीहरूमा स्वामीज्यू पनि अन्यतम हुनुहुन्थ्यो।

सबै थरि ब्राह्मणहरूले सैकडौंका संख्यामा एकसाथ प्रेमपूर्वक भाग लिएको यो यज्ञ अभूतपूर्व, ऐतिहासिक, अद्वितीय र अनुपम बनेको थियो। कुनै पनि शास्त्रोक्त सत्कर्मको सफलता विधि र श्रद्धा दुबैको समानरूपले उपस्थिति भएमा मात्र हुन्छ। शास्त्रोक्त-विधिका साथ श्रद्धा पनि भयो भने कर्मयोग बल्ल सुशोभित हुन्छ। स्वामीज्यूले आयोजन गरिएका महायज्ञहरूमा खास विशेषता यही हुन्थ्यो कि त्यहाँ श्रद्धा र विधि दुबैको परिपूर्णता हुन्थ्यो। यसरी **'नैवातिक्रम दोषोऽस्ति विप्रे वेदविवर्जिते'** वेद जानेन भने जिजुबाजेका पालाबाटै पौरोहित्य कर्म गर्दै आएको भए पनि त्यसब्राह्मणलाई नबोलाई अरु वेदज्ञ ब्राह्मणलाई बोलाई आफ्रा श्रौत-स्मार्त वेदविहित कर्म गर्दा दोष लाग्दैन भनेर स्मृतिमा प्रतिपादन गरेको योग्यताको कदर गर्ने प्राचीन सिद्धान्तलाई स्वामीज्यूले पुन: स्थापना गर्नुभयो। वेदोच्चारण, सन्ध्याविधि, संबद्ध कर्म गराउने दक्षता भएका मुण्डित सदाचारी ब्राह्मणले मात्र नियुक्ति प्राप्त गरेका थिए। जहाँ-तहाँ यज्ञकर्ममा पनि अरु क्षेत्रमा झैं नै सिफारिस, भाइ- भतिजावाद, क्षेत्रवाद र वर्गवाद पनि हावी भएका देखिन्छन्। स्वामीज्यूका कार्यक्रममा यसप्रकारका पक्षपातको कुनै अवसर नै थिएन। ब्राह्मण सेवा-समितिले यज्ञमा वरण लिएका ब्राह्मणहरूको सेवा सुचारु रूपले सम्पन्न गऱ्यो। स्वामीज्यूका यज्ञमा वरण भएका ब्राह्मणहरूको विशेष सत्कारको व्यवस्था हुने गर्थ्यो। यी यज्ञहरूमा संस्थाको विकास निम्ति गरिएको आयोजन भए पनि ब्राह्मणको दक्षिण आदिमा कुनै किसिमको न्यूनता रहँदैनथ्यो। स्वामीज्यूले स्वयं प्रवचनमा भन्नुहुन्थ्यो-'यज्ञमा वरण भएका ब्राह्मण, पाहुना, दीनदु:खी समेतले सन्तुष्ट भएर प्रसादरूपमा रहेको अमृत कुनै पनि संस्थाले उपयोग गऱ्यो भने त्यो संस्थामा स्थायी सन्तोष हुन्छ, अहिले सबैलाई ठगेर धन जम्मा गर्न खोज्नुभयो भने यसै धनले नाना किसिमका कल झगडा ल्याई संस्थालाई नै ढाल्न सक्नेछ'।

समितिका मानिसहरूले पैसा र सामान थन्क्याउन सकेका थिएनन्, तर एक पैसा या एक दानाको पनि दुरुपयोग भने पटक्कै भएन। प्रतिदिन समितिलाई ओजस्वी मर्मस्पर्शी उपदेशद्वारा निर्देश दिनुहुन्थ्यो ''केही वस्तुको जानाजान दुरुपयोग कसैले गरेमा त्यसको कुफल त्यसलाई तत्काल मिल्नेछ'। स्वामीज्यूका वचनमा त्यति तागत थियो कि भलै शास्त्रको वचन मानोस् नमानोस् तर वहाँका वचनमा तुरून्तै श्रद्धा र विश्वास भइजान्थ्यो। यो सबै वहाँले गरेका असल तपस्या र उत्तम परोपकारको फल हो।

प्रतिदिन प्रवचनमा 'आएका अतिथि यदि सद्व्यार नपाएर भोकै प्यासै या सुत्न-बस्न नपाएर फर्के भने हाम्रो सबै गरेको पुण्य नाश हुन्छ। तपाईंहरूले अतिथि सेवामा ज्यादै ध्यान दिनुहोस्, परमेश्वर अनन्त अतिथिको रूपमा यहाँ आउनुभएको छ' भन्दै स्वामीज्यूले अतिथि-सेवाको अनिवार्यता बताउनुहुन्थ्यो र अतिथिहरूको उत्तम सेवा सम्पन्न भयो। विभिन्न ठाउँबाट गहना-गुरियाले छाइएका नारीहरू पनि निकै संख्यामा आइरहेका थिए। चारैतिरको जंगल र अनेक ठाउँबाट आएका अनेक तरहका मानिसहरू भएकाले चोरीको धेरै संभावना थियो। गाउँलेहरू र जिल्ला प्रशासनले पनि उग्र चोरीको आशंका गरेका थिए। स्वामीज्यूका प्रवचनको प्रभावले गर्दा कसैको चोरी काममा हातै बढेन। चोरी को त कुरा परै रह्यो, भीडमा चुँडिएर खसेका ३ तोला सम्मका गहना १० हजार सम्मका नोटका मुठा भेटाउनेहरूले ल्याएर स्वामीज्यूका श्रीचरणमा टक्र्याए; वहाँद्वारा जसको तसैले पाए। आशा मारेको चीज पाइँदा प्रसन्न भएका कतिपय व्यक्तिहरूले फेला परेको वस्तु फेरि टक्र्याए तर स्वामीज्यूले नलिई उनीहरूलाई नै फिर्ता दिनुभयो। कहीं कसैको केही नोक्सान भएन। भेटाएर दिनेहरू पुरस्कृत भए। यसरी यस यज्ञले धर्म; सदाचार, संस्कृति, सह-



अस्तित्व, परोपकार, आध्यात्मिकता, नैतिकता, श्रद्धा र आस्तिकताको जन-जनमा सञ्चार गऱ्यो। सबै घर थरका व्यक्तिहरूले एकसाथ रहँदै थर-घरको सीमित दायराबाट बाहिर निस्केर सामाजिक साझा उद्देश्यको पूर्तिका लागि काम गर्ने सु-अवसर प्राप्त गरी नौलो र गहीरो आनन्द फेला पारे। मानिस जति जति साँघुरोपनबाट फराफिलो पनतिर फर्कन्छ ऊ उति-उति आनन्दको मुहानतिर बढिरहेको हुन्छ। यही कुरा श्रुति भगवती भन्दछिन् : **'यो वै भूमा तत्सुखे नाल्पे सुखमस्ति'** बृहत्ताले युक्त (भूमा) ब्रह्म नै वास्तविक सुखरूप हो, अरू साना विषयहरू सुखाभास मात्र हुन्।

स्वामीज्यूले जनतालाई यज्ञको असली स्वरूपको व्याख्या गर्दै भन्नुभयो-'उत्तम यज्ञमा मुख्य रूपमा यी ५ तत्त्व आवश्यक हुन्छन् (१) शास्त्र अनुसारको विधि (२) अधिकाधिक अन्नदान, (३) शुद्ध मन्त्र उच्चारण गर्ने कर्मठ ब्राह्मण (४) श्रद्धापूर्वक गरिएको ब्राह्मण सेवा (५) यस यज्ञद्वारा हाम्रो कल्याण अवश्य हुन्छ भन्ने दृढ विश्वास सहित यज्ञ कसरी सिद्ध गरौं भनी यजमानका हृदयमा भएको आतुरीरूपी श्रद्धा[1]। यति ५ चीजले यज्ञलाई सात्त्विक र उत्तम बनाउँछन् भने यिनको अभावमा यज्ञ तामस हुन्छ।[2]

यज्ञ सात्विक बनाउन प्रत्येक व्यक्तिले प्रयास गरे। अतः यज्ञ सफल भयो। मंसीरको धान्यपूर्णिमाका दिन यज्ञ त सकियो तर त्यसको अमिट छाप भने जनतामा प्रभावी भएर बसिरह्यो।

यज्ञान्तमा गुल्मी र बाग्लुङका भक्तहरूको संयुक्त बैठक वेदवेदाङ्ग विद्यालय-संचालन-विषयलाई लिएर बस्यो। स्वामीज्यूका नाममा एक व्यवस्थित गुरुकुल हाल रामकोटमा नै संचालन गर्ने निर्णय गरी पं. सिद्धिनाथज्यूलाई बिहूँ नै सरुवा गरी 'श्रीपरमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुल' नामबाट विद्यालयको संचालन प्रारम्भ भयो। फटाफट घर-घरबाट छात्रहरू प्रवेशका लागि आउन लागे। बिहूँबाहेक अन्य टाढा-टाढाबाट पनि छात्र आइरहेका थिए।

बिहूँ रामकोटमा ०३३ मार्ग १६ गतेबाट महायज्ञ शुरु भै सोही २१ गते धान्यपूर्णिमासम्म ६ दिन चलेको थियो। एकलाख जति मानिसद्वारा दर्शन गरिएको त्यो महायज्ञ अपूर्व ऐतिहासिक थियो, ६ दिनसम्म त्यति ठूला भेलालाई सह्यार्दा पनि नथाकेका कार्यकर्त्ताहरूले भव्य रूपमा फूलपाती सेलाउने (यज्ञान्त अवभृथ स्नान गर्ने) कार्यक्रम राखे। २४ गते मुंसीरको बिहान भव्य शोभायात्रा बिहूँ रामकोटबाट थालियो। यसको संचालन स्थानीय युवकहरूले गरिरहेका थिए। हजारौं नरनारीको सहभागिताबाट आरम्भ भएको फूलपाती सेलाउन हिंडेको जुलुस बिहूँका फेदीमा आइपुग्दा चौगुना भएको थियो। अघि-अघि सुसम्मानित रूपमा यस महायज्ञका सूत्रधार स्वामीज्यूको सवारी चलेको थियो; त्यसपछि क्रमशः विद्वान् आचार्यहरू, यज्ञका ब्राह्मणहरू, विभिन्न गाउँका कीर्तनमण्डलीहरूका नाच सहितका भजनकीर्तनहरू, नौमती बाजा र श्रद्धा र भक्तिले ओतप्रोत भएका अनगिन्ती नर-नारीहरूको चित्रविचित्र समूह थियो। कतै धर्म र यज्ञको जय-जयकार भइरहेको थियो भने कतै सर्वमान्य धार्मिक जगत्का महानायक आबाल ब्रह्मचारी प्रभुको जयकार उर्लिरहेको थियो। यसरी यो विशाल नरसमुदाय द्वारा अपूर्व हर्षोल्लासका साथ बाग्लुङबजारका जनताका सत्कार र श्रद्धाका बूँदहरू टिप्दै २ बजेतिर पुण्यसलिला कृष्णागण्डकीको तट निरहघाट (नीलह्रदघट्ट) मा पुगी फूलपाती मात्र सेलाइयो, नाच्ने गाउनेहरूको उमङ्ग र उत्साह भने कत्ति सेलाएन। स्वामीज्यूबाट प्रभावित यस जिल्लाको सदरमुकाम बाग्लुङ

---

१. *श्रद्धा नाम मदिष्टं साधयत्वेतदिति विश्वासपूर्विका साधने त्वरा (गीताभाष्य)*

२. *विधिहीनमसृष्टान्नं मन्त्रहीनमदक्षिणम्। श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते॥ (गीता)*

बजारले साह्रै नै आग्रह गरेको देखेर दयालु स्वामीज्यू २ रात बजार क्षेत्रमा नै सदुपदेश प्रदान गर्दै बस्नुभयो। दर्जनौं व्यक्तिहरूका समूहले स्वामीज्यूको फिर्ती सवारी कुरेर बस्यो। बजारमा बस्ने सुविधाको अभावमा माथिबाट झरेको जनसागर भने जहाँ-तहाँ चुहिंदै ओर्दै जनतन उकालो नै लाग्यो। उकालो लागे तापनि जनताको मन भन्ने स्वामीज्यूले साथ राख्नुभएको थियो।

**दुःखदायी प्रारम्भ सुखदायी परिणाम—**

यत्तदग्रे विषमिव परिणामेऽमृतोपमम् -गीता १८.३७

मानौं कीर्तिकौमुदीको अझै विस्तार चाहने परमेश्वरद्वारा केही विरोधीहरू तयार गरी बाग्लुङ बजार स्थित धवलागिरि अञ्चलाधीश कार्यालयमा निवेदन पारियो। त्यस उजूरीको मुख्य तात्पर्य थियो-'महात्मा परमानन्दलाई फकाएर वर्तमान व्यवस्था विरूद्ध चल्ने प्रतिबन्धित राजनैतिक दलले आर्थिक हीनामीना गरी आफ्नो पार्टीलाई धनी बनाएको छ; महात्मालाई झिकाई सत्य तथ्यको छानवीन गरी पाऊँ।'' तत्कालीन राजनीतिक परिस्थिति अनुसार यस व्यहोराका निवेदनमा कारवाही नगर्नु अधिकारीहरूको सबभन्दा ठूलो अपराध हुन्थ्यो। बिचरा अञ्चलाधीशले डरडरैसंग २ पुलिस रामकोट पठाए। विचरा ती विवश पुलिसहरू श्रद्धा र संकोच दुबैका साथ रामकोट आएर मन्दिरमा ढोगी स्वामीज्यूलाई ल्याएको कागजको विषय अवगत गराए। जनतामा धेरै अशान्ति हुने थाहा पाएर स्वामीज्यूले यथार्थ कुरा छिपाउन खोजे पनि जनताले पुलिस दोभिल्लाबाट उँभो लागेपछि उनीहरूबाटै प्रभुज्यूलाई पक्डन अञ्चलाधीश कार्यालयले सिपाही पठाएको भन्ने थाहा पाएर सिपाहीका साथ-साथै विविध अवस्थाका नरनारीहरू समेतको उग्र भीड उम्लेर आयो। बिचरा सिपाहीहरू कुनै अपराधी झैं भयभीत देखिइरहेका थिए। गाउँका लोहाकार, सूचीकारको एक टोली लामा-लामा लौरा भुइँमा बजार्दै रामकोटको टापुमा आएर 'हाम्रो प्रभुलाई पक्डेर लान आएका सिपाहीहरूको अनुहार देख्न चाहन्छौं। निक्ल बाहिर, हामी बिहूँकोटे सबैलाई पक्राउन पर्छ। एक्लै जान दिन्नौं प्रभुलाई, सबै जान्छौं, हामी पनि हेर्छौं कस्तो रहेछ अञ्चलाधीश' भन्दै ठूलो होहल्ला गरिरहेका थिए। श्रद्धा र आस्थाका प्रवाहमा जाति-प्रजातिका भेदभाव हटेका थिए। सब एकजुट भएर सिपाहीलाई बाहिर निकाल्न प्रयास गरिरहेका थिए। स्वामीज्यू भने सिपाहीहरूको सुरक्षाको विषयमा चिन्तित हुनुहुन्थ्यो। सिपाहीलाई सुरक्षित स्थानमा राखी आफू बाहिर निस्की भन्नुभयो-'यिनीहरू भेटघाट निम्ति आएका हुन्, हामीलाई यिनीहरूबाट कुनै डर छैन।' तर मानिसहरूले यो कुरा पत्याइरहेका थिएनन्। यो सबै स्वामीज्यूको पुलिस जोगाउने प्रयास मात्र सम्झिरहेका थिए। केही विशेष व्यक्तिसंग परामर्श गरी स्वामीज्यूले हो-हल्ला नगरी अञ्चलाधीशलाई भेटी आउने विचार राख्नुभयो। सिपाही अघि पठाई स्वयं केही व्यक्तिसाथ सदरमुकाम जान हिंड्नुभएको थियो। हजारौंको भीड रुँदै पछि लाग्यो। भीडबाट चर्काचर्का यस्ता आवाज दुःखका साथ बाहिर निस्किरहेका थिए 'हाम्रो आश्रमलाई भ्रष्टाचारको आरोप?' कस्ता कस्ता चोर, डाँका, ज्यानमारा त्यही सरकारले छाडिरहेको छ, अहिले दुनियाको हितका लागि आफ्नो सर्वस्व समर्पण गर्ने स्वामीज्यूले आँटेका यज्ञमाथि यस्तो आरोप! धर्म र स्वामीज्यूका जय-जयकारका साथ यो भीषण जुलुस स्वामीज्यूका पाइला खेदेर तीन कोश टाढाको अञ्चलाधीश कार्यालयमा पुग्यो। गुप्तचरद्वारा बिहूँबाट हजारौं जनताको समूहसाथ स्वामीज्यू आएको थाहा पाएर सदरमुकाममा प्रशासनिक अधिकारीहरूको गोप्य बैठक बसी 'स्वागत सहित भित्र ल्याई क्षमा मागेर पठाइदिने' निर्णय भए अनुसार समस्त अधिकारीहरू ढोकामा निस्केर फूलमाला लगाई स्वामीज्यूको स्वागत गरे। आदर पूर्वक स्वामीज्यूलाई मात्र भित्र लान खोज्दा भीड झन् उग्र बन्यो। भीडको माग थियो-भित्र बोलाइएको किन हो र जे भन्नुपर्छ सबैले सुन्न पाउनुपर्छ। हजारौं व्यक्तिहरूले चारैतिरबाट घेरिएको यो अफिस

निकै आत्तिएको थियो। यहाँ बाग्लुङ् बजारको सरकारी आफिस बिहूँ रामकोटका आश्रमसँग हार स्वीकार गरिरहेको थियो। स्वामीज्यूले अनगिन्ती जनताको यतिका समर्थन पाएर पनि प्रशासनिक अधिकारीहरूलाई कुनै आक्षेप गर्नुभएन। संक्षिप्त वक्तव्य भित्र नगई कार्यालयको सामुन्ने सबैका समक्षसुनाउनुभयो। आफ्नो विरुद्ध चुगली लगाउने र विचारै नगरी एक्कासी आफूलाई पक्रेर ल्याउन पठाउने शीर्षस्थ प्रशासनिक अधिकारी यी दुबैथरिलाई केही दोष नदिई एकदम शान्त भावले संक्षिप्त वक्तव्य दिंदै "अधिकारीहरूले निवेदन आएपछि जाँचबुझ गर्नै पर्‍यो, उनलाई हामीमा विश्वास नभएकाले विरोधमा उजुर पनि गर्नै पर्‍यो, कसैलाई केही दोष छैन। मुख्य दुःखको विषय यो छ कि मेरा निम्ति यतिका भक्त बा-आमाहरूले मुंसीरको बाली थन्क्याउने आत्तुरीको पर्वाह नगरी आँगन-खलाको नालबाली असरट्टै छाडी मेरा पछि लाग्नुभयो। सोध्नुहोस् अञ्चलाधीश साहेब! तपाईंले पठाएका सिपाही भाइहरूलाई, मैले यो भीड नल्याउन कत्ति प्रयास गरें-कहिल्यै नबोलेको झूटो पनि बोलें, 'भेटघाटलाई सिपाहीहरू आएका हुन् भनें। उनीहरूसँग आउँदा देखालो हुन्छ भनी उनीहरूलाई एक्लै पठाएँ, म वनवनै लुकेर गोप्य बाटो यहाँ आउन पनि प्रयास गरें, पूरै गाउँ नै ठाडा कान लगाएर बगालबाट यौटालाई बाघले थुते पछिका बाख्राको बथान झैं सजग भएको थियो। कता हिड्नुभयो गुरुज्यू भनी सब पछि लागे। 'गहतका झोलमा जात फाल्नु' जस्तै भयो। झूटो बोलेर पनि यहाँहरूलाई रोक्न सकिएन। कतिपय महिलाहरूले गुरुलाई सिपाहीले पक्रेर लगे भन्ने सुन्दा बित्तिकी कोर्कामा निदाएका साना नानीलाई झट्पट् उठाई पीठमा कपडाले बाँधी, पछि लाग्न तर्खराएका ठूलो नानीको गालो दरो लपेटोले-दन्क्याउँदै, डाँको छाडेर रुँदै मेरा पछि लागेको मैले आफ्नै आँखाले देखें। आकाश बादलिएको छ, वर्षभरि खाने कमाइ नरुझाउनुहोस्, छिटै फर्कनुहोस्, मलाई विश्वास भयो, रामकोटको आश्रम भत्कन तपाईंहरू अवश्य दिनुहुन्न। समाजबाट जम्मा भएका पैसाको हिसाब किताब ठीक छ छैन भन्ने कुरा जान्न यहाँहरूले बोलाउनुभएको बुझियो। गाउँ प्रधान समेतका व्यक्ति रहेको समितिले विश्वशान्तिका निमित्त महायज्ञ गरेको हो, भक्तहरू श्रद्धाले मेरा पाउमा राखेर ढोगेका पैसा पनि जम्मा गरेर मैले त्यहीं दिएको विवरण स्वयं गाउँ प्रधान श्रीचण्डीप्रसाद कण्डेल्ज्यूले जानिरहनुभएको छ। विभिन्न वार्ड एवं गाउँका व्यक्तिहरू राखी आर्थिक समिति गठन भएको थियो। जम्मा भएका धान, चामल पैसा दिनदिनै चन्दा दाताहरूका नाम सहित सभामा सुनाइएको थियो। सबैका सामु नै दैनिक आय व्ययको विवरण प्रस्तुत गरिन्थ्यो। जम्मा भएको पैसा लेखापढी पूर्वक प्रतिदिन सर्वमान्य विश्वासी व्यक्तिका घर पुऱ्याई राखिन्थ्यो। यसरी छैटौं दिनसम्म जम्मा भएको रकम आश्रमको संरक्षकका नाताले मेरा र आश्रम संचालक समितिका अध्यक्षका नाममा पैल्ये नै खोलिएका खातामा बैंकमा ल्याई राखिएको छ। केही गाउँका व्यक्तिहरूले त्यो पैसा ऋणमा माग्नुभएको थियो तर त्यसो गर्दै जाँदा कुनै दिन आश्रमको कोष हिनामिना हुन जाला भन्ने आशंकाले हामीले गाउँका व्यक्तिलाई आश्रमको पैसा भट्टबँडाइ गरेनौं। अब पनि त्यो काम गर्न मिल्दैन। यस्ता आश्रम हजारौं ठाउँमा बन्न सक्छन्, किन हामी यस बिहूँ या बाग्लुङ्मा नै बस्न पर्‍यो? समाजका भक्तजनले हामी उपर विश्वास गरेर धर्म र ईश्वरका नाममा गरीबीको पर्वाह नगरेर दिएको एक पैसा पनि कसैका व्यक्तिगत स्वार्थमा लाग्यो भने त्यसको हिसाब किताब यज्ञको तर्जुमा मिलाउने हामीले नै परत्रमा तिर्नुपर्छ। हामीलाई त यहाँबाट मात्र जोगिएर पुगेको छैन सूर्य, चन्द्र, दिन, रात, आकाश, वायु, सबैले हाम्रा पुण्य र पाप हेरिरहेका छन्। हामी साधु-सन्त जति भ्रष्टाचारबाट डराउँछौं,त्यसको केही अंश मात्र भए पनि अरु सबै डराइदिए त यो संसार नै अर्को हुने थियो। आज देशमा ठूला-ठूला भ्रष्टाचारकाण्ड भएको सुनिन्छ, आत्माको नित्यता र पुनर्जन्ममा विश्वास राख्ने व्यक्तिले लुकेर पनि पाप गर्न सक्तैन! आज कतै पनि धार्मिक शिक्षा छैन, त्यसैले परलोकको डर हराएर हरेक ठाउँमा भ्रष्टाचार बढेको छ। हामीले परलोकको डर पैदा गरेर हिंसा नगर्नु, साँचो बोल्नु, नचोर्नु, नरिसाउनु,





आदि धर्मको पाठ पढाउन वेदवेदाङ्गको शिक्षा दिइरहेका छौं। तपाइँहरू आफै बुझिरहनु भएको छ। सरकारी तहबाट रामकोटजस्तो कार्यक्रम भएको भए कति लाख स्वाहा हुन्थ्यो होला! त्यहाँ फाँकमुठी जम्मा भएर श्रद्धाको रास लागेको हो। कहीं कसैलाई कुनै किसिमले दिनै पर्छ भन्ने आग्रहसम्म पनि हामीले गरेका थियौं कि! तपाइँहरूलाई शंकालाग्छ भने जनता यहीं आएका छन्, सोध्नुहोस्। (हामीले स्वेच्छाले भेटी चढाएका हौं, कसैको करकापबाट होइन, फेरि अर्को यज्ञ पनि गर्छौं भनी भीड बोलिरहेको थियो) शीत उभाएर घैला भरिएको हो, ठूलो रकम कसैको परेको छैन, समाजको सम्पत्ति समाजकै नियन्त्रणमा छ। मेरो जानकारीमा त्यहाँ केही हीनामीना भएको छैन। हिड्नुहोस्, त्यहाँको जाँचबुझ गर्नुहोस्। एक महीना बसे पनि तपाइँहरूलाई आश्रमले अतिथिको रूपमा पाल्छ। यस समाजलाई दुःख लागेको मूल कारण पनि यही हो। 'हिसाब-किताबमा केही गड़बडीको आशंका भए ठाउँमा नै गई सोधपूछ गर्नुपर्नेमा सिपाही पठाई यहाँ दुःख दिने के काम थियो!' 'मलाई त कुनै दुःख छैन, विकट लेखाली हिमाली भीर पाखामा रही वर्षौं तपस्यामा बिताउनेलाई यहाँ आउन केही कठिन थिएन, यतिका, वृद्ध, बालक, महिला समेतका जनताले कष्ट पाएको यहाँहरूको विचार नपुग्नाले हो। अधिकारी, कर्मचारी यहाँहरू पनि हाम्रै समाजको काम गर्न आएका हाम्रै स्वदेशी आफन्त बन्धुहरू हुनुहुन्छ। आफ्नाले गरेका सानातिना भूल त्रुटि हामीले बिर्सनु नै ठीक हुन्छ। यहाँहरूलाई मैलै हिसाब हेर्न उहीं रामकोट बोलाएको छु। (जनतालाई) तपाइँहरू पनि अब छिटै फर्कनुहोस्। तपाइँहरू घर-गोठ लथालिङ्ग छाडेर मलाई भेट्टाउन पछि हिड्नुभयो, फेरि घर फर्किनुपर्ने सोचु नै भएन'।

समाजले स्वामीज्यूलाई अघि नलगाई फर्कन नमानेकाले अधिकारीहरूको एकदिन बस्ने आग्रहलाई टुक्र्याई स्वामीज्यू बिहूँतिर लाग्नुभयो। हात जोडेर बिदा भई अञ्चलाधीश समेतका व्यक्तिहरू भित्र पसे।

बिहूँ पूर्जि (उपस्थित हुने आदेश लेखेको कागज) लिएर गएका दुई जना सिपाहीहरू भने निन्याउरो मुख लिएर स्वामीज्यूका पछि-पछि लागिरहेका थिए। उनी दुबै 'हाम्रा प्रभुलाई पक्डन गएका' भन्ने भावले टेढो-टेढो हेरिरहेका जनताका बीच स्वामीज्यूका पाउ ढोग्न निहुरिए। 'हिंड भाई हो! आज पनि रामकोट जाऊँ' भन्दा सारा समाज खितितित्त हाँस्यो। उनीहरूले आँखाबाट आँसु झार्दै साह्रै गुन मानेको स्वरमा भने-गुरुज्यू! बिहूँकोटे जनताको रीसको झोकबाट हामीलाई बचाइदिनुभयो। पक्राउको उर्दी लिएर गएका हामीलाई जुन मान र सुरक्षा दिनुभयो त्यसलाई जिन्दगीमा भुल्न सक्दैनौं। हजूरले अलिकति मात्र हेलचक्र्याइँ गरिदिनुभएको भए हाम्रो जिन्दगी एक-एक थप्पर गर्दागर्दै धूलोपीठो पर्ने थियो। आज हाम्रा आइमाई केटाकेटीको कुन दशा हुन्थ्यो? धन्य परमात्मा! कत्रो दिल दिएको रहेछ ईश्वरले आजै पक्रेर ल्याउनुपर्छ भनेर बिहूँकै ठूलै मान्छे तीन दिनदेखि धर्ना बसेका थिए। हजूरको कीर्ति हाम्रा पनि कानमा परेको थियो, हामी पनि पक्राउको उर्दी लिएर जान जोगिन खोज्यौं, अरु हाम्रा साथी बाठा भएर कुनै बिमारी भएछन्, कुनै छुट्टी लिएर गएछन्; हामी सोझाले मेसै पाएनौं। खुट्टा नलाई-नलाई हिडेका थियौं। खहरे खोलानेर एकजना बिहूँकै गफडी मानिस मिले। हामीसँग मीठा बनेर कुरा थुते। हामीले सही कुरो उनलाई भन्यौं। अनि त दाह्रा किट्तै हामीलाई उछिनेर सुइँकुच्चा ठोके। हामीले यी मान्छेले हामीलाई खतरा पुऱ्याउन सक्छन् भनेर अन्दाज गर्दै थियौं, साच्चिनै उनैले गुरुलाई पक्डने सिपाही आएका छन्, खान केही पनि नदिनु भनेर हरेक चियापसलमा भन्दै सबैलाई रामकोट बोलाउँदै हिंडेछन्। यसैले नै बिहूँका पूरै उकालामा हामीले पानी पनि पिउन पाएनौं। हरेक व्यक्तिले रिसाएरै हामीलाई हेरिरहेका थिए। छकालमा पुगेका हामीलाई तुरून्त भोजनको व्यवस्था मिलाई जुन जिन्दगीमा खान नपाएका मीठामीठा पदार्थ आफैं सामनेमा बसी ख्वाउनुभयो, त्यसले गर्दा हामी सधैंका लागि ऋणी बनेका छौं। क्षमा गर्नुहोस्, गल्ती गऱ्यौं, यति भनी सबैलाई हात जोड्दै यी दुई सिपाहीहरू धर्धर्ती रोइरहेका थिए।

हिउँदका दिन, घाम डाँडै माथि पुग्न लागेका थिए, भक्तजनका भीडले स्वामीज्यूलाई धेरै रोकिन दिएन। फेरि 'रामकोट पक्कै आउनु होला' भन्दै स्वामीज्यू त्यस समुदायभित्र छिप्नुभयो। दुई जना सिपाहीहरू भने तीव्रतासाथ पश्चिमतर्फ लागिरहेका भीडलाई उभिएर एकटक अश्रुपूर्ण नजरले मौनतापूर्वक हेरिरहेका थिए।

यस घटनाले बाग्लुङ बजार र धवलागिरि अञ्चलाका सबै क्षेत्रका घर-घरमा स्वामीज्यूको उज्वल कीर्ति फैलाउने महत्त्वपूर्ण काम गर्दै लग्यो। केही महिनासम्म त समस्त सरकारी कार्यालयहरू समेतको मुख्य चर्चाको विषय स्वामी परमानन्दज्यू नै बन्नुभएको थियो।

यता ०३३ को मंसीरदेखि थालिएको परमानन्द वेदवेदाङ्ग विद्यालयमा त्यसै फागुनदेखि वेदाचार्य पं. शेषनारायण भण्डारी (जोहाङ् गुल्मीका) लाई पनि अध्यापकको रूपमा नियुक्त गरियो। श्रीदुर्गानन्दज्यू स्वामीज्यूको प्रतिनिधि भएर यहाँको व्यवस्था हेर्न लाग्नुभयो। धमाधम छात्रहरूको संख्या बढिरहेको थियो। रामकोटका रुख-रुखका फेद-फेदमा बसेर छात्रहरू वेद र व्याकरण घोक्दै थिए। समय-समयमा विशेष अवसरहरूमा गाउँमा जानु पर्दा शिरमा पहेंला रुमाल, पहेंलै कटिवस्त्र र भोटो लगाएका ललाटमा उज्जवल विभूतिको त्रिपुण्ड्र धारणा गरेका छात्रहरू आपसमा संस्कृतभाषमा नै बातचीत गरेका देखेर जनताले बिहूँमा स्वर्ग नै ओर्लेको अनुभव गरे। यस प्रकार अस्ताउन लागेको वेद-ध्वनि र कर्मकाण्डलाई स्वामीज्यूले नवजीवन प्रदान गरेर वैदिक सनातन धर्मको कायाकल्प गर्नुभयो। निकै माथिबाट नालाद्वारा पानी ल्याई दहपानी धौराली समेत ठाउँमा वितरण गर्दै रामकोट आश्रमको ठूलो खाँचो टार्ने समेतका महत्त्वपूर्ण काम संपन्न गराउनुभयो। अबतक स्वामीज्यूका तीन प्रमुख आश्रम बनिसकेका थिए- दिब्रुङ शिवधुरी र रामकोट। यी तीनै ठाउँमा पालैपाला आवतजावत गरिरहनुहुन्थ्यो। श्रीदुर्गानन्दजी बिहूँ आएपछि दिब्रुङको कार्यभार श्रीदेवीरामज्यू (स्वामी विद्यानन्द सरस्वती)ले चलाउन लाग्नुभयो।

बाग्लुङ्मा दुई आश्रम तयार भएको र बिहूँको यज्ञ पनि भव्यरूपले सम्पन्न भएकोले प्रभु अब उतै धेरै निवास गर्नु भई हामी दर्शनबाट वञ्चित रहन्छौं कि! भनेर गुल्मीवासी भक्तहरूलाई डर हुन लागेको थियो। उनीहरूले पनि गुल्मीकै दमुका रूपाकोट भन्ने ठाउँमा केही जमीन उपलब्ध गराई आश्रम खोल्ने विचारले बिहूँ स्वामीज्यूका पासमा आए। भक्तवत्सल प्रभु वहाँको सब भार समिति र श्रीदुर्गानन्दज्यूलाई छाडी गुल्मीको दमुका रूपाकोट पुग्नुभयो। बाटामा पर्ने गाउँका भक्तहरूलाई भेट्तै रूपाकोट पुग्दा स्वामीज्यूका पास चरणपूजामा केही धन जम्मा भयो। रूपाकोट पुगी सर्वप्रथम त्यही धनलाई अघि सारी शिवालय बनाउने प्रस्ताव भएपछि त्यहाँका आस्तिकहरूले चन्दा बोली अपेक्षित धन जम्मा भएकाले शिवालय एवं धर्मशाला बनाउने निर्णय गरियो।

### आनन्दपुर-अलैंचेमा पितृ-उद्धारक स्वामीज्यू :—

२०३४ को भदौमा परेको अधिकमासमा बिहूँका वडा नं ३ मा पर्ने अलैंचे भन्ने ठाउँमा ब्रह्मा बाजेका हत्याका तुरून्तपछि नै बाजेबज्यैको तामसी पूजा (बलिदान सहित) प्रारम्भ भएको थियो। यो ठाउँ स्वामीज्यूको जन्मभूमि पौवाडाँडाका नजीकै पश्चिमतर्फ भीरको फेदीमा पर्छ। त्यहाँ पानीको मूल र केही रूख थिए, तिनै रूखको फेदमा ढुंगाहरूका प्रतीक राखी बाजे-बज्यैको पूजा गर्ने चलन थियो। प्रत्येक जेठ र मुंसीरमा उँभ्यौली उँध्यौली भनी पूजा गरिन्थ्यो। प्रत्येक पूजामा पशुको रक्तपात गरिन्थ्यो। पुत्र जन्म, विवाह आदिमा पनि त्यहाँ गई प्रत्येक परिवारले पूजा गर्ने चलन थियो। त्यहाँको पूजा श्रद्धाभक्तिभन्दा बाध्यताले अधिक गरिन्थ्यो। तोकिएका अवसरमा पूजा नगर्ने हो भने बाजे-बज्यैको श्राप लाग्ने डर थियो। पर्वत जिल्ला, नाङ्लीवाङ्का पं. टीकारामज्यूलाई पनि साथ राखी त्यस

बाजें-बज्यैका थानमा पुरुषोत्तम माहात्म्यको आयोजन स्वयं स्वामीज्यूले गर्नुभयो। पं. पशुपतिनाथ, देवीप्रसाद कण्डेल समेतका वार्ड नं. ३ का प्रमुख व्यक्तिहरू यस आयोजनलाई सफल पार्न कटिबद्ध थिए। गत ०३३ सालमा सिंगानाको अन्नपानी सबै कण्डेलहरूलाई फुकाई सिंगाना समेतको घ्यू, दूध, धान, चामल आदि बिहूँको विश्वशान्ति महायज्ञमा चढिसकेको थियो। मानिसहरूलाई बाजेबज्यैले कुनै दुःख दिएका थिएनन्। तार्किक बुद्धिजीवीहरूले पनि प्रेतात्माहरूको स्वामीज्यूद्वारा उद्धार भएको स्वीकार गरेका थिए। अब स्वामीज्यले यहाँको चलिआएको रक्तपातमय पितृपूजा हटाई सात्विकपूजा चलाउने इच्छा लिनुभएको थियो। अब पुरानो थान पनि भत्कने र पूजा पद्धतिको पनि आमूल परिवर्तन हुने सुइँको सबैले पाइसकेका थिए। कुल-परम्परागत रूढीमा बढी आस्था राख्ने बूढापाका अहिले दोहोरो मारमा परेका थिए। पुरानो पूजा-पद्धति र स्वामीज्यू दुबैमा समान आस्था रहेकाले यिनी अहिले अप्ठ्यारोमा परेका थिए। उनीहरूको आत्माले यी हाम्रै ब्रह्मा बाजेका वंशज महात्माले हाम्रा बाजेबज्यैको खाइपाइ आएको मान-भाउ नखोसिदिए हुन्थ्यो भनेर देवता पितृ पुकार्न थालेका थिए। स्वामीज्यूले उचित ठम्याई थालिएको काम कुनै पनि परिस्थितिमा छाड्नु हुँदैनथ्यो। यो वहाँको विशेष गुण थियो। स्वयं बूढापाकाले स्वामीज्यूसँग आएर आफ्नो दुःख पोख्न सकेनन्, किनकि उनीहरूलाई यति कुरोको निधो थियो कि हिंसा हुने पूजा-प्रथालाई वहाँले कदापि स्वीकार गर्नु हुन्न। अब उनीहरू आफ्नो दुःखेसो या गुनासो आ-आफ्ना घरका युवाहरूद्वारा स्वामीज्यूलाई चढाउन थाले। स्वामीज्यूले उनीहरूका विचारको साफ खण्डन गर्दै भन्नुभयो-हाम्रा बालु बाजेहरूले मासु खान पल्केर ब्रह्मा र कृष्णालाई प्रेत योनिमा नै राखिरहेका थिए र आफू पनि भूतप्रेत बन्दै थिए। यी आजका हाम्रा बूढा बाहरूले पनि मरेर भूतप्रेत योनिमा नै जाने प्रयास गरिरहेका छन्। हामीले यिनीहरूसँग चिनिएर पनि यिनीहरूलाई भूतप्रेत हुनुबाट बचाउनु पर्छ। यसै बीच जब कसैले यी बूढापाकाको पनि मान राखी चित्त बुझाउन सकिन्छ कि? भन्ने प्रश्न गर्थ्यो। तब उसलाई स्वामीज्यूले भन्नुहुन्थ्यो-बाबु! तिम्रो प्रश्न पनि त मासुतिरै ढल्क्यो नि?

पुरुषोत्तम माहात्म्यका साथ पुरानो थान हटाई नयाँ शिवालय बनाई पूजा चलाउने चर्चा-परिचर्चा चले। मानिसहरू धेरै नै जम्मा हुँदै गए। यतिका दिनदेखि चलिआएको पूजाको नियम अबबाट हट्ने कुरो निकै संवेदनशील नै थियो। मानिसहरूका खामोसी भित्रको विद्रोही स्वर पनि तीव्र बन्दै थियो। कतिपयले यसलाई 'अख्खड साधुको फक्कडी हठ' भनी भन्नथालेका थिए। ईश्वरले उस्तै उस्तै जोर जुक्ति मिलाउँदै ल्याउन थालेको थियो। स्वामीज्यूले साफ र स्पष्ट बाणीद्वारा निर्भीक रूपमा भन्नुभयो-'द्विजाति भएर आफ्ना जीब्राका स्वादका लागि देवता र पितृका नाममा अनाथ अबोध प्राणीको वध गर्नु राक्षसीपन हो, आज पाठाका रगतले आफ्ना पूर्वजको तर्पण गर्ने परम्परालाई जोगाइराखेर मासुको प्रसादी नचबाई निल्ने यी हाम्रा बूढा पाकाहरूले आफू मरेपछि पनि प्रेतभएर पशुका रगतको तर्पण नै चाहिरहेका छन्। न पूर्वजहरूलाई प्रेतयोनिबाट उक्कास्न चाहन्छन् न त आफूनै प्रेतयोनिमा नपुग्ने चाहना नै गर्छन्'।

'हाम्रा कुनै पनि वैदिक देवताको पूजा गर्न शुद्ध सात्विक भोजन गर्नुपर्छ। अर्काको कलकलाउँदो जीवनमाथि गरेका क्रूर प्रहारले पाइने मासुको आहार कदापि सात्त्विक हुन सक्तैन। वास्तवमा मानिस जाति शाकाहारी हो। मांसाहारीहरूका दाह्रा र नङ तीखा एवं लामा हुन्छन्। उनीहरू कुकुर-बिरालाले झैं चाटेर पानी पिउँछन्, कुनै पनि मानिसले त्यसो गर्दैन, अतः मानिस मांसाहारी होइन। दया नै धर्मको जरो हो। दयाको गन्धसम्म हुनेले अर्काको गर्धन रेटेर पाइने मासु मुखमा लान सक्तैन। मानवलाई परमेश्वरले अरु प्राणीमा भन्दा बढी ज्ञान दिएको, बाठो भएर लाटाजातिको जीवन चुड्न होइन, सबैको रक्षा गर्न हो। मानवकै घरमा उसैका बालबच्चासँग खेली हुर्किएका पाठाका गर्दनमा धारिलो



तरवार हिर्काउन सक्नेले मानिसलाई पनि काट्न नसक्ला भन्न सकिँदैन। आज मानव-बीच भएका संघर्षको एक कारण पशुहरूको निर्मम हत्या पनि हो।

यहाँका यी साना-तिना रुख-झाडी साफ गरौं, यी तेर्सा रुखहरूमा सयकडौं वर्षदेखि बाँधिदै आएका ध्वजाको जंगल हटाऊँ। यहाँ ठाउँ-ठाउँमा विभिन्न नामले राखिएका, वर्षौंदेखि टाँसिएका रगतले कट्कटिएका यी ढुङ्गाहरू उखेलेर यसै ठाउँका पींधमा जग थापौं, यो पाखो माथिसम्म नै खनेर लम्बा-चौड़ा फाकट बनाऔं। यहाँ धर्मशाला र मन्दिर बनाऔं। माथि रामकोटमा त्रिपुरेश्वर भगवान्‌को स्थापना छ। यहाँ दिब्रुङ्मा झैं लोकेश्वर महादेवको स्थापना गरौं। घरबाट शालिग्राम ल्याएर राखौं, नित्य पूजा-पाठ सहितको शंख-घण्ट ध्वनि सुनेर यहाँ भएका भूत-प्रेत जति छन् सबै मुक्त भएर हामीलाई आशीर्वाद दिनेछन्। आजसम्म हजारौं प्राणीको वध गरेर लागेको पाप हामीले अब भूत-प्रेत योनिमा परी दुःख पाएका जीवलाई यज्ञ-याग, पूजा-पाठ, होमहरू गरेर उद्धार गरी पखाल्नुपर्छ।''

स्वामीज्यूका उपर्युक्त प्रवचनबाट अब अलैंचेको रूप बदलियो। उसको नयाँ जन्मभयो। यस जन्मको न्वारनमा अलैंचेले 'आनन्दपुर' नाम धारण गर्‍यो। पाँचदिने पुरुषोत्तम-महात्म्यको प्रवचन सिद्धियो। अब पहिलेको अलैंचेमा भइआएका काम आनन्दपुरमा हुन नसक्ने निर्णय सार्वजनिक गरियो।

आनन्दपुरमा कसैले दुःख पाउनहुने भएन; यहाँ पशु-पंक्षी, मानव सबैले आपसमा आनन्दको आदान-प्रदान गरून् भन्ने लक्ष्यले नै अलैंचे आनन्दपुर बनेको थियो। स्वामी टीकारामज्यूले पनि त्यहाँ मिलेको दान दक्षिणा त्यहींका लोकेश्वर, शिवालय सञ्चालन निम्ति सबै टक्टक्याई परमानन्दीय त्यागमय शैलीको समर्थन गर्दै यस यात्रालाई जीवनको सबभन्दा ठूलो उपलब्धि ठानी कालीपारतर्फ लाग्नुभयो। स्थानीय भक्तहरू स्वामीज्यूका ठोस निर्णयको शक्ति र परिपुष्ट दृढताको प्रताप देखेर झन् श्रद्धालु बने।

**वैदिक धर्मधारा-समन्वय शिखरमा स्वामी परमानन्द :—**

त्यसपछि रामकोट शिवालय र श्री परमानन्द वेद-वेदाङ्ग संस्कृत विद्यालयको देखरेख गर्दै स्वामीज्यू दिब्रुङ नै पुग्नुभयो। तपःसिद्धि पाएको ठाउँ भएकाले स्वामीज्यू फुर्सद पाएसम्म दिब्रुङनै रहन रुचाउनुहुन्थ्यो। वहाँको यस क्षेत्र प्रति विशेष अभिरूचि रहेकोले नै दिब्रुङ मूल आश्रम मानिएको छ।

यता लक्ष्मीनारायण मन्दिर छीसमा दिब्रुङको शैलीमा धान्याचल गराउने सल्लाह भएअनुसार त्यहींका निवासी खिमानन्दज्यूका अगुवाइमा २०३४ का भदौमा एक टोली दिब्रुङ गई स्वामीज्यूलाई निवेदन गर्‍यो। स्वयं पनि सर्वप्रथम दिब्रुङ आउँदा त्यस मन्दिरमा दर्शन गरेको र विगत दिब्रुङका धान्याचलमा छिसेली श्रद्धालुहरूको ठूलो सहयोग रहेकोले भक्तवत्सल स्वामीज्यूको आज्ञा भयो-''अर्लाङकोट निवासी हाल वाराणसीमा अध्ययनरत पं. कृष्णप्रसाद सापकोटा र उहीं रहने आचार्य जगन्नाथलाई अवश्य बोलाउनुहोस्, अरु त्यस क्षेत्रले माने जानेका गुरुहरू सबैलाई बोलाउनुहोस्। मैले धुवाँकोटबाट एक जना विद्वान् श्रीताराप्रसादज्यूलाई बोलाउँला'' भनी यज्ञ-सम्बन्धी सारा निर्देशन दिई कार्यक्रमको सारा रूपरेखा बताउनुभएपछि वहाँको सरलता र उदारताको गानगर्दै अत्यन्त हर्षित रूपमा छिसेलीहरू फर्के। पछि स्वामीज्यू स्वयं आई मूल समिति र उपसमितिहरूको गठन गराई प्रचार-प्रसार व्यापक बनाउन प्रेरित गर्दै अन्यत्र जानुभयो। स्वामीज्यूका आदेशको पालन दर्म-खोलांका दक्षिण उत्तर दुबै तटका निवासीहरूले श्रद्धापूर्वक गरे।

यसभन्दा पूर्वनै छिस नजिकैको ''पचुवा''मा एक शिवालयको शिलान्यास स्वामीज्यूले गरिसक्नुभएको थियो। वहाँले शिलान्यास गरेका ठाउँमा नै स्वामीज्यूद्वारा यसै वर्ष धान्याचल गराई प्रतिष्ठा गराउनुपर्छ भन्ने धारणाले यता कार्यक्रम

जुधाउने तहले पचुवालीहरू तम्सिए तापनि उपासना पद्धतिमा समन्वय ल्याई एकात्मक वैदिक समाजको निर्माण गर्ने सर्वमान्य लोकोत्तर चरित्रका धनी स्वामीज्यूले ''यस यज्ञमा सबैले सहयोग गर्नुपर्छ, एकै वर्षमा, एकै क्षेत्रमा, दुईवटा सामाजिक धार्मिक आयोजना गर्दा जनतालाई धेरै भार पर्छ; जनताको धर्मकार्यप्रति रुचि रहे पनि उनलाई बोक्न नसक्ने भारी बोकाउन खोज्नु धार्मिक शोषण हुन जान्छ'' भनी छीस दरबारका श्रीलक्ष्मीनारायण मन्दिरको गुठ जम्मा पार्ने उद्देश्यले हुन लागेको धान्याचल महायज्ञलाई नै सबैले सहयोग गर्नुपर्ने अनुरोध गर्नुभएकाले सबैले त्यसै महायज्ञमा सहयोग गर्ने विचार लिए। विविध ठाउँबाट विविध धाराका विद्वान्हरूको संगम हुने बुझी यस महायज्ञप्रति पनि जनताको चासो निकै बढ्दै गएको थियो। त्यस महायज्ञमा स्वामीज्यूका मुखारविन्दबाट दिव्य कथामृत बर्सिरहेका थिए। त्यस्तै श्रीधराचार्यज्यू र आचार्य जगन्नाथबाट समसामयिक विषयमा प्रवचन हुने गर्दथ्यो। यसरी २०३४ सालको पौष ५ गतेदेखि छीस दरबारमा थालिएको यो विश्वशान्ति धान्याचल महायज्ञ सोही १० तक भव्यरूपमा सम्पन्न भयो।

लक्ष्मीनारायण पूजा सञ्चालन समिति र यज्ञ सम्पादन समितिको तर्फबाट समापन समारोहमा पौष १० गते विशाल जनसमूहको बीच स्वामीज्यूको कर-कमलमा संस्कृतमय दिव्य अभिनन्दन पत्र पनि समर्पण गरियो। यसरी स्वामीज्यूका कीर्ति-कौमुदीको प्रकाश झन् झन् बढ्दै गयो।

यस यज्ञको अवशेषको मुख्यभागले साँझबोट भन्ने ठाउँको २० मुरीधान आउने खेत किनी श्रीलक्ष्मीनारायण भगवान्‌को नित्य भोगराग चलिरहेको छ। यस यज्ञभन्दा पूर्व यस मन्दिरको आर्थिक स्थिति नितान्त दयनीय थियो। त्यहाँको समाजले स्वामीज्यूका यस उदारताको प्रशंसा गरेको छ।

यस छीस दरबारका यज्ञले पचुवाको ०३३मा स्वामीज्यूबाट शिलान्यास भएको शिवालय, जन-जागृति विद्यालय काँडेवास र स्थानीय पुल निर्माण समेतका आसपासका काममा सक्दो सहयोग पुऱ्याउँदै शेष रकमबाट मन्दिरको गुठको खेत किनिएको हो।

### व्यावहारिक अद्वैतवादको उत्तम प्रयोग—

बिहूँमा आश्रम र विद्यालयका सञ्चालनको भार श्रीदुर्गानन्दज्यूलाई दिई स्वामीज्यू धेरैजसो धर्मद्वारीनै रहने चेष्टा गर्नुहुन्थ्यो। तर त्यहाँ रहँदा पनि त्यहाँबाट एकै छिनमा पुगेर उपदेश गरी फर्कन सकिने अर्जेवा, भञ्ज्याङ् आदि ठाउँहरूमा नियमित प्रवचन चलाउनुभयो। एकादशी, पूर्णिमा आदि पर्वहरूमा समीपस्थ गाउँहरूमा प्रवचनको पर्व तोकिदिनुभएकोले त्यस दिन स्थानीय व्यक्तिहरूको ठूलो जमघट हुने गर्दथ्यो। विना कुनै खर्च महत्त्वपूर्ण उपदेश प्राप्त गरी जनता कृत-कृत्य भएर घर फर्कन्थे। स्वामीज्यू कि त उपदेश गर्नुहुन्थ्यो, कि त आश्रममा आएर ब्रह्मचिन्तन नै गर्नुहुन्थ्यो, या त गाउँहरूका समस्या सुल्झाउने विषयमा चिन्तन गर्नुहुन्थ्यो। अनावश्यक गफ गरेर, सुतेर या इन्द्रियभोगमा परेर कहिल्यै एकपला पनि बिताउनुभएन। उपदेश निम्ति गाउँघरमा जाँदा-आउँदा बाटामा पनि धर्म र अध्यात्मका नै कुरा चलिरहन्थे। बाटामा पर्ने गाउँका मानिसहरूलाई सफा-सुग्घर राख्न, वस्तुभाउलाई आवश्यक ध्यान दिन, बाटाघाटामा फोहर मैला नगर्न, पिउने पानी सफा राख्न, बाटो सुधार्न अर्ति दिइरहनुहुन्थ्यो। गाउँलेहरू घरभित्रै भए पनि बा, आमा, ठूली, सानी, जेठा, कान्छा आदि नामधारीहरूलाई उनका गाउँघरमा प्रचार भएकै नामले जनसाधारणकै भाषामा बोलाएर दर्शन दिंदै हालचाल सोधी हिंड्नुहुन्थ्यो। यो सबै व्यवहार देख्दा वहाँले परिवार छोडेको नभएर परिवारको विस्तार गरेको देखिइरहेको थियो। वहाँलाई प्रत्येक घरको खबर थाहा थियो। अरु घर पस्न नभ्याए पनि रोगी भएको घर स्वामीज्यू अवश्य पस्नुहुन्थ्यो र उपचारको निम्ति आवश्यक सर-सल्लाह दिई बाटो बताउनु हुन्थ्यो। 'हजूरकै दया, जे गर्नुपर्छ' भन्नेहरूलाई दयामय करले



स्पर्श गरी मन्त्रशक्तिद्वारा छिट्टै रोगमुक्त पार्नुहुन्थ्यो। अस्पताल धाउने पैसावाल दङ्ग पर्थे। पछि गाउँमा चर्चा हुन्थे— ''दिब्रुङका प्रभुले यस्तो छोइदिँदा फलानो व्यक्ति सञ्चो भयो तर त्यही रोग अमुक व्यक्तिले अमुक ठाउँमा गएर खर्च गर्दा पनि 'किन सञ्चो भएन?' जो पूर्ण विश्वास गरेर अनन्यभावले स्वामीज्यूका चरणारविन्दको मात्र भरपर्दथ्यो त्यसलाई स्वामीज्यूले उद्धार गर्नुहुन्थ्यो।

यस प्रकार स्वामीज्यूले प्रत्येक व्यक्तिका भित्र रहेको जीवात्माको सेवालाई लक्ष्य बनाई जनसेवा गर्दै प्रत्येक जीवसंग तादात्म्य स्थापित गर्नुभएको थियो। ग्रामीण महिलाले धेरै टाढाबाट कुरुवा पानी बोकी उकालो-ओरालो गर्दा पाएको पीडा आफ्नै सम्झनुभयो। यसरी वहाँले भगवान् रामले झैं नै उनीहरूको सुख र दुःख पनि आफैले अनुभव गर्नुभयो। भगवान् नै जीवात्माको रूपमा सबै प्राणीभित्र प्रवेश गर्नुभएको बुझी सबैलाई आदर गर्नुहुन्थ्यो। आफ्नो गाउँको बाटो हिड्दा कारणवश स्वामीज्यूको दर्शन गर्न नपाउने व्यक्तिले आफूलाई धिक्कार्दा तिमीले नदेखे पनि मैले देखेको थिएँ भन्ने वाणी सुन्न पाएर बल्ल उसका प्राण फर्कन्थे।

यसरी स्वामीज्यू जनताका हृत्केन्द्रबिन्दुको अन्तरङ्ग किं वा देख्ने सुन्ने जत्तिको अन्तरात्मा नै बनिरहनुभयो। प्रत्येकका आत्मासंग आफ्नो अभेद सम्बन्ध देख्ने अद्वैत सिद्धान्तको व्यावहारिक दर्शन प्रयोग गरेर स्वामीज्यूले आदर्श अद्वैतवादको स्थापना गर्नुभयो।

## रूपाकोट दमुकामा शिवाश्रमको स्थापना :—

२०३५ सालको हिउँदमा स्वामीज्यूका नेतृत्वमा नर्मदेश्वर मन्दिर, गुल्मी रूपाकोट (दमुका)मा धान्याचल महायज्ञ सम्पन्न भयो। त्यस महायज्ञमा टाढा-टाढाबाट आउने साधु-सन्त, विद्वान्हरूको समागम थियो। रुद्रावतीको तटीय क्षेत्र समग्ररूपमा यस महायज्ञमा पूर्ण सक्रिय थियो। स्वामीज्यूका प्रवचनबाट आधुनिक शिक्षाको प्रवाहमा परेर ज्ञान र स्वधर्मबाट टाढा हुन पुगेका नवयुवा-युवतिहरूले पनि यथार्थतालाई जान्ने मौका पाए। उनीहरू पहिले त छिद्रान्वेषकका रूपमा स्वामीज्यूका निकट आएका थिए, तर पछि क्रमशः स्वामीज्यूका प्रवचनबाट प्रभावित भई वहाँकै अनन्य भक्त हुन पुगे। यज्ञावशेषले यहाँका आश्रमको गुठव्यवस्था र थप निर्माणकार्य पनि सम्पन्न भए।

२०३६ सालमा गुल्मीका विभिन्न ठाउँमा प्रवचन र मन्दिरहरूको स्थापना भयो। स्थापित मठ-मन्दिरहरूमा सञ्चालन गर्न योग्य व्यक्ति नियुक्त गरी आफूले उपरि रेखदेख बाहेक प्रत्यक्ष शासन नगरेकाले स्वामीज्यू सधैं सर्वजनप्रिय बनि नै रहनुभयो। उसैमा पैसा राख्ने र खर्च गर्ने काम त कहिल्यै पनि आफ्ना हातमा राख्नुभएन। ''साधुलाई पैसाको कहिल्यै जिम्मेवारी दिनुहुन्न; यज्ञ गर्ने, गुठ राख्ने, धार्मिक संस्था चलाउने, धार्मिक कार्यहरू सम्पन्न गर्ने काम गृहस्थको हो; धर्मको बाटो बताउनु मात्र साधुको काम हो, यज्ञशेषबाट संरक्षित आश्रमहरू भत्के-बिग्रेमा हामी साधुलाई पाप लाग्दैन, संस्थापित संस्थाहरूको आय-व्ययको एक पैसा मात्रै भएपनि तलमाथि भएछ भने स्थानीय समितिका व्यक्तिहरूले त्यसको दण्ड यसलोक या परलोकमा भोग्नुपर्ने छ '' भन्ने सदुपदेशबाट स्वामीज्यूले जनतालाई सचेत र कर्तव्यनिष्ठ बनाइराख्नुहुन्थ्यो।

## देवघाटको कोटिहोममा स्वामीज्यूको कीर्ति :—

२०३७ सालसम्म स्वामीज्यूको कीर्तिध्वजा चारैतिर फहराइसकेकोले अब दिब्रुङमा स्वामीज्यूको दर्शनभेट गर्न धार्मिक सामाजिक र राजनैतिक क्षेत्रका उच्चतम व्यक्तित्वहरूको पनि आवत-जावत चल्न थालिसकेको थियो। यसै

क्रममा नेपालको प्राचीन र मध्ययुगीन इतिहासका साहसी अन्वेषक योगी नरहरिनाथज्यू पनि २०३७ सालको जेठमा दिब्रुङको धुरीमा पुग्नुभयो। स्वामीज्यूसंग भेट गर्न योगीज्यूको आगमन भएको खबरले स्थानीय जनताको ठूलो भीड जुट्यो। यी जनताको स्वामीज्यूप्रति यति ठूलो श्रद्धा देखेर योगीज्यूले लोकोत्तर एक अवतारी पुरुष नै मान्नुभयो। धर्मसेवा र जनसेवाका काम देखेर प्रभावित योगीज्यू बिहूँ स्थित आश्रम पनि देख्ने इच्छाले स्वामीज्यूको मार्गनिर्देशन र व्यवस्थापन अनुसार बिदा हुने समयमा २०३८ सालमा देवघाटमा आयोजन गरिने कोटिहोममा मुख्य सञ्चालकत्व वहन गर्ने जिम्मेवारी स्वामीज्यूका काँधमा राख्दै जानुभयो।

२०३८को मार्गमा गुल्मी भञ्ज्याङ्का खिमानन्द गौतम (खिमानन्द सरस्वती) का घर भव्य सप्ताह भयो। स्वामीज्यूका प्रवचनबाट प्रभावित खिमानन्दजी फूलपाती सेलाउन धर्मद्वारी जानुभयो, फेरि भञ्ज्याङ्तर्फ फर्कनुभएन।

यता देवघाटधामका कोटिहोम निमित्त योगीज्यू र आयोजक समितिले पुनः पुनः पत्रव्यवहार गरिरहेकोले स्वामीज्यू विशेष निमन्त्रित रूपमा पहिलो पटक २०३८ सालको पौष महिनामा देवघाट पुग्नुभयो।

त्यतिखेर देवघाटमा गलेश्वरबाबाको शिवसायुज्य प्राप्ति भइसकेकाले वहाँको उत्तराधिकारीका रूपमा दण्डीस्वामी श्रीआशुतोषानन्द सरस्वतीज्यू हुनुहुन्थ्यो। वहाँले योग्य कुनै महात्मा पाएमा आश्रमको जिम्मा दिने बाटो हेरेर बस्नु भएको थियो। गलेश्वर आश्रममा नै बसी कोटिहोमको सुव्यवस्थित सञ्चालन स्वामीज्यूद्वारा भएकोले आयोजक समिति र योगीज्यू समेतका देश-विदेशबाट आएका साधु-सन्त अत्यन्त प्रसन्न भए। फलतः नेपाल र भारतका धार्मिक क्षेत्रमा स्वामीज्यूको प्रचार भएकाले वहाँको सुवास सबैले पाए। यस्ता साधु आउनुभएको छ भनी दर्शन गर्न देवघाटमा ठूलो भीड जम्मा भयो। माघ-स्नान र कोटिहोमका कारणले जुटेको भीडभन्दा स्वामीज्यूका दर्शनका इच्छाले जुटेको भीड लामो समयसम्म देवघाटमा अडियो। यसरी नेपालको धार्मिक क्षेत्रको मुटु देवघाट फेला पारी स्वामीज्यू केही दिन यतै रहनुभयो। कतै स्वामीज्यू यतै बस्नुभई पहाडका मीठा घाम छेलिने त हैनन्? भनी पहाडबाट लिन आएका भक्तहरूलाई चिन्ता लागेको थियो। चितवन, नवलपरासी र तनहूँ तीनवटै जिल्लाका व्यक्तिहरूले यतै तर्फ स्वामीज्यूलाई राख्ने प्रयास प्रारम्भ गरेका थिए। कसैले चितवन र कसैले नवलपरासीतिर स्वामीज्यूको निवास हुनुपर्छ भन्ने प्रस्ताव राख्दै थिए भने निष्पक्ष विचारकहरू भने तराइतर्फ स्वामीज्यूको एक आश्रम देवघाटमै हुनुपर्छ भन्ने कुरामा एकमत भएका थिए। त्यस कोटिहोमको मुख्य आकर्षण स्वामीज्यू नै रहनुभएकोले टाढा-टाढाबाट आउने प्रत्येक व्यक्तिले स्वामीज्यूसँग प्रत्यक्ष बात गर्ने मनसाय राख्दथे। त्यसकारण स्वामीज्यूले हरेक ठाउँका व्यक्तिहरूको राय बुझ्ने अवसर पाउनुभएको थियो। धेरैजसो व्यक्तिले देवघाटमा रहेर गलेश्वर आश्रमको सञ्चालन गर्ने प्रार्थना गरिरहेका थिए। तीर्थस्थलमा आएर जप-ध्यान गर्न छाडी, आश्रम सञ्चालनको झञ्झट उठाउन स्वामीज्यूले स्वीकार नगर्नुभएकोले योगीज्यू र दण्डीस्वामीज्यू बीच गलेश्वर आश्रमभित्रको केही जमिन स्वामीज्यूका कुटी निमित्त दिई यहाँ आउने-जाने बाटो मिलाइराख्ने सरसल्लाह भएकोले वर्तमान रातोपौवा भएको जमिन देवघाटमा उपलब्ध गराइयो। त्यहाँ छिटै कुटी बनाउने प्रस्ताव भए अनुसार स्वामीज्यूले पहाड जाने मौकामा आफ्ना शिष्य कलानन्द सरस्वती र स्वरूपानन्द सरस्वती लाई बास बनाउन भन्नुभएकोले एकवर्षभित्रमा रातोपौवाको निर्माण तैयार भयो। आजसम्म पनि यस पौवाले साधु-सन्त, अतिथिहरूको सेवा गरिरहेको छ। स्वामीज्यूले अन्तिम समयसम्म यहाँ रहन रुचाउनुहुन्थ्यो।



## स्वामीज्यूको व्यक्तित्व पहाडदेखि तराइसम्म :—

२०३८ सालको अन्तमा स्वामीज्यू बिहूँ रामकोट सवारी भयो। विद्यालय र आश्रमले राम्रो प्रगति गरिरहेको थियो। त्यस क्षेत्रका प्रत्येक गाउँले आ-आफ्ना गाउँमा लैजान आग्रह गर्दै थिए। बिहूँसँगै गाँसिएको लेखानी गा.वि.स. का व्यक्तिहरु त्यसैपटक स्वामीज्यूलाई आफ्नो गाउँमा लान सफल भए। त्यहाँ २०१८ सालको अष्टग्रही योगले त्यहाँका समाजलाई शिवालय बनाउन लगाएको थियो। ०१८ सालमा एकै राशिका आठ ग्रह जम्मा भएकाले सन्सार मासिन्छ भन्ने प्रचार ज्योतिषको आधार लिएर भएको हुँदा नास्तिकहरू पनि मृत्युको भयले आस्तिक भएका थिए। त्यसताक कहीं मन्दिर बनाई पूजा चलाउन थालियो भने कहीं भजन-कीर्तन चलाउने र अखण्ड दीप जलाउने पनि निस्के। त्यस समयमा लेखानीको गाउँमा एक शिवालय बनी पूजा चल्दै थियो। त्यहाँ गई स्वामीज्यूले त्यस मन्दिरको नाम नर्मदेश्वर शिवलाय राख्नुभयो। त्यतिखेरसम्म स्वामीज्यू विकास र निर्माणका पर्याय बनिसक्नुभएको थियो। जहाँ गए पनि केही न केही निर्माण या विकास भइजान्थ्यो। लेखानीमा स्वामीज्यू गएपछि सब भेला भई त्यसपछिको कार्यक्रम तयार पारे। त्यसै सल्लाह अनुसार लगत्तै पछिल्ला वर्ष त्यहाँ शतरुद्री र लक्षहवन स्वामीज्यूका उपस्थितिमा भव्यरूपले सम्पन्नभयो। यसठाउँमा स्वामीज्यूद्वारा पछि पनि धेरै धार्मिक अनुष्ठानहरू सञ्चालन गरिए।

२०३८ को देवघाटको कोटिहोम-महायज्ञ सफल पार्न स्वामीज्यू देवघाट गएका बेला भक्तहरूको अनुरोधमा चितवन भ्रमण गर्नुभयो। त्यसबेला चितवनको भरतपुर नगरपालिका वार्ड नं. ९ स्थित शरद्पुरमा पुगी हेमलाल र ताराविक्रमशाह समेतका भक्तहरूलाई शिवालय निर्माण गर्ने प्रेरणा प्रदान गर्नुभयो। पूर्वचितवन शान्तिबजारमा गई मातापिताको दर्शन गर्नुभयो। त्यता देहसम्बन्धी भाइ-बन्धुसमेतको प्रयासले विविध ठाउँमा देवमन्दिर, धर्मशालाहरूको प्रारम्भ गराई स्वामीज्यू धर्मद्वारी फिर्ता हुनुभयो। काकाकुलले स्वातीको जल पर्खे झैं नै त्यहाँका भक्तहरूले स्वामीज्यूको बाटो हेरिरहेको थिए। यसरी जीवनका ४४ बसन्त पार गरेको वर्ष २०३८ सालमा स्वामीज्यू पहाडबाट तराईसम्म झरी सबैको हृदय आफ्तर्फ खिच्नुभयो।

## रामकोटमा मूर्ति प्रतिष्ठा र रथ-यात्रा परम्परा :

त्यहाँबाट स्वामीज्यू बिहूँ जानुभयो। बिहूँमा श्रीआत्मानन्द गिरिज्यू र सञ्चालक समितिका संयुक्त प्रयासले निकै विकास, निर्माणकार्यहरू भइरहेका थिए। मद्रासमा रहने बिहूँका भक्तहरूले रामकोट मन्दिरका लागि भाँडाहरू, घण्टाहरू र शिवविष्णु आदिका मूर्तिहरू पनि ल्याइसकेका थिए। ती मूर्तिहरूको प्राण-प्रतिष्ठाको निम्ति ठाउँठाउँका विशिष्ट विद्वानहरूलाई निमन्त्रणा दिई २०३९ सालको प्रारम्भमा नै स्वामीज्यू बिहूँ पुग्नुभयो। बाग्लुङ बजारदेखि नै स्वामीज्यूको सत्कार आरम्भ भयो। ठाउँ-ठाउँबाट पछि लागेका भक्तहरू जम्मा भै भीड बनाए। यसै भीडका साथ उत्सवमय वातावरणमा स्वामीज्यू एकाएक शिवालयमा पुग्नुभयो। त्यहाँ पनि पहिलेदेखि नै एकत्रित भई बसेका व्यक्तिहरू लामो लस्कर बनाएर राजमार्गमा झरे। भव्य भजन-कीर्तनका साथ स्वामीज्यूले अग्रिम कार्यक्रमको रूप-रेखा तयार गर्दै रामकोट शिवालय पुग्नुभयो। २०० जति छात्र र उनका अध्यापकहरू आश्रमीय भेषमा पंक्तिबद्ध भई स्वस्तिवाचन गर्दै रामकोटको सुरम्य शिखरको सुगंध बढाइरहेका थिए। त्यहाँको प्रत्येक क्षण प्रमुदित बनेको स्पष्ट प्रतीत

भैरहेको थियो। यसचोटी पनि स्वामीज्यूको शुभागमन एक महान् महोत्सवको रूपमा बिहूँले मनायो। रामकोट आश्रमले स्वामीज्यूको दर्शनार्थ पाल्नुहुने सज्जनलाई उत्तम प्रसाद वितरण गरी परमानन्द प्रदान गर्‍यो। यसरी सबैका मनमा तनमा र दर्शनमा पनि परमानन्द नै छाइयो। दर्शनपछि मन नहुँदा-नहुँदै पनि जान बाध्य भएकाहरूलाई स्वामीज्यूले आचार्य जगन्नाथ कण्डेलको आचार्यत्वमा आगामी जेठ १ गतेदेखि सोही ११ संम्म हुने शिवादि मूर्ति-प्रतिष्ठांको कार्यक्रमको घोषणा गर्नुभयो।

२०३९ जेठ १ गतेबाट शिवपुराणादि विविध पुराणको पाठ प्रवचन सहितको प्रतिष्ठा महायज्ञ प्रारम्भ भयो। बिहूँका बृहत्तम कार्यक्रमहरू मध्येमा यो चौथो कार्यक्रम थियो। टाढा-टाढावाट आएका नर-नारीहरूको भीड उर्लेर रामकोटको डाँडो छाइयो। त्यो क्षेत्र वेद र पुराणका ध्वनिले व्याप्त थियो। लेकको ठाउँ हुनाले ग्रीष्म यहाँ अत्यन्त सुखदायी बनेर झुल्केको थियो। रातीमा वर्षा गरेर मेघले पानीको थप पूर्ति गरेका थिए। विभिन्न ठाउँवाट आएका कीर्तन-टोलीको नृत्यवाद्य सहित कीर्तन रातीमा पनि पर्याप्त जनसमूह बटुल्न समर्थ भएको थियो। ११ दिवसीय कार्यक्रम भएकाले विद्वान्हरू को प्रवचन सुन्ने पूर्ण अवसर प्राप्त गरी सबै प्रसन्न थिए। दिल-दिमागका लागि प्रवचन, उदरदरीको लागि इच्छानुसार-को भोजन, कानका लागि मीठामीठा वैदिक ध्वनि र आँखाका लागि मञ्च-मन्दिर एवं सुरम्य वन्य दृश्य पनि त्यहाँ थिए। एघारौं दिनमा भगवान्लाई रथमा राखी हजारौं भीडले बिहूँको मुख्य भागको परिक्रमा गरी जेष्ठ ११ गतेमा रामकोटको रथयात्राको परम्परा बसाल्यो।

०३८ पछि स्वामीज्यूलाई चितवन क्षेत्रले अलि-अलि तान्दै ल्याएको थियो। ०३९ को हिउँदमा पनि एकपटक स्वामीज्यू चितवन आई शरदपुरमा बनिरहेका शिवालयको निरीक्षण गरी थप सुझावहरू दिंदै त्यसै ठाउँमा आगामी वर्षको धान्याचल सम्पन्न गर्ने निर्णय दिई देवघाट जानुभयो। यसपटक पनि स्वामीज्यूलाई देवघाटले एकमुख लगाएर यहीं बस्न आग्रह गरेको थियो। तर पहाडतर्फ नै धेरै कामहरू रहेकाले स्वामीज्यूले त्यहाँ हालबाटै रहन असमर्थता जनाए पनि कुटी बनिसकेकोरवहाँका विशेष भक्तहरूको सिलसिला पनि बढिरहेकाले सबै आशान्वित हुँदै गएका थिए। शरदपुर, पूर्वचितवन, कोटिहोम, लङ्कू, गैंडाकोट, गिदाहा आदि ठाउँहरूमा स्वामीज्यूको चाहना बढ्दै गएकाले पनि देवघाटवासीलाई यस क्षेत्रलाई स्वामीज्यूको दर्शन मिल्दै रहने विश्वास भएको थियो।

फेरि २०४० मा पनि एकपटक आई यस क्षेत्रमा धर्मप्रचार गर्नुभयो। यसपटक पनि चितवनका विभिन्न क्षेत्रको भ्रमण भक्तहरूले गराए। भरतपुर न.पा. क्षेत्रको वार्ड नं. ५ मा स्थित लङ्कू मा २०३१ सालमा वैष्णवागम अनुसार श्रीलक्ष्मी वैकुण्ठनाथ मन्दिरको प्रतिष्ठा भएको थियो।

यसै मन्दिरका आदिशब्दबाट नामकरण गरिएको वडा नं. ६ लङ्कू स्थित लक्ष्मी नि.मा.वि. को भवन निर्माण समेतको अधुरो काम पूरा गर्न समाजसेवी श्रीदधिराम सापकोटा, चेतनारायण समेतका व्यक्तिहरूको सरसल्लाह अनुसार २०४१ मा धान्याचल महायज्ञको आयोजना लक्ष्मी नि.मा.वि. लङ्कूमा गर्ने निर्णय समेत भयो। यसै सल्लाह अनुसार जगन्नाथ समेतका आचार्यहरू जम्मा पारी २०४१ को धान्याचल समारोह स्वामीज्यूकै तत्वावधानमा सम्पन्नभयो। विभिन्न धाराका वैदिक विद्वान्हरू भेला भएकाले बीच-बीचमा केही अप्रियताको आभास हुनथाले पनि स्वामीज्यूको समन्वयात्माकता र आदर्शमय अभेदभावनाले गर्दा परिणाममा सब अनुकूल नै भयो। प्रत्येक स्कूल, कलेजमा सरस्वतीको मूर्ति स्थापना हुनुपर्ने र शिक्षण संस्थानमा सरस्वतीको प्रार्थना अवश्य हुनुपर्ने प्रस्ताव स्वामीज्यूले यसै महायज्ञको मञ्चबाट राख्नुभयो। सबैले यसको समर्थन गरे। वैदिक धर्मका सबै धाराका विद्वान्हरूले आपसमा समन्वय गरी वैदिक धर्मको रक्षा गर्नुपर्ने प्रस्ताव

पनि स्वामीज्यूले विशाल जनसमक्ष राख्नुभयो। वैदिक धर्मको प्रचार गर्ने सबै कर्मकाण्डी ब्राह्मणहरूले आपसमा ठूला-सानाको भेदभाव नराखी विद्या र सदाचारमा अघि बढ्नुपर्छ भन्ने विषयलाई स्वामीज्यूले खुलाएर भन्दा विविध अहङ्कारीहरू शुद्ध भै स्वामी चरणमा कृतज्ञता ज्ञापन गरे। स्वामीज्यूको नेतृत्वमा जम्मा भएका रूपैयाँले आवश्यक काम पूरा गरियो। विद्यालय मा. विद्यालयको दर्जा प्राप्त गर्न समर्थ भयो।

अब हिन्दूधर्मको वास्तविक रूप बुझी स्थानीय विद्वान्हरूमा उदारता र गम्भीरताको वृद्धि हुने आशा समाजले गर्नलाग्यो। स्वामी श्रीधराचार्य (पछि श्री मुक्तिनारायण त्रिदण्डिजीयरज्यू) आचार्य जगन्नाथ समेतका विद्वान्हरूका संयुक्त प्रयासले कार्यक्रम मीठो र सुखान्त नै भएको थियो। यसै यज्ञको अन्तिम दिनमा आगामी २०४२मा श्रीलक्ष्मीवैकुण्ठनाथ मन्दिरमा धान्याचल गर्ने पूर्वसङ्कल्प गर्नुभयो।

## वामीटक्सारमा ज्ञान-ज्योति फैलियो :—

२०४० सालमा आई स्वामीज्यूले देवघाटमा स्वतन्त्ररूपमा कहीं जग्गा लिनुपर्ने भक्तहरूको परामर्श अनुसार हाल हरिहर मन्दिर भएको ठाउँमा २ रोपनी ८ आंना जमीन उपलब्ध गर्नुभएको थियो। अब यसमा पनि कुटी बनाउनमा भक्तहरू तम्सिए। क्रमश: बेला-बेलामा जमीन थपै लगेर आज धेरै जमीन यस आश्रममा जम्माभइसकेको छ। स्वामीज्यूको तत्त्वावधानमा मार्ग महिनामा शरद्पुरमा विश्वशान्ति धान्याचल महायज्ञ सम्पन्नभयो।

योगी नरहरिज्यूले २०४० साल माघ महिनाभरि हुने रुद्रवेणी गुल्मीमा कोटिहवनको सञ्चालन गर्न स्वामीज्यूलाई अति आग्रह गरी बोलाउनुभएको थियो। स्वामीज्यू सरलतासँग रुद्रवेणी कोटिहोम महायज्ञ विधिपूर्वक भव्यरूपमा सम्पन्न गर्नुभएकाले त्यहाँ पनि वहाँको माग बढ्न लाग्यो। जनतन त्यहाँबाट बिदा लिई स्वामीज्यू रूपाकोट, दमुकाको नर्मदेश्वर शिवालयको दर्शन गर्दै वामीटक्सार पुग्नुभयो। त्यहाँ निम्नमाध्यमिक विद्यालय निकै अप्ठ्यारामा थियो। यस शिक्षण संस्थाले शिर उठाउन नसकेको बुझी स्वामीज्यूले माध्यमिक तहसम्म सञ्चालन गर्न तुरुन्त धान्याचल गराउनुभयो। ठूलो धान्य र अर्थको राशि त्यहाँ जुट्यो। केही नास्तिकहरूले धर्मसम्बन्धी प्रश्न गरे तिनको यथार्थ जवाफ पाई उनी सबै आस्तिक बने। धर्मले के गर्छ? भन्नेहरूलाई स्वामीज्यूले उत्तर दिनुभयो—"हेर्नुहोस् यहाँ यज्ञ भइरहेको छ। यहाँ भाँडा माझ्ने, दाउरा चिर्ने, दूध दही फल आदि बेच्ने समेतले केही दिनकै लागि भए पनि पेशा पाएका छन्। गरीब-गुरुवा, भिखारी, अशक्त, अपाङ्गहरूले नि:शुल्क भोजन र आवास पनि पाइरहेका छन्, आफ्नो राष्ट्रिय धर्म संस्कृतिको चर्चा-परिचर्चाका साथ यहाँ मानिसहरूको सामूहिक मनोरञ्जन पनि भइरहेको छ, ठाउँ-ठाउँका मानिसहरूको भेटघाट भएकोले एक आपसमा परिचय गर्न सजिलो भएको छ; परस्पर सह-अस्तित्व र सहयोग गर्ने भावनाको पनि विकास भएको छ। मानिसले एकातिर परलोकको लागि धर्म कमाइरहेका छन् भने अर्कातिर उनीहरूले आफ्नो सामाजिक शिक्षण संस्थाको सहयोग गरी यसलोकको काम पनि गरिरहेका छन्। यहाँ कसैलाई बाध्य गरेर केही मागिएको छैन, घरमा भएको वस्तु इच्छा अनुसार मानिसले प्रदान गरेका छन्। प्रत्येक घरबाट १ चम्चा घ्यू र १/१ फाँक चामल, जौ-तिल एक दिन ल्याए यहाँको लक्षहवन चल्दछ। तपाईंहरू भन्नुहुन्छ-अनिकालको अन्न र घ्यू पोलिरहेका छन्। तर यज्ञ कार्यबाट कत्तिको वातावरण शुद्ध भैरहेछ भन्ने कुरा बुझ्न चाहनु हुन्न। देशको उत्पादनमूलक समय जूवा र तासमा निरर्थक बगेर कति खेर गैरहेको छ। त्यसमा ध्यान छैन तर यज्ञमा केही व्यक्ति जम्मा भए भने समयको बर्बाद भएको सम्झिइन्छ। बिंडी, सिगरेट र मद्यपानमा देशको कति पैसा र

स्वास्थ्य बिग्रिरहेको छ त्यतापट्टि आधुनिक समाजले आँखा चिम्लिरहेको छ; उसले त केवल अग्निकुण्डमा दाउरा चीसा भएर धुवाँको मुस्लो उठेको देखी, घ्यू र चामल जले भनेर होहल्ला मच्चाइन्छ। हेर्नुहोस् -यज्ञ र हाम्रो धर्मले कहीं कसैलाई केही बिगारेको छैन। यसले सधैं सबैको हित गर्दछ। हाम्रो धर्मले बाटा-बाटा पीपल रोपेर ठाउँ-ठाउँमा चौतारा, पोखरी, पाटी-पौवा बनाएर सार्वजनिक सेवा गरिरहेको छ। यहाँ हाम्रा धर्मले मानव बाहेकका पशु-पक्षी, कीट, पतङ्ग समेतलाई भोजन दान गर्दछ। हाम्रो धर्म मानव मात्रको नभएर प्रत्येक प्राणीको पनि सेवक छ। यस्ता धर्मको रहस्य नबुझी आज यस धर्मलाई केही व्यक्तिले खान कमाउन र स्वार्थ सिद्ध गर्न बनाएको भनी निन्दा गर्दै छौं। आज हामी आफैं आफ्ना धर्मकर्मको निन्दा गरी आफ्नै पूर्खालाई झुटा बनाई आफू बाठा र इजेती बनि रहेका छौं, हरेक देश आफ्नो प्राचीन धर्म संस्कृति भाषा र चाल-चलनलाई अधि बढाउन प्रयास गरिरहेको छ, तर हामीहरू आफैं आफ्नो निन्दा र तिरस्कार गरी स्वयं बेवकूफ बनिरहेका छौं। विदेशी शिक्षाले हाम्रो असली आँखा छोपिसकेको छ। हामी आफ्ना आँखाले नहेरेर हाम्रै चीजलाई अर्काको आँखाले हेर्दछौं। त्यसैले प्रत्येक आफ्ना स्वदेशी वस्तुमा दोषै दोष देख्छौं। अब हामी आफ्नो आँखाले हेर्न सिकौं र आफ्नो धर्म संस्कृतिको रक्षा गरौं। धर्म संस्कृति मेटिए राष्ट्रको स्वरूप नै रहन्न। संस्कृति नै राष्ट्रको आत्मा हो। आत्मा नभएका निर्जीव राष्ट्रको केही महत्व रहन्न'।

इत्यादि रूपमा स्वामीज्यूका गहकिला राष्ट्रभक्तिपरक आदर्श र अनुपम प्रवचन सुनेपछि सारा शिक्षकहरूका आँखा खुले र नवीन पिँढीले आफ्नो गन्तव्यको बोध गऱ्यो।

फेरि २०४१ सालले स्वामीज्यूलाई रुद्रवेणीमा बोलायो। रुद्रवेणी चितवन आउने र दिब्रुङ-रूपाकोटतर्फ जाने बाटामा भएकोले र रुद्रावती नदीको संगम दिव्य तीर्थस्थल रुरुक्षेत्रकै अन्तर्गत रहेको तीर्थ हुनाले स्वामीज्यूले सबैको आग्रहलाई आदर गर्दै रुद्रवेणीको राममन्दिर आश्रमको पीठाधिपति पद स्वीकार गरी तत्काल त्यहाँ बाटो, पाटी-पौवा आदिको निर्माण गराई ठूलो विकास आरम्भ गर्नुभयो। स्वामीज्यूको ०३५ बाट ०५० सालसम्मको समय अत्यन्तै व्यस्त रह्यो।

०४१ सालको मंसीर १९ देखि २३ गतेसम्म द्वितीय धान्याचल महायज्ञ गर्ने निर्णय भए अनुसार कार्तिकदेखि नै बिहूँकोटमा गई व्यवस्था र देखभाल गर्नुभयो। यसपटक पनि बिहूँलाई आसपासका सबै गा.वि.स. हरूले सहयोग गरे। स्वामीज्यूद्वारा सम्पन्न हुने यज्ञको एक छुट्टै शैली या प्रक्रिया बनिसकेकोले यस प्रक्रियाद्वारा अल्प परिश्रमले नै ठूला-ठूला काम पनि सम्पन्न हुनलागेका थिए। श्रीप्रजापति कण्डेल समेतका प्रयासले बिहूँले २०० रोपनी जति रामकोट परिसरको जमीन शिवालयको गुठ राखी उल्लेखनीय कार्य गऱ्यो। यस यज्ञपछि बिहूँको विद्यालयमा अक्षयकोष जम्मा भएकोले अझ व्यवस्थितरूपमा चल्नथाल्यो। बिहूँको यज्ञ सकेर शिष्य समूहको साथ पौषको आरम्भमा वाराणसी आउनुभयो। वाराणसीमा नेपाली संस्कृत विद्यालयमा विवाद रहेको खबरले स्वामीज्यू निकै चिन्तित हुनुभएको थियो। वहाँकै प्रेरणाको फलस्वरूप वाराणसीमा 'नेपाली अध्यात्म पीठ' नामक संस्था त्यहाँ रहने नेपाली अध्यापक तथा छात्रहरूका प्रयासले २०४० मा संस्थापित भइसकेको थियो।

त्यसलाई आशीर्वाद र संरक्षण प्रदान गरी नेपाली विद्यालयको सम्बन्धमा गम्भीर अध्ययन गरी वहाँको स्वागतार्थ नेपाली-समाजद्वारा आयोजित समाजलाई सम्बोधन गरी वाराणसीमा राजनीतिनिरपेक्ष छात्र परिषद्को स्थापनाको आवश्यकता बताउँदै 'नेपाली संस्कृत-छात्र-परिषद्'का स्थापनाको सूत्रपात गरी केही दिन काशीवास गर्नुभयो।

काशीमा अन्यान्य धार्मिक तथा शैक्षिक संस्थाहरूमा पनि पुगी वैचारिक आदान-प्रदान गरी थोरै दिनमा नै काशीका लागि अविस्मरणीय बनेर उत्तर भारतका केही अन्य तीर्थहरू समेत घुम्दै स्वामीज्यू नेपाल फिर्ता हुनुभयो।

**सुन्तलाचौरबाट हरिचौरसम्म :—**

यहाँबाट स्वामीज्यू सीधै बाग्लुङ् दमेकेको तल्लाथोक सुन्तलाचौर मा०वि०को विकासार्थ अयोजित कार्यक्रममा पुग्नुभयो। स्वामीज्यूको मुख्य विशेपता यो पनि थियो कि वचन दिएको ठाउँमा कत्ति नबिर्सी जे-जति कष्ट सहेर पनि यथासमय पुग्नुहुन्थ्यो। यसरी जनताका काममा तत्परता देखिएकाले पनि जनताको आकर्षण स्वामीज्यूप्रति दिनानुदिन बढ्दै गयो। कहीं-कहीं स्वामीज्यूले कार्यक्रममा सम्मिलित हुने वचन दिइसकेपछि त्यो ठाउँ र त्यहाँका कार्यकर्ता उपयुक्त नभएको कुरा ज्ञात हुन्थ्यो; त्यस्ता ठाउँहरूमा जाँदा मानहानि समेतको नोकसानी हुने कुरा स्पष्ट देखिन्थ्यो तापनि "रामो द्विर्नाभिभाषते" रामदुई पटक बोल्दैनन् भने झैं स्वामीज्यूले पनि दिएको वचन फिर्ता लिनुहुन्नथ्यो। अभय आदि दैवी सद्‌गुण प्राप्त भइसकेका महापुरुषलाई कहीं केही डर रहँदैनथ्यो। वहाँ पुगेपछि विघ्नरूपी अन्धकार स्वयम् पन्छिंदै जान्थ्यो। स्वामीज्यू पुगेका ठाउँमा कहीं कतै कुनै अशान्ति वा असफलता देखिएन। यहाँ त स्वामीज्यूको सम्मान हुँदैन कि ? भन्ने शंका भएका ठाउँमा त झन् सारा समाज वहाँको अनुगामी बनेको हुन्थ्यो। वास्तवमा अन्तःकरण निर्मल भएपछि निर्भयता र असन्दिग्धता स्वाभाविकरूपमा उपस्थित रहने गर्दछन्: स्वामीज्यू जहिले पनि काम गर्दा निर्भ्रान्त रूपमा देखिनुहुन्थ्यो। "यसो गरौं कि त्यसो गरौं" को भ्रान्तिले स्वामीज्यूमा कहिल्यै डेरा जमाउन सकेन। कार्य निर्णयको अक्षमता नै अवनतिको जरो हो।

दमेकमा माघ १७ बाट २२ गते सम्म हुने महायज्ञमा सबै विद्वान्हरूको समेत समागमले सुन्तलाचौरको शोभा नवरंगी बन्यो। त्यस दुर्गम पर्वतमय क्षेत्रमा पनि अपार भीडले स्वामीज्यूका वचनामृत पान गऱ्यो। पाँचौं दिनमा बल्ल वचनामृतका प्यासको बैंस जुर्मुराएर आएको थियो, श्रवणेच्छा उत्तरोत्तर बढ्दै थियो; एकाएक यज्ञ समाप्तिका घोषणाले सबैका आँखाबाट छहरा छुटे। विदाइ समारोहका भावुकताले दयार्द्र स्वामीज्यू समेतका आँखा पनि रसाएका थिए।

जैमिनीघाट कालीतटमा सञ्चालित संस्कृत विद्यालयलाई केही रकम छुट्याउने घोषणा स्वामीज्यूबाट प्रवाहित हुँदा त्यस क्षेत्रका आस्तिक जनसमुदायका झन् हाडहाँसेका थिए। स्वामीज्यूको आगमनका उत्सुकताले अति चम्किरहेका आँखाहरू आज विछोड़का व्याकुलतामा बर्सिंदै छिटे पुनः दर्शनको माग प्रस्तुत गरिरहेका थिए। यस्तै श्रद्धामय हुन्थे स्वामीज्यूका गमन-प्रत्यागमनरूपी घाम-छायाका दृश्यहरू हरेक ठाउँमा। ती दृश्यहरूलाई पूरै उतार्ने शब्दहरू सायद पछिसम्म पनि कुनै भाषाले संग्रह गर्न नसक्ला। श्रद्धा र अनुरागलाई ठीक-ठीकसंग उतार्नु भाषिक क्षमता भन्दा बाहिरको कुरा हो।

सुन्तलाचौरको यज्ञपछि स्वामीज्यू बिहूँबाट आएर प्रतीक्षा गरिरहेका जनसमूह र दमेकबाट पुऱ्याउन जाने बाजा कीर्तन सहितका जनसमुदायका साथ आफ्नो अतिमानुष प्रभाव जहाँतहाँ छर्दै श्रद्धावनत नरनारीहरूद्वारा गरिएको दर्शन भेट स्वीकार गर्दै चिने-जानेका मानिसहरूसँग भेटघाट गर्दै लेकको बाटो दहपानीमा विशाल प्रतीक्षारत दर्शनार्थीको भीड़द्वारा सत्कार पाउँदै रमणीय रामकोटमा पुगी रमाउनुभयो। केही दिन त्यहाँको व्यवस्था देखी गुल्मीबाट पुनः पुनः आएका आह्वानहरूको सत्कार गर्दै गुल्मी दिब्रुङपाल्नुभयो।





स्वामीज्यूको दर्शनार्थ गुल्मी फेरि व्याकुल थियो। वहाँको नाममा सामाजिक र व्यक्तिगत धेरै उद्घाटन र सत्सङ्गहरू सँगालिएका थिए। क्रमशः सबैको मनमा सन्तोष पार्दै गुल्मीका गाउँ-गाउँ घुम्ने सिलसिला शुरु भयो। एकदिन पनि कहीं कतै विश्रामको अवसर प्राप्त हुँदैनथ्यो। अनियन्त्रित यात्रा र अनुकूल भोजनको पार्वह नगर्ने बानीले विविध शारीरिक कष्ट पनि निम्त्याएको थियो, तर बिचरा ती रोगव्याधिहरूको हेरचाह नै भएन। रोगहरू आए, गए, स्वामीज्यूले तिनको कदर गरी विश्राम या उपचार गर्नतर्फ समय नै दिन पाउनुभएन। प्रारब्धानुसार आएका कष्टहरूको भोग अनिवार्य सम्झी दृढव्यक्तिले तीतो दवाई खुशीसाथ सिनिक्क पिए झैं स्वामीज्यूले पनि आइपरेका शारीरिक कष्ट कसैलाई विशेष थाहा नदिई आन्तरिक योगबलद्वारा सजिलैसँग सहन गर्दै जानुभयो। प्रायः म बिरामी छु, यो काम गर्न सक्तिन भनी आफूलाई माग्नेहरूको मन कुँड्याउनुभएन; बरु दिनमा तीन ठाउँको उद्घाटन या सत्सङ्ग पनि गर्नुभयो। तर म जान सक्तिन भनी कहीं कसैको निश्चित कार्यक्रम सकेसम्म बदल्न पनि लगाउनुभएन। यही सरलता नै थियो वहाँका सर्वप्रियताको मूल आधार पनि। ''वसुधैव कुटुम्बकम्'' को भावना लिएर हिड्ने स्वामीज्यूको परिवार अत्यन्त ठूलो र भिन्नभिन्न प्रकृतिका विविध सदस्यहरूद्वारा बनेकोले अप्ठारो पनि थियो। एकजनाले ती सबैको सधैं चित्तबुझाउनु भनेको तरवारका धारमा हिड्नु थियो। तर ''किं दुष्करं हि साधूनाम्'' अमलात्मा साधुले गर्न नसकिने कुरा पनि त केही हुँदैन।

अब देशमा शैक्षिक जागरणको लहर पनि चलेको थियो। सरकारको साधन र स्रोतको कमीले गर्दा जनताले आफै प्राथमिक, निम्न मा०वि०, र माध्यमिक विद्यालयहरूको सञ्चालन गर्नुपर्थ्यो। सबै समूहका मान्य हुनुभएकोले यहाँको नेतृत्वमा काम गर्न सबै तत्पर रहन्थे। अतः आधुनिक विद्यालयहरूको संचाल न गर्न स्वामीज्यूको सहयोग लिनेक्रम विकसित हुँदै गयो।

२०४२ सालको भदौमा गुल्मी दिब्रुङ स्थित शारदा नि०मा०वि०लाई धार्मिक कार्यद्वारा अक्षयकोष जम्मा गरी निःशुल्क अध्यापनको व्यवस्था स्वामीज्यूद्वारा भएकोले समस्त जनताले वहाँलाई भावपूर्ण अभिनन्दन समेत अर्पण गरेका थिए। यसै क्रममा स्वामीज्यूले यसै वर्षको शारदीय नवरात्रको अवसरमा गुल्मी, आँपचौरका दुर्गाभवन नि०मा०वि० को संचालनार्थ अनायास पर्याप्त अक्षयकोष जुटाइदिनुभएकाले कृतकृत्य बनेका जनताले आश्विन ९ गते भव्य समारोहका बीच स्वामीज्यूका चरणमा भावपूर्ण अभिनन्दन पत्र चढाएका थिए।

यसरी स्वामीज्यूले लोकोपकारी द्रुत-यात्रामा कहाँ कहाँ गई के के काम सम्पन्न गराउनुभयो, कसले के के सम्मान, सत्कार, स्वागत, अभिनन्दन गरे, यी सबै कुराको व्यवस्थित लेखा-जोखा गर्न एक अफीस स्वामीज्यूका साथै हिड्नुपर्थ्यो, या त आजकलका नेताहरूको जस्तो आफ्नो जीवनी आफैं बनाउने, चित्रहरू संकलन गर्ने र डायरी भर्ने महत्वाकांक्षी प्रवृत्ति स्वामीज्यूमा पनि हुनुपर्थ्यो, तर स्वामीज्यूमा कुनै प्रकारका प्रतिष्ठा बढाऊँ भन्ने खालका इच्छाहरू पटक्कै थिएनन्।

आठवर्षसम्म म्याग्दीका मुसुङ, खानी, डोले, बरंजा र सोलीघोप्टे, थामी, समेतका ठाउँहरूमा रही कठीन तपश्चर्याका साथ मानवसेवापरक कामहरूले समेत म्याग्दी मण्डलका प्राण बन्न पुग्नुभएको थियो। हुन त वाग्लुङ बिहूँले स्वामीज्यूको भौतिक जन्म प्रदान गऱ्यो भने म्याग्दी मुसुङ्ले वहाँको आध्यात्मिक द्वितीय जीवन प्रदान गऱ्यो। पछिगएर स्वामीज्यूको तेस्रो सामाजिक जीवन भने दिब्रुङको केन्द्रीयताका गुल्मीले दियो।

यसै स्थितिमा म्यादीको बाबियाचौरमा रहेको विद्यालयको सञ्चालनार्थ गरिने धान्याचलादि यज्ञमा आचार्यहरू

सहित पदार्पण गर्ने विशेष आग्रह गऱ्यो। यता बाग्लुङ जिल्लाकै सदरमुकामनेर रहेको फेदीमा एक शिवालयको स्थापना र २०४२को मंसीरमा धान्याचलको आयोजना गरिएको थियो। वहाँको समग्र म्याग्दीले भावविभोर भै भव्य स्वागत गऱ्यो। भकिम्ले, अर्वन, डाँडाखानी, डोले, मुसुङ, बराङ्जा आदि ठाउँबाट जनता खनिए। बाबियाचौरका भीरका बाबियाका जरा पनि उर्लेर आएका जनसमूहका पादाघातले खल्बलिए। सबै वर्ग र जातजातिका नरनारीहरूको अपार भीड पनि स्वामीज्यूका प्रभावले नियन्त्रित र व्यवस्थित बनेकाले सबैले यसलाई दैवी चमत्कारको रूपमा स्वीकार गरे।

यज्ञको परमानन्दीय पद्धतिका विशेषज्ञहरू बिहूँबाट पहिल्यै नै बोलाइएकाले यज्ञ-व्यवस्थापनमा कुनै कमी कमजोरी रहेन। नेपालका अरु जिल्लामा झैं नै यस जिल्लामा पनि जूवा, मदिरा र धूम्रपानका आदतमा जनता परिसकेकाले सामाजिक र शारीरिक स्वास्थ्यमा निकै नै कुप्रभाव परिसकेको थियो। यसो गर्दा लोक र परलोकको लागि हुने हानिहरू पष्ट्याई जब स्वामीज्यूले यो दुर्व्यसन छोड्ने अनुरोध गर्नुभयो तब अत्यन्त शान्त र स्तब्ध भएको जनसमूहबाट कहिल्यै पनि यस प्रकारका कुलतमा नलाग्ने कसम खाँदै स्वामीज्यूका अगाडि तासका बिटा, चुरोटका पाकेट, बिंडीका पोका, खैनीका बट्टा र कङ्कटका माटे चिलिमहरू र कतैबाट हुक्काका नलीहरू जम्मा हुन लागे। साथै हरेक क्षेत्रका नरनारीहरूले पनि मदिरापान गर्ने दुर्व्यसन तुरुन्त त्याग्ने प्रतिज्ञा गर्दै स्वामीज्यू समक्ष उपस्थित भए। यो घटना एकदम नयाँ ढंगको र ऐतिहासिक भएकोले टाढा-टाढासम्म यस घटनाको चर्चा-परिचर्चा हुँदै रहन्थ्यो। मंगल मा०वि०का यस लोकमङ्गलमय घटनाले स्वामीज्यूलाई पनि अत्यन्त प्रसन्न तुल्यायो। त्यहाँ स्वामीज्यूका आदेशले सरस्वती मन्दिरको स्थापना समेत भएको थियो। यसैबेला माथि धुरीमा रहेको आश्रमका विषयमा पनि चर्चा भएकोले स्वामीज्यूले त्यहाँ आश्रम भवन र गणेश मन्दिर बनाउने व्यवस्था पनि गरेर बाग्लुङ्को लेखानीमा माध्यमिक विद्यालय र २०१८ मा स्थापित शिवालयका संयुक्त आयोजनामा २०४२ सालको पौष ८ देखि १३ गतेसम्म आयोजित धान्याचल महायज्ञमा आउनुभयो। यो यज्ञ पनि अत्यन्त भव्यताका साथ सम्पन्न भयो।

त्यसपछि स्वामीज्यू भक्तमण्डलीका साथमा गुल्मीको दमुकामा आयोजित धान्याचलयज्ञमा पदार्पण गर्नुभयो। यों यहाँको दोस्रो धान्याचल थियो। नवनिर्मित अन्य एक पौवाको समुद्घाटन पनि यसै अवसरमा भएको थियो। अब यो शिवाश्रम झन् व्यवस्थित र गहकिलो रूपमा सञ्चालित हुन पुग्यो।

वि०सं० २०४३ (सन् १९८६) को वैशाखमा हरिद्वारमा पूर्णकुम्भ-योग परेकोले स्वामीज्यू पहाड़ र चितवन समेतका भक्तहरूका साथ हरिद्वारको कुम्भ स्नानको लागि प्रस्थान गर्नुभयो। हरिद्वारको मेलामा विभिन्न ठाउँबाट आएका साधुसन्त, विद्वान्हरूको सम्पर्क र सहवासले स्वामीज्यूलाई निकै प्रसन्न तुल्यायो।

**स्वामी सत्यप्रकाशानन्द सरस्वतीजी महाराजबाट ब्रह्मचर्य-दीक्षा ग्रहण :—**

स्वामी सत्यप्रकाशानन्द सरस्वतीजी महाराज एक उच्चकोटीका अन्तरङ्ग साधक हुनुहुन्थ्यो। वहाँले आफ्नो अन्तः साधना विद्या र वाग्वैभव कहीं कसैलाई बताउनुहुन्नथ्यो। एकदम नै अन्तःसाधनामा निरत गुप्त विद्याका धनी महात्माहरूमा अन्यतम हुनुहुन्थ्यो। विद्या, साधना र तपस्याको प्रचार नै उसका शक्तिको नाशक हो भन्ने विश्वासमा रहेका उक्त स्वामीज्यूको शील र स्वभावले यता प्रखर बुद्धिमान्, दिव्यज्ञान-सम्पन्न स्वामीज्यूलाई निकै प्रसन्न पारे। स्वामीज्यूले वहाँसंग शिष्यता प्रदान गर्ने अनुरोध गर्दा पनि वहाँले अरु महान्, विद्वान्, प्रवक्ता, योग्य स्वामीजीहरूसंग नै दीक्षा लिने सल्लाहा दिनुभयो तर गुणवेत्ता स्वामीज्यूले हजुर बराबरीको महात्मा मैले अन्यत्र कहीं पाइन भनी वहाँकै श्रीचरणमा शरण पर्नुभयो। श्रीराम र श्रीकृष्णले पनि गुरुस्थापना गरे झैं हजारौं शिष्यका गुरुले पनि यसै मर्यादाको अनुशरण गर्नुभयो।

संन्यास दीक्षा ग्रहणको क्रममा प्रेषमन्त्र अर्थात् ब्रह्मचर्य दीक्षा ग्रहण गरी गैरिकवस्त्र धारण गर्नु भयो। यसै यात्रामा बदरी केदारको दर्शन पनि भयो।

यता स्वामीज्यू र बडेस्वामीले भविष्यसम्म नेपालमा ऐतिहासिक अपूर्व कार्य गर्ने पृष्ठभूमि अन्तरङ्गरूपमा तैयार पार्नुभयो। बड़ेस्वामीजी अत्यन्त उदार तथा देश-काल, एवं अन्यविविध भेद प्रभेदबाट निकै माथि पुगेका निःस्पृह समदर्शी महात्मा हुनुहुन्थ्यो। गोसेवापूर्वक गुप्तवास तथा यात्रा गरी हाल हरिद्वारमा रहने बडेस्वामीज्यूले नेपाल जननीलाई निकै स्नेह गर्नुहुन्थ्यो। फलतः वहाँका समीपमा विशेष सहयोगीका रूपमा ब्रह्मचारी योगानन्द र अन्य नेपाली छात्रहरू रहने गर्दछन्।

एकदिन गुल्मी डाँसीकोटका छात्रहरूले आफ्नो गाउँमा खाने पानीको साह्रै ठूलो समस्या रहेको कुरा गरेको सुन्नुभयो। दयार्द्र स्वामीज्यू तत्कालै छात्रहरूसंग त्यस गाउँमा आई फलामे नालाद्वारा पानी ल्याएर समग्र ग्रामीण जनताको ठूलो उपकार गर्नु भयो। त्यसै प्रसंगमा दुबै स्वामीज्यूहरूको त्यहाँ आकस्मिक भेट भएको थियो। यही दर्शन यी दुई स्वामीजीको अमोघ सम्बन्धको कारण बन्न सक्ला भन्ने अनुमान कसैले गर्न सकेको थिएन।

जति धनको आवश्यक भएपनि बडेस्वामीज्यूले कहीं कसैसंग आफ्नो आवश्यकता जनाएको कसैले थाहा पाउनथ्यो। नजाने वहाँमा के निजी सिद्धि थियो चाहेको धन स्वयं अकस्मात् भैंजान्थ्यो। यसरी २०४३ सालले स्वामीज्यूलाई नयाँ रङ्गले रङ्ग्यायो।

२०४३ कै मार्गमहिनामा गुल्मी अर्लाङ्कोटमा गृहस्थजीवनमा रहेका पदमपाणि सापकोटा (हालको दीक्षित नाम : स्वामी पद्मानन्द सरस्वती) ज्यूलाई एकाएक वैराग्यभाव उर्ली घर छोड़ायो। वहाँ त्यागमूर्ति स्वामीज्यूको शरण लिन दिब्लुङको आश्रममा आउनुभयो र स्वामीज्यूका आज्ञाले २०४५ सालका भदौभरि दिब्लुङमा नै आई ०४८ जेष्ठ २९मा देवघाटधाममा स्वामीज्यूबाट संन्यास ग्रहण गरी हाल हरिहर संन्यास आश्रमको प्रधान अङ्गका रूपमा रहनु भएको छ।

यसभन्दापूर्व २०४३ कै वैशाखमा सराङ्निवासी श्री रविलाल अर्याल (हालको दीक्षित नाम :—स्वामी रघुनन्द सरस्वती) ज्यूका उत्कृष्ट वैराग्य देखेर रूद्रवेणीमा स्थायी पुजारीको रूपमा नियुक्त गरी जिम्मेवारीपूर्वक स्वामीज्यूले पठाउनुभयो। वहाँले पछि २०५३ को जेष्ठ २५मा स्वामीज्यूबाट रूद्रवेणीमा संन्यास लिनुभई हाल हरिहर मन्दिर देवघाटमा रहनुभएको छ।

अब यसरी २०४४ ले प्रवेश गर्‍यो। असौजको नवरात्रमा यसवर्ष स्वामीज्यूलाई चितवनले उछिनी पहाडलाई दङ् खुवायो। भरतपुर नगर पालिका वार्ड नं० ९ मा पर्ने शरद्पुरमा नर्मदेश्वर शिवालयको स्थापना स्वामीज्यूबाट भैसकेको थियो। त्यहाँ स्वामीज्यूले यसपटक देवीभागवतको प्रवचन गर्नुभयो। यस यज्ञबाट केही अर्थ संकलन भएकाले संस्था बलियो भएर चलन थाल्यो।

उता देवघाटतर्फ पनि स्वामीज्यूको शुभदृष्टि परी नै रहेको थियो। हरिद्वार स्वामीज्यूले पनि देवघाट प्रति विशेष रूचि राख्नु भएको र नेपालको मध्यवर्ती तीर्थस्थल समेत भएका कारणले मौका-मौकामा गई स्वतन्त्र जमीन जुटाउने विचार बढाइरहनुभएको थियो। चितवन र नवलपरासीवासी भक्तहरूको देवघाट नै गुरुको मूल स्थान बनाउने चाहना थियो। यसै क्रममा हाल हरिहर मन्दिर भएकै परिसरमा २०४० सालमा किनिएका केही जमीनमा २०४२ मा एक कुटी निर्माण गराई देवघाट जाँदा स्वतन्त्र रूपमा रहने व्यवस्था स्वामीजीले गराइसक्नुभएको थियो। गलेश्वर आश्रम

अन्तर्गत प्राप्त भएको जमीनमा 'रातोपौवा' नामले बनेको आश्रममा स्वामीज्यूसंग संबद्ध भक्तहरू पहिलेदेखि नै रहँदै आएका थिए। बेला-मौकामा स्वामीज्यू देवघाट आउँदा-जाँदा तराई भेगका भक्तहरूको भीड़ लाग्ने गर्दथ्यो र रातोपौवामा निकै चहल-पहल बढ़्ने गर्दथ्यो। केही दिनका लागि परमानन्द आउँदा त यस्तो रमझम छ, सधैं रहन थाल्दा कुन् रूप होला? भन्ने कल्पनामा देवघाटवासी मग्न हुन थालेका थिए।

२०४४ सालको पौष महिनादेखि नै स्वामीज्यू देवघाटमा रहन थाल्नुभएको थियो। रातो पौवा र सेतो कुटीमा निकै चहल-पहल बढेको थियो। वहाँको उपस्थितिले देवघाट धामको विकास र प्रचार हुने आशामा कल्पवासी प्रसन्न बनेका थिए।

गलेश्वर आश्रममा संस्कृत विद्यालय मन्दगतिले चलिरहेको थियो। आश्रमका अधिपति दण्डीस्वामीज्यू धेरैजसो पहाडतर्फ नै रहने हुँदा आश्रमको अपेक्षित उन्नति रोकिएकोले स्वामीज्यूलाई नै सबैले आश्रम संचालनार्थ अनुरोध गर्दै थिए। यसवर्षको माघे संक्रान्तिमा स्वामीज्यू देवघाटमै हुनुहुन्थ्यो। त्यसै समयमा विभिन्न स्थानबाट विशेष विद्वान् मनीषिहरू बोलाई विशेष परामर्शपछि वैदिक धर्म-संस्कृतिको संरक्षणार्थ ''वैदिक विद्वत् परिषद्'' स्थापना गर्नुभयो जसको संरक्षक स्वामीज्यू स्वयं हुनुहुन्थ्यो। समयान्तरमा यो संस्था विकसित भई परिष्कृत रूपमा २०४९ मा **वैदिक धर्म परिषद् नेपाल**को नामले संचालित भयो। यतिखेर यस संस्थाको केन्द्रीय कार्यालय मणिग्राम रूपन्देहीमा छ।

यसपछि स्वामीज्यूको तराइतर्फ नै ज्यादा निवास रह्यो। चितवनको भ० न० पा० :—८ गौरीगञ्जमा स्व० नन्दलाल लामिछानेद्वारा प्रदत्त जमीनमा श्रीराधाकृष्ण. मन्दिरको शिलान्यास गरिदिन र निर्देशन प्रदान गरिदिन भएको आग्रह अनुसार २०४४ को फाल्गुनमा स्वामीज्यूका करकमलबाट उक्त कार्य सम्पन्न भएको थियो। हाल यहाँ शिवालय समेत निर्मित छ।

नवलपरासी जिल्लाको नवलपुरमा पर्ने अमरापुरी गा०वि०स०को १६ नम्बर गिदाहा परिसरमा स्वामीज्यूका भक्तहरूको संख्या निकै मात्रामा थियो। उनीहरूको बारम्बारको आग्रहमा स्वामीज्यू यसै फागुनमा सत्सङ्ग दिने विचारले त्यहाँ पुग्नुभयो। प्रवचनमा शिवालयको महत्व बताउँदै एक शिवालय यहाँ पनि स्थापना हुनुपर्छ भन्ने कुरामा जोड़ दिनुभयो। सर्वसम्मति अनुसार शिवालयको स्थापना गर्न २०४४, फाल्गुन ४ गते स्वामीज्यूबाट शिलान्यास कार्य सम्पन्न भयो।

०४५ सालमा राममन्दिरको निमित्त स्वामीज्यूबाट प्रेरणा प्राप्त गरी निर्माणकार्यको प्रारम्भ, ०४५ कै, शिवारात्रिमा शिवालयको प्राण-प्रतिष्ठा, यसै वर्षको वासन्तिक नवरात्रमा श्रीराममन्दिरको प्रतिष्ठा, २०५०को पौष १८ देखि २४ सम्म श्रीराममन्दिरमा विश्वशान्ति धान्याचल महायज्ञ समेतका विभिन्न कार्य नवलपरासीको गिदहामा सम्पन्न भए। साथमा गणेश मन्दिर, पुष्पवाटिका र सन्तभवन समेत निर्मित छन्। योगी नरहरिनाथको आयोजनामा सम्पन्न भएको कोटिहोमकै नामद्वारा प्रसिद्ध मुकुन्दपुर गा० वि० स० को दुर्गामन्दिर धाम पनि स्वामीज्यूकै कृपादृष्टिबाट फूल्दै फल्दै गएको छ।

२०४५ सालको आरम्भको साथ देवघाटमा एक महान् कार्यको आयोजना भएको थियो-हरिहर संन्यास आश्रमको शिलान्यास। यस कार्यका लागि बडे स्वामीज्यूलाई हरिद्वारबाट आवाहन गर्नुभएको थियो। विभिन्न स्थानबाट आएका भक्तहरूका बृहत् समुपस्थितिमा स्वामीज्यूले आफ्ना गुरुदेवका करकमलबाट यस आश्रमको शिलान्यास गराउनुभयो। यस कार्यले तराईक्षेत्र ज्यादै प्रसन्न बन्यो। यस समयमा शिलान्यास भएको हरिहर मन्दिरको आकार-

प्रकारको चर्चाले जनताका हृदयका निकै जिज्ञासा पैदा गऱ्यो। यस मन्दिरको सम्पन्नतासम्म, एककरोड रूपैयाँस्म खर्च हुन सक्ने अनुमान लागाइएको थियो। यत्तिको रकम त्यस समयको लागि धार्मिक क्षेत्रले कहाँबाट प्राप्त गर्न सक्ला भन्ने जिज्ञासा हुनु अस्वाभाविक थिएन। स्वामीज्यूको कार्यशैली र बडेस्वामीज्यूको गंभीर उदारताको आकलन गर्दा जनता यथासमय भने अनुसारको मन्दिर तैयार भई प्रतिष्ठा हुन सकने कुरामा विश्वस्त थिए।

२०४५ मै जेष्ठमा स्वामीज्यू बाग्लुङ्तर्फका विभिन्न धार्मिक पुनर्जागरणका कार्यहरू गर्दै मार्ग महीनामा हरिचौर दर्मा पुग्नुभयो। त्यहाँ स्थित पृथ्वी मा० वि० को सम्यक्तया संचालन गर्न स्थानीय जनताहरूको सहयोग लिई श्रीभीमबहादुर गौचनको अध्यक्षतामा समिति गठन गरी यसै वर्षको मार्ग १३ देखि १८ गतेसम्म स्वामीज्यूले विशाल धान्याचल महायज्ञ सम्पन्न गर्नुभयो। समाजबाट धर्म-संस्कृतिको सम्बन्धमा आएका विविध प्रश्नहरूको सरल र यथार्थ जवाफ पाएर धर्मकार्यमा सबैको आस्था बढेको थियो।

त्यसपछि त्यस क्षेत्रमा धर्म एक नशा हुनाले समाजबाट त्यसलाई हटाउनुपर्छ भन्ने खाले विचारहरू सेलाएका थिए। यसरी जहाँ पुगेर पनि स्वामीज्यूले धार्मिक जागरणको नयाँ बिहानी ल्याई आफ्ना अमीट छाप छोडनुहुन्थ्यो।

**वैदिकधर्म परिषद्सम्म :**

रुरुक्षेत्र रिडी-नेपालको गण्डकी तटवर्ती-पञ्चमहातीर्थ मध्ये यौटा हो। कृष्णा गण्डकीमा मुहानबाट क्रमशः मुक्तिक्षेत्र, पुलहाश्रम गलेश्वर, रुरु क्षेत्ररिडी, देवघाट र नवलपरासीको वाल्मीकि आश्रम, नेरको त्रिवेणीधाम पुराणहरूमा यसको विस्तृत वर्णन छ। यहाँ एक श्रीदेवी र भूदेवी सहितको स्वयं व्यक्त भगवान् नारायणको ऋषिकेशव नामक प्राचीनमूर्ति भएको मन्दिरका साथ अन्य देवालयहरू पनि छन्। यहाँ रुरुगंगा र कृष्णा गण्डकीको पवित्र सङ्गम छ। यो गुल्मी र पाल्पा जिल्लाको साँधमा रहेको तीर्थ हो। पाल्पाका सेनवंशी राजाहरूका इष्टदेव भगवान् ऋषिकेशवका यस धाममा प्रतिवर्ष आषाढ़ शुक्ल एकादशी हरिशयनीमा ठूलो मेला लाग्दछ। धर्मावतार स्वामीज्यूबाट यस्तो क्षेत्रमा केही शुभ कार्य परमेश्वरले गराउनु थियो। त्यहाँ भक्त जनताहरूको संयुक्त आवाहनमा स्वामीज्यू २०४५ माघ महिना रुरुक्षेत्र मा नै बिताउने विचारले गुल्मीका जनसमूहका साथ रिडी पुग्नु भयो। स्वयं व्यक्त प्रभुको दर्शन गरी परमानन्द प्राप्त भयो। वहाँ गायत्री विद्यापीठ स्थापना गर्न स्वामीज्यूले वेदमाता गायत्रीको महान् उपासना प्रारम्भ गर्नुभयो। गायत्रीद्वारा लक्षहवन सम्पन्न भयो। एक-मासव्यापी यस महान् सत्संगले पाल्मा, स्याङ्जा आर्घाखाँची, गुल्मी, बाग्लुङ् र रूपन्देही चितवन सम्मबाट आएका जनतालाई विशेष आध्यात्मिक उपलब्धि प्रदान गऱ्यो। त्यहाँ भक्तहरूद्वारा गुरुदक्षिणारूपमा एकत्रित भएका धनबाट गायत्री विद्यापीठनामक संस्कृत-वेदवेदाङ्ग, विद्यालयको स्थापना भयो। जम्मा भएको सबै रकम झारझुर पारी त्यहाँ कोष खडा गरिदिएकाले यस निःस्पृहताले सबै चकित भए। यसभन्दा पूर्व यसक्षेत्रमा यज्ञ गराउने महात्माहरूले धन संग्रह गरी लैजाने गर्थे, त्यसको विपरीत स्वामीज्यूले निश्चित कोष पूरागर्न कमी भएको केही रकम साथमा ल्याएका रकमवाट प्रदान गर्नुभयो।

यसरी माघ महिना रिडीमा बिताई बिहूँ रामकोटमा आयोजित धान्यचल समेतको सप्तपुराण महायज्ञ गराउन बोलाउन गएका व्यक्तिहरूकासाथ विहूरामकोटतर्फ स्वामीज्यूको यात्रा शुरु भयो। यो महायज्ञ फागुन १ देखि ७ गते सम्मको लागि आयोजित थियो। बिहूँकै पोखरा भन्ने रामकोट समीपस्थ गाउँमा अमर मा० वि० छ। यो विद्यालय संचालन गर्न जनतालाई कठीन भएको थियो। यस समस्याको समाधान गर्न स्वामीज्यूलाई नै सबैले प्रार्थना गरिरहेका



थिए। कार्यक्रम निश्चित गरी प्रचार-प्रसारको व्यवस्था मिलाई स्वामीज्यू रिडी पाल्नुभएको थियो। अत्यन्त तीव्र गतिले बिहूँ आई स्वामीज्यूका प्रवचन आरम्भ भए। प्रवचनका प्रयासले आशातीत अर्थ संकलन गरी केही न्यूनतम अंशमात्र संस्कृत विद्यालय रामकोटलाई समर्पित गरी शेष सबै आमदानी अमर मा० वि०को संचालनार्थ प्रदान गर्नुभयो। यस कार्यक्रमको आयोजना राककोट शिवालयमा नै भएको थियो। श्रीमद्भागवत्, देवीभागवत, विष्णुपुराण, गणेशपुराण, सूर्यपुराण, शिवपुराण, स्कन्दपुराण अन्तर्गतको ब्रह्मोत्तर खण्डको योग्य विद्वान् आचार्यहरूबाट पाठ प्रवचन भएको थियो। यस्तै अनेकलोकोपकारक कार्यहरूमा अति व्यस्त रहँदा रहँदै २०४५ ले पनि बिदा लियो।

२०४६ साल शरदपुर चितवनमा 'श्री परमानन्द वेद-वेदाङ्ग, संस्कृत गुरुकुल उद्‌घाटनका साथसाथै उदायो। शरदपुरको शिवालयमा २०४६ साल वैशाख १ गते उक्त विद्यालयको उद्‌घाटन श्रीस्वामीज्यूकै बाहुलीबाट सम्पन्नभयो। जि० नवलपरासी अमरापुरी बस्ने पं० चन्द्रमणि कण्डेल उक्त विद्यालयका प्रथम अध्यापक हुनुभयो।' यता गुल्मीरूपाकोट दमुका शिवालय भन्दा केही दक्षिणमा पर्ने सोता नामक रुद्रावतीको तटमा अवस्थित पवित्र विस्तृत भूभागलाई त्यहाँका जनताले धार्मिक काममा लगाउने विचार गरी स्वामीज्यूलाई लिम गए। आषाढको २२ गते समाप्त हुने गरी तुलसीकृत रामायणको प्रवचन र राममूर्तिको प्राणप्रतिष्ठा सम्पन्न भयो। दमुका शिवालयका साथ निर्मित यस राममन्दिरले हरिहरोपासनाको अनिवार्यता पनि व्यक्ति गऱ्यो। यसै वर्षको नवरात्रमा (असौजमा)स्वामीज्यूद्वारा शरद्पुर शिवालयमा देवीभागवतको प्रवचन गरी संस्कृत विद्यालयलाई गहकिलोसेवा पुऱ्याउनु भयो।

यसरी तराइक्षेत्रमा पनि जतातत्तै व्यापक रूपमा स्वामीज्यूको प्रभाव बढ्दै गएकोले गलेश्वर आश्रमदेवघाटमा तत्कालीन पीठाधीश दण्डीस्वामी श्री १००८ आशुतोषानन्दज्यूले त्यस आश्रमको भार ग्रहण गर्न पुनः पुनः स्वामीज्यूलाई आग्रह गर्न लाग्नुभयो। पहाडतर्फ स्वयं गई स्वामीज्यूका आश्रमका प्रभावको गहन अध्ययन गरेपछि श्रीदण्डीस्वामीज्यूका अन्तःकरणले यत्तिको गहकिलो यशस्वी तथा कार्यकुशल उद्यमी साधु अब प्राप्त नहुने निधो गरी देवघाटका अन्य कल्पवासीहरू समेतको सहयोग लिई स्वामीज्यूलाई गलेश्वर आश्रम दिलाउने प्रयासमा तीव्रता ल्यायो।

यो सुनेर नवलपरासी र चितवन क्षेत्रका भक्तहरू पनि स्वामीज्यूलाई गलेश्वर आश्रम स्वीकार गर्न आग्रह गर्न थाले। यसरी सबै भेगबाट आग्रह भएकोले देवघाट जस्तो महत्त्वपूर्ण क्षेत्रको विकासगर्ने इच्छा पनि मनमा पलाउँदै गयो र स्वामीज्यूले कार्तिक २३ गते हरिबोधिनी एकादशीमा भव्य समारोहका साथसाथ उक्त आश्रमको समस्त कार्यभार स्वीकार गर्ने निर्णय लिनुभयो। यो निर्णय सबैतिर तीव्र गतिले फैलिएर अधिकार ग्रहण समारोहमा हजारौं भक्तहरूलाई उपस्थित गरायो। वैदिक विधिअनुसार भव्यसमारोहका विच आबाल ब्रह्मचारी स्वामीज्यूले दण्डीस्वामीज्यूबाट सर्व-सम्मतिले त्यस आश्रमका अभिभारा आफूमा लिनुभयो।

अब देवघाटमा त्यहाँ रहने केही अवकाश प्राप्त न्यायधीशहरू श्रीगोपीकृष्ण त्रिपाठी र श्रीपीताम्बर पुडासैनी समेतका सहयोगले देवघाटमा विकासको लहर ल्यायो। केही वर्ष भित्रै देवघाटको कायाकल्प भयो। बिजुली, पानी, बाटो आदि प्रत्येक विषयमा ध्यान गयो। अन्नक्षेत्र विद्यालय आदिको व्यवस्थामा आमूल परिवर्तन भयो। अतिथिसेवामा देवघाट गलेश्वर आश्रमले ठूलो ख्याति प्राप्त गऱ्यो। कुनै पनि समयमा आउने यात्रीहरूलाई उत्तम भोजनको व्यवस्था सुलभ भयो। यसरी आशातीत सुविधा प्राप्त गराएकाले देवघाट का कल्पवासी नरनारीको अनन्त शुभ-कामना स्वामीज्यूलाई प्राप्त भयो। अनाथ दशामा तीर्थवास गर्न आएका सज्जनवृन्दको शुभ-कामनाका प्रतापले स्वामीज्यूको कीर्तिपताका झन् झन् फहरिँदै गयो।

भरतपुर नगरपालिका ६ स्थित चिसापानी भन्ने ठाउँमा " बोलबम कावरिया" सेवा खोली भक्तहरूले साउनमा भगवान् शिवलाई जल चढाउन जाने गर्थे। यसरी प्रसन्न भएका भगवान्ले शिवालय बनाउने प्रेरणाप्रदान गर्नु भयो। यस मन्दिरको निर्माण र संचालन निम्ति स्वामीज्यूलाई त्यहाँको धर्ममा जागरुक समाजले प्रार्थना गर्‍यो। स्वामीज्यूले कृपा पूर्वक ०४६ को हिउँदमा धान्याचल समेतको यज्ञ संचालन गरी पशुपतिनाथ शिवालय बनाउने निर्देशन प्रदान गर्नुभएका ले त्यसै अनुसार त्यहाँका समाजले काम गर्न थाल्यो। चितवनको सदरमुकाम भरतपुर निकटमा रहेको चिसापानीमा आयोजित कार्यक्रम स्वामीज्यूका प्रतापले सफल भयो। यस यज्ञका एकत्रित धनले मन्दिर निर्माणको कार्य थालियो।

गलेश्वर आश्रम स्वीकार गरे पछि स्वामीज्यूको धेरै समय चितवन तर्फ नै बित्नलाग्यो। ज्यामिरघाट बलेवा बाग्लुङ्मा रहेको विद्यालय ठीकसंग चल्न नसकेकाले यो विद्यालय दमेकमा सार्ने लक्ष्यले त्यहाँका भक्तहरूका प्रयासले २०४७ माघमा दमेक बिराउनेमा एक धान्याचल महायज्ञको आयोजना भयो। स्वामीज्यू त्यहाँ गई महायज्ञ सम्पन्न गरी हरिहर मन्दिरको स्थापना गरी त्यस ठाउँको नाम परिवर्तन गरी शिवपुरी राखी संस्कृतविद्यालयको उद्घाटन-गरी दिब्रुङतर्फ फिर्ता हुनु भयो।

स्वामीज्यूको प्रार्थनामा २०४८ सालको जेठमा बड़ेस्वामीज्यू हरिद्वारबाट देवघाटमा आउनु भयो। स्वामीज्यूले संन्यास लिने इच्छा गरेपछि स्वामीज्यूबाट संन्यास धारण गर्ने धेरै नरनारीहरू तैयार भए। गलेश्वर आश्रममा ०४८जेठ २९ गते संन्यास दीक्षा ग्रहणको भव्य समारोहको आयोजना भयो जसमा स्वामीज्यू र हरिहरानन्द गरी केवल दुईजनालाई बेडस्वामीले संन्यास आश्रममा प्रवेश दिनु भयो भने बड़े स्वामीज्यूको आज्ञाले स्वामीज्यूले धेरै जनालाई संन्यास प्रदान गर्नु भयो। यसरी देवघाट धाममा प्रथम भव्य संन्यास ग्रहण समारोह सम्पन्न भयो।

यसै सालको फागुन शिवरात्रीका अवसरमा अमरापुरी गिदाहामा स्वामीज्यूको निर्देशनद्वारा निर्माण गरिएको शिवालय प्रतिष्ठा महोत्सव सम्पन्न गराई त्यस क्षेत्रमा ठूलो उपकार गर्नु भयो।

०४९ को फागुनमा मणिग्राम रूपन्देहीमा सहस्रचण्डी समेतको महान् यज्ञको अवसरमा २०४४ मा स्वामीज्यूकै संरक्षणमा देवघाटमा गठित 'वैदिक विद्वत् परिषद्' को नाममा आंशिक परिर्वतन सहित 'वैदिक धर्म परिषद् नेपाल' यस नामले आरम्भ भयो। यसको सारा श्रेय स्वामीज्यूमै थियो तापनि मणिग्राम गीर्वाण सं० मा० वि० मा भएका यस समारोहमा साक्षात् स्वामीज्यूको समुपस्थिति अस्वस्थताका कारणले हुन सकेन तथापि आफ्नो प्रतिनिधिद्वारा परिषद्प्रति आफ्नो शुभकामना पठाई कार्यकर्ताहरूको साहस बढाउनु भएको थियो। यसै अवसरमा परिषद्ले वहाँलाई प्रथम प्रधान संरक्षकका रूपमा स्वीकृत गर्‍यो।

नेपाल सन्त समाज पनि स्वामीज्यूलाई अध्यक्ष बनाई कृतकृत्य बन्यो। अन्य धार्मिक संघ-संस्थाहरूले पनि स्वामीज्यूलाई संरक्षक एवं अध्यक्ष बनाई कृत्यकृत्यताको अनुभूति गरेका थिए।

वैदिक धर्मको मूल मर्यादाको सम्बन्धमा स्वामीज्यू कहित्यै सम्झौतावादी रहनुभएन। वर्ण र आश्रमको वैदिक मर्यादा स्वामीज्यूको लागि सधैं अनुकरणीय रह्यो। वास्तवमा वैदिक धर्मकै पुनरुद्धार निमित्ति नै परमात्माले वहाँलाई पृथ्वी तलमा उतार्नु भएको थियो। स्वामीज्यूले यसै कारणले वैदिक मर्यादामा विशेष योगदान दिनु भयो।

**देवघाट धाम हरिहर मन्दिरको समुद्घाटन समारोह :**

२०४५ वैशाख शुक्ल अक्षयतृतीयामा शिलान्यास भई थालिएको हरिहर मन्दिरको निर्माण कार्य अखण्ड

रूपमा चलिरहेको थियो भने उता स्वामीज्यूको स्वास्थ्यमा शिथिलता आइरहेको थियो। समय-समयमा हरिद्वार निवासी परमगुरु स्वामीज्यूका माध्यमबाट छड, सिमेन्ट आदि निर्माण सामग्री प्राप्त भइरहेको भए पनि अन्य विविध खर्चको तर्जुमा गर्न स्वामीज्यूले निकै प्रयासरत रहनु परिरहेको थियो। आजसम्म भएका निर्माण र यस मन्दिरको निर्माणमा धेरै फरक थियो। पूर्व निर्माणहरू सम्बन्धित स्थानीय व्यक्ति या समितिद्वारा सम्पन्न हुन्थे, स्वामीज्यूका केवल संकल्प, निर्देश र संयोजन मात्र रहन्थे। यहाँ त संकल्प, निर्देश र संयोजनका साथ अर्थ संकलन, संरक्षण, विनियोजन, व्यवस्थापन समेतका सबै जिम्मेवारीहरू स्वामीज्यूमै आइपरेका थिए। यस निर्माणको एक अन्य विशेषतापनि थियो। यस पटक स्वामीज्यूलाई प्रयोज्य बनेर काम गर्नु आवश्यक थियो, किनकि प्रयोजक पद हरिद्वार स्वामीमा नै रहन दिने सदिच्छा थियो। ''परम स्वतन्त्र शिर पर नहीं कोऊ'' वाला स्थिति अहिले थिएन। आजसम्म भएका विकास-निर्माणका कार्यमा यस्तो अवसर प्राप्त भएको थिएन। निर्माण सम्बन्धी विभिन्न साधन र स्रोतको कमी भएको त्यस्तो ठाउँमा पनि स्वामीज्यूका अथक प्रयासद्वारा आवश्यक सामाग्री जुटे। निर्माण कार्य द्रुतगतिमा चलि नै रह्यो।

श्रीस्वामीज्यूका करकमलबाट गैंडाकोट-७ शीतलनगरमा २०४४ साल चैत १२ गते हरिहर मन्दिरको शिलान्यास भयो। पछि त्यहाँ स्वामीज्यूको अध्यक्षतामा २०५० पौष २२ देखि २८ गतेसम्म विशाल धान्याचल महायज्ञको आयोजना भयो। यसै महायज्ञका अवशेषबाट भजन, कीर्तन र प्रवचन आदि धार्मिक कार्य गर्ने हल समेत भएको हरिहर मन्दिरको निर्माण भयो। यसरी नै स्वामीज्यूको लोकोपकारमै समय बित्दै गयो।

२०४६ चैतदेखि आएका बहुदलीय व्यवस्था अन्तर्गत रहेका राजनैतिक दलहरूले हिन्दू धर्म र हिन्दू राष्ट्रको कुरा उठाई परस्पर विरुद्ध वक्तव्य प्रति वक्तव्यहरू समेत छिटेकाले पनि स्वामीज्यूको धर्म र राष्ट्रियता प्रति अति संवेदनशील मस्तिष्कलाई धेरै काम गर्न परिरहेको थियो। ०४७ सालको संविधान सुधार आयोगलाई हिन्दू राष्ट्र यथावत् राख्न आफ्ना आश्रमका शाखा प्रशाखा सहित देशका विविध धार्मिक संस्थाहरूलाई सक्रिय पार्नु पर्ने कामले पनि शारीरिक श्रम भई बौद्धिक भार बढेको थियो। यसप्रकार हाम्रो राष्ट्र संस्कृति, धर्म र समाजको लागि, नडराईकन भनौं भने, स्वामीज्यूले शरीर र मस्तिष्क प्रति घोर अन्याय बढाउँदै जानुभएको थियो, तर पनि वहाँका मनोबल, साहस या उत्साहमा केही कमी आएन। उनै सधैंका जस्ता शीतल वचन, उनै सबैका प्रति अविशेष दृष्टिहरू, उनै श्रमशीलता र प्रवचन, उनै बातचित र उठ-बसका शैलीहरू रहे, केही परिवर्तन आउन पाएन। एकक्षण पनि न त शरीरले नै न त मस्तिष्कले नै विश्राम पायो। तर ''**चरैवेति चरैवेति**''—हिंड, हिंड, हिंड्दैरह, ''**गच्छन् वै मधु विन्दति**''—हिंड्दै रहनेले नै मीठो मह फेला पार्दछ, जहाँको तहाँ पसारिइरहने लुम्राले होइन'' इत्यादि वेदवाणी जसका मस्तिष्कमा सदा नाचिरहन्थे त्यो महापुरुष शरीर-पिंजराबाट चेतन पंछी नउडुन्जेल कसरी हात-खुट्टा खुम्च्याएर बस्न सक्थ्यो? उता शरीरमा लागेका रोगहरूले पनि आफ्नो काम गर्दै रहे यता धीर गम्भीर महात्माले पनि आफ्ना दैनिक र सामाजिक कामहरूबाट विश्राम लिन मान्नु भएन। मानों मनोबल र शरीरबल आपसमा जीत-हारको अन्तिम लडाइँ लडिरहेका थिए। यो क्रम जीवनको अन्तिम क्षण सम्म यो अखण्ड लडाइँ चलि नै रह्यो।

डाक्टर आए, वैद्य आए, अनुभवी आए, साधु-सन्त-महन्त आए, एकान्तमा आराम र वाग्विरामको प्रस्ताव सामु राखे। आए, गए, तर यहाँ चलिआएको उही पुरानो सर्वोपकारी प्रक्रिया प्रचलित नै रह्यो। हितैषी साहसीहरू सामु आएर





भने—चलिआएको यो रङ्ग–ढङ्ग भङ्ग न गर्ने हो भने जीवन–भङ्गको खतरा छ। यताबाट तुरुन्तै जवाफ सहित प्रश्न थपियो—"त्यो खतरा केही नगरीकन बसे पनि छ, आराम र वाग्विरामको परिपूर्ण पालन गर्नेहरू के त्यसबाट जोगिन सकेका छन् ?"

०४९ र ०५० का वर्षहरूमा निकै तेजीसाथ हरिहर मन्दिर निर्माणको काम चल्यो, झन् ०५० को वर्षले हरिहर मन्दिरलाई संगमरमरद्वारा चमचम पार्न लाग्यो। जसरी काम तीव्रसाथ चालू थियो, त्यसरी नै स्वामीज्यूका शारीरिक र मानसिक क्रियाकलापहरू पनि चलिरहेका थिए।

प्रतिदिन हज्जारौंको संकलन र वितरण भइरहेको थियो। जाँतो पिसाइ थियो त्यहाँ; माथिबाट ओइरो राखिँदै गइएको हुन्थ्यो; तलबाट पैरो चलिरहेको हुन्थ्यो, एकछिन चारो नपाए जाँताका तीव्र घुमाइले आफ्नै तल्ला–माथिल्ला (गर्ने र गराउने) का दाँत फुकालिदिन्थ्यो। चालु मशीन बन्द गरे फेरि चलाउन गाह्रो, चलाइ–राख्न त्यसको खाद्य पदार्थ दिइरहन सक्नु पर्‍यो; यही अप्ठ्यारो थियो यहाँको यस निर्माण कार्यमा।

अन्यत्र स्वामीज्यूले समाजका काम गराउनु हुन्थ्यो भने यहाँ गुरु आज्ञामा रही आफ्नै गुरु आश्रमको काम गर्दै हुनुहुन्थ्यो।

भारतबाट हरिहर भगवान्‌का साथ सबै प्रसिद्ध देवताका २४ वटा मूर्तिहरू देवघाटमा प्रतिष्ठा निम्ति आइसकेका थिए। हरिद्वार स्वामीज्यू अनेक विद्वान्‌हरूका साथ ठीक समयमा देवघाट आइपुग्नु भयो। यसरी प्रतीक्षित प्रतिष्ठा पूरा हुने वातावरणको अध्ययनले प्रत्येक नरनारी प्रसन्न बने।

भगवान् हरिहरको शुभागमनमा देवघाटकी मङ्गलमय मधुर प्रकृतिले विशेष सुसज्जित मनोहर रूप ग्रहण गरिन्। परमगुरुवरको गंभीर मनमोहक र उदार दृष्टि, स्वामीज्यूको सावधानी सहितको कार्यव्यवस्थापन शैलीले प्रतिष्ठा महोत्सव महिमामय बन्नुकासाथै देवघाटका पूरै कल्पवासी समाज सहित स्वामीज्यूले जुन्–जुन् ठाउँमा पुगी आफ्ना दिव्य सन्देशहरूद्वारा भक्तहरूका मन जित्नुभएको थियो ती ठाउँका सम्पूर्ण भक्तहरूको अवर्णनीय सहयोगले यो महोत्सव सुसम्पन्न भयो।

आचार्य जगन्नाथका प्रधान आचार्यत्वमा भएका यस प्रतिष्ठा समारोहमा देव–आवाहन र मन्दिरको समुद्घाटन गर्ने काम परमगुरुवर श्रद्धेय हरिद्वारस्वामीज्यूबाट नै भयो। यसरी २०५० साल आश्विन शारदीय नवरात्रको शुक्ल पञ्चमीका दिन शुभ–मुहूर्तमा देवमूर्तिहरूको प्रतिष्ठा कार्य वैदिक विधि अनुसार शान्ति तथा उल्लासमय वातावरणमा सुसम्पन्न भयो।

## बराङ्जामा रोकहा रोकाहा र थापा थाहपा भए :—

यसै वर्षको मंसीरले फेरि एकपटक उही म्याग्दीको महिमामय माइतीभूमिको बराङ्जाले स्वामीज्यूलाई बोलायो। म्याग्दीका उपल्लाभेगको यो यात्रा स्वामीज्यूका यस जीवनमा अन्तिम रह्यो। बराङ्जा अर्वाङ् गा.वि.स.–४ मा २०१६ सालमा स्थापित 'श्रीमहेन्द्र रत्न मा.वि.' थियो। त्यसको र त्यही वार्ड नं. ८, दुर्लीको स्वामीज्यूद्वारा संस्थापित शिवालयको सहयोगार्थ २०५० मार्ग २७ देखि पौष ४ सम्म धान्याचल महायज्ञ सम्पन्न भयो। एक पटक म्याग्दी फेरि आफ्ना प्रियतम स्वामीज्यूको नेतृत्वमा एकता र सौहार्दको उदाहरण बन्यो। अति कमजोर स्वास्थ्यको केही परवाह नगरी दुर्गम पैदल बाटो पार गरी आएका स्वामीज्यूलाई त्यहाँका नरनारीका अनन्त भक्तिभावमय चेहराका श्रद्धापूर्ण आँखाहरू

निरन्तर पिएर पनि थाकिरहेका थिएनन्। मार्ग २७ का दिन स्वामीज्यूकै श्रीकरकमलबाट उद्घाटित त्यस महायज्ञको पौष ४ गते स्वामीज्यूबाटै पूर्णाहुति पनि भएको थियो।

अन्तिम दिन स्वामीज्यूले त्यहाँ केही भिक्षा पनि माग्नुभयो, त्यो भिक्षा थियो-धूम्रपान त्याग। स्वामीज्यूका प्रवचन अटूटरूपमा सुन्न इच्छा हुँदा-हुँदै पनि श्रोतालाई बीच-बीचमा छोडी हिंड्न बाध्य गराउने एकमात्र शत्रु थियो धूम्रपानको अम्मल। प्रवचनको बीचमा बिचारा अम्मलीहरूले अम्मल तान्न पाउँदैनथे र बीच-बीचमा अमृतमय प्रवचन छाडी मृत्युमय धूम्रपान गर्न निस्कनुपर्थ्यो। अम्मलको तल-तलले सबैको स्वास्थ्य तलतल झारिरहेको थियो। जब स्वामीज्यूले—"यति टाढाबाट स्वास्थ्य ठीक नरहँदा-नरहँदै पनि बडो कष्टले यहाँ आई सकी-नसकी तपाइँहरूलाई प्रवचन सुनाइरहेको छु; यस परिश्रमको केही दक्षिणा पनि त लिन पर्‍यो," भनी दक्षिणाको माग राख्नुभयो, तब एक छिन कुरो नबुझी त्यो विशाल सभा अल्मलियो। पछि स्वामीज्यूले स्पष्ट भन्नुभयो—"तपाइँहरूलाई यो धूवाँको अम्मल खान तलतल लाग्छ भने मलाई यो सबैको स्वास्थ्यनाशक पर्दा हटाउन तलतल लागेको छ। आजसम्म तपाइँहरूले तलतल मेट्नु भयो, अब मेरो तलतल मेटिदिनुहोस्।" यत्ति नै के भन्नुभएको थियो—सैकडौंका खल्ती, गोजी, पाकेट पेटारा, खादी, खोकिला, पटुका, घलेकी आदिबाट निस्केका कङ्कट, चिलिम, काँचोपात, झुलो, चकमक, बिंडीका पोका, चुरोटका पाल्टा र खैनीका डिब्बाहरू दनादन प्रवक्ताको अघिल्तिर थुप्रो लागे। सर्वप्रथम त्यहाँका कर्ता-धर्ता रहेका रोकाहा र थापा आदि थरका मानिसहरू हर्षोल्लासले रमाएका सुरम्य मुखबाट धूम्रपान त्यागको घोषणा गरे। अरुले उनीहरूकै अनुकरण गर्दै गए। सबभन्दा आश्चर्य त तब भयो जब सुल्फा सेलाउनै नदिने एक स्थानीय लगभग ६० वर्षकी महिलाले आजीवन धूम्रपान नगर्ने गौरवपूर्ण प्रतिज्ञा सुनाइन्। यसरी त्यहाँ रोकहाहरू स्वास्थ्यनाशक धूम्रपानको कुप्रवृत्ति रोकाई रोकाहा बने भने स्वास्थ्य रक्षानिम्ति के छोड्नपर्छ भन्ने कुरा यथार्थ थाहा पाई थापाहरू थाहापा बने। यसरी पिढी-दरपिंढी चली आएको वंशगत अम्मली विषाक्त महारोगको भिक्षा लिई दुनियाँको दुःख-दर्द शान्त गर्न महाविषपान गरी नीलकण्ठ बन्ने भगवान् महादेवका आदर्श चरित्रको अनुकरण गर्नुभयो। यो एक उदाहरण मात्र हो। यस्तै कति-कति ठाउँमा अद्भुत चमत्कारी ढंगले दुर्व्यसन रूपी महारोगको फन्दामा फँसी त्रस्त मानवतालाई अभयदान दिनुभएको छ।

बराङ्जाबाट मुसुङ्का आश्रमको र थामी (सोलीघोप्टे)का धुरी को सोधखोज गरी म्याग्दी का माथिल्ला भागको अन्तिम यात्रा पूरा गर्नुभयो।

यसरी म्याग्दीको शिरोभागबाट बिदा लिंदै बेनी (म्याग्दीको सदरमुकाम)को बाटो गलेश्वरमा गल्दै गएका वैदिक धर्म-समन्वयलाई दह्‍याउँदै देवघाट फिर्ता हुनुभयो।

**अमरापुरी राममन्दिरमा रामकथा :—**

बराङ्जाबाट आएर देवघाटको नवप्रतिष्ठित मन्दिरको व्यवस्थापनमा केही समय प्रदान गरी नवलपरासी अमरापुरी गिदाहा-६ श्रीराममन्दिरमा पौष १८ देखि २४ गतेसम्म हुने धान्याचल महायज्ञमा सम्मिलित भई श्रीरामचरित्रको आध्यात्मिक वर्णन प्रस्तुत गर्नुभयो।

अमरापुरी गिदाहा समय समयका स्वामीज्यूका प्रवचनका प्रभावले शिवमन्दिर, राममन्दिर, गणेशमन्दिर आदिको स्थापना र सञ्चालनले वैदिक धर्म र संस्कृतिको संरक्षक बन्दै १६ र १७ नंबरबाट पछि फर्केर आज १

नंबरको धार्मिक र सात्त्विक गाउँको रूपमा आएको छ। अहिले उक्त राममन्दिरको रेखदेख श्री कुलानन्द वानप्रस्थीले गर्नुभएको छ।

२०५० को पौषमा स्वामीज्यूको संरक्षकत्वमा चितवन शरदपुर मा.वि. को निर्माणार्थ त्यहाँको समाजले एक धान्याचल महायज्ञको समायोजना गऱ्यो। त्यहाँ मुख्य प्रवक्ताको पदमा रही स्वामीज्यूले धर्म, संस्कृति र शिक्षाको उद्देश्य बारे विशद व्याख्यान गर्नुभयो। यसरी स्वधर्म संस्कृतिको सम्यक् ज्ञानका अभावले अल्मलिएका आधुनिक स्कूल, कलेज समेतमा गई धर्मको मर्म बताई नास्तिकलाई आस्तिक र आस्तिकलाई विशेष श्रद्धालु बनाउनुभयो।

यज्ञद्वारा बराङ्जामा विद्यालयको निम्ति पर्याप्त सहयोग जुटेकोले अरू शिक्षणसंस्थाहरूले पनि स्वामीज्यूलाई बोलाउने मनसाय लिन लागे। देवघाट फर्कंदा बेनीका जयन्ती मा.वि. ले आगामी वर्ष यहीं आई धान्याचल गराउने वचन फुकाल्न क-कसरी समर्थ भएको रहेछ। यसै कारण २०५१ को मार्ग ८ बाट १३ गते सम्म म्याग्दीको सदरमुकाम बेनीको जयन्ती मा.वि. मा शिक्षाको विकासार्थ धर्म र शिक्षाको सेवामा वीर क्याप्टेन वीर बहादुर रोकहाको अध्यक्षतामा भएको महायज्ञ सम्पन्न गर्दै उक्त मा.वि. मा आफ्ना उत्तम प्रवचनद्वारा सनातन वैदिक धर्मको विजय-वैजयन्ती फहराउनुभयो।

यस वर्ष माथि मुसुङ् भकिम्ले जान समय र सामर्थ्य दुवै नरहेकाले त्यहींबाट मेघाद्रि (म्याग्दी) का ती तपः पूत पर्वतहरूलाई अन्तिम नमन गर्दै भकिम्ले गा.वि.स.-४ स्थित मुसुङ् आश्रममा यसै सालको आगामी पौष ११ गतेमा गणेश मन्दिरको शिलान्यास र त्यसै दिन त्यसै भकिम्ले-५ मा शिवमन्दिरको शिलान्यास समेतको कार्यक्रमको निर्देशन दिई त्यहींबाट फेरि यता यस रूपमा नफर्कने स्थितिको बोध भएकाले म्याग्दीका ती आफ्ना आरम्भिक तपोमय जीवनका आधारभूत तपोभूमि देवतात्मा गिरि शिखरहरूलाई अन्तिम नमन गरी देवघाटमा फिर्ता हुनुभयो।

## गलेश्वर धाममा एकात्मक उपासनाको आह्वान :

म्याग्दीको सुप्रसिद्ध तीर्थ पुलस्त्य-पुलहाश्रम गलेश्वरधामका भक्तहरूले—"स्वामीज्यू! यसका प्राचीन शिवालय समेत यस क्षेत्रको रेखदेख गरिदिनुहुन सविनय निवेदन चढाउँछौं, हजुरको शुभ-दृष्टिले देवघाटको हरिहरक्षेत्रको रूपमा कायाकल्प भयो; त्यसै रूपमा विकसित हुनुपर्ने त्यस्तै महत्वपूर्ण यस तीर्थ क्षेत्रको विविध कारणबाट हामीले विकास गर्न सकेका छैनौं, यहाँ हामी बेला-बेला शैव र वैष्णव बनेर बम्किने पनि गरेका छौं। हामीलाई वैदिक धर्मका मूल स्वरूपको यथार्थ ज्ञान छैन। हजूरको सर्वप्रिय-समन्वयात्मक शीलको सर्वत्र फैलिएका सुगन्धले हामीलाई पनि लोभ्याएको छ। हजूरकी माताको स्वप्न अनुसार यसै गलेश्वर धाममा आई मातापिताले शतबीजरोपण गरेपछि मात्र हजूरको जन्म भएको कुरा बूढापाकाबाट सुन्न पाउँदा हामी आशान्वित छौं। हजूरलाई ज्ञान दिने म्याग्दी (मेघाद्रि) जिल्ला अज्ञानका अँध्यारोमा नपरोस्। यस क्षेत्रको विकास गरिदिनुहोस्" भनी अर्जी चढाएका थिए। केही क्षण बाटैमा रोकिई स्वामीज्यूबाट यस्तो मर्जी भएको थियो—

यो तीर्थ भगवान् शङ्करको क्षेत्र भएकोले यहाँ पुरानो शिवशक्तिपीठ छँदैछ। अतः भगवान्का कृपाले यस क्षेत्रको आवश्यक विकास हुनेछ। हाल मेरो स्वास्थ्य निकै बिग्रेकाले तीर्थयात्राकै क्रममा भेलोरसम्म पुगी केही डाक्टरहरूको परामर्श लिन भक्तहरूले आग्रह गरेका छन्। म तुरुन्तै भारत जाँदै छु। भोलि के कसो हुँदै जाने हो, तपाईंहरूले भने झैं नै यस शरीरको आरम्भ देखि नै यस धामसंग मेरो सम्बन्ध रही आएको छ। म फेरि फर्केर यहाँ आउन



नसके पनि एकरूप बनी सबैले यस शालिग्राम चक्रशिलामा अवस्थित गलेश्वर महादेव र भगवान् राधाकृष्णको सेवा आराधना गर्नुहुनेछ। भगवान्ले हजूर–हामीका सत्सङ्कल्पलाई छिटै पूरा गर्नुहुनेछ।

'यति भन्दै स्वामीज्यू सबैलाई वरदहस्तले स्पर्श गरी आशीर्वादका धाराले सबैका हृदयलाई सेचन गर्दै देवघाटतर्फ प्रस्थान गर्नुभयो।

म्याग्दीबाट देवघाट आई हरिहर प्रभुको दर्शन गरी केही समयपछि दक्षिण भारतको आन्ध्रप्रदेश स्थित भेलोर तर्फ २०३८ देखि नै स्वामीज्यूको सेवामा समर्पित ब्रह्मचारी रविचैतन्य तथा ऋषिराम खरेल (सराङनिवासी) का साथ स्वास्थ्य परीक्षण गराउन जानुभयो। शुभ या अशुभ प्रारब्धकर्मको फलभोग अनिवार्य भएकोले उपचार–यात्रा नगरौं भनी स्वामीज्यूले निकै प्रयास गर्नुभए तापनि यहाँ स्वामीज्यू पराजित पक्षमा र भक्तहरू विजयी पक्षमा परेका थिए। केही तीर्थहरूको दर्शन समेत होला भन्ने आशा राखी निर्लेप भावले भेलोर यात्रा गर्नुभएको थियो। वहाँका डाक्टरहरूले अत्यन्त प्रेम र श्रद्धाका साथ परीक्षण पूरा गरी केही उपचार आरम्भ गरेर लामो समयसम्म रही उपचार गर्दै रहेमा मात्र अपेक्षित लाभ हुन सक्ने विचार प्रकट गरे। केही दिन उपचार चल्यो। उता स्वामीज्यूलाई लिएर जाने भक्तहरूको स्वामीज्यू कसरी स्वस्थ बन्नुहोला भन्ने तर्फ विशेष ध्यान थियो भने यता स्वामीज्यूको मनमा भने अर्कै खालको छट्पटी बढ्न लाग्यो। नवलपरासीको कावासोती र गुल्मी चोरकाटेमा यसै पौषका उत्तरार्धमा आउन दिएका बचनहरू झुट्टा हुने भए भन्ने चिन्ता बढ्यो। अस्पतालमा नै आफ्ना सेवकहरूसंग भन्न लाग्नुभयो—''यो शरीर त जत्ति जे गरे पनि आखीर ढलेर नै छाड्छ। तर आजसम्म आउँछु भनी वचन दिएका ठाउँमा निराश पारेको थिइन। उपचार जति भयो–भयो, फेरि गर्दै रहौंला, उतै पनि गर्न सकिन्छ। अब छिटै फर्कौं। एकदिन भएपनि कावासोतीमा गई हाजिरी दिई सरासर चोरकाटे जान अति आवश्यक छ। मैरै आवाहनबाट खेमराज केशव शरण समेतका विद्वान्हरू त्यहाँ आउनुहुने भएको छ। म नपुग्दा धैरैलाई कष्ट हुनेछ, छिटै जाऔं।''

के गरून् भक्तहरू, फर्कने व्यवस्था मिलाई स्वामीज्यूलाई लिएर फर्की कावासोतीमा केही समय प्रवचन गराई त्यस ठाउँका समाजलाई कृतकृत्य पारी जनता माध्यमिक विद्यालयको उत्थान गर्ने स्वामीज्यूलाई सीधै गुल्मी, जोहाङ चोरकाटेको यज्ञस्थलमा पुऱ्याए।

भारतको लामो यात्रा, रुग्ण देह, जाडाको समय, फेरि पाहाडको यात्रा, आदिले गर्दा स्वामीज्यूलाई निकै कष्ट भएको थियो। तर केही पर्वाह नगरी एक्कासी भेलोरबाट कहीं केही आराम नगरी उपचार क्रमलाई बीचैमा तोडी गुल्मी गाउँमा पुग्नु भनेको जो सुकैले गर्न त टाढै रहोस् आँट्न पनि नसकिने काम हो तर उच्चतर मनोबलका सामू शरीर बल नरहनुले केही फरक पार्दो रहेनछ।

### चोरकाटेको नयाँ न्वारानः परमानन्द नगर—

गुल्मी स्वामीज्यूको स्वास्थ्यका स्थितिले निकै मर्माहत थियो। बाहिर प्रचारमा आउनुहुन्छ भन्न बाध्य भएं पनि भेलोरमा थालिएको जीर्ण रोगको उपचार क्रम त्यत्तिकै अलपत्रै पारेर यहाँ आउन सक्नुहोला भन्ने कसैका मनले ठानेको थिएन। एकाएक स्वामीज्यूलाई पाउँदा उर्लेका हर्ष, उत्साह र साहसका त्रिवेणीमा डुबुल्की मारेका भक्त जनताले एकछिन त हामी कहाँ छौं र को हौं ? को होस पनि पाएनन्। यस्तै हुन्छ असम्भव पनि सम्भव हुँदा मानव–मनको स्थिति।





चोरकाटेकी कान्छी भनी चिनिने समाज सेविका शिक्षाप्रेमी सुवर्ण ज्वाहार्चनको पनि त्यस विद्यालयको विकासमा निकै चासो रहँदै आएको थियो। विद्यालयकै विकास निम्ति त्यहाँ यो धार्मिक आयोजना गरिएको थियो। ती महिला समेतका महिलासमाजको पनि मन गद्गद भएर आँखाबाट भूइँमा ओर्लेको थियो। संक्षेपमा भन्दा स्वामी परमानन्दका साथ परम आनन्दको महासागर आफ्नी प्रेयसी रुद्रावती (बडिगाड) भेट्न गुल्मीको दुर्गम पहाड चढेको थियो। प्रियसङ्गममा आइपर्ने पीरबाधाको पर्वाह गर्ने त प्रिय नै भएन। यसैले त त्यस अत्यन्त सफल अद्भुत मनोहर महायज्ञका चरमदिवसमा परम आनन्द दिने स्वामी परमानन्दज्यूकै नामबाट त्यस ठाउँलाई 'परमानन्दनगर' नाम दिने सर्वसम्मत निर्णय सार्वजनिक गरियो।

वास्तवमा भक्तिभावमय ललित भागवतकथाका विख्यात वक्ता आचार्य खेमराज समेतका साथ स्वामीज्यूका माधुरिमामय मनोहर माङ्गलिक सदुपदेशका तीक्ष्ण धारले श्रद्धा र विश्वासको अचानामा हरेक मनमा रहने काम, क्रोध-लोभ, मोह, मद र मात्सर्य नामका ६ वटा चोर काटिएर चोक्टा चोक्टा भएका थिए। यी चोरले उसै घरमा आएर इन्द्रियहरूलाई हात लिई मूल आत्मा स्वरूप सम्पत्ती हिनामिना गरिरहेका थिए। त्यसैले त्यहाँ आनन्द थिएन। अब यी चोर काटिइसकेपछि परमानन्दको प्रकाश स्वतः स्फुरित हुन आएकाले चोरकाटेले परमानन्द नगर हुन पाएको हो।

धेरै भाग्यवान्ले स्वामीज्यूका जीवनको यो अन्तिम पर्वतीय महान् महोत्सव देख्ने सुअवसर पाए। यो महायज्ञ २०५१ पौष २१ गतेदेखि २७ गतेसम्ममा सम्पन्न भयो।

**भक्त समूहका साथ भव्य तीर्थयात्रा—**

वि.सं. २०५१ सालको फागुनमा स्वामीज्यू रिजर्व बसद्वारा तीर्थयात्रामा निस्कनुभयो। यो यात्रा लगभग ५० दिनमा पूरा भएको थियो। दुई बस भरी स्वामीज्यू साथ गएका तीर्थयात्रीहरूमा ब्रह्मचारी विवेक चैतन्य, खिमानन्द सरस्वती, ब्रह्मचारी रविचैतन्य, रामचन्द्र वानप्रस्थी, पूर्णबहादुर भुजू समेतका व्यक्तिहरू स्वामीज्यूका मुख्य सहयोगी रहे। यद्यपि स्वामीज्यूको स्वास्थ्य त्यति ठीक थिएन तथापि भक्तहरूलाई धेरै दिनबाट तीर्थयात्रा गर्ने आशा दिनुभएकाले मुख्यरूपमा भक्तहरूको सन्तोषको लागि पनि यो यात्रा आवश्यक सम्झनुभएको थियो। स्वामीज्यूले यो आफ्नो जीवन लामो समय तक नलैजाने विचारले पनि यसै वर्ष तीर्थ जाने निर्णय लिनुभयो।

२०५१ फागुन पहिलो सप्ताहतिरै प्रस्थान गरेको यो चारधामको यात्रा देवघाटधामदेखि प्रारम्भ भएको थियो। स्वामीज्यूको साथ चलेको यो यात्रा—गया, वैद्यनाथ धाम, गंगासागर हुँदै २०५१ फाल्गुन १८ गते पूर्वको जगन्नाथपुरी पुगेको थियो। समुद्र तटवर्ती जगन्नाथपुरीमा केही दिन बसी प्रमुख स्थलहरूको दर्शन गऱ्यो। त्यहाँबाट दक्षिणतर्फ तीरूपति बालाजी आदि विविध मन्दिरहरूको दर्शन गर्दै यस टोलीले दक्षिण दिशाको प्रमुख धाम सेतुबन्ध रामेश्वर पुगी ब्रह्माण्डनायक भगवान् शिवको रुद्राभिषेक सम्पन्न गरायो। नासिक, पञ्चवटी, किष्किन्धा आदिको दर्शन गर्दै त्यहाँबाट फर्का त्रिविध तीर्थ दर्शन गर्दै स्वामीज्यूका नेतृत्वको यो टोली पश्चिम दिशाको प्रमुख धाम द्वारकापुरीको दर्शन गर्न सफल भयो। उत्तरीय यात्रा स्वामीज्यूले पहिले ब्रह्मचर्यावस्थामा नै गरिसक्नुभएकाले २०५१ समाप्तिको साथ स्वामीज्यूको चारधाम तीर्थयात्रा पनि समाप्त भयो। अलि अलि गर्दै स्वामीज्यूले सबै तर्फबाट बिदा लिंदै जानुभएको थियो। अब समस्त तीर्थ देवताहरूसंग आफ्नो अन्तिम निवेदन या प्रार्थना पूरा गर्दै ठाउँ-ठाउँमा ब्राह्मणभोजन, विधिवत् पूजन, दीन-जन सत्कार समेतका काम उदारता पूर्वक सम्पन्न गर्दै ठाउँ-ठाउँमा मठाधीश धर्माचार्य समेतका विशेष व्यक्तिहरूसंग भेट गर्दै परस्पर सन्देशहरूको विनिमय गर्दै तत् तत् देवस्थानहरूको दर्शन



गरी यो तीर्थयात्री समूह पुष्कर हुँदै वृन्दावन, मथुरा, नैमिषारण्य, प्रयाग, चित्रकूट, अयोध्या, गोरखनाथ, समेतका प्रमुख तीर्थ घुम्दै यो तीर्थयात्रा ०५१ सालको समाप्तिको साथ-साथ नेपालको शान्तिद्वार सुनौलीबाट प्रवेश गरी स्वदेश फर्कंदा भक्तसमुदायले मार्गका बीचबीचमा अर्पण गरेका स्वागत र भावपुष्पहारलाई स्वामीज्यूद्वारा स्वीकार गरिंदै देवघाट आई समाप्त भयो।

## गुरु जन्मभूमिमा श्रीराम-प्रतिष्ठा र वैदिक धर्म-परिषद् को महायज्ञ

यता स्वामीज्यूको जन्मभूमि पौंवाडाँडामा भक्तहरूले आराध्य भगवान् रामचन्द्रको मन्दिर स्थापना गरी रामपुर बनाउने इच्छा राखेकाले बालकृष्ण कण्डेलले दान दएिको ४ रोपनी जमिनमा श्रीराम मन्दिर र धर्मशाला बनाई मूर्तिहरू पनि ल्याइसकेका थिए। २०५० वैशाख २१ गते यस मन्दिरको शिलान्यास स्वामीज्यूका बाहुलीबाट नै भएको थियो। २०५१ को रामनवमीमा वैशाख ७ गते वैदिक विधिले श्रीराम-प्रतिष्ठा साथै मन्दिर र धर्मशालाको उद्‌घाटन गर्नुभयो। अघि अलैंचे 'आनन्दपुर' भए झैं पौंवाडाँडा पनि 'रामपुर' भयो। हाल यहाँ स्वामी पूर्णानन्द सरस्वती मठाधीश रहनुभएको छ।

यो मन्दिर स्वामीज्यूको पृथ्वीमा अवतरण भएकै ठाउँमा बनेका हुनाले हामी सबैको एक महान् तीर्थ भएको छ। भक्तहरूले विविध सहयोग गरी यस रामाश्रमको वैभव निरन्तर बढाइरहेका छन्। यस गुरुजन्मभूमिलाई अयोध्याकै रूपमा क्रमश: विकास गर्दै लैजाने समितिले प्रयास गरेको छ। यसरी श्रीरामप्रतिष्ठाको कार्यक्रमले पनि बिदा लियो।

स्वास्थ्यमा निकै उत्तरोत्तर ह्रास बढ्दै गएकाले सबै भक्त चिन्तित भई यस २०५२ सालको वर्षाकाल बिताउन स्वामीज्यूलाई दिब्रुङ् लाने निर्णय गरेअनुसार स्वामीज्यू आफ्नो अति प्रिय तपःस्थल दिब्रुङमा आराम गर्न यसै जेठमा जानुभयो।

आराम गर्न गए पनि ठाउँठाउँबाट भेट दर्शन गर्न जानेसंग हुने संवादले समय बित्ने हुनाले शारीरिक केही आराम रहे पनि वाग्विरामको अवसर मिल्दैनथ्यो। कति नै कतै कहीँ नलाग्ने भन्दाभन्दै पनि आँपचौर कोटेश्वरको (गुल्मी) नयाँ प्रकट भएको गुफा, जहाँ पानी तप्तपाउने प्राकृतिक ओडार गुफाभित्र पहाडको खोच दुर्गम ठाउँमा स्वयं व्यक्त अनेक देवमूर्ति र धार्मिक प्रतीकहरू थिए। त्यहाँ यसै २०५२ को असौज नवरात्रमा ब्रह्मोत्तरखण्ड पुराण गर्न आउनुभयो। त्यस ठाउँलाई 'कोटेश्वर महादेव गुफा' नामकरण गरी स्वामीज्यू दिब्रुङ्गमा नै फिर्ता हुनुभयो।

यता वै.ध.प. को प्रस्तावित यज्ञको प्रचार प्रसार सम्बन्धी केही अत्यावश्यक महत्त्वपूर्ण विषयमा परामर्श लिन परिषद्‌का केन्द्रीय पदाधिकारीहरूको एक टोली स्वामीज्यूको तपःसिद्धिस्थल दिब्रुङ पुग्यो। त्यस सुरम्य स्थलमा स्वामीज्यूका दर्शनले सबैलाई परम आनन्द दिलायो। यज्ञका विषयमा वहाँले विशेष परामर्श दिंदै भागवत प्रवक्ताका रूपमा आचार्य महामण्डलेश्वर स्वामी पुण्यानन्द गिरिज्यूको नाम लिनु भयो र महामण्डलेश्वरज्यूलाई एक पत्र पनि लेख्नुभयो।

दिब्रुङबाट बिदा भएका यस टोलीले मणिग्राम रूपन्देही पुगी तुरुन्त स्वामीज्यूको सन्देश समाजलाई सुनाउन एक बृहत् जनभेला बोलाई दिब्रुङका आफ्ना प्रधान संरक्षकको स्वास्थ्यका निम्ति र आगामी महायज्ञको सन्दर्भमा वहाँबाट कृपापूर्वक प्राप्त सन्देशको विवरण सुनाई ''आज्ञा गुरूणामविचारणीया''—आदरणीय गुरुको आज्ञापालनमा कुनै सन्देह नगर्नू, भन्ने नीतिको अनुशरण गर्दै अध्यक्ष जगन्नाथ, उपाध्यक्ष लोकनाथ खरेललाई स्वामीज्यूका पत्रको अवलम्बनले दिल्ली पठायो।

राजस्थानको श्री डुंगरगढसम्म पुगी आचार्य श्री १००८ स्वामी पुण्यानन्द गिरिज्यूलाई स्वामीज्यूको सन्देश सुनाई वहाँद्वारा लिखित पत्र टक्र्याउँदा आगामी परिषदीय महायज्ञमा भागवत वक्ताका रूपमा नेपालमा उपस्थित हुने अनुमति वहाँले प्रदान गर्नुभयो।

२०५२ को फागुन १५ देखि २३ सम्म परिषद्ले स्वामीज्यूको प्रधानसंरक्षकत्वमा ऐतिहासिक **संचतुर्वेद पारायण साङ्ग-अष्टोत्तरशत श्रीमद्भागवतज्ञानमहायज्ञ** गर्ने निर्णय भए अनुसार स्वामीज्यू यथासमय देवघाटबाट यज्ञका उपयोगी ब्राह्मण, वाचक, कार्यकर्ता समेतका विशाल समूहका साथ मणिग्राम स्थित महायज्ञस्थल, गीर्वाण संस्कृत मा.वि. को प्राङ्गणमा पुग्नुभयो। महामण्डलेश्वरज्यूबाट नियमित भागवत प्रवचन र डा० रामानन्द स्वामीज्यूबाट नियमित रामगीता प्रवचन भयो भने स्वामीज्यूबाट देशकालोचित धार्मिक व्याख्याहरू भए। प्रतिदिन महायज्ञका कोषाध्यक्ष चक्रपाणि पाठक यज्ञाध्यक्ष नरहरि खरेल समेतका कार्यकर्तालाई आफ्नो निवासमा बोलाएर दैनिक यज्ञीय विवरण लिई सुझाव दिने कामहरू गर्दै रहनुभयो। यस महायज्ञको बीच स्वामीज्यूलाई योगी नरहरिनाथज्यूले भेटी स्वास्थ्यको गिर्दो स्थितिप्रति चिन्ता व्यक्त गर्दै वहाँका उत्कृष्टतम धर्मसेवा र राष्ट्रसेवाको प्रशंसा गर्नुभएको थियो।

यज्ञान्त प्रवचनमा ''यदि परिषद्ले मलाई वास्तवमा प्रथम प्रधान संरक्षक मानेको हो भने मेरो अनुपस्थितिमा पनि वैदिक-धर्म-संरक्षणमा सदैव सजग रहोस्।''—स्वामीज्यूले भन्नुभयो।

विविध कार्यक्रमको बेवास्ता गरेर वैदिक धर्म परिषद्द्वारा आयोजित महायज्ञमा भागवत प्रवचनार्थ श्री पुण्यानन्दज्यूको समुपस्थिति मुख्यतया स्वामीज्यूकै पत्रको सम्मानकै क्रममा भएको हो। यसरी दिब्रुङ् गुल्मीमा एक साधुले लेखेको पत्ररूपी अमोघ रामबाणले राजस्थानका रेतिला भूमिमा प्रवचनरत अर्को साधुका हृदयलाई स्पर्श गरी बाहिरिएका साधुलाई नेपालमा भित्र्यायो। सच्चा हृदयको छाप परेको चार हरपमा यतिका शक्ति हुँदो रहेछ।

महापुरुषका प्रत्येक इशारा या वाणीका अनुसरणले सबैलाई लाभै-लाभ हुन्छ। वहाँका चिठीको आदर गरेर पाल्नुहुने महामण्डलेश्वरज्यू क्रमशः ०५२ मा मणिग्राम, रूपन्देही मा, हरिहर संन्यास आश्रमको आयोजनामा आयोजित 'श्रीमद्भागवत सप्ताह-महायज्ञ २०५५' मा देवघाट तनहूँमा र ०५६ मा विश्वनाथ लालगोविन्द सं. आश्रमद्वारा आयोजित श्रीमद्भागवत महायज्ञ आदिमा आउने गुप्त सूत्र यही पत्र नै रह्यो।

स्वामीज्यू संग मणिग्राममै भएका सल्लाह अनुसार स्व० थानेश्वर अर्यालका, सक्रियतामा 'भवानी उच्च मा.वि. देवदह (भगवान् बुद्धको मावल) रूपन्देहीमा आयोजित धान्याचल महायज्ञमा आशीर्वाद प्रदान गर्न स्वामीज्यू पुग्नुभयो। शारीरिक स्वास्थ्य जति नै कमजोर रहे पनि प्रवचनमा बसेपछि शरीरको कमजोरीका केही असर देखिएन। उही ओज, पूर्ण पूर्व शैली, उही टड्कारो र स्पष्ट भनाइ, उही साफ र सुथरो बोली, उही उत्साह र जाँगर, उस्तै हातका मुद्रा, उस्तै सोझो र स्पष्ट बसाइ, उस्तै बोलीका भाव अनुसारका उतार-चढावहरू सबै उस्तै नै रहे।

### स्वर्गद्वारीका शतवार्षिक समारोहमा मुख्य अतिथि —

शरीर अस्वस्थ छँदाछँदै पनि २०५२ का अन्तिम दिनहरूमा स्वामीज्यू स्मरणीय विशेष कार्यक्रमलाई पूरा गर्न नेपालको प्रसिद्ध धर्मस्थल प्यूठानको स्वर्गद्वारीमा पुग्नुभयो। नेपालको निम्ति स्वर्गद्वारी आश्रम विक्रमका बीसौं शताब्दीको



सबभन्दा ठूलो उपलब्धि हो। त्यहाँ नेपाली माटापानीद्वारा गहकिला महासिद्ध योगीका रूपमा उत्पादित स्वर्गद्वारी महाप्रभुद्वारा गिरिशिखरमा वैदिक धर्म रक्षार्थ वैदिक आश्रमको निर्माण भएको थियो। तात्कालिक राणा शासकहरूले पनि यसप्रति राम्रो सहयोग पुऱ्याउँदै आएका थिए। आश्रमको निम्ति त्यहाँ एक ठूलो वन्यक्षेत्र उपलब्ध गराइएको छ। महाप्रभुको समयमा त्यहाँ हजारौं गाईहरूको पालन हुन्थ्यो। अहिले पनि गोसेवा भइरहेकै छ। महाप्रभुद्वारा १९५२ बाटै संचालित अखण्ड अग्निमा हुने नित्यहवनादि कार्य आजसम्म अटूटरूपमा चलेकै छ। यस आश्रमको गुठको निम्ति हजारौं बिघा जमीन छँदैछ। हाल यहाँ नित्यहवन, घृतधारा, रुद्रीपाठ जस्ता वैदिक कार्यहरू परम्परानुसार भइरहेकै छन्। राणाकालपछि **श्री ५ महाराजाधिराज सरकार**को पनि विशेष श्रद्धामय दृष्टि रहँदै आएको छ। २०५२ मा यज्ञ थालेको सयवर्ष पूरा हुने भएकोले राष्ट्रव्यापी सहयोग जुटाई शतवार्षिक महोत्सव हुँदै थियो। स्वयं **श्री ५ महाराजाधिराज सरकार** र **श्री ५ बडामहारानी सरकार**को गौरवमय सवारी समेत रहने कार्यक्रम रहेकोले यस महोत्सवको महत्त्व झन् बढेको थियो। देशभरका र भारतका पनि सन्त, महन्त, बुद्धिजीवी, विशिष्ट विद्वान्‌हरूको समुपस्थिति रहने भएको थियो। विभिन्न क्षेत्रका विशेष व्यक्ति र शासनाधिकारीहरूको विशेष बैठक बसी श्री ५का जुनाफमा श्रीमद्‌भागवत श्रवण गराउने विशेष व्यक्तित्वको अन्वेषण हुँदा सर्वसम्मतिबाट स्वामीज्यूकै श्रीनाम प्रस्तावित भई पारित समेत भएको थियो। आश्रमपक्ष र श्री ५ महाराजाधिराजपक्ष दुवैतर्फको विशेष रुचि बुझी स्वामीज्यू जसरी तसरी त्यहाँ पुगी शतवार्षिक समारोहको मुख्य अतिथिको रूपमा सुसम्मानित हुनुभयो। यसै अवसरमा एकदिन राष्ट्रनायक राजदम्पतिलाई शान्त, एकान्त मनोरम स्वर्गद्वारीको विशेषकक्षमा केही समय श्रीमद्‌भागवतको सारसंग्रह सुनाई राष्ट्रकै प्रति अवशेष आफ्नो अन्तिम कर्तव्य पूरा गर्नुभएको थियो।

## बिदाइको तैयारी :—

परमगुरुवर स्वामी सत्यप्रकाशानन्द स्वामीज्यू महाराजका चरणकमलमा रही वहाँकै कृपाले शास्त्राध्ययन गरेका ब्रह्मचारी आत्मचैतन्य हरिद्वारबाट ०५१ सालतिर देवघाट आउनुभयो। यता स्वामीज्यूले यस संसारमा अब धेरै नरहने स्थिति पनि स्पष्ट बुझिरहनुभएको थियो। पहाडतिर सबै ठाउँमा एक एक विरक्त साधुलाई जिम्मा दिइसक्नुभएको थियो। खाली देवघाटको गलेश्वर आश्रम र हरिहर आश्रम-आफ्नै भरमा थिए। यी दुईटै भार पनि पन्छाउने स्वामीज्यूको विचार आयो र ब्र० आत्मचैतन्य लाई गलेश्वर आश्रम प्रदान गर्ने प्रस्ताव गर्नुभयो। जब वहाँ स्वामी आत्मनन्द गिरिको रूपमा संन्यास धारणपछि देवघाट आउनुभयो तव पूर्वचर्चित विषय सामू आयो।

२०५३ वैशाख १० गते शङ्कराचार्य जयन्तीको अवसरमा विद्युत, खानेपानी, भोजनालय, सन्तनिवास, गौशाला, बाटा पाटीपौवा समेत विविध निर्माण र विकास गर्दै आश्रमको कायाकल्प गरी उक्त विद्वान् यतिलाई उत्तराधिकरी बनाई आफ्नो आधाभार हलुका भएको अनुभव गर्नुभयो। वक्तृता शास्त्रीय योग्यता, व्यवहारपटुता, लोकोपकारिता, साधु सेवा, विद्वत्प्रियता, सदाचार र अखण्ड ब्रह्मचर्यको पालनप्रतिको उत्सुकताको साथै दीर्घकालीन आश्रमसेवा समेतको परिपूर्ण योग्यता बुझी ब्रह्मचारी ज्ञानानन्दज्यूलाई हरिहर सं. आश्रमको उत्तराधिकार प्रदान गरी आफ्ना सबै मठको संरक्षणार्थ प्रमुख उत्तराधिकारी बनाउने निर्णय गर्नुभएको थियो। श्रीज्ञानानन्दज्यूको भने अझै विद्याध्ययन गरी सर्वविद्याविशारद बन्ने निकै दरो अभिलाषा थियो। जति-जतिखेर मठीय दायित्वको उत्तराधिकारीको प्रसङ्ग आउँथ्यो त्यति त्यतिखेर ब्रह्मचारी ज्ञानानन्दज्यू स्वामीज्यूका सान्निध्यबाट हटी दायाँबायाँ लाग्नुहुन्थ्यो। यति छिटो स्वामीज्यूको

अन्तर्ध्यान, हुने बुझेका भए यसो गर्नुहुन्नथ्यो होला, किनकि स्वामीज्यूकै उपस्थितिमा आश्रम परिर्वतन, एवं मठीय भारग्रहण गर्नु अझै उत्तम कुरा हुन्थ्यो। तर यो कुरा हरिहर परमेश्वरले चाहनुभएको रहेनछ। स्वामीज्यूले श्रीज्ञानानन्दज्यूलाई आफ्नो प्रमुख उत्तराधिकारी बनाउन खोज्नुभएको हो, तर वहाँले नै नचाहनाले यो काम हुन सकैको थिएन। जेठमा अरु वर्षहरू झैं नै यस अन्तिमवर्ष पनि दिब्रुडतर्फ नै लाग्नुभयो। सकेसम्म स्वामीज्यूले वर्षा-शरद्‌का चार महीना दिब्रुडको मुख्य आश्रममा नै बिताउने प्रयास गर्नुहुन्थ्यो। चातुर्मासव्रत निम्नि यतिहरूलाई आवश्यक शान्ति र एकान्तता परिपूर्ण रहेकाले यो स्थान अत्यन्त उत्तम छ। कृशतर शरीर लिएर आउनुभएका स्वामीज्यूलाई गुल्मेली जनमानसले भावपूर्ण हार्दिक स्वागत गऱ्यो। हो न हो, लेखाली स्वामीज्यू तराई गएर यस्तो स्थिति आएको हो, अब यहाँ रहँदा सबै ठीक हुन्छ भन्ने विश्वासमा नै सबै थिए। स्वामीज्यूले आफ्ना आन्तरिक कष्ट या वेदना बाहिर कसैसंग प्रकट गरेर अरूलाई पनि कष्ट दिन चाहनुभएन। वहाँलाई थाहा थियो कि मेरा भक्तहरू मेरा कष्टले स्वयं मभन्दा धेरै विह्वल हुने छन्, मेरा वियोगको कल्पना मात्रै पनि उनीहरूलाई असह्य हुनेछ।

दिब्रुङ्मा एकान्त अवसर भेटिंदा वित्तिकै वहाँलाई ब्रह्मध्यान लाग्न थाल्यो। घरिघरि त्यस्ता अवस्थामा पुग्नु हुन्थ्यो जहाँ कुनै रोग-शोक, राग-द्वेष र भोक तिर्खा नै थिएनन्, देह र इन्द्रियको आभास पनि हुँदैनथ्यो। १० मिनटको यस स्थितिले सारा शरीरको ग्लानि केही क्षणको लागि टाढा गराइदिन्थ्यो। यस प्रकार कठीन रोगाक्रान्त दशामा पनि बाह्य-वृत्ति निरोधपूर्वक भएका स्वात्मानुभावले आनन्द-प्रदान गरीनै रह्यो। वर्षाका रसिला झरिला दिन बिते दिब्रुङ्मा पनि दर्शनार्थी हरूका ताँतीले विश्राम लिएको थिएन। 'बातचित कसैसंग नगरी आरामलिनु पर्छ' भन्नेहरूसंग 'एक दिन त निश्चय नै बातचित नगरी चुपचाप बस्ने पनि भइन्छ। अहिल्यैबाट त्यसको अभ्यास किन गर्न पऱ्यो' भन्दै हंस्यौली गर्नुहुन्थ्यो। यसरी दिब्रुङ्मा शरदले प्रवेश गऱ्यो। यता 'बिरामी स्वामीज्यू कस्ता हुनुभयो' भन्ने चिन्ताले ग्रस्त तराइले भदौबाट बोलाउन लागेको थियो।

आश्विन शुक्ल पंचमीमा देवघाट हरिहर भगवान्‌को वार्षिकोत्सव रथयात्रा र धेरै व्यक्तिहरूको अत्यास समेत बुझी भक्तहरूका साथ स्वामीज्यू असौजमा घटस्थापनाभन्दा पहिले नै देवघाट आश्रम आइपुग्नुभयो। काकाकुल बनेका तराईवासीले स्वामीज्यू रूपी स्वातीको जल निकै पान गरे, तर अघाएनन्।

सबैतिर आएको दशैं देवघाट पनि आयो, मानिस जम्मा पनि भए, पूजा-पाठ पनि चले, वार्षिक उत्सव पनि भयो। समय आएपछि सुख-दुःख सबै कुरो हुँदै नै जान्छ, समयको प्रवाह रोकिन्न, त्यस प्रवाहको पछि प्रत्येक वस्तु लाग्नै पर्छ। यस काल देवताको पंजामा नफँसेको कोही थिएन तर देवघाटमा ऊ उत्साह र रमाइलो यस वर्ष भएन। मुखले कसैले पनि गुरुलाई केही हुन्छ कि! भनेर कुरो फोरेर सन्देह अघि सार्न सकेको थिएन तापनि, हरेक मनले भित्रभित्रैको एक्लोमा स्वामीज्यूले आफ्ना जीवनका अन्तिम क्षण गनिरहनु भएको देखिरहेको थियो। कता कता त्यस आगामी वज्रपातको पूर्व आभास सबैमा भइरहेको थियो, बिम्बले स्थानान्तरित हुने प्रक्रिया चालु गरेपछि बिचरो प्रतिबिम्ब कसरी आफ्नो पुरानै स्वरूपमा रहन सक्थ्यो! हुन त यस वर्षको दशैंमा गुरु भेट्नेहरूको संख्या पनि निकै बढेको थियो। हरेकले कोसेली-भेटी धे-धेरै ल्याए। कपड़ा र पैसाको थुप्रो लाग्यो; केही कमी भएन तर त्यो पोहोर-पराहारको हर्ष, उल्लास, स्फूर्ति-रङ्ग र रमाइलो भने नमालूम कहाँ गयो त्यसको खोज गर्न कसैले सकेको थिएन। यसपटक त कसैसंग कसैले केही सोध्न नै सकेको थिएन, न कोही रोइरहेको थियो, न हाँसि नै रहेको थियो। कोही कसैसंग बोलेको थिएन। प्रत्येक आत्मामले 'आफ्ना अन्तर्मनले 'यहाँ केही हुने वाला छ' भन्ने सूचना पाइसकेको अनुभव भइरहेको थियो। यस शान्ति र मौनताका बीच मानौं

प्रत्यक्ष मृत्युदेवताको क्रूर चीत्कार गर्जिरहेको थियो। प्रत्येक वस्तुले छिटै नै जडता र स्तब्धताको चरम सीमामा पुग्ने यात्रा आरम्भ गरिसकेको महसूस भइरहेको थियो।

नवदुर्गा घटस्थापनाको साथै स्वामीज्यूका स्वास्थ्य-लाभको उद्देश्यले देवाराधना शुरु भयो। सबैले आ-आफ्ना इष्टदेव पुकारिए, रोइए, गुहारिए। जब मानिस आफ्ना परम-प्रिय वस्तुको वियोग निकट देख्छ तब त्यो नास्तिक भए पनि आस्तिक बन्छ; अश्रद्धालु पनि श्रद्धालु बन्दछ। साँचै हो, ''दुःख में सुमिरन सब करे सुखमें करै न कोय'' दुःखले परमेश्वरका निकट लान्छ भने सुखले त्यसको विपरीत काम गर्दछ।

यसरी दशैं आयो-गयो, परमानन्दीय समाजमा त्यसलाई यसवर्ष कसैले बोलाएका पनि होइनन्, फेरि-त्यसको बिदाइ समारोह जुटाउनेपट्टि पनि कोही लागेनन्। दशैं आयो गयो, अर्थात् जन-तन घुचेटियो। गुरुका करकमलबाट दशैंका टीका थाप्र आउनेहरूलाई दोहोरो संकट थियो, टीका थाप्ने हजारौं, लगाइदिने स्वामीज्यू एक जना बिरामी, स्वामीज्यूकै हातबाट नलगाई छोड्दिन भन्न पनि अप्ठ्यारो, फेरि अर्को दशैंसम्म यी हात यसै रूपमा हामीलाई सुलभ रहने हुन् कि होइनन् यो निर्णय गर्न झन् अप्ठ्यारो, दयामयले जनताको दोहोरो कष्ट बुझी बिसाई-बिसाई धेरै जसोलाई आफै टीका प्रदान गर्नुभयो। यो दशैं टीका महोत्सव यस शरीर ले मनाउने अन्तिम हो भन्ने वहाँलाई पूरा निधो थियो, त्यसो भएर नै सबैलाई आफै टीका-प्रदान गरी भक्त-जनताको मन बुझाउनुभयो। टीका लगाइदिंदाको थर्थराएको हात र तलबलाएको अनुहार आफ्ना आँखाको ढोकाबाट भित्र लगी भित्रको सुरक्षित मन-मन्दिरमा विराजमान गराए।

गुरुभक्तहरूलाई तिहारले त यत्तिको स्थितिमा पनि राख्न सकेन, झन् भक्तहरूका मनको स्थिति दयनीय बन्दै गयो। तिहारमा स्वामीज्यू काठमाडौं वीर हस्पिटलमा हुनुभयो। ब्र० ज्ञानानन्द, ब्र० रविनन्दन, ब्र० शोभाकर, ऋषिराम खरेल, समेतका व्यक्तिहरूका टोलीले उपचारार्थ दशैंका तुरन्तै पछि लगी पहिला पाटन अस्पताल र पछि वीर अस्पतालमा भर्ना गराइयो। भक्तवत्सल स्वामीज्यू अब पूरै रूपमा भक्त पराधीन हुनुभएको थियो।

''हुनु पर्ने नभई छाड्दैन; देवघाटमा नै बसी प्रारब्धको खेल हेरौं'' भनी स्वामीज्यूले पुनः पुनः भनेर पनि जब ठूलो भक्तसमूहको चित्त सन्तुष्ट भएन तब स्वामीज्यूले भन्नुभयो ''म जहाँ गएपनि आफ्नै स्वरूपमा छु, तपाईंहरूलाई जहाँ जहाँ लगेर जे जे गर्दा सन्तोष हुन्छ त्यही त्यही गर्नुहोस्। म तपाईंहरूले लगिदिएको ठाउँमा गइदिएर, खा भनेको चीज खाइदिएर सहयोग गर्छु। अब म भनेको जेभने पनि मात्रै चेलो, तपाईंहरू गुरु हुनुभयो।'

अब भक्तहरूले तँछाड-मछाडका साथ द्रव्य संकलन गरी देवघाट पठाउन लागे। मन्दिरहरूमा पूजा-पाठ बढ़े, जताततैबाट उपचारमा केही कमी नपरोस् भनी पत्रहरू आए।

लगभग १ महिनाको प्रयास र दौड़-धूप पछि स्वामीज्यू काठमाण्डौबाट देवघाट ल्याइनु भयो। सरकारी क्षेत्रबाट बाहिर पठाउने चर्चा पनि चले। सबैका कान ठाडा भएका थिए। काठमाडौंमा उपचार गर्दा देख्ने-भेट्ने हरेक वर्गका मानिसको अभूतपूर्व भीड़ देखी डाक्टर र मन्त्रीहरू पनि छक्क परी स्वामीज्यूप्रति अत्यन्त श्रद्धालु बन्दै गइरहेका थिए।

स्वामीज्यूको देवघाट आगमन साथ दर्शनार्थीको मेहोरो फेरि देवघाट तर्फै फर्क्यो। मार्गशीर्षको आरम्भमा केही दिन देवघाट बसी दक्षिणभारत लानुपर्छ भन्नेहरूको विजय भयो। ''जे-जति बाँच्नु र गर्नुछ त्यो सबै प्रकृतिप्रदत्त आफ्नै शरीरद्वारा नै गर्नुपर्दछ; अरुका शरीरावयवका सहायताले बाँच्न खोज्नु के त्यो जीवन हो र!'' भन्नुहुने स्वामीज्यू सबै भक्तहरूले धेरै आग्रह गरेकाले उनीहरूको चित्त बुझाउन आहार-व्यवहार शुद्धभएका शरीरको मात्र मृगौला प्रत्यारोपण गर्न बल्लतल्ल तैयारी हुनुभएको थियो।





वहाँका दुबै मृगौलामा खराबी रहेकाले मृगौला दिने साहसी श्रद्धालुको आवश्यकता थियो। ''लाग्छ भने हामी दिन्छौं'' भनी गुरुका जीवनलाई आफ्नो जीवन ठान्ने ब्रह्मचारी शोभाकर र गृहस्थ भक्त मनोहरि कण्ड़ेल (मुकुन्दपुर नवलपरासी) र अन्य सहयोगीका रूपमा रामलाल भट्टराई (भ.न.पा.-६ चितवन), मेघराज कण्डेल (यज्ञपुरी चितवन) समेतका भक्तहरूको टोली ब्रह्मचारी ज्ञानानन्दज्यूको प्रमुख दायित्वमा उपचारनिम्ति स्वामीज्यूलाई लिई दक्षिण भारततर्फ प्रस्थान गऱ्यो। त्यस टोलीले आन्ध्रप्रदेश, पुट्टपर्ती हुँदै अन्त्यमा मद्रासको 'रामचन्द्रन् मेडिकल' मा पुऱ्यायो।

डाँक्टरले हेरे, जाँचे, मृगौला (वृक्क) सम्बन्धी रोग भएको कुरा पहिलेबाट थाहा थियो। यस्तो रोग यस्तो स्थितिमा पुगेको बेला पनि यतिं उज्यालो चेहरा र यत्तिको शारीरिक, मानसिक शक्ति हुनु अत्यन्त आश्चर्यकारी घटना सम्झी डाक्टरहरूले स्वामीज्यूलाई सिद्धपुरुष नै ठाने। डा० 'जहर्जी अब्रहम' ईसाइ सम्प्रदायका थिए। जब यस्तो रोगले आक्रान्त भएका चिन्तनीय दशामा पनि स्वामीज्यूको सबै इन्द्रिय, चेहरा, दिल-दिमाग स्वस्थ पाए तब उनले यहाँलाई कुनै अद्‌भुत जीवन्मुक्त पुरुष माने। स्वामीज्यूप्रति उनी र उनका सहयोगी सबै डाक्टरहरू बिहान अस्पतालमा पस्ता सर्वप्रथम ''ॐ नमः शिवाय'' पदद्वारा अभिवादन गर्न थाले। असली आत्माले असली आत्मा चिन्न साम्प्रदायिक घेराले कत्ति छेक्दैन।

रक्तशुद्धि भयो; नली फीट भए। जे जे जानेका थिए त्यहाँका डाक्टरहरूले ती सबै यथासमय गर्दै लगे। यता नेपाल चिन्तित थियो। बीचमा गुल्मीका भक्त र आश्रमहरूका तर्फबाट ब्रह्मचारी श्रीविवेकचैतन्य, देवघाटबाट रक्तभिन्नताका कारणले गुरुलाई मृगौला दिन नपाउँदा आफ्नो जीवनै व्यर्थ सम्झिने ब्रह्मचारी रविनन्द, देवघाट कल्पवासीका तर्फबाट पीताम्बर पँगेनी, सपत्नीक विष्णु भण्डारी र रामकृष्ण पन्त समेतका अन्य गृहस्थ गुरुभक्तहरू स्वामीज्यूलाई भेट-सेवा गर्न मद्रास पुगे। त्यस्तै स्वामीज्यूको मृगौला प्रत्यारोपण हुने चर्चाले सबै भक्तहरूका कान र हृदयलाई छोयो। वहाँलाई मृगौला दिन पाए जीवन सफल हुनेथियो भन्ने भावुक भक्तहरूको संख्या बढ्दै थियो। तर ईश्वरको इच्छा, स्वामीज्यूको शरीरले अब कसैको अङ्ग चाहेको थिएन। डाक्टरले यस अङ्ग प्रत्यारोपण प्रक्रिया स्वामीज्यूमा लागू हुन नसक्ने घोषण गर्दा ती गुरुभक्त दानवीर आत्माहरू खिन्न बनेका थिए। संसार यस्तै बहुरूपिया छ, कोही दिन पऱ्यो भनेर रुन्छन्, कोही दिन पाएनौं भनेर पनि रुन्छन्। **''विस्तीर्णा पृथिवी नश्च विविधः किं किं न सम्भाव्यते''** अर्थात् यस फराकिला पृथिवीतलमा जे-जस्तो पनि देख्न सुन्न पाइन्छ। स्वामीज्यू ५२ दिनसम्म त्यस औषधालयमा उपचारक्रममा बस्नुभयो। त्यसपछि काठमाण्डौलाई देखरेख गर्न पत्र लेखी त्यस मेडिकलले वहाँलाई कथञ्चित् छाड्यो।

यसरी माघ ६ गते साँझ स्वामीज्यूको आगमन देवघाट आश्रममा भयो। एक कान दुई कान सबैतिर खबर पुग्यो, दर्शनार्थीको भीड़ उमडियो, स्वामीज्यू उस्तै नै हुनुहुन्थ्यो। शान्त शीतल अनुहारमा कुनै मलिनताको आभाससम्म पनि थिएन। मृत्युदेवता ठीक सामु खड़ा भएको स्वामीज्यूले नदेख्नुभएको होइन तर मानिसलाई रोगका पीड़ाले भन्दा अब मर्ने भएँ, कहाँ जाउँला, के खाउँलाको चिन्ताले बढ़ी दुःख दिन्छ र चेहरा बदल्छ। यस प्रकारको चिन्ता आत्मज्ञानी स्वामीज्यूमा नभएकाले नै मुखाकृतिमा कुनै विकृतिले वास पाएन। गुरुको स्वास्थ्यलाभको निमित्त संकीर्तन, रुद्राभिषेक पूजा-पाठ आदि भइरहेका थिए। हरेक आत्माले 'कहिले के सुन्नुपर्ने हो' को चिन्तापूर्ण सतर्कता लिइरहेको थियो।

स्वामीज्यू भने आफ्नो लागि कुनै चिन्ता लिनु भएको थिएन, भक्तहरूका निन्याउरा चेहरा देखेर ''म सबैका

दुःखको कारण बन्ने भएँ'' भनी बी-बीचमा जरूर केही खिन्नताका रेखाहरू देखा पर्दथे। यस बाहेक वहाँमा केही अन्य विकृति रहेन।

यस्तै-यस्तैमा माघका छोटा तर भक्तहरूका दुःखका लामा दिन घुचेटिंदै गए। डरलाग्दा स्वप्नमय रात पनि जनतन बिते। माघ १० गते आयो, सबैले फेरि स्वामीज्यूलाई एकपटक काठमाडौं लाने मनः स्थिति बनाए भरतपुरमा हुइऽऽयँ हवाइजहाज झर्‍यो, गुरुलाई टिप्यो, लग्यो, गयो। अरु हेरेको हेर्‍यै बने। यस जहाजको त गन्तव्य थाहा छ, हामीलाई, गन्तब्य थाहा नहुने जहाजले गुरु महाराजलाई न उछाइदिए हुन्थ्यो, यही प्रार्थना रह्यो सबैको।

काठमाण्डौमा हवाइजहाज ओर्ल्यो, स्वामीज्यूलाई भेट्ने र दर्शन गर्ने व्यक्तिको धुइरो हवाइअड्डातिर दौड्यो। वानेश्वरमा स्वामीज्यूको सवारी गराइयो हरिहर संन्यास आश्रमका प्रथम सदस्य सचिव पूर्णबहादुर भुजू नवीनकुमार अग्रवाल र किशोर कुमार गौतम काठमाडौंका गुरुभक्तहरूमा अन्यतम हुनुहुन्थ्यो। किशोरज्यूको घर सबैलाई सबै तर्फबाट उपयुक्त जँच्यो। त्यहीं वहाँको निवास भियो।

वास्तवमा स्वामीज्यूले अन्त्य-अवस्थामा भगवान् पशुपतिको सान्निध्य मात्र चाहनु भई काठमाडौं लाग्नु भएको थियो। केही उपचार गराउन शेष थिएन, त्यहाँ गई केवल सत्सङ्ग वार्ता चालु भए, अब यो खाने यो नखान यो गर्ने यो नगर्नेको विधि-निषेधबाट पार भएको दशालाई सबैले बाध्य भएर अनुमति दिनुपरेको थियो, ज्ञानगङ्गाका त्रिवेणी स्वामीज्यूका मुखारविन्दबाट फुटिरहेका थिए, जसले जे-जति भेट्याए त्यति आ-आफ्ना भाग्य अनुसार लिए।

श्री ५ महाराजधिराजका जूनाफमा सन्तको अन्तिम घड़ी रहेको व्यहोरा जनिइसकेको थियो। सारा दल प्रमुखहरू-मन्त्रालयहरू-प्रशासकहरू र संचारमाध्यमहरू यस नेपाल विभूतिलाई 'कहिले कहाँ के हुन्छ'का डरले सशङ्कित थिए। श्री ५ कातर्फबाट निजी सचिव पशुपति महर्जन आउनुभयो। अरु अरु सुजनहरू पनि आउनुभइरहेको थियो। सांसद गोविन्द कण्डेल, गुल्मीमा प्र०जि०अ० हुँदादेखि नै स्वामीज्यूका परमभक्त रहिआएका तत्कालिक रक्षासचिव श्री चक्रबन्धु अर्थाल, तत्कालिक सभामुख श्रीरामचन्द्र पौडेल समेतका व्यक्तिहरूले काठमाडौंको पहिले उपचार यात्रादेखि नै स्वामीज्यूको स्वास्थ्य लाभका लागि भए पुगेसम्मको प्रयास गरिरहेका थिए। कहाँ कसले गुरुका लागि के कति सहयोग गर्नुपर्छ भन्ने तैयारीमा हरेक वर्गको नेपाली लागेको थियो। नवीन अग्रवालको मानौं प्राण नै स्वयं स्वामीज्यू हुनुहुन्थ्यो। यज्ञमूर्ति खरेल समेतका साहसी युवाहरूले जे जति सहयोग जोड्न परे पनि हामी पछि हट्दैनौं, को शिवसंकल्प गरेर पहिलेदेखि नै सहयोग पुर्‍याइरहेका थिए। संचार माध्यमहरूले स्वामीज्यूको रूग्णावस्था जनाइरहेका थिए। गाउँ-गाउँमा कुनै खास आवश्यकताको सम्भावनामा आर्थिक सहयोगका इच्छुकहरूको सूची पनि तैयार भइरहेको थियो।

तर यता भगवान् पशुपतिनाथले भने अब परमानन्दीय शरीर रक्षाका लागि कुनै पनि सहयोगको आवश्यकता नठानी केवल शरीरमा प्रतिबिम्बित चैतन्यांशलाई स्वस्वरूप महाचैतन्यमा तुरून्तै विलीन पार्ने इच्छा लिनु भएछ। प्रलयङ्कर अकाल महाकाल महारुद्र पशुपतिको इच्छाका सामु अरु कसैको केही लागेन।

यता प्रत्यक् चैतन्यरूप हिमकणको स्वस्वरूप उच्चतम हिमगिरिशिखरका महाहिमराशिमा गई मिल्ने तैयारी परिपूर्ण भइसकेको थियो भने उता केही अतासिएका भक्तजनहरूले ''अब मेरो आत्मा यस देहमा २४ घण्टा भन्दा रहँदैन'' भन्ने सुन्दा-सुन्दै पनि स्वामीज्यूलाई माघ १७ गतेका दिन ज्ञानेश्वर स्थित हिमालय सेवा भवन (नर्सिङ्ग होम) मा

पुऱ्यायो, किनभने आफूलाई अनन्त उपकारले कृतार्थ बनाउने गुरुवरको पंचभूतमय देह नै श्रद्धालुहरूको लागि परम प्रेमास्पद थियो। स्वामीज्यू आफ्नो चितिलाई परमचिति पशुपतिमा समर्पण गरी स्वस्थ निश्चिन्त हुनुहुन्थ्यो। अब देह आभास हटिसकेकाले ज-जसले जहाँ जहाँ लगे-राखे पनि वहाँलाई केही कुनै चिन्ता या आपत्ति थिएन। महाकाल-प्रवाहमा २०५३ साल माघ १८ गते बिहान ९ बजेको समय आइपुग्यो। आज माघका सूर्य 'उदाऊँ कि नउदाऊँ' का सन्देहका बीच नै उदय गिरिबाट जन-तन निस्के पनि बाक्ला हुस्सु (कुहिरो) का खैरे खास्टाभित्रबाट आजका भावी दुर्घटनाका ज्ञानले आँसु चुहाइरहेका थिए। अहिलेसम्म त्यस्तो हालसालै देहावसानको शङ्का कसैलाई थिएन। आहार, बोल-चाल, उठ-बस, पनि ठीक-ठाकै थियो। गंभीर परिवर्तनको आभासले हिमालय सेवा भवन डग्मगायो। अब पशुपतिको आर्यघाटमा नै सबैका दृष्टि पुगे। सेवामा संलग्न सबै भक्तहरू एकछिन अलमलिएर पनि सम्हालिन करै लाग्यो। शिव-सन्निधिमा पुऱ्याउन यानहरू उपस्थित भए। सम्पूर्ण जीवन गुरुसेवामा समर्पण गर्ने ब्रह्मचारीद्वय श्रीविवेकचैतन्य र शोभाकरद्वारा वहाँको शिथिल शरीर सम्हालिंदै राखिएको यान र अन्य यानहरू भगवान् पशुपतिका द्वारामा आई रोकिए। स्वामीज्यूको होश-चेत सबै थियो केवल बोल्ने शक्ति कम हुँदै गइरहेको थियो। आँखाले कतिखेर समाधिका भावना देखाउँथे भने कतिखेर स्पष्ट दृष्टि फैलाइरहेका हुन्थे। प्रातःकालीन पशुपति परिसरमा देवमन्दिरका घण्टाहरू जहाँतहाँ बजिरहेका थिए। भगवान्‌को निर्माल्यका निर्गमनद्वार वाग्मतीतर्फ थियो। त्यहींनेर विशिष्ट आर्यजनलाई राखिने संन्यास वेदी थियो, त्यही स्वामीज्यूको सचेत अवस्थाको अन्तिम आसन बन्यो। पलेटी मारेका अवस्थामा स्वामीज्यूलाई राखियो, सामान्य आधारले मात्र पनि ठडिइरहन सक्ने स्थिति अझै थियो। उता वातावरणमा सूर्यप्रकाशको तातो पनि स्वभावतः बढी नै रहेको थियो तर यता स्वामीज्यूको भौतिक देहका तातोले भने फेरि नफर्कने गरी बिदा लिने तर्खरमा रहेछ।

× × ×

हात-हातका घडीहरूले ९:४५ सम्मको यात्रा पूरा गरिसकेका रहेछन्। स्वामीज्यका दृष्टि खुलेकै थिए। पूर्वाभिमुख भई बस्नुभएको थियो। सामुमा वाग्मती थिइन्। दुबै ओठ र मुखमण्डलको अध्ययन गर्दा मन्दतम स्वरमा 'ॐ' कारको जप भइरहेको देखिन्थ्यो। यस नश्वर भौतिक देहबाट महाचैतन्यमा विलीन हुने स्वामीज्यूको इच्छा भइसकेको रहेछ; स्वामीज्यू ब्रह्मलीन हुनुभयो। गुरुतेज महातेजमा विलीन भयो; भौतिक पिण्ड भूतलमा नै रह्यो।

× × ×

**आचार्य जगन्नाथ शर्मा कण्डेल**
व्याकरण-वेदान्त-मीमांसा-साहित्याचार्य, एम. ए.
लब्धस्वर्णपदक (नेपाल तथा भारत)
अध्यक्ष-वैदिक धर्म-परिषद्, नेपाल
श्री लक्ष्मीवैकुण्ठनाथ मन्दिर, लङ्कू, चितवन
प्राध्यापक-सं. सं. विश्वविद्यालय, वाराणसी



स्वामीज्यू महाराज परमहंस संन्यास ग्रहण गर्नु भन्दा पूर्वावस्थामा।



# ❋ गुरुमहाराजका आन्तरिक तथा बाह्यवृत्तिहरु ❋

**स्वामी ज्ञानानन्द सरस्वती**
श्रीहरिहर–संन्यास–आश्रम
देवघाट धाम, तनहूँ

**उपक्रम—**

परमेश्वरको संङ्कल्पमय यो चराचर जगत्‌को उत्पत्ति, स्थिति र विनाश प्रभुको इच्छाद्वारा नै भइरहेको हुन्छ। सृष्टिको आदिमा परमेश्वरले नै 'एकोऽहं बहु स्याम' भनी इच्छाशक्तिद्वारा प्राणीहरूको सृष्टि गर्नुभयो र उनीहरूको सुव्यवस्थाको लागि धर्मको मर्यादा कायम गर्नुभयो। हुन पनि धर्म विना सृष्टिचक्रं सुव्यवस्थित हुन सक्दैन। त्यसैले जब–जब धर्मको ह्रास र अधर्मको अभिवृद्धि हुन्छ तब–तब धर्मको रक्षा गर्न स्वयं अवतरित होइबक्सन्छ। गीतामा स्वयं आज्ञा हुन्छ—

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम्॥** (गीता–४/७)

वैदिक धर्म मर्यादाको परिपालन नै मनुष्यको शाश्वत शान्तिको स्रोत हो। धर्मबाट नै समाजमा आपसी मैत्रीभाव संयम र सदाचारको परिपालन सम्भव हुन्छ। धर्मरक्षाको माध्यमले समाजलाई सुव्यवस्थित बनाउन नै परमेश्वरले, ब्रह्मालाई वेदको उपदेश गर्नुभएको हो। वस्तुतः सृष्टि सञ्चालनको विधान नै वेद हो। अपौरुषेय वेद स्वयं नारायणको रूप हो र वेदले बताएको विधान धर्म हो। वेदले 'गर्न-हुँदैन' भनि निषेध गरेको कर्म नै अधर्म हो, जस्तै भनिएको छः—

**वेदप्रणिहितो धर्मो ह्यधर्मस्तद्विपर्ययः।**
**वेदो नारायणः साक्षात्स्वयंभूरिति शुश्रुम॥ भागवत ६/१/४०॥**

**वर्णाश्रम धर्मको स्वरूप**

वेदले नै विधि र निषेधको माध्यमले मनुष्यलाई अनुशासित गरेको हुन्छ। वेदले नै वर्णधर्म र आश्रमधर्मको विधान गरी मनुष्यलाई स्वधर्ममा निष्ठावान् रहन निर्देशन दिन्छ र निष्काम कर्मयोगको माध्यमले चित्तशुद्ध गरी भगवद्भक्तिको साथ–साथै आत्मतत्त्वको अपरोक्ष अनुसन्धान गर्दै मुक्तिको द्वारमा पुग्ने सन्मार्ग देखाउँछ। वेदोक्त चार वर्ण हुन्—ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र। विराट् पुरुषका ४ अवयवबाट उत्पन्न चार वर्णहरूको अलग–अलग कर्तव्य पनि शास्त्रले नै देखाएको छ। ब्राह्मणको कर्तव्यमा–मनलाई नियन्त्रण गर्नु, इन्द्रियलाई वशमा राख्नु, तपस्या गर्नु, शौचाचारको पालन गर्नु, क्षमा, सरलता आदि गुणलाई जीवनमा उतार्नु, शास्त्रीय ज्ञानमा र अनुभवात्मक ज्ञानमा पक्का रहनु र आस्तिक्य बुद्धिका साथ भगवदाराधना गर्नु आदि पर्दछन्। जस्तै गीतामा भनिएको छ :—

**शमो दमस्तपः शौचं क्षान्तिरार्जवमेव च।**
**ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्म स्वभावजम्॥ गीता १८।४२**

त्यस्तै शास्त्रमा क्षत्रियका कर्महरू यस प्रकार बताएको पाइन्छ :—

**शौर्यं तेजो धृतिर्दाक्ष्यं युद्धे चाप्यपलायनम्।**
**दानमीश्वरभावश्च क्षात्रं कर्म स्वभावजम्॥ गीता १८**

अर्थात् शूर बन्नु, तेजी हुनु, धीर-दक्ष बन्नु, धर्मरक्षार्थ युद्धमा पछि न हट्नु, दान गर्नु र ईश्वरभावले सबैलाई देख्नु क्षत्रियको स्वाभाविक धर्म हो।

कृषिगौरक्षवाणिज्यं वैश्यकर्म स्वभावजम्।
परिचर्यात्मकं कर्म शूद्रस्यापि स्वभावजम्॥ गीता १८/४४

अर्थात् कृषि, गोसेवा, व्यापार आदिद्वारा समाजमा आर्थिक न्यूनताको पूर्ति गर्नु वैश्यको स्वाभाविक धर्म हो भने समाजको सेवाद्वारा नै भगवदाराधना गर्नु शूद्रको स्वाभाविक कर्म हो। यसरी शास्त्रले स्वाभाविक वर्णधर्मको निर्देशन गरेकोछ र स्वधर्म पालनले नै सिद्धि प्राप्त हुने बताएको छ—

स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः॥ गीता

यो शास्त्रोक्त वर्णाश्रम व्यवस्था सङ्कीर्ण जातिवाददेखि भिन्न र विज्ञान सम्मत पनि छ। जाति केवल जन्मद्वारा निर्धारित हुन्छ भने वर्णव्यवस्था शास्त्रको वर्णनको आधारमा जन्म कर्म र स्वभाव अनुसार तोकिएको हुन्छ।

त्यस्तै आश्रम धर्म भनेको आफ्नो श्रमलाई व्यवस्थित रूपमा विभाजित गरी सदुपयोग गर्नु भनेको हो। आश्रम पनि ४ छनः ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास। जीवनको पहिलो चरणमा ब्रह्मचर्याश्रमको नियम पालन गर्नुपर्दछ। जस्तो भागवतमा उल्लेख गरिएको छ—

ब्रह्मचारी गुरुकुले वस दान्तो गुरोर्हितम्।
आचर दासवन्नीचो गुरौ सुदृढसौहृदः॥ भा० ७.१२.१

अर्थात् द्विजमात्रले यज्ञोपवीत संस्कार गरी गुरुकुलमा बसी ब्रह्मचर्यव्रतको पालन र गुरुको सेवा गर्दै विधिपूर्वक वेद र वेदाङ्ग (व्याकरण, ज्योतिष, शिक्षा, कल्प, निरुक्त, छन्द) को अध्ययन गर्नुपर्छ।

त्यसपछि गृहस्थाश्रममा प्रवेश गरी यज्ञादि-द्वारा देवता पितृहरूको आराधना गर्नु; सत्य व्यवहार, सत्य भाषण सबैको उपकार आदि शास्त्रीय मर्यादाको पालन गर्दै समाजको सेवा, साधु सन्त अतिथिको सेवा आदि गर्नु; शास्त्रीय मर्यादानुसार विषयको उपभोग गरी पुत्र उत्पन्न भए पछि जीवनको तेस्रो चरणमा वानप्रस्थ आश्रममा प्रवेश गर्नु र कृच्छ्र चान्द्रायणादि कठोर व्रतको आचरण गर्नु। यसरी गायत्री अनुष्ठानादि गर्दै तपस्याद्वारा अन्तःकरण शुद्ध गरी विधिपूर्वक चौथो संन्यास आश्रममा प्रवेश गर्नु। विधिवत् कर्मको त्याग गरेपछि अन्तर्मुखी भई केवल ब्रह्मचिन्तन गरी अन्तमा कैवल्यपद प्राप्त गर्नु, यो आश्रम धर्म हो।

यसरी वर्णाश्रम धर्मको पालन गर्दै मनले शास्त्रको मनन, चित्तले सदसद्वस्तुको विवेकपूर्वक चिन्तन, बुद्धिले असद् वस्तुको परित्याग गरी सद्वस्तुमा निष्ठा र अहङ्कारले असद्पदार्थको ममतालाई तोडी 'अहं ब्रह्मास्मि'को सिद्धान्तमा स्थिर रहनुपर्छ। अनि मात्र आफ्नो शुद्ध, बुद्ध र निरामय सच्चिदानन्दघन स्वरूपलाई अपरोक्ष साक्षात्कार गर्न सकिन्छ। यही नै परमधर्म र चरम पुरुषार्थ पनि हो।

**वैदिक धर्म-पालक गुरुमहाराजको जन्म—**

सनातन वैदिक धर्मको संरक्षण र संवर्द्धन गर्न विश्वनियन्ताले समय-समयमा आफ्ना प्रतिनिधिलाई यस धराधाममा पठाउनुहुन्छ। यदि समय-समयमा भगवत्प्रतिनिधि भएका महापुरुषहरू धराधाममा अवतरित नहुने हो भने सनातन वैदिक मर्यादा नै नष्ट भ्रष्ट हुन्छ र समग्र सृष्टि नै विथोलिन जान्छ। जस्तो कि-आज भन्दा लगभग १२ सय वर्ष पूर्व वेदोक्त धर्ममर्यादा क्षीण हुँदै गएको वेला धर्मरक्षार्थ स्वयं भगवान शङ्कर शङ्कराचार्यको रुपमा अवतरित हुनुभयो। समग्र भारतवर्षको भ्रमण गरी भारतको चारै कुनामा वेदान्तको प्रचार गर्दै वैदिक मर्यादाको कीर्तिपताकारूप चार मठको स्थापना गर्नुभयो।



कुतार्किकहरूका वेदविरुद्ध सिद्धान्तलाई शास्त्र र युक्तिको शस्त्रले परास्त गरी सनातन वेदान्तसिद्धान्तलाई पुनः प्रतिष्ठित गर्नुभयो, त्यस्तै हाम्रा परमश्रद्धेय गुरुमहाराजले पनि सनातन वैदिक मर्यादाको संरक्षणरूप पावन कर्म गरी प्रत्येक नर-नारीका मानस पटलमा अङ्कित बन्न पुग्नुभयो।

धवलागिरिको वक्ष:स्थलमा पर्ने बाग्लुङ्ग जिल्ला विहूँ गा.वि.स.-३, इनारपानी पौवाडाँडा नामक पवित्र भूमिमा पिता टीकाराम कंडेल र माता अदितिका स्वर्णमय गर्भबाट वि.सं. १९९४ साल आश्विन १८ गते रविवार अमावस्या तिथिका दिन पवित्र भारद्वाज वंशीय परमोत्तम ब्राह्मणकुलमा जन्मनुभएका गुरुमहाराज बाल्यकालदेखि नै अलौकिक चरित्र भएका हुनुहुन्थ्यो।

पहाड़ी जनजीवनको परम्परा अनुसार गोठमा बस्ने, गोसेवा गर्ने कार्यमा नियुक्त हुँदा पनि वहाँको अपूर्व नैसर्गिक प्रभावले सबैलाई आकर्षित तुल्याएको थियो। गुरुकुल या विद्यालयमा प्रवेश नै नगरी सम्पूर्ण विषयमा त्यस्तो अद्वितीय प्रतिभा कसरी भयो होला भन्ने कुरा यौटा जिज्ञासाको विषय नै हो। तर पूर्व संस्कार, ईश्वरानुग्रह र गुरुको स्नेहमय आशीर्वादका सामु त्यो कुनै आश्चर्यको विषय भएन, बाल्यावस्थादेखि नै वहाँको विशेषभक्ति मर्यादा पुरुषोत्तम भगवान् राममा थियो। स्नान-संध्या, पूजा-आराधना, भजन-कीर्तन आदिमा विशेष रुचि थियो। बाल्यावस्थामै पनि वनमा जाँदा वहीं वन्य सामग्री तयार गरी ढुङ्गा आदिको मूर्ति बनाई पूजा शुरु गर्नुहुन्थ्यो र साथीहरू सहित भई कीर्तन गर्ने, प्रसाद वितरण गर्ने गर्नुहुन्थ्यो भनी प्रत्यक्षदर्शी वहाँका समवयस्कहरू बताउँछन्। गाउँमा कहीं पूजा-पाठ कथा भएको थाहा पाउँदा साथ वहाँ पुग्ने र श्रद्धासंग भगवत्कथा सुन्ने, घरमा गोठमा आई ती कथाहरू अरुलाई सुनाउने पनि गर्नुहुन्थ्यो। यस्तो स्वभाव देखेर सबैले यी बालक पछि कस्ता होलान् भनी चर्चा गर्दथे।

**बाह्य वृत्तिहरू—**

अक्षर परिचय भन्दा पहिले पनि रामायणको पुस्तक साथमा राखी अरुबाट सुन्न रुचाउने वहाँले एक दिन ईश्वरानुग्रहवश स्वयं विद्याको ज्योति प्रकट भएको अनुभव गर्नुभएछ। त्यसपछि स्वयं रामायणको पाठ गर्न थाल्नु भएछ।

'यसरी अक्षरारंभ बिना नै सम्पूर्ण विद्या कसरी उपस्थित भइन् र हजुरलाई यो दुस्तर भवसागरमा नफँस्ने प्रेरणा कसरी प्राप्त भयो?' भनी हामीले कुनै दिन प्रश्न गर्दा स्वयं वहाँबाट आज्ञा भयो—बाबू हो! आफ्नो प्रेरणाको स्रोत अरुलाई सुनाउन उचित त होइन तर तिमीहरूका प्रेरणाका लागि सुनाउँछु। एक दिनको प्रसङ्ग हो—म गाईको गोठमा थिएँ, अचानक एक अद्भुत अपरिचित योगी अगाड़ी आउनुभयो। वहांको स्वरूप दिव्य थियो। वहाँले भन्नुभयो—''मलाई भोक लागेको छ केही खान देऊ'। श्रद्धा र उत्सुकताले युक्त भई मैले एकमाना चामल टक्र्याएँ। वहाँले त्यसबाट तीन मुठी चामल लिनुभयो। स्वयं पकाई केही भोजन गर्नुभयो र बाँकी उच्छिष्ट मलाई खान दिनुभयो। त्यसपछि 'तिमी यहाँ बस्न हुँदैन मसंग हिँड' भन्नु भयो। योगीको आज्ञा अनुसार म पनि वहाँका पछि-पछि लागें। तर केही पर पुगे पछि वहाँ अदृश्य हुनुभयो। दायाँ बायाँ दृष्टि लगाएँ कतै पनि वहाँलाई देख्न सकिन। योगीको सम्बन्धमा वर-पर सबैलाई सोधें तर देखेको उत्तर कतैबाट आएन। त्यसपछि थाहा भयो कि मलाई स्वयं भगवान् शङ्करले दर्शन दिनुभएको रहेछ। शिशुबुद्धिवश थाहा पाइन। त्यसपछि विद्याधिपति शङ्करको नै अनुग्रह होला, स्वत: विद्या स्फुरित भइन् र गोठमा बस्ने इच्छा पनि हरायो। क्रमशः गुरु आश्रममा गएँ। वहीं नै गुरुसेवा र वेदान्त श्रवण गर्ने सौभाग्य प्राप्त भयो।

गुरुमहाराजका जीवनमा घटेको यो सन्दर्भ सुन्दा र मनन गर्दा अध्यात्मपथका पथिकलाई आफ्नो साधनामय यात्रामा ठूलो सहयोग हुने मान्दछु।

गुरु महाराजका पूज्य गुरु हुनुहुन्थ्यो—तपोमूर्ति ब्रह्मनिष्ठ श्रीछविप्रकाशानन्दजी। पैयूँ धुवाँकोटको पवित्र भूमिमा गर्गगोत्रीय वेदपाठी ब्राह्मणको कुलमा जन्मिनुभएको वहाँ ४८ वर्ष सम्म परिवारका साथमा शास्त्रीय गृहास्थाश्रम पूरा गरी आफ्नो सम्पत्तिद्वारा परिवारको आवश्यक व्यवस्था मिलाई पूर्वजंन्मको पवित्र संस्कारद्वारा प्रेरित वैराग्यको बाढले वैषयिक चिन्तन र विषयप्रतिको भोग्यबुद्धि समाप्त गरी म्याग्दी जिल्लाको मुसुङ भन्ने जङ्गलमा एकान्त शान्त र तपोमय जीवन यापन गर्दै ब्रह्मनिष्ठाका साथ रहनुभएको थियो। ब्रह्मनिष्ठ छविप्रकाशानन्द गुरुसंग गुरुमहाराजको प्रथमभेट सानै उमेरमा नै भएको हो। पितामाताका साथ आउने जाने प्रक्रिया घट्दै गएपछि क्रमशः गुरुशिष्य बीचको स्नेहले प्रगाढ़ रूप लिन थाल्यो। यो गुरुशिष्य-भावरूप सम्बन्ध नै आज आएर हाम्रो समाजको निर्माणमा कारण बन्न पुग्यो। यस संयोगलाई ईश्वरीय वरदानको रूपमा मात्र सकिन्छ।

यसप्रकार सत्सङ्ग र गुरुसेवाद्वारा आरम्भिक उमेर बिताएपछि सांसारिक माता-पिता र बान्धवको दुस्तर-मायामोहलाई पूर्णरूपले त्यागी साधनामय जीवन बिताउन चाहने गुरुजी महाराजले आफ्नो पैतृक सम्पत्ति गुरुपुत्रलाई अर्पण गर्नुभयो। त्यसपछि केही वर्षसंम गुरुसंगको सहवास पछि गुरु आज्ञा अनुसार सब त्यागी कौपीन र कमण्डलुमात्र साथमा लिई वन्यजन्तुले घेरिएको निर्जन वनमा तपस्या गर्न जानुभयो। यसरी निष्किञ्चन भई वनतर्फ लाग्नुभएका गुरुमहाराज फेरि फर्केर समाजमा आई यति ठूलो समाजको कल्याणमा लाग्नुहोला भन्ने कसैले चिताएको पनि थिएन।

वहाँलाई कन्दरा नै महल थियो, घाँस नै विछ्यौना, धुनि नै मित्र, भस्म नै वस्त्र, साग-सिस्नु नै आहार यस्ता तपस्याका पोशाक धारण गरी शारीरिक कष्टमा कत्ति विक्षिप्त नभई तपस्यामा रहनुभयो। आत्मचिन्तन्, मय तपस्याबाट प्राप्त ब्रह्मवर्चस्का सामु यो कुनै असम्भव कुरा होइन।

गुरुमहाराजले तपस्या गरेका शिखरहरूध्ये मुसुङ्, सोलिघोप्टे, झुलेनी, शिवधुरी, हिले, दिब्रुङ्, शालिमेदह, रेसुङ्गाआदि प्रमुख छन्। यी मध्ये विशेष सिद्धिप्राप्त भएका स्थल शिवधुरीको कन्दरा र दिब्रुङ्को खर्सुको फेद प्रमुख हुन्। यसरी कठोर साधनाद्वारा सिद्धिको शिखरमा पुग्नु भएका गुरुमहाराज परमेश्वरको अव्यक्त प्रेरणा पाई वैदिकमर्यादाको संरक्षण संम्वर्द्धन गर्न समाजमा आउनुभयो। संस्कृत गुरुकुल एवं विविध आश्रम मठमन्दिर स्थापना गरी यागादि र प्रवचनको माध्यमले वेदोक्तधर्म र ब्रह्मज्ञानको सदुपदेश गर्नुभयो। वहाँका प्रवचन, तत्त्वोपदेश, निःस्वार्थ समाजसेवा, अनुशासन, गुरुकुल आदिको सञ्चालन आदि क्रियाकलापहरू ग्रन्थाध्ययनको बलमा हैन तपस्याको बलमा भएका थिए। यो कुरा सबैका सामु प्रत्यक्ष छ।

मैले सर्वप्रथम गुरुमहाराजको दर्शन भेट गर्ने सौभाग्य बिहूँ रामकोटस्थित आश्रममा नै प्राप्त गरेको हूँ। त्यतिबेला मेरो उमेर १५ वर्षको थियो। परमेश्वरको इच्छा र पूर्वसंस्कारको प्रेरणाले जुन दिन वहाँको दर्शन प्राप्त गरें, त्यस दिनदेखि मेरो जीवनको नयाँ अध्याय शुरु भयो। यद्यपि गुरुकुलमा गई कर्मकाण्ड आदिको अध्ययन गरी कुल परम्परागत पाण्डित्य पौरोहित्य चलाउने साधारण विचार लिएर घरबाट गएको थिएँ परन्तु गुरुमहाराजको दर्शन भएपछि वहाँको ब्रह्मतेज झल्किएको दिव्य मूर्ति, सरल स्वभाव, मधुर वाणी आदि विशिष्ट गुणले गर्दा वहाँ प्रति दिनानुदिन आकर्षित हुँदै गएँ। यो मेरो ठूलो सौभाग्य सद्गुरुको महिमामयी कृपाको परिणाम नै हो।

**आन्तरिक वृत्तिहरू—**

लोकशिक्षार्थ वर्णाश्रम धर्मलाई स्वीकार गरी धर्मोपदेश, ज्ञानोपदेश र संस्कृत-संस्कृतिको प्रचार गर्दै पहाडदेखि

मधेशसम्म पैदल यात्रा गर्दा पनि वहाँले कुनै कष्टको अनुभव गर्नुभएन। वहाँका जीवनमा वासनामूलक प्रवृत्तिहरू कहिल्यै पनि देखिएनन्। वहाँका अन्त:करणका वृत्तिहरू नित्य ब्रह्ममा लीन रहन्थे। अर्थात् वहाँ नित्य साक्षीभावमा रहनुहुन्थ्यो। तर बाह्यदृष्टि भने लोकोपकारमा समर्पित थियो। स्वयं नित्य ब्रह्मचिन्तनमा रहेर पनि बाह्य जगत्को व्यवहारलाई अति नै सहज ढंगले समाधान गर्नुहुन्थ्यो। शिक्षाको विकास, मठ मन्दिर तथा आश्रमहरूको स्थापना र सुसञ्चालनका साथै पुल, बाटो, धर्मशाला, खानेपानी आदि सामाजिक कार्यमा पूर्णरूपमा समर्पित हुनुले वहाँको लोकोपकारी व्यक्तित्वलाई अझ बढ़ी स्पष्ट पार्दछन्।

वर्तमान युगको बहिर्मुखी प्रवृत्तिलाई ध्यानमा राखी लोकोपकारार्थ यी मठमन्दिरहरूको स्थापना नगरिदिएको भए यस राष्ट्रको धार्मिक रूपरेखा नै दयनीय हुने थियो। त्यतिमात्र होइन सारा देशवासीहरूको मानस नै भिन्नै हुने थियो। भगवान् शङ्कराचार्यले झैं गुरुमहाराजले पनि छोटो समयमा नै वैदिकमर्यादाको उत्थान गरी समाजको कायाकल्प गर्नुभएको तथ्य छिपाएर छिप्दैन। जसरी घना वृक्षले सम्पूर्ण प्राणीहरूलाई विना शर्त शीतलता प्रदान गर्छ त्यसरी नै गुरुमहाराजले पनि ठूला-साना, धनी-गरीब, सबैलाई प्रत्युपकारको भावना नलिई शान्तिरूप छहारी प्रदान गर्नुहुन्थ्यो। वहाँको उपदेश, सान्निध्य र आशीर्वादले हजारौं साधकहरूले विषयतृष्णारूप अन्धकारलाई निराकरण गरी जीवनलाई सफल गराए। कतिपय भौतिकवादी भनिने कुतार्किकहरूले कुतर्कका आधारमा ईश्वर धर्म र वेदप्रामाण्यवादको खण्डन गर्ने कुप्रयास गर्दथे, तर तिनीहरूलाई गुरुमहाराजले युक्तियुक्त र ठोस उत्तर दिई छिटै प्रभावित पार्नुहुन्थ्यो। यसरी प्रभावित भएका उनीहरू छिटै नै शिष्यत्व ग्रहण गर्न आइपुग्थे।

सौभाग्यवश मलाई गुरुदेवका साथ २० वर्षसम्म रहने अवसर प्राप्त भयो। यस अवसरमा मैले प्रत्यक्ष अनुभव गरें कि वहाँको जीवन तपोमय र स्वभाव अगम्य थियो। कतिपय सिद्धिहरू पनि वहाँका पछि लागेका थिए, तर प्रयोग गर्नु भएन। समय-समयमा हामीले प्रत्यक्ष रूपमा अलौकिक शक्तिको सङ्केत पाएका थियौं परन्तु यी शक्तिहरूलाई वहाँले प्रकट गर्न चाहनुभएन; अन्नपूर्णा सिद्धि भने छिप्र सकिनन्। आफ्नो हृदयमा अनात्मचिन्तनलाई कहिल्यै स्थान दिनुभएन। वहाँमा दोषारोपण गर्नेहरू पनि वहाँका प्रभावलाई बुझी स्वयं क्षमा याचना गर्न आउँथे। पछि कार्य सफल भएको पनि बताउँदथे।

समय-समयमा हामी आश्रमवासी भक्तहरूलाई सरल शैलीमा गहन उपदेश गर्दै आज्ञा हुन्थ्यो—आत्मचिन्तन गर्ने साधकका लागि सांसारिक मोह भयंकर जहर हो। होशियार नहुने हो भने विषयविषले कुनै पनि समयमा आक्रमण गर्न सक्दछ। संसार एक नाट्यशाला हो। स्त्री-पुरुषभावको मुकुण्डो उक्त नाटकमा अभिनय गर्ने पात्रको उपकरणमात्र हो। नाटकीको वेश केही बेरका लागि मात्रहुन्छ सधैंका लागि हुँदैन, त्यस्तै सांसारिक व्यवहारपनि प्रारब्ध रहँदा संमको मात्र हो, सधैंका लागि होइन। इन्द्रिय प्राण र शरीरादि अनात्मपदार्थमा अहंकार गर्नुहुँदैन। यिनमा सत्यत्व बुद्धि पनि नगर्नू। स्रक्चन्दनादिको भोगेच्छा लिनु हुँदैन। वेदान्तशास्त्रको श्रवण मनन गरिरहनू, ब्रह्मविचार छोड़ेर बाँच्नु, बाँच्नु नै होइन। आ-आफ्नो वर्ण-आश्रमको मर्यादालाई निष्ठापूर्वक पालन गर्नु तर तत्तद् अवस्थाका वेषभूषा र कर्मको अभिमान बिल्कुल नगर्नू। साधनामार्गमा शास्त्रीय मर्यादाको उल्लंघन गर्नु ठुलो गल्ती हो। आफूले मान नखोज्नु अरुलाई योग्यतानुसार संमान दिनू। अनिच्छया मान आए पनि त्यसको पहाडमा आफू चढने गल्ती कहिल्यै नगर्नू, किनभने बाह्य विषयहरू शरीरसंग संम्बन्धित हुन्छन्। शुद्ध आत्मामा मान र अपमानको सम्बन्ध कहिल्यै रहँदैन-इत्यादि।

विशेष जिज्ञासा राख्ने साधकलाई आफ्ना गुरुमहाराजले जस्तै यहाँले पनि षट्चक्रचिन्तनको उपदेश दिनुहुन्थ्यो।





कैयौं साधकलाई अजपा उपासना र कुण्डलीजागरण गर्ने प्रक्रिया सिकाई सहजयौगिक पद्धतिबाट साधना गराउनुहुन्थ्यो। यसै प्रक्रियाबाट साधना गर्ने भक्तहरू वहाँका विभिन्न आश्रममा अनुष्ठानरत छन्।

**लोकोपकारक सन्त—**

वहाँबाट स्थापित प्रमुख आश्रममध्ये दिब्रुङ, रामकोट, देवघाटधाम, सालिमेदह, रूपाकोट, रुद्रवेणी, शरदपुर, दुर्गानगर, वराङ्जा, लेखानी, क्यूँ, रेमी, रामन्दिर बिहूँ, राममन्दिर सोता, पचुवा, लङ्कू, गैंडाकोट, १६ नं० गिदाहा, मुसुङ, देउराली, आदि प्रमुख छन् र प्रत्येक आश्रमका भक्तहरूले वहाँलाई अलग-अलग विशेषताको साथ अनुभव गरेको बताउँछन्। गुरुमहाराजद्वारा स्थापित प्रथम आश्रम र विशेष वेदान्त-चिन्तन हुने तपोवन दिब्रुङ हो। चारैतर्फ हिम-आच्छादित पावन पहाडहरूले र मनोहर जंगलले वेष्टित भएको, पक्षीहरूका मधुर कलरवले गुञ्जायमान, वैराग्यको अनुकूल वातावरण भएको यो लेक गुरुमहाराजको तपोभूमि भएकोले सिद्धपीठको रूपमा प्रतिष्ठित छ। यहाँ अघि पनि नित्य ब्रह्मचर्चा चल्थ्यो र आज पनि चलिरहन्छ। विषय र तज्जन्य प्रदूषणलाई यहाँ ठाउँ छैन। समय-समयमा श्राद्ध तर्पणादि र दान पुण्य गर्न भक्तहरूको ठूलो भीड लाग्छ। यस तीर्थस्थलमा पुग्दा अन्तःकरण स्वतः निर्मल हुन्छ। यहाँ रही धेरै समयदेखि गुरुमहाराजको र आश्रमको पनि सेवा गर्दै भजनमार्गमा लाग्नुभएका स्वामी विद्यानन्द सरस्वती जी महाराजले यसस्थानका अनुभूत विशेषताहरू बताउनुहुन्छ। यस ठाउँमा धेरै साधकहरूले गायत्रीको अनुष्ठान गरी जीवनको परमपुरुषार्थ सिद्ध गर्नुभएको छ।

दिब्रुङ्को नजीकै छवि प्रकाशानन्द ब्रह्मनिष्ठ गुरुमहाराजको तपोभूमि सालिमेदह पर्दछ। तीर्थरूप यस पुण्यभूमिमा पनि समय-समयमा हजारौं पुण्यात्मा भक्तहरूको भीड लाग्दछ। परमगुरुजीको समाधि रहेको (निर्जीव शरीरलाई गर्तस्थापित गरिएको) ठाउँ पनि यहीं हो। वहाँको स्मृतिमन्दिर समेत भएको यस साधना भूमिमा मात्र दुई साधिकाहरू पच्चीस वर्षदेखि योगसाधना गरी बसेका छन्।

पूज्य गुरुवरले देवघाटधामस्थित परमश्रद्धेय योगनिष्ठ गलेश्वर बाबा (ईश्वरानन्द ब्रह्मचारी) द्वारा संस्थापित गलेश्वर आश्रममा वहाँका तत्कालीन महन्त दण्डी स्वामी श्री १००८ आशुतोषानन्द सरस्वतीजीको विशेष आग्रह र सम्पूर्णभक्तहरूको अनुरोधमा वि० सं० २०४६ सालमा गलेश्वर आश्रमका पीठाधीश पदको स्वीकार गर्नुभयो। त्यसपछि त्यहाँका अन्नक्षेत्र, विद्यालय, भोजनालय, सन्तनिवास, बाटो, खानेपानी आदि विकासका साथसाथै नित्य सत्सङ्ग र साधनाको विशेष व्यवस्था मिलाउनुभयो। यसपाछि २०४८ साल जेठ महिनामा परमश्रद्धेय अनन्तश्रीविभूषित स्वामी सत्यप्रकाशानन्द सरस्वतीजी महाराजबाट परमहंस आश्रम स्वीकार गर्नुभयो। यसै सिलसिलामा परमश्रद्धेय स्वामी सत्यप्रकाशनन्द सरस्वतीजी महाराजसंग अभिमन्त्रणा गरी दुबै गुरुशिष्यको निर्देशनमा देवघाटमा विशाल हरिहर मन्दिरको निर्माण सम्पन्न हुनुले तीर्थभूमिको गौरव झन् बढेको छ। पूज्य गुरुमहाराजले यसरी विविध स्थानमा मन्दिर र विद्यालयको स्थापना, सञ्चालन, वेदान्तप्रचार र सामाजिक उन्नतिका पुनीत कार्यहरू सम्पन्न गरी जीवनका ५९ वर्षहरू व्यतीत गर्नुभयो।

**अन्त्यावस्था—**

रोगको सम्बन्धमा वहाँको धारणा थियो—"रोग मेरो पहिलो गुरु हो। शरीर घर हो, रोग पाहुना हुन्। घरमा आउने पाहुनाको तिरस्कार गर्नुहुँदैन। हुन पनि रोग न लागेको भए म सायद सांसारिक विषमय विषम मार्गमा भट्किने थिएँ होला।" विधिको विधान विचित्र हुँदोरहेछ। टारेर टर्ने, सासेर सर्ने होइन रहेछ। शरीरको धर्म रोगले आक्रमण गरे तर रोग

प्रतिको वहाँको दृष्टिकोण भिन्नै थियो। नचाहँदा नचाहँदै पनि भक्तहरूको आग्रहमा चिकित्सालयमा पुग्नुभयो। मनहरि कण्डेल, शोभाकर ब्रह्मचारी, भानु ब्रह्मचारी लगायत कतिपय श्रद्धालुहरूले वहाँका लागि आफ्नो मृगौला दिन सम्मपनि प्रतिज्ञा गरेका थिए, तर यो पनि विधिलाई मान्य थिएन। सम्पूर्ण भक्त-वृन्दका आशाहरूलाई तोड़ी २०५३ साल माघ १८ गते विहान भगवान् पशुपतिनाथको सन्निधिमा इहलीला समाप्त गरी वहाँ ब्रह्मलीन हुनुभयो। त्यति वेला सर्वत्र शून्यता व्याप्त भयो। पृथिवी थर्थराइन् (भूकम्प गएको थियो)।

हुन त ''जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च'' भन्ने सिद्धान्त थाहा पाइएकै हो। मर्यादापुरुषोत्तम श्रीराम, योगेश्वर श्रीकृष्ण, भगवत्पाद श्रीशङ्कराचार्य आदिको पनि शरीर नरहेको अनुभव थियो। ''नासतो विद्यते भावो नाभावो विद्यते सतः'' (सद्वस्तु नाशिदैन, असदवस्तु कसै रहँदैन) भन्ने भगवान्‌कोभनाइ पनि छ तथापि यति छिटै गुरुमहाराजदेखि अलग भई रहनुपर्ला भन्ने कल्पनासम्म पनि थिएन। यति छिटो स्मृति-लेख लेख्न कलम अग्रसर गर्नुपर्ला भन्ने सोचिएको सम्म पनि थिएन तर अचानक वज्रपात परेर आयो जे नहुनुपर्ने थियो त्यही भयो। भूतभावन पशुपतिनाथ भगवान्‌ले वहाँलाई धर्म-रक्षार्थ आफ्नो प्रतिनिधि बनाएर पठाउनुभएको थियो, काम पूरा भए पछि पुनः आफ्नो सान्निध्यमा बोलाउनुभयो र हामी सबैका माझबाट टप्प टिपेर आफैमा लीन गर्नुभयो। यो सबै प्रभुकै लीला त होला!

जसको सान्निध्यमा रहँदा सहज आनन्द मौलाउँथ्यो त्यस्ता गुरुमहाराजको शरीरलाई भूमिले आत्मसात् गरिन्। देवघाट हरिहरमन्दिरको ठीक दायाँ पट्टिको स्थानमा सद्गुरु स्वामी सत्यप्रकाशानन्दजी महाराजको आज्ञा अनुसार समाधि मन्दिर बनाइएको छ। अहिले गुरुमहाराज व्यष्टिरूपबाट समष्टिरूपमा प्रवेश गर्नुभएको छ र आत्मारूपले सबैको हृदयमा रही सदसद्विवेक गराइरहनुहुनेछ। मलाई यही विश्वास छ।

### गुरुदेवप्रति हाम्रो कर्तव्यं

हामीमाथि रहेको गुरुऋण तिर्न असमर्थ छौं, तर पनि वहाँले देखाएको मार्गको अनुसरण गरी वहाँको आज्ञाको पालन गरेमा अवश्य पनि गुरुऋण तिरेको ठहर्नेछ। गुरुमहाराजका उपदेशलाई मनन गरी जीवन सार्थक बनाउनु हाम्रो कर्तव्य हुन आउँछ। साथै गुरुमहाराजद्वारा स्थापित यी आश्रमहरूको संरक्षण गर्नु एवं वहाँले बताइएका सनातन वर्णाश्रम धर्मका मर्यादाको पालन गर्नु हाम्रो कर्तव्य हो।

अन्त्यमा गुरुमहाराजका कृपाले सम्पूर्णप्राणीहरूको चित्तवृत्ति सत्कर्तव्यमा लागोस्, धर्मको रक्षा होस्, सवैमा शान्ति फैलियोस्, वहाँले दिइएका कार्यभारलाई सुचारु रूपमा सञ्चालन गर्ने क्षमता प्राप्त होस्, र अखण्ड ब्रह्माकारवृत्तिमा स्थिर हुन सामर्थ्य मिलोस्; यिनै प्रार्थनाकासाथ सद्गुरु महाराजका स्मृतिमा हार्दिक श्रद्धासुमन समर्पित गर्दछु।





# ❋ परमानन्द ब्रह्मचारीदेखि स्वामी परमानन्दसम्म ❋

**—सम्माननीय डा०स्वामी प्रपन्नाचार्य**
भृगस्थली, काठमाण्डौ

नेपाल विश्वको एक मात्र हिन्दू राष्ट्र हो। यो हिन्दू राष्ट्र आज या दश बीस वर्षदेखि यता मात्रै होइन, अपितु सृष्टिको मिर्मिरे उज्यालोदेखि नै हिन्दूराष्ट्र कहलायो भने आजसम्म पनि हिन्दू राष्ट्र नै रहेको छ । यो धर्मसापेक्ष्य हिन्दू राष्ट्र नेपालमा नेमुनिको निर्देशनमा गोपालवंशी किरात, अहीरवंशी किरात, यलम्ववंशी किरात, लिच्छविवंशी किरात, मल्लवंशी किरातदेखि ठकुरी शाहवंशको शासनसम्म पनि नेपाल हिन्दू राजा महाराजहरूबाट शासित हुँदै आइरहेको छ। नेपाल' नाम कति पुरानो हो? भन्ने प्रश्नको उत्तरमा आज भन्दा पाँच हजार वर्ष पुरानो इतिहास महाभारतले भन्छ— 'नेपालविषये ये च राजान:' अर्थात् आज भन्दा पाँच हजार वर्ष पूर्व पनि नेपाल एउटा राष्ट्रकै रूपमा विद्यमान थियो भन्ने इतिहास प्रष्ट भएको छ। यति मात्रै होइन अनेकौं पुराण-इतिहास, शिलालेख आदि पुरातत्वहरूमा उल्लेख भएअनुसार नेपालको प्राचीनत्वमा सन्देह गर्ने अवसर छैन। यहाँ 'नेपालविषये' भन्ने पदमा 'विषय' शब्दको अर्थ कोषकार तथा महर्षि पाणिनिले 'विषयो देशे' भनेर अर्थ्याएका छन्। देश तथा राष्ट्र पर्यायवाचक शब्द हुन्। त्यसैले आज भन्दा पाँच हजार वर्ष पूर्व महाभारतकालमा पनि नेपाल प्रसिद्ध राष्ट्रकै रूपमा रहेको थियो भन्ने इतिहास प्रष्ट हुन्छ। नीलमतखण्ड, जालन्धरखण्ड, केदारखण्ड, मानसखण्ड, हिमवत्खण्ड क्रमश: जम्बूकाश्मीर, हिमाचल, गढ़वाल, कुमाऊँ, तथा नेपाल हिमालयका पाँच खण्ड इतिहासमा प्रसिद्ध छन्। ती मध्ये हिमवतखण्ड नेपालको विश्वका राष्ट्रहरूमा आफ्नै स्थान छ। नेपालको भौगोलिक क्षेत्रफल सानो छ। विश्वका साना राष्ट्रहरू मध्ये नेपाल पनि एक हो। परन्तु नेपाल भूस्वर्ग हो। हरितश्यामल प्रकृतिको लीलाभूमि हो। नेमुनि, याज्ञवल्क्य, जनक, सीता, अश्वपति, बुद्ध, आनन्द आदि समर्चनीय विश्वगुरुहरूको जन्मभूमि हो। सप्तकोशी र सप्तगण्डकीका पावन धाराहरूले सिञ्चित नेपालका राष्ट्रदेव भगवान् पशुपति तथा विश्वमा सबै भन्दा अग्लो सगरमाथाले गौरवान्वित राष्ट्र हो।

नेपालको अनुपम छटा देखेर प्रकृति सुन्दरीको आँचलमा भजन गर्ने उद्देश्यले शिवपुरी बाबा, खप्तड बाबा आदि महापुरुष नेपालमा पसेर नेपालका जनतालाई आध्यात्मिक मार्गको प्रदर्शन गरेर नेपालको प्रकृतिमा विलीन भइसकेका छन्। परन्तु इतिहासको आध्यात्मिक विधामा दृष्टिपात गर्दा मित्रराष्ट्र भारत र नेपालका आध्यात्मिक महापुरुषहरू दुबैतिर साधनारत थिए र छन् पनि भन्ने निश्चयमा पुगिन्छ। नेपालबाट मित्रराष्ट्र भारतमा गएर प्रख्यात हुने नेपाली महापुरुषहरू स्वामी शशिधरदास मिरासिनी, प्रथम महामहोपाध्याय हरिशर्मा मनि, अनन्तानन्द गिरी, नेपाली तपोवनस्वामी, नरहरितीर्थ, धनी-दास, मङ्गलदास आदि धेरै थिए र अद्यावधि छँदै छन् पनि। यसरी अध्यात्मसाधनाका क्षेत्रमा आदान र प्रदान हुँदै रह्यो भने संस्कृत वाङ्मय र नेपाली साहित्यको सृर्जनामा वाराणसी तथा दार्जिलिङ्ग आदिको अविस्मरणीय इतिहासलाई भुल्न हुँदैन।

जसको फलस्वरूप महामहोपाध्याय नीलदेव पन्त, वाचस्पति पन्त, सुकीर्तिदत्त पन्त, पद्मप्रसाद भट्टराई, रङ्गनाथ पौडेल, प्रेमनिधि पन्त आदि संस्कृत विषयका मूर्धन्य विद्वान् थिए भने नेपाली साहित्यका मोतीराम भट्ट, शम्भु प्रसाद ढुङ्गेल आदिका नेपाली साहित्यको सृजनाक्षेत्र मित्रराष्ट्र वाराणसी नै रह्यो। नढाँटीकन भन्नुपर्दा साधु, सन्त महात्मा आदिदेखि लिएर सबैले उच्चशिक्षा लिन जानुपर्छ भने विदेशतिरै लाग्नुपर्छ। यो मित्रराष्ट्रको अनावश्यक प्रशंसा त नभ नौं तथापि नेपालको विडम्बना चाँही अवश्य भन्न सकिन्छ।



यस्तै प्रकारले वि.सं. सत्रौं शताब्दीको उत्तरार्धमा वर्तमान लुम्बिनी अञ्चल, अर्घाखाँची जिल्ला अर्घा वामरूक गाऊँमा जन्मेका लालमणि मिरासिनीका नाती, दिशै पण्डित मिरासिनीका छोरा ¹शशिधर मिरासिनी भारतको गुजरात प्रान्त जूनागढ राज्य गिरिनारमा ज्योतिमुनि-मुरेबाबासँग योगविद्या सिक्न गएका थिए। वि.सं. १८ शताब्दीमा शशिधरले योग आदि सिकेर आफ्नो गुरुसंग पौडीगढवालको रमणीक क्योंकालेश्वर (कङ्कालेश्वर) मन्दिरमा पुगेर कुटिया बनाएर बसेका थिए। शशिधरले आफ्ना गुरु ज्योतिमुनि भुरेबाबाको नामबाट नैष्ठिक ब्रह्मचारी मुनिसम्प्रदायको स्थापना पौडीगढवालमै गरे। यद्यपि ज्योतिमुनि भारतका प्रसिद्ध विष्णु स्वामी समुदायका थिए। त्यसैले सम्प्रदायको दृष्टिले हेर्ने हो भने शशिधर विष्णुस्वामी सम्प्रदायका वैष्णव थिए भन्नुमा अत्युक्ति नहोला। पौडीको शिलालेखको हिसावले हेर्दा वि.सं. १८ शताब्दीमा बत्तीस वर्षको उमेरमा शशिधर त्यहाँ बसेका थिए। त्यस पछि शशिधर नेपाल पसे। आफ्नो जन्मभूमि अर्घावामरुक गाउँमा पुगेयछि वैवाहिक सूत्रमा आबद्ध भए। त्यसपछि गाउँबाट वारिपट्टि खनगुफामा गुठी जमाए र बस्दा लक्ष्मीनारायण भन्ने छोरा जन्म्यो। त्यस पछि शशिधरले खनगुफा पनि छोडे र गुल्मी तमघास माथि रेसुङ्गाको घनघोर जङ्गलमा आएर तपस्या गर्न थाले। पछि छोरा लक्ष्मीनारायण शशिधर सँगै आएर बस्दा ऊ पनि बाबु जस्तै सिद्ध भएका थिए भन्छन्। जे होस्, शशिधर वि.स. १८ शताब्दीका नामी सन्त थिए। नेपालका जोसमुनि सम्प्रदायका संस्थापक यिनै शशिधर थिए। जेहोस् रेसुङ्गालाई शशिधर जस्ताले तप: स्थल बनाएर अध्यात्म साधनाले नेपाललाई गौरवान्वित तुल्याएका थिए। यसै परम्परामा यदुकानन्द स्वामीले राणाकालमा करोडौंको सम्पत्ति जोडेर समुद्रतलदेखि नौ हजार फीट उचाईको रेसुङ्गा (ऋष्यशृङ्ग) लाई झिलिमिलि परेरका थिए। त्यहींका जनताको गल्तिलेगर्दा पूरा आश्रममा आगो लगाएर यदुकानन्द काठमाण्डौ आई बसे। त्यहाँको जनताले आफ्नो प्रगति वा उन्नतिलाई आफैं तहस नहस पारे। रसुङ्गाको त के भनौं गुल्मीकै शिर ढल्यो। गुल्मीकै के सम्पूर्ण नेपालकै गौरवको परम्परा खतम भयो। त्यतिखेर केही जनता समझदार निक्लेका भए रेसुङ्गाको त्यो स्थिति हुने थिएन । साधु, सन्त, महापुरुष भनेका राष्ट्रका विभूति हुन्छन् भन्ने त्यहाँका जनताले ठानेर दु:ख नदिएका भए यदुकानन्दले आगो लगाउने थिएनन् होला। किन भने आफैंले परिश्रम गरेर जोडेको सम्पत्तिमा आगो लगाउनु सानो मुटुको काम होइन र सानो मुटुको कामले हुँदैन पनि। जेहोस् आफ्नो भाग्यलाई आफैं खतम गर्ने अपराधीको रेसुङ्गा मात्र किम्वदन्ती भएर बसेको छ भन्ने मलाई थाहा थिएन शशिधर जस्ताले तपस्या गरेको भूमि उजाड छ भन्ने थाहा थिएन। त्यहाँको जनताको भाग्य फुटेको छ भन्ने पनि थाहा थिएन। म चाहिं शशिधरको अनुसन्धान (Research) मा लागिराखेको थिएँ। रिसर्च गरेको छ वर्ष भइसकेको थियो। पौडी आदिमा अनुसन्धान गरेर, वामरुक, खनगुफा र रेसुङ्गाको रिसर्च गर्न पुगें। त्यस बेला तात्कालिक सी.डी.ओ. पाल्पा, तथा तमघासको सी.डी.ओ. केशवप्रसाद पौडेल, जि.पं.स. रविलाल थापा, रुद्रबहादुर भुजेल मगर, फोटाग्राफर नन्दराम पाण्डेय तमघास आदिको सहयोगले म घोडामा चढेर रेसुङ्गा पुगें।

रेसुङ्गा हिड्नुभन्दा पूर्व माथि नै बस्ने कि बास बस्न तलै तमघासमा आइपुग्ने हो कि आदि चर्चा विचर्चा हुँदा मैले भनें-के त्यहा साधु सन्त रहदैनन् र? तमघासका व्यक्तिले भने-रेसुङ्गा उजाड छ; भर्खरै दश महिना जति भयो, बागलुङ्ग तिरका परमानन्द ब्रह्मचारी आएर बसेका छन्। तर साधु ब्रह्मचारी त राम्रै छन् भने। हामी रेसुङ्गातिर उकालो लाग्यौं। भयङ्कर उकालो घनघोर जङ्गल थियो। मैले भनें-ऐले त यस्तो छ शशिधरका समयमा कस्तो थियो होला? एउटाले भन्यो यस्तै थियो होला। मैले भनें—

*(१) 'जोसमुनि सन्त परम्परा र साहित्य' भन्ने पुस्तकमा जनकलाल शर्मा ढकालले गलत लेखेका छन्। त्यो पाठ यसमा सच्याइएको छ।*





**ये मत पूछो कि उसकी सूरत कैसी थी।**
**खण्डहर ही बताती है कि इमारत बुलन्द थी।।**

बूढापामा त यस्तो छ भने मस्त बाँके तन्देरीमा कस्तो होला ? बूढी हुँदा त यस्ती छे तरुनी उमेरमा कस्ती थी होली। यी कुराहरू कुराले मात्रै जान्ने विषय होइन यो अनुभवगम्य विषय'हो भन्दाभन्दै आश्रमको खण्डहर देख्न पुग्यौं। अघिल्लै दिन परमानन्द ब्रह्मचारीलाई पता चलेको रहेछ। हामी घोडाबाट उत्रदा परमानन्दजी स्वागतका लागि आफैं आइपुग्नुभयो। त्यस पछि सँगै शशिधर र लक्ष्मीनारायण दुबै पिता-पुत्रको समाधि विष्णुपादुकामा गयौं, दुबैका राणाकालमा राणाहरूले बनाइदिएका भव्य समाधि थिए। रमणीय शिखरमा रहेछन्। त्यो समाधि स्थानबाट चारै तिर रमिता हेर्न पाइन्छ। शशिधर र लक्ष्मीनारायणको समाधिले इतिहास बोल्दै थिए। त्यसमा पनि पश्चिम नेपाल रेसुङ्गादेखि लिएर समग्र नेपाल, दार्जिलिङ्ग, सिक्किम, भूटान, आसाम, मणिपुरदेखि वर्मा सम्मको जोसमुनि सम्प्रदायको इतिहास शशिधरको समाधिले भन्दै थियो। त्यस पछि फेरि तल खंडहर आश्रममा आयौं। खण्डहरको इतिहास अरुले उगाले। केहीले यदुकानन्द पागल भएका कुरा गरे। तर केही सत्य अनुभवका आधारित कुरा गर्ने व्यक्तिहरू पनि थिए। भन्दै थिए-भार्सेका केही जनताले पीर नपारेका भए यदुकानन्दले ठूलो काम गरेका थिए र गर्ने थिए परन्तु केही व्यक्ति समाजमा यस्ता पनि छन्, जो राष्ट्रका लागि घातक सिद्ध भएका छन्। यदुकान्दले करौडौंको सम्पत्ति काठमाण्डौ आदिबाट जोडेका थिए। त्यसैले आश्रम बिग्रँदा यहाँका जनतालाई दुःख लागेन भन्दै थिए। परमानन्दजीले सुनी राख्नुभएको थियो। कपटी र हेपाइ चेपाइ गर्नेहरूको आफ्नै पनि कहिल्यै कल्याण हुँदो रहेनछ पनि भन्दै हुनुहुन्थ्यो। यस्तै कुरा हुँदै जाँदा परमानन्दजीले आज यतै बसौं, भोली बिहानै म पनि तमघास सम्म जान्छु भन्नुभयो। लगभग बेलुका ८ बजेतिर भान्सा गरेपछि साधुसाई र धार्मिक सामाजिक कुराहरू खुलेर भए। त्यस बीचमा 'रेसुङ्गा र यहाँका जनताको भाग्यरेखालाई सुधार्न सक्छु कि भनेर म यहाँ बसिराखेको छु' परमानन्दजीले भन्नुभयो। मैले पूर्व प्रसङ्गानुसार भनें-

**लिखा मुसाफिरी तक्दीर में वतन की याद क्या करना।**
**जहाँ वेरहम मालिक हो वहाँ फरियाद क्या करना।**

त्यहाँ उपस्थित सबैले यो कुरा बुझ्न सकेनन्, परमानन्दजी भने चाख लिएर हाँस्नुभयो, त्यसपछि हामी सबै सुत्यौं। बिहान तीनै बजे परमानन्दजी उठेर खस्राङ्खुस्रुङ् गर्दै हुनुहुन्थ्यो। मेरो घड़ीमा तीन बज्दै थियो। वहाँ सधैं तीन बजे उठ्नुहुन्थ्यो कि त्यसै दिन मात्रै उठ्नुभएको हो, सोधिएन। परमानन्दजीलाई मैले रेसुङ्गाको भाग्यरेखालाई सीधा पार्न सक्ने व्यक्तित्व देखेको थिएँ। परन्तु सहयोग र सहयोगीहरूको भने अत्यन्तै कमी देखेको थिएँ। रेसुङ्गामा बस्दा परमानन्दजी त्यति स्वस्थ देखिनुहुन्न थियो। भोजन-व्यवस्था आकाशवृत्ति नै देखें। त्यो रेसुङ्गा बाह्रैमास जाड़ो लाग्ने ठण्डी भएको हुनाले आवश्यकतानुसार ओढ़्ने बिछाउने पनि देखिएन। परमानन्दजी चिन्तनशील परमार्थी सन्त हुनुहुन्थो। त्यस बेला पनि आश्रम सञ्चालनका लागि अधिक चिन्तन मनन गर्नुहुन्छ होला जस्तो लाग्यो। साथमा अरु तीन जना ब्रह्मचारी थिए। बिहान भयो। जेठकै महिना भए पनि नौ हजार फीटको उचाइको जाडो के कुरा गर्ने! बिस्तारै तम्घास झर्यौं। त्यस दिन तम्घासमा जनता, क्याम्पस, तथा जिल्ला प्रमुख मिलेर बजारमा मेरो प्रवचन राखेका थिए। त्यस सभामा परमानन्दजी तथा जिल्ला प्रमुख केशवप्रसाद पौडेल, क्याम्पस प्रमुख, जिल्ला सभापति, आदि उपस्थित थिए। सभा समाप्त भएपछि रेसुङ्गातिरै फर्कने बेलामा उहाँले मेरो भावभरी बिदाइ गर्नुभयो। मेरो रेसुङ्गाको रिचर्समा परमानन्दजी ठूलो सहयोगी हुनुहुन्थ्यो। हामी बिदा भएर छुट्टियौं तर 'प्रसादचिह्नानि पुरः फलानि' भने जस्तै छुट्टिँदा गरुङ्गो मन भयो। अब फेरि भेटघाट हुँदैन कि? भने जस्तै गरुङ्गो भइराखेको थियो। एक छेउमा म, एक



छेउमा सी.डी.ओ., एक छेउमा परमानन्द उभिनुभएको थियो. म काठमाण्डौतिर लागें, परमानन्दजी रेसुङ्गातिर लाग्नुभयो। संयोग सुखदायी हुन्छ भने वियोग दुःखदायी हुन्छ भन्ने कुरा सबैलाई थाहा भएकै भए पनि व्यवहारमा उतार्न धेरै कठिन भएको हुन्छ। अद्वैतवेदान्तको आमूलचुल पान गर्नेलाई पनि देहाध्यास त भएकै हुन्छ; फेरि सर्वसामान्य जनतामा देहाध्यास नहुने कुरै आएन। हामी दुबैमा युष्मदीभाव र अस्मदीभाव अध्यास भयो। केही वर्षपछि परमानन्दजीको केही सन्तहरू संग कुशल क्षेम र योगक्षेमको बारेमा अवगत गर्दा रेसुङ्गा छोडेर पूर्वाश्रम बाग्लुङ्ग जानुभयो अरे भन्ने सुनें। केही महिना बितेपछि बाग्लुङ्ग आउने निमन्त्रणा पाएँ परन्तु व्यस्ताले गर्दा जान सकिन। फेरि केही महिना पछाडि परमानन्दजी देवघाटमा बस्नु भएको छ भन्ने समाचार मैले योगी नरहरिनाथजी बाट सुनें। फेरि पछि एकजना सज्जनको माध्यमबाट देवघाट आउने निमन्त्रण पाएँ; त्यसमा पनि 'काम पनि छैन फुर्सत पनि छैन' भने जस्तै इच्छा भएरै पनि कार्यव्यग्रताले बाँधिरह्यो। त्यसपछि संन्यास लिनुभएको कुरा सुन्न पाएँ। मलाई खुशी लाग्यो। हिन्दूधर्म संस्कृतिको प्रचार-प्रसार तथा रक्षा गर्ने अब नेपालमा को छ र? गर्न सक्ने साधुसन्तहरू हुन्। गुठी हड़प भएको हुनाले नेपालमा साधु, सन्त, विद्वान् महात्माहरू बस्नै चाहँदैनन्; भारततिरै जान्छन्। यस परिस्थितिमा संस्कृत, संस्कृति र हिन्दूधर्मको संरक्षण र संबर्द्धन त प्रमुख रूपमा महात्मा, साधु, संन्यासीहरूबाटै भएको हुन्छ। तर नेपालमा हिन्दूधर्म र हिन्दू संस्कृतिको जरा उखाल्ने मात्रै छन्। राजनीतिवालाहरू आ-आफ्नो पार्टी रक्षामा हुन्छन्। अतः हाम्रो हिन्दूधर्म-संस्कृतिरूप फूलबारीको एक जना कुशल माली थपियो। सौभाग्यको अवसर आयो भनेर खुशी भएँ। फेरि केही महिनापछि कतैबाट खबर पाएँ। परमानन्दजी वीमार हुनुहुन्छ भन्ने। भगवान् रामले भन्नु भएको थियो-

**न त्वहं कामये राज्यन्न स्वर्गन्नापुनर्भवम्।**
**कामये दुःखतप्तानां प्राणिनामार्तिनाशनम्।**

हो पनि, दुःखले पीड़ित प्राणीहरूको दुःखनाश गर्ने गराउने महापुरुष विरलै हुन्छन्, किनभने राज्यको कामना पनि स्वार्थ हो। अपुनर्भवरूप स्वर्ग पनि व्यक्तिगत स्वार्थ नै हो। आफू सुखी हुन कसले चाहँदैन? परन्तु त्यस्ता आर्तिनाश र दुःखनाश गरी अर्कालाई सुख दिने सन्त दुर्लभै हुन्छन्।

**शैले शैले न माणिक्यं मौक्तिकन्न गजे गजे।**
**साधवो नहि सर्वत्र चन्दनन्न वने वने॥**

सबै ठाउँमा सबै पहाड़मा माणिक्य पाइए, सबै हात्तीहरूमा गजमोती पाइए, सबै वनमा चन्दन पाइए त्यसको मूल्य नै के रहन्थ्यो?

त्यसैले **'परकार्यं साध्नोतीति साधुः'** यस्ता साधु, सन्त पनि दुर्लभ हुन्छन्। जो **'यस्मिन् जीवति जीवन्ति स एव ननु जीवति'** वस्तुतः जसको जिउनाले सम्पूर्ण मानव जिउँछन् त्यही नै जिउँदो मानव हो। यसको तात्पर्य यो होइन कि अरूले ऊ नभए श्वासै फेर्दैनन्, कुनै पनि राष्ट्रको समाजमा अग्रेसर महापुरुषहरू नभएसम्म समाज जिएको मानिंदैन। श्वास प्रश्वास फेरेर पुत्र कलत्र अमत्रवान् मात्रै बनेर जिउनु जिउँदै मूर्दा हो भनी शास्त्रहरूले भनेका छन्। **'ईश्वरभजन-परमार्थकार्यविरहितं पुत्रकलत्रामत्रादि परिपालकजीवनं शवतुल्यजीवनमिति'** यो पङ्क्ति श्रीकरभाष्यमा श्रीशंकराचार्यले प्रष्ट लेख्नुभएको छ। स्वामी परमानन्द यी सबै गुणले गुणवान्, समाजसेवी, सनातन हिन्दूधर्मको संरक्षण संबर्द्धन गर्ने महापुरुषहरू मध्ये अन्यतम हुनुहुन्थ्यो, स्वामी परमानन्दजीले आफ्नो ब्रह्मचर्य जीवन-कालदेखि नै ख्याति प्राप्त गर्नुभएको थियो। त्यसमा मुख्य संस्कृतविद्याको प्रचार, पुराना मठ, मन्दिरहरूको जीर्णोद्धार, संस्कृत विद्यालयहरूको स्थापना तथा अध्यापक छात्रहरूको अशनवसनासन व्यवस्था आदिमा समर्पित जीवन भएर खट्नुभयो। परन्तु यस्तो काम गर्नु हाम्रो नेपालमा सजिलो छैन। पदे

पदे अनेक थरिका विघ्न बाधाहरू तेर्सिन्छन्। यस परिस्थितिमा काँतर स्वार्थीहरू तर्सेर कुलेलम ठोक्छन् या त हातखुट्टा बाँधेर मुखमा मोहोला हालेर बस्ने गर्छन्। स्वामी परमानन्द त्यस्ता प्रकृतिका हुनुहुन्नथ्यो। जस्तै विपत्तिका आँधी-बेरी आए पनि **'न्याय्यात्पथः प्रविचलन्ति पदन्न धीराः'** भन्ने नीतिको अनुसरणमा हठव्रती हुनुहुन्थ्यो। **'सर्वेषामेव दानानां विद्यादानं विशिष्यते'** सूक्तिको अनुसरण गरेर संस्कृतविद्या को प्रचारमा लागेका महापुरुषलाई स्वर्गे अथवा **'ब्रह्मलीन'** शब्दले लेख्नु पर्दा विश्वास लाग्दैन। त्यसै रेसुङ्गामा पुगेको हुन्छु, त्यसै कोठामा वार्तालाप गर्दै मन्द मुस्कान गरेको देख्छु। मलाई यो पङ्क्ति लेख्दासम्म पनि विश्वास लाग्दैन। परन्तु यसलाई भन्नु पर्दा विधिको विडम्बना नै भन्नुपर्छ। **'मृत्युर्जन्मवतां वीर देहेन सह जायते'** महर्षि व्यासले भन्नु भएको वाक्य सबैले शिरोधार्य गर्नै पर्छत्यसैले युद्धकातर अर्जुनलाई भगवान् कृष्णले **'जातस्य हि ध्रुवो मृत्युः'** भन्नुभयो, अर्थात् 'जन्मेपछि अवश्य मर्छ, बनेपछि अवश्य नै बिग्रिन्छ।' यो त पुरानो लुगा फ्याकेर नयाँ लुगा लगाए जस्तै हो। अर्जुन! यस्तो अपरिहार्य विषयमा तिमीले सोच्नु व्यर्थ छ। मूर्खले मात्रै आवश्यक हुने कुरालाई सोच्दैन, अनावश्यक विषय वस्तुलाई सोचेर समय खेर फाल्छ,

**मूर्खत्वं सुलभं भजस्व कुमते मूर्खस्य चाष्टौ गुणाः**
**निश्चिन्तो बहुभोजनोऽतिमुखरो रात्रिन्दिवं स्वप्नभाक्।**
**कार्याकार्य-विचारणान्धबधिरो मानापमाने समः**
**प्रायेणामयवर्जितो दृढवपुः मूर्खः सुखं जीवति॥**

नीतिशास्त्रले भन्छ-मूर्खमा आठ गुण हुन्छन्। त्यो मूर्ख संसारमा पृथ्वीको भारै भएर पनि सुख पूर्वक जिउँछ। मूर्खको पहिलो गुण निश्चिन्त रहनु हो। राष्ट्र जेसुकै होस्, धर्म संस्कृति समाजको उसलाई के मतलब! तर, आफूमा आइ लाग्यो भने मात्रै तातिन्छ। दोस्रो गुण 'बहुभोजन' धेरै खानु हो। आफ्नो चाहीं साँच्ने अर्काको पाए बेसरी डकार्ने हुन्छ, तेस्रो गुण 'अतिमुखर' तत्त्वको कुरा ठूला पाकाहरूसंग बोल्न नसक्ने तर आफूले हेपेका मानिसहरूसँग बोलेको बोल्यै गर्ने बानी हुन्छ। चौथो गुण रात दिन 'स्वप्न' देख्ने काम गर्छ अर्थात् रात दिन सुतेरै बिताउने गर्छ। पाँचौं गुण 'यो काम राम्रो हो यो काम राम्रो होइन भनी, विचार गरेर छुट्याउन नसक्ने विवेक विचार हीन अन्धा भएर हिंडने, कसैलेबाटो देखाइ दे भने बैरो हुने काम मूर्खले गर्छ। मूर्खलाई मान र अपमानको पनि ख्याल रहँदैन। मान र अपमान दुबैलाई समान सम्झन्छ। सातौं गुण मूर्ख प्रायः रोगरहित हुन्छ। आठौं गुण 'दृढवपुः' मोटो र बलियो शरीरको हुन्छ। यस्तो मूर्ख सुखपूर्वक जिउँछ।

परन्तु यसको विपरीत सन्त महापुरुषको जीवनचर्या हुन्छ। महापुरुष राष्ट्रका विभूति हुन्छन्। महापुरूषको दिनचर्या धर्मानुकूल आचरण, व्यवहार तथा धर्मानुकूल आहार विहार गर्नाले शरीर त्यसै पनि दुर्बल हुन्छ, रोगी हुन्छ। किन्तु धर्मसंस्कृति, संस्कृतको, संरक्षण र समाज सेवा, राष्ट्रसेवा गर्नमा उनको आत्मा प्रबल र सक्षम हुन्छ। स्वार्थदेखि पर रहेर समर्पित जीवन भएर राष्ट्र गौरव र समाज सेवामा बिकेका हुन्छन्।

**जिन्दगीसे बड़ी सजा ही नहीं, क्या जुल्म है कि पता ही नहीं।**
**इतने हिस्सोंमें बट गया हूँ मैं, कि मेरे हिस्सेमें कुछ बचा ही नहीं।**

स्वामी परमानन्दजी पनि यस्तै महापुरुष हुनुहुन्थ्यो। राष्ट्रका गौरव समाजसेवी कलेवर सदा जीर्ण र शीर्ण रोग ग्रस्त रह्यो!!तापनि जिन्दगी एउटा साझा घर जस्तै रह्यो। पूर्वजन्मको प्रारब्ध कर्मले गर्दा शारीरिक कष्ट सबैले भोग्नपर्ने नै रहेछ। त्यसैले **'नाभुक्तं क्षीयते कर्म कल्पकोटिशतैरपि'** वचनलाई सार्थक पार्नुपर्‍यो। तथापि जिन्दगी रहुञ्जेल परमानन्दजी यति विभागमा बाँडिनुभयो कि आफ्नो हिस्सामा वा आफ्नो भागमा केही पनि राख्नुभएन। यो पनि विधिको विडम्बना नै भन्नुपर्छ। जहाँ प्रजातन्त्रको नाममा धर्म र हिन्दू संस्कृतिको हत्या गर्ने षड्यन्त्र भयो त्यसमा पनि

छाडावादी प्रजातन्त्र भन्दा स्वधर्म स्वसंस्कृतिको परतन्त्रमा रहेरै जीवनलाई अमर पार्नुभयो। जहाँ धर्मनिरपेक्षको विडम्बना उठ्यो त्यहीं धर्मसापेक्षको आचरणमा जिन्दगी बिताउने व्रत लिनुभयो। जहाँ मानवाधिकारवादी झञ्झावात आयो त्यहीं अधिकारभन्दा ठूलो कर्तव्यमा दृढ़व्रती भएर रहनुभयो। कर्तव्य नगरी अधिकार मात्रै खोज्नु अकर्मण्य हुनु हो। अधिकार त निकम्मा, बेकार पुरुषार्थहीनले मात्रै माग्दै हिँड्छ। कर्तव्यपरायण पुरुषलाई अधिकारले स्वतः जयमाला लगाइदिहाल्छ। फेरि अधिकार किन माग्ने? कोसंग माग्ने? अधिकार भनेको कर्तव्य गर्ने पुरुषको पुरुषार्थमा हुन्छ। मलाई पढ्न देऊ, मेरो पढ्ने अधिकार छ भन्दैमा त्यो साक्षर वा विद्वान् हुन सक्दैन, अपितु कर्तव्यमा लागि पर्‍यो भने त्यो विद्वान् वा साक्षर बन्न सक्छ। मानवाधिकार भनेको भिख होइन। मानव भनेको भिखारी होइन। मानव भनेको ईश्वरको सर्वश्रेष्ठ रचना हो र ईश्वरको उत्तराधिकारी हो। त्यसैले **'कर्मण्येवाधिकारः'** कर्म गर्ने नै तिम्रो अधिकार हो भनेर भगवान् कृष्णले भन्नुभयो। परमानन्दजीले यसको अक्षरशः जीवनभर पालन गर्नुभयो। जबसम्म यस्ता महापुरूष धराधाममा रहनेछन् तब सम्म हिन्दूधर्म संस्कृतिको प्रचार-प्रसार र रक्षा अवश्य हुनेछ। यो केबल लेखाइ मात्र होइन अपितु जागरण सन्देश पनि हो-जबसम्म हिन्दूराष्ट्र नेपालमा सन्त, महात्मा, महापुरुष रहनेछन् तबसम्म हिन्दूधर्म संस्कृति रही नै रहनेछ। यस्मा सन्देह छैन र सन्देह गर्ने अवसर पनि छैन।

तर, एक कर्मठ व्यक्ति परमानन्दजस्ता महापुरुषको कमीभने खट्किरहने छ। अपूरणीय क्षति पूर्ति गर्न निकै समय लाग्छ। कुनै पनि चीज बन्न समय लाग्छ। बनी सकेपछि बिग्रने डर हुन्छ। बिग्रेपछि त्यस्तै चीज बनाउन उति नै समय पर्खिनुपर्ने हुन्छ। हामीलाई परमानन्द जस्ता सन्त पाउनलाई निकै समय लाग्नेछ। न आत्तिऊँ; प्रारब्धले घुमाएर ल्याउनेछ। केहीलाई आफैं मिशीन बनेर साँचो बनाउनु पर्नेछ। यो आवश्यक छ कि वर्तमान परिप्रेक्ष्यमा हिन्दू समाज नाजुक परिस्थतिमा गुज्रिराखेको छ। राना विनाका मौरी जस्ता भएका छन्, कतै मिहे विनाको गोरु भएका छन्, कतै एक गास वा एक चोक्टाका कुकूर भइराखेका छन्। यस परिस्थितिमा परमानन्दजीको अनुपस्थिति हिन्दूसमाज वा नेपाल राष्ट्रको दुर्भाग्य नै सिद्ध भएको छ। जहाँ अनेकौं मठ, मन्दिर, पौवा, पाटी, सत्तलहरू विराना श्मशान भएर रोइराखेका छन्, जहाँ हिन्दू समास गर्ने धर्म परिर्वतन भइराखेको छ, जहाँ हिन्दूत्वको विपरीत गर्भपात भ्रूणहत्या जस्तो पापाचरण गर्न तैयार छन्, जहाँ ब्राह्मणवर्ग नै हिन्दूत्वको विपरीत आचरणवाला भइसकेका छन्, यस परिस्थितिमा परमानन्दजीको आवश्यकता वा अनुपस्थिति बुझक्कड समाजलाई अवश्य नै खट्किनेछ।

यस क्षतिपूर्तिको लागि पतितपावन भूतभावन भवानीजानि पशुपतिनाथसँग प्रार्थना गरौं कि-परमानन्दजी अर्को शरीरमा आएर आफ्नो कार्यभार सम्हालून्। रह्यो शरीरको कुरा **'मरणं प्रकृतिः शरीरिणां विकृतिर्जीवितमुच्यते'** देहधारीले मर्नु प्रकृति नै हो; बाँच्नु नै विकृति हो।

**परिवर्तिनि संसारे मृतः को वा न जायते।**<br>
**स जातो येन जातेन याति राष्ट्रं समुन्नतिम्॥**

यस परिवर्तनशील संसारमा को जन्मदैन र को मर्दैन? जस्ले जन्म लिन्छ त्यसले अवश्य मनुपर्छ। परन्तु त्यसैको जन्म सार्थक हुन्छ जस्को जन्म लिनाले राष्ट्र र समाजको उन्नति हुन्छ। यस्ता विभूतिहरू राष्ट्रमा सधैं जीवित रहन्छन्। परमानन्द स्वामी पनि यस राष्ट्रमा हमेशै जीवित रहनुहुनेछ। यसमा सन्देह छैन। अन्तमा -

**जीवानन्दस्य माधुर्यं परमानन्दमनुस्मरन्।**<br>
**समर्प्य लघुलेखश्च सम्पूर्णानन्दनिर्भराः॥ इति**





# ❋ आचार्य शङ्करको परम्परामा स्वामी परमानन्द सरस्वती ❋

**डा० स्वामी रामानन्द गिरि**
महेश संन्यास आश्रम, देवघाट, तनहूँ

आजभन्दा बाह्रसय वर्ष पहिले सनातन हिन्दु-मर्यादालाई खल्बल्याउने खालका विभिन्न कुतत्त्वहरू समाजमा देखा परेका थिए। वेदको अध्ययन गर्नु, मन्दिरहरूमा देवी या देवताहरूको पूजा गर्नु, यज्ञ गर्नु र गराउनु सामाजिक कुरीति मानिन थालिएको थियो। विभिन्न प्रकारका पाखण्ड धर्महरू समाजमा प्रचलित थिए। धार्मिक विवाद र मतभेदको कारणले देश टुक्रा-टुक्रामा विभक्त भइसकेको थियो। सनातन वैदिक धर्ममा आस्था राख्ने जनताहरू धर्मको सही बाटो फेला नपरेकोले पानीबाट निकालिएको माछो छट्पटाए झैं छट्पटिएका थिए।

सर्वनियन्ता परमात्माको असीम प्रेरणाले उक्त समस्याहरूको समाधानका लागि दक्षिण भारतको केरल प्रदेशको कालटी ग्राममा शिवगुरु र सती ब्राह्मणीबाट एक अद्‌भुत बालकको उत्पत्ति भयो, जुन बालक पछि गएर जगद्‌गुरु शङ्कराचार्य बन्न पुग्यो। किंबदन्ती अनुसार आठ वर्षको उमेरमा आचार्य शङ्करले चारै वेदहरूलाई कण्ठ गरिसक्नुभएको थियो। बाह्र वर्षको उमेरमा उहाँ सम्पूर्ण शास्त्रहरूमा पारंगत भइसक्नुभएको थियो। सोह्र वर्षको उमेरमा त उहाँले गीता, ब्रह्मसूत्र र उपनिषद् यी तीनै ग्रन्थहरूमा भाष्य लेखिसक्नुभएको थियो। आचार्य शङ्करले भारतवर्षका चार दिशाहरूमा चार मठहरूको स्थापना गरी उक्त मठहरूमा योग्य शिष्यहरूको अभिषेक गर्नुभयो। गिरि, पुरी, सरस्वती र भारती आदि दशनामी संन्यासीहरूको परम्परा उहाँले नै बसाल्नुभएको हो, जुन् परम्परा अहिले सम्म पनि चलिरेको छ।

निष्पक्षसँग भन्ने हो भने आद्य जगद्‌गुरु शंङ्कराचार्य र कुमारिल भट्ट यी दुई महापुरुषहरूले वैदिक संस्कृतिको रक्षा गर्नुभएको हो भन्नुमा कुनै अत्युक्ति नहोला। कुमारिल शङ्कराचार्यका समकालीन आचार्य हुनुहुन्थ्यो। उहाँले वेदको कर्मकाण्डभागको रक्षा गर्नुभयो भने आचार्य शङ्करले ज्ञानकाण्डको रक्षा गर्नुभयो। धार्मिक मतभेदको कारणले अनेकवर्गमा विभाजित भारतवर्षलाई आचार्य शङ्करले सांस्कृतिक एकताको सूत्रमा बाँध्ने चेष्टा गर्नुभयो। प्राणीहरूको कर्मसंस्कार, तदनुरूप जाति, आश्रम र वर्ण भिन्न भिन्न भएता पनि सम्पूर्ण प्राणीहरूमा एउटै परमात्माले निवास गर्नु भएको छ। एक वेदान्त दर्शनलाई छोडेर अरु दर्शनहरू आत्माको एकत्वलाई झट्ट स्वीकार गरिहाल्न सक्तैनन्। वेदान्त दर्शनको अध्ययनद्वारा सम्पूर्ण प्राणीहरूमा एउटै परमात्माले निवास गर्नुभएको छ भन्ने कुराको ज्ञान भएपछि परस्परमा एउटाले अर्कालाई होच्याउने या कष्ट दिने कामहरू स्वत: नै समाप्त हुन्छन्। यसबाट समाजमा विघटनात्मक पक्ष भन्दा संरचनात्मक पक्षको विकास बढ्दै जान्छ।

आफ्ना हातका पाँच औंलाहरू पनि कहिल्यै बराबर हुन्नन् भने मनले कल्पनासम्म पनि गर्न नसकिने विधाताका सृष्टिमा विभिन्नताले वास गर्नु कुनै अनौठो कुरो होइन। अनेकतामा एकताको दृष्टि हुनु नै सबै भन्दा महत्वपूर्ण कुरो हो। यही कुरालाई ध्यानमा राखी आचार्य शङ्करले वर्णधर्म र आश्रमधर्ममा कुनै प्रकारको पनि आँच नआउने गरी समन्वयात्मक ढंगले आफ्नो अद्वैत दर्शनको व्याख्या गर्नुभयो।

कुनै रोगी अत्यन्त अस्वस्थताको कारणले यदि वैद्यको घरमा जान सकेन भने वैद्यले नै उसको घरमा उपचारको लागि जानुपर्ने हुन्छ। त्यस्तै आचार्य शङ्करको समयमा हाम्रो यो भारतवर्ष सांस्कृतिक दृष्टिले अत्यन्त रुग्णावस्थामा

पुगिसकेको थियो। अतः आचार्य शङ्करले भारतको पहिलो पटकको पैदल भ्रमण गरी देशको वस्तु स्थितिको पूरा अध्ययन गर्नुभयो, जसरी वैद्य पहिलो पटक रोगीको घरमा गई उसको रोग पत्ता लगाउने काम गर्दछ। दोस्रो पटकको भारतभ्रमणमा उहाँले आफ्नो अद्वैत दर्शनको प्रचार गर्नुभयो, जसरी वैद्य दोस्रो पटक रोगीको घरमा गई रोगीलाई औषधि प्रदान गर्ने काम गर्दछ। उहाँको तेस्रो पटकको भारत भ्रमण आफूले प्रचार गरेको अद्वैत दर्शनले समाजमा कतिसम्म प्रभाव पाऱ्यो भन्ने कुराको जाँच गर्नका लागि थियो, जसरी तेस्रो पटक वैद्य रोगीको घरमा मैंले दिएको औषधिले रोगीमा कुनै प्रभाव पऱ्यो या परेन भन्ने कुरा बुझ्नका लागि जान्छ।

आचार्य शङ्करले सूर्य, दुर्गा, गणेश, विष्णु र शिव यी पञ्चदेवहरूका उपासनापद्धतिको विशेष रूपमा प्रचार-प्रसार गर्नुभयो। यी पञ्चदेव मध्ये आफ्नो जन्मान्तरीय संस्कार अनुसार कुनै एकलाई प्रधान मानी उपासना गरे पनि अरु चार देवताहरूलाई पनि वरिपरि राखेर पूजा गर्नुपर्दछ भन्ने कुराको प्रचार समाजमा व्यापक रूपमा गर्नुभएकाले समाजका देवी-देवताका उपासकहरूमा एक समन्वयात्मक दृष्टि कायम हुन गयो, जुन दृष्टिले अहिले सम्म पनि समाजमा समन्वय कायम गरेको छ।

**प्रस्थानत्रयीमा भाष्य प्रणयन**

गीता, ब्रह्मसूत्र र उपनिषद् यी तीन ग्रन्थलाई प्रस्थानत्रयी भन्दछन्। प्रस्थान शब्दको अर्थ हो बाटो। गीता, ब्रह्मसूत्र र उपनिषद् यी तीन प्रस्थान मध्ये कुनै एक प्रस्थानलाई स्वीकार गरी अध्ययन र मनन गरेको खण्डमा जीवको वास्तविक स्वरूप ब्रह्मको प्राप्ति हुने हुँदा यी ग्रन्थलाई प्रस्थानत्रयी भनिएको हो। जीव परमात्माको अंश हुनाले चाहे जानेर होस् चाहे नजानिकन होस् भित्रैबाट परमात्मालाई नै प्राप्त गर्न खोजिरहेको हुन्छ। **'आनन्दो ब्रह्मेति व्यजानत्'** भन्ने श्रुतिवाक्य हुनाले आनन्द नै परमात्माको स्वरूप हो। संसारका समस्त प्राणीहरूले खोज़िएको वस्तु आनन्द नै हो। यस प्रकार प्राणीमात्रको लक्ष्य ब्रह्मप्राप्त नै हो भन्ने सिद्ध हुन्छ। तर प्राणीहरूलाई हाम्रो असली स्वरूप ब्रह्म नै हो र ब्रह्म प्राप्ति नै हाम्रो लक्ष्य हो भन्ने कुराको ज्ञान उक्त तीन ग्रन्थ मध्ये कुनै एकको सम्यक् अध्ययन नगरिकन सम्भव हुँदैन। अतः मुमुक्षुहरूले आफूमा सामर्थ्य भए उक्त तीनै ग्रन्थहरूको अध्ययन, यदि सामर्थ्य नभए तीन मध्ये कुनै एकको अध्ययन अवश्य गर्नुपर्दछ। मुमुक्षुहरूका लागि उक्त तीन ग्रन्थहरू अत्यन्त महत्त्वपूर्ण हुनाले यी ग्रन्थहरूलाई 'त्रिरत्न' भन्ने पनि प्रचलन छ।

उक्त तीन प्रस्थानहरूमा मुख्य प्रस्थान उपनिषद्लाई नै मानिन्छ किनकि गीता र ब्रह्मसूत्र यी दुबै ग्रन्थहरूको मुख्य आधार उपनिषद् नै हो। गीताको उद्‌गम स्रोत उपनिषद् हो भन्ने कुराको पुष्टि गीता माहात्म्यको 'सर्वोपनिषदो गावः' भन्ने वाक्यले गर्दछ भने ब्रह्मसूत्रको उद्‌गम स्रोत पनि उपनिषद् नै हो भन्ने कुराको पुष्टि आचार्य शङ्करको 'तत्तु समन्वयात्' (ब्र. १/१/४) भाष्यका 'उपनिषद्वाक्यकुसुमग्रन्थनार्थत्वात् सूत्राणाम्' भन्ने बाक्यले गर्दछ। अर्थात् जसरी माली बगैंचामा गएर त्यहाँका अत्यन्त सुन्दर सुन्दर फूलहरूलाई छानेर एकत्रित गर्दछ र अनि माला गाँस्दछ, त्यस्तै महर्षि भगवान् वेदव्यासले पनि उपनिषद्रूपी बगैंचामा गएर उपनिषद् वाक्यरूपी पुष्पहरूको चयन गरी ब्रह्मसूत्ररूपी सुन्दर मालाको निर्माण गर्नुभयो। यस प्रकार गीता र ब्रह्मसूत्र यी दुबै ग्रन्थहरूको मुख्य आधार उपनिषद् नै हो भन्ने सिद्ध हुन्छ।

उपनिषद् गीता र ब्रह्मसूत्र यी तीनै ग्रन्थहरू अत्यन्त सूत्ररूपमा हुनाले भाष्य नभई यी ग्रन्थहरूको तात्पर्य बुझ्नु निकै कठिन कुरो हो। सामान्य मुमुक्षुहरूले पनि प्रस्थानत्रयीको आशय सजिलैसँग बुझी आत्मज्ञान गर्नका लागि समर्थ होऊन् भन्ने उद्देश्यले आचार्य शङ्करले उक्त प्रस्थानत्रयीमा गङ्गाको प्रवाह झैं अत्यन्त स्वच्छ र निर्मल भाष्यको प्रणयन गर्नुभयो।





जसरी भगवती गङ्गाले मन्दाकिनी भागीरथी र भोगवतीको रूपमा, स्वर्ग मर्त्य र पाताल यी तीनै लोकहरूलाई पवित्र गर्नुभएको छ, त्यस्तै गीता, ब्रह्मसूत्र र उपनिषद् यी तीन ग्रन्थहरूले मुमुक्षुहरूको मनको मैलोपनलाई निरन्तर पखालिरहेका छन्। अतः आचार्य मधुसूदन सरस्वतीले भने–भगवान् वेदव्यासलाई नमस्कार गर्नुभन्दा पहिले भगवान् शङ्कराचार्यलाई नमस्कार गर्दछु, किनकि आचार्य शङ्करले ब्रह्मसूत्रमा भाष्य लेखेर ब्रह्मसूत्रको महत्तालाई नदर्शाई दिएको भए हामीले ब्रह्मसूत्रको आशय आफ्नो बुद्धिले कुनै पनि परिस्थितिमा बुझ्न सक्ने थिएनौं। यो भगवान् शङ्कराचार्यको महत्ता र विशेषता हो, जसको भाष्यबाट हामीले ब्रह्मसूत्रको तात्पर्य बुझ्न पायौं। अतः म सूत्र लेख्ने व्यासलाई भन्दा भाष्य लेख्ने शङ्करलाई विशेष महत्त्व दिन्छु भन्दै उहाँले आचार्य शङ्करप्रति विशेष आस्था व्यक्त गर्नुभएको छ। त्यस्तै आचार्य वाचस्पति मिश्र जसलाई विद्वत् समाजले षट्दर्शनकाननकेशरी (षड्दर्शनरूपी जङ्गलमा घुम्ने सिंह) भन्ने उपाधि प्रदान गरेको छ, उहाँ जस्ता दर्शनकेशरी पनि आचार्य शङ्करको ब्रह्मसूत्रको भाष्यमा आफ्नो भामती टीका लेख्ने क्रममा मङ्गलाचरण गर्दै भन्नुहुन्छ–जस्तै सडकको नालीमा बग्ने दूषित जल पनि गङ्गामा प्रवेश गर्दा गङ्गा नै बन्न पुग्दछ, त्यस्तै निरन्तर विषयको वर्णन गर्दागर्दै नालीको दूषित जल जस्तो अत्यन्त अपवित्र भएको मेरो वाणी पनि भगवान् शङ्कराचार्यको भाष्यको संपर्कलाई प्राप्त गरी गङ्गाजल झैं परम पवित्र होला भन्ने उद्देश्यले शङ्कराचार्यको ब्रह्मसूत्र भाष्यमा म आफ्नो भामती टीका लेख्न प्रवृत्त भएको हूँ भनी आचार्य शङ्करप्रति अगाध श्रद्धा व्यक्त गर्नुभएको छ। उहाँको उक्त उद्‌गारबाट पनि आचार्य शङ्करको ब्रह्मसूत्रभाष्य कति महत्वपूर्ण रहेछ भन्ने कुरा स्पष्ट हुन्छ।

### दूरदर्शिता

जसरी शरीर भित्र रहने अनन्त नाडी र नसाहरूले शरीरलाई बाँधेका हुन्छन्, त्यस्तै धर्म र संस्कृतिरूपी नाडी र नसाहरूले राष्ट्ररूपी शरीरलाई बाँधेका हुन्छन्।

यो कुरा आचार्य शङ्करले खूब राम्रोसँग बुझ्नुभएको थियो। अतः देशमा सांस्कृतिक एकता कायम राख्नका लागि उहाँले सुदूरदेश केरलका नम्बुद्रि ब्राह्मणहरूलाई उत्तर भारतको बदरीकाश्रममा लगी भगवान् नारायणको पूजाका लागि नियुक्ति गर्नुभयो भने उत्तर भारतबाट गंगोत्रीको जल लगेर दक्षिण भारतको रामेश्वर शिवलिङ्गमा चढाउने व्यवस्था मिलाउनुभयो। यसबाट देशको सांस्कृतिक एकता अत्यन्त सुदृढ हुन गयो। जसको फल स्वरूप आजभन्दा बाह्रसय वर्ष पहिले बाँधिएको व्यवस्थाले अहिलेसम्म पनि देशमा त्यस्तो निश्चित कुनै प्रमाण फेला नपरे तापनि यस्तो किंवदन्ती छ कि आचार्य शङ्कर नेपालमा पनि आउनुभएको थियो रे। बौद्ध धर्ममा दीक्षित अमरकोशकार अमर सिंह बाणासँग पनि उहाँको ठूलो शास्त्रार्थ भएको थियो रे। नेपालको पशुपतिनाथमा दक्षिणी भट्ट द्वारा पूजा तथा आरती आदि गराइने व्यवस्था पनि उहाँले गर्नुभएको हो भन्ने कतिपय विद्वान्‌हरूको भनाइ छ। जेहोस् वैदिक या हिन्दुसंस्कृति प्रति आस्था राख्ने जनता उहाँप्रति अत्यन्त ऋणी छ भन्न करै लाग्दछ। मेरो विचारमा त उहाँको ऋणबाट मुक्त हुने एउटै उपाय छ–हामीले उहाँले लेख्नुभएका भाष्यहरूको यथावत् अध्ययन गरी ज्ञानपिपासु मुमुक्षुजनताहरूमा ती भाष्यग्रन्थहरूको प्रचार–प्रसार गर्नु।

### शङ्कराचार्य परम्पराका एक पथिक स्वामी परमानन्द सरस्वती

आचार्य शङ्करकै परम्परामा श्री१००८ स्वामी परमानंद सरस्वती पनि एक प्रखर व्यक्तित्व हुनुहुन्थ्यो। आज भन्दा साठी वर्ष पहिले वाग्लुङजिल्लामा शिक्षाको वातावरण बिल्कुलै थिएन। उहाँका भक्तवर्गको भनाइ अनुसार जब स्वामीज्यू पन्ध्र या सोह्र वर्षका उमेरमा लेकमा गाइको गोठमा गोसेवामा हुनुहुन्थ्यो त्यस समयमा गोठमा एक अपरिचित सिद्ध



महात्मा आएर स्वामीज्यूसँग तीन चिम्टी चामल माग्नुभयो, अनि केही आलु र दाल पनि त्यसैमा मिलाएर दिउरीमा खिचड़ी पकाई थालीमा पस्केर आफूले खानुभयो। अनि बाँकी रहेको खिचड़ी चाँहि-'ए बाबु ? तिमी पनि खिचडी खाऊ' भनी स्वामीज्यूलाई दिनुभयो। स्वामीज्यूले पनि प्रेमपूर्वक त्यो खिचड़ी खानुभयो। खिचड़ी खाइसकेपछि सिद्ध महात्माले उहाँको गोठमा एक छिन आराम गर्नुभयो। जाने बखतमा सिद्ध महात्माले स्वामीज्यूको शिरमा आफ्नो हात राखेर केही छिन सुम्सुम्याउनु भयो र अनि अन्तर्धान हुनुभयो।

सिद्ध महात्माको अनुग्रह हुनुभन्दा पहिले स्वामीज्यूमा शास्त्र पढ्ने प्रवृत्ति बिल्कुलै थिएन। सिद्ध महात्माको अनुग्रह भएपछि उहाँलाई मैले केही शास्त्र अवश्य पढ्नुपर्दछ भन्ने इच्छा जागृत भयो। तर त्यसबेला सम्म उहाँले अक्षर सम्म पनि चिन्नुभएको थिएन। उहाँको दाज्यू तुलसीकृत रामायण पढ्ने गर्नुहुन्थ्यो। उहाँ दाज्यूले पढ्ने गरेको तुलसीकृत रामायण लगेर अरु साथीहरूलाई पढ्न लगाई आफूले सुन्ने बानी बसाल्नुभएछ। रामायण सुन्दा सुन्दा अक्षर पनि त्यत्तिकै चिन्न थाल्नुभएछ। त्यतिमात्र नभई वेद र वेदान्तको रहस्य पनि उहाँलाई नपढीकन स्वतः नै खुल्न थालेछ। यो सब उनै सिद्ध महात्माको अनुग्रह हो भन्ने उहाँका भक्तवर्गको भनाइ छ।

त्यसपछि स्वामीज्यूले आफ्नो घर छोडी म्याग्दी जिल्लाको मुसुङ्‌ भन्ने ठाउँमा गई त्यस समयका वेदान्तका प्रखर विद्वान् एवं परम विरक्त छविलाल गुरुको सेवामा रहेर उहाँबाट आत्मपुराण र योगवासिष्ठको श्रवण गरी वेदान्तमा उच्च योग्यता हासिल गर्नुभयो। जस्तो कुनै तलाउमा कमलका अत्यन्त सुन्दर फूलहरू फूलेका छन् भने के भमराहरूलाई कमलहरूले आफ्नो रस पान गर्नका लागि बोलाइरहनुपर्छ र ? पर्दैन, स्वयं भमराहरू उहाँ रसपान गर्न पुगिहाल्दछन्। त्यस्तै स्वामीज्यूको वैराग्य र विद्वत्ताबाट प्रभावित भएका जनताहरू उहाँको पछि लाग्न थाले। उहाँको वेदान्तको सरल र सरस प्रवचन सुन्दा प्रभावित नहुने व्यक्तिहरू विरलै हुन्थे।

राम्रा राम्रा सडकहरू र गगनचुम्बी भवनहरूको निर्माण गरेर मात्र राष्ट्रको विकास हुने होइन; संस्कृतभाषामा लेखिएका वेद र वेदाङ्गहरूको व्यापक अध्ययन र अध्यापन धर्मको प्रचार-प्रसार र अनुष्ठान तथा वैदिक संस्कृतिको संरक्षण नभैकन नेपालको विकास हुन सक्दैन भन्ने उहाँको मूलमन्त्र थियो। हामीसँग कुराकानी गर्दा उहाँ यस विषयमा विशेष जोड़ दिएर बोल्ने गर्नुहुन्थ्यो।

धेरै वर्षसम्मको साधना र अध्ययनबाट परिपक्व भएपछि स्वामीज्यूले धर्म र संस्कृतिको संरक्षण गर्ने उद्देश्यले बाग्लुङ् जिल्लामा आफ्नो जन्मभूमिको नजीकै 'बिहूँ रामकोट' भन्ने ठाउँमा प्रकृतिको अनुपम सौन्दर्यको काखमा वेद र वेदाङ्गहरूको संरक्षण एवं प्रचार-प्रसार गर्ने उद्देश्यले एक भव्य संस्कृत गुरुकुलको स्थापना गर्नुभयो। जहाँबाट शिक्षा प्राप्त गरी निक्लेका विद्वान्हरूले देशको कुना कुनामा गएर धर्म र संस्कृतिको प्रचार-प्रसार गरिरहेका छन्। त्यसै गरी गुल्मी जिल्लाको 'दिब्रुङ्' भन्ने ठाउँमा एक भव्य आश्रमको निर्माण गरी त्यहाँका ग्रामीण जनताहरूमा वैदिक संस्कारहरूको आधान गर्नका लागि स्वाध्याय र प्रवचनको व्यवस्था मिलाउनुभयो भने चितवन भरतपुरको नजीकै शरद्पुर भन्ने ठाउँमा एक वैदिक पाठशाला खोली त्यहाँको आस-पासका विप्रवटुहरूका लागि वेदाध्ययन गर्ने व्यवस्था मिलाई दिनुभयो।

स्वामीज्यूले आफ्नो जीवन लीलाको करीब करीब अन्तिम समयमा देवघाटधाममा आएर देवघाटको ठूलो विकास गर्नुभयो। सर्वप्रथम उहाँले देवघाटमा आएर गलेश्वर आश्रमको विकास गर्नुभयो। त्यसपछि उहाँले आफ्ना

संन्यासगुरुश्री१००८ स्वामी सत्यप्रकाशनन्दज्यूको ठूलो सहयोग र आफ्नो प्रबल पुरुषार्थ द्वारा देवघाटधाममा हरिहर संन्यास आश्रम, शिवपञ्चायतन मन्दिर र प्रवचनमण्डपको निर्माण गर्नुभयो। जहाँको आश्रम मन्दिर र प्रवचन मण्डपले देवघाट मात्रको नभई सम्पूर्ण नेपालराष्ट्रको नै शिरलाई अत्यन्त उच्च पारेको छ भन्नुमा कुनै अत्युक्ति हुनेछैन।

यसप्रकार जुन् दिनदेखि स्वामीज्यू संस्कृत, संस्कृति र धर्मको सेवामा लाग्नुभएको थियो, त्यस दिनदेखि आफ्नो अन्तिम दिनसम्म कुनै प्रकारको प्रमाद या आलस्य नगरीकन धर्म र संस्कृतिको प्रचार-प्रसार गर्दागर्दै आफ्ना निकटवर्ती ज्ञान पिपासु भक्तहरूलाई वेदान्तरूपी अमृत पान गराउँदा गराउँदै गतवर्ष माघ महिनामा काठमाण्डौमा भगवान् पशुपतिको अगाड़ि आर्यघाटमा उहाँ आफ्नो जीवन लीला समाप्त गरी शिवसायुज्य भावमा प्राप्त हुनुभयो। यस प्रकार नेपाल राष्ट्रका परम विभूति, गोरखा दक्षिणबाहु, स्वामी परमानन्द सरस्वतीज्यूले आचार्य शङ्करद्वारा निर्मित वैदिक संस्कृतिरूपी भवनमा प्रसस्त ईटहरू थप्ने काम गर्नुभएको छ भन्दा कुनै अत्युक्ति हुनेछैन। आज हामीहरूले उहाँको पाञ्चभौतिक शरीरलाई यस नेपाल माताको माटो माथि हिंड़डुल गरिरहेको देख्न नपाए तापनि उहाँले यस नेपाल धर्तीका विभिन्न क्षेत्रहरूमा त्यस प्रकारका विभिन्न कीर्तिलताहरूलाई फैलाएर जानुभएको छ। मेरो विचारमा ती कीर्तिलताहरू कहिल्यै पनि ओइलाउने छैनन्, अपितु दिनानुदिन झाङ्गिदै जानेछन्। यसैबाट उहाँ सधैंका लागि अमर हुनुहुन्छ।

निष्कर्षमा भन्नुपर्दा हामी सम्पूर्ण राष्ट्र भक्त नेपालीको यो परम कर्तव्य हुन आउँछ कि-ब्रह्मलीन स्वामी परमानन्द सरस्वतीज्यूले देखाउनुभएको पदचिह्नमा रही धर्म, संस्कृत र संस्कृतिको रक्षा गर्दागर्दै हामी पनि आफ्नो यही मातृभूमिमा जीवन-लीला समाप्त गरी शिवसायुज्यलाई प्राप्त गरौं। अहिले म आफ्ना यिनै शब्दहरूद्वारा मेरा परम मित्र ब्रह्मलीन स्वामी परमानन्द सरस्वतीज्यूको सुमधुर स्मृतिमा आफ्नो अगाध श्रद्धाञ्जलि अर्पण गर्न चाहन्छु। हरिः ॐ तत्सत्॥

शास्त्रं शारीरमीमांसा, देवश्चन्द्रार्धशेखरः।
आचार्याः शङ्कराचार्याः सन्तु जन्मनि जन्मनि॥

जति जन्म लिनु परे पनि मलाई ब्रह्मसूत्र शांकरभाष्यको अध्ययन गर्न मिलोस्, चन्द्रशेखर भगवान् शङ्करको उपासना गर्न मिलोस्; भगवत्पाद शङ्कराचार्यलाई गुरु बनाउन पाऊँ।



# ❋ युगपुरुष गुरुमहाराज ❋

**स्वामी विवेकानन्द सरस्वती**
दिब्रुङ् धर्मद्वारी, गुल्मी

यत्पादाम्बुरुहाश्रयाश्रितवतां धूनोति तापत्रिकं
आद्यन्तप्रतिवर्जितं सुखमयो स्वान्ते निधत्ते बलात्।
अज्ञानोन्मददन्तिदारणपटुः कण्ठीरवो यस्सदा
तद्भक्त्या गुरुनामकं परतरं ज्योतिर्नमस्कुर्महे॥

वदन्तु शास्त्राणि यजन्तु देवान्
कुर्वन्तु कर्माणि भजन्तु देवताः।
आत्मैक्यबोधेन विना विमुक्तिर्-
न सिद्धयति ब्रह्मशतान्तरेऽपि॥(वि.चू.)

आत्मानात्म-विवेचनाको लागि सर्वप्रथम ब्रह्मनिष्ठगुरुदेवको आश्रयण अति आवश्यक पर्दछ, भगवत्-कृपा नभएसम्म ब्रह्मनिष्ठ गुरु प्राप्त हुन दुर्लभ छ। भगवान्को कृपा भयो भने स्वयं भगवान्ले गुरु रूपमा दर्शन दिनुहुन्छ। ब्रह्मज्ञानीहरू भगवान्का विभूति स्वरूप हुन्। मुमुक्षुहरूको उद्धार गर्न परमात्माको अंशबाटै यसरूपमा अवतार भएको हुन्छ। निर्विशेष स्वरूपलाई प्राप्त गर्नुछ भने सविशेष रूपको अति आवश्यक पर्दछ। मुमुक्षुका उद्धारको लागि प्रभुले समय-समयमा साकार अवतार लिई वैदिक मर्यादालाई नछोडी कर्म उपासना र ज्ञानको बाटो गरेर गन्तव्य स्थानमा पुऱ्याउनुहुन्छ। परमात्माका निर्विशेष एवं सविशेष दुई रूप छन्। यसमा निर्विशेष रूपले माया र उसको समस्त कार्य अखिल भू-मण्डलमा सत्ता स्फूर्ति प्रदान गर्दै सबैलाई जीवित गरिराखेको छ। कुनै पनि ठाउँमा अस्ति, भाति र प्रिय यी तीन अंश प्रतीत हुन्छन्, ती सबै निर्विशेष ब्रह्मको नै सत्ता, चिद् रूपता र आनन्दरूपता उद्भासित भएको हो किनकि माया र मायाको कार्यमा स्वयं मायाले नै सत्ता दिन सक्दिन। यस प्रकार निर्विशेष ब्रह्म माया र मायाको कार्यमां अनुगत प्रतीत हुन्छ।

अब विशेष कार्य भने सविशेष ब्रह्मबाट नै हुन्छ; जस्तै :-यसमा निर्विशेष ब्रह्मको निरूपण 'नेति नेति' वाक्यद्वारा श्रुतिले गरेको छ। सविशेष ब्रह्मको निरूपण त उसैको विशेष विभूतिहरूको प्रतिपादनद्वारा नै श्रुतिले वर्णन गरेको छ। अब त्यो सविशेष ब्रह्मको विभूतिको इयत्ता पाउन सकिँदैन, अथवा उसको इयत्ता नै छैन। भगवान्को कस्तो रूप बनेर संसारमा प्रादुर्भाव हुने हो भन्ने कुरा अनिर्वचनीय नै छ, अत एव गीतामा भगवान् श्रीकृष्णले प्रधान रूपमा केही विभूतिहरूको वर्णन गरेर अन्त्यमा 'यद्यद्विभूतिमत्सत्वं श्रीमदूर्जितमेव वा। तत्तदेवावगच्छ त्वं मम तेजोंऽशसंभवम्' यो वाक्यले आफ्नो विभूतिहरूको अनन्ततालाई नै निरूपण गर्नुभएको छ। तदनुसार देव, दानव एवं मानवहरूमा जे जति विभूति एवं ऐश्वर्य देखिन्छ त्यो सबै परमेश्वरको नै हो। कुनै-कुनै व्यक्तिहरूमा परमेश्वरको विशेष विभूतिको अवतरण उनै परमेश्वरको कृपाबाट हुन्छ र परमेश्वरका कृपाको असाधारण कारण के हो त? उनैको आराधना हो, जसको फलस्वरूप परमात्मा अनुकम्पित भएर उसमा आफ्नो विशेष विभूतिहरूको अवतरण गराइदिनुहुन्छ। शरीरसौष्ठव, धनादि ऐश्वर्य र बुद्धिप्रावण्य





इत्यादि मनुष्य जीवनमा ऐश्वर्य मानिएका छन् त्यो कहीं कहीं विशेष रूपमा देखा पर्दछ। सृष्टिको आरम्भदेखि अद्यावधि अवाधितरूपबाट उपर्युक्त विभूति-अवतरणको क्रम देखा पर्दछ। नारायणबाट प्रारम्भ गरेर आद्यशंकराचार्य पर्यन्त ज्ञान-वैराग्य-ऐश्वर्य-परोपकार आदि चरम सीमासम्म देखा परेको छ। सम्पूर्ण पूर्वोक्त विभूतिस्वरूप गुरुजनहरूको समग्रजीवन लोकोपकारको लागि नै भयो।

भगवान् आद्यशंकराचार्यद्वारा पूर्व, पश्चिम, उत्तर र दक्षिणमा चार मठ स्थापना गरी धर्म, अर्थ, काम र मोक्ष प्राप्तिको लागि चार मठ ज्योतिर्मठ, शृङ्गेरी, शारदा तथा गोवर्धनमठ जस्ता अनेकौं मठ- मन्दिरहरूको जीर्णोद्धारको माध्यमबाट वेद-वेदान्तको भाष्यको साथै भक्ति, ज्ञान, वैराग्यलाई चरम सीमासम्म प्रचार-प्रसार गरी जीवहरूको उद्धार गरिदिनुभयो। सोही परम्परा संरक्षणको लागि वैदिक सत्य सनातन धर्मको माध्यमबाट ब्रह्मविद्या प्राप्त गरेर जीवनोद्धार गराउनको लागि स्वयं प्रभुले विभूतिको रूपमा उत्तराखण्ड हिमालयको समीपस्थ गुल्मी, दिब्रुङ्गमा धर्मद्वारी ब्रह्मविद्यापीठ आश्रमको स्थापना गर्नुभयो। सोही आश्रमबाट अनेकौं साधकहरूले साधनाको प्रक्रियालाई विधिपूर्वक पालना गरी 'तत्त्वमसि' महावाक्याऽनुसार जीव र ब्रह्मलाई ऐक्य गरी जीवनमुक्त दशामा प्राप्त भएका छन् भने अन्य साधक साधनाको मार्ग परिपक्व गर्दै छन्। सद् गृहस्थहरूले आफ्नो गृहस्थाश्रमलाई शास्त्रीय ढंगबाट सञ्चालन गर्ने विधि विधान उपलब्ध गरिराखेका छन्।

हिन्दु-धर्मका रक्षक ब्रह्मनिष्ठ तपोनिष्ठ अनन्तश्रीविभूषित गुरुमहाराजको रूपमा हामीहरूलाई परमेश्वरले दर्शन दिनुभएको छ भन्न केही अत्युक्ति नहोला। ब्रह्मचारी, तपस्वी, संन्यासी, समाजसेवी, युगपुरुष सन्तशिरोमणि आदि विविध रूपमा देखिदै धर्मको विगुल फुक्दै धर्मसंरक्षणको लागिजीवन समर्पण गर्नुभयो। गुरुमहाराजद्वारा भएका आध्यात्मिक, सामाजिक र उन्नति धार्मिक हामीहरू सबैले प्रत्यक्ष देखेका छौं।

यी सम्पूर्ण अवस्था एवं कार्यहरूमा पूज्यपाद गुरुदेव अनुपम रहनुभयो। आश्रममा पीठाचार्यको उपाधिमा रहेर पनि जीवन-मुक्तिको विलक्षण आनन्दको रसास्वादन गुरुदेवले गर्नुभयो। उहाँको यो जीवनमुक्त अवस्था देख्दा हामीहरूलाई यो आनन्दको अनुभूति हुन्थ्यो कि वचनद्वारा भन्न नै नसकिने। गुरुदेवको स्वभाव कस्तो थियो त भनेर कसैले प्रश्न गरेमा मेरो तर्फबाट यस्को उत्तरै देख्दिन किनकि बालकसंग बालक नै जस्तो हुनुहुन्थ्यो भने विद्वान्हरूसंग विद्वान्जस्तै देखिनुहुन्थ्यो। मेरो सानो खेल्ने अवस्था नै थियो तर पूज्य गुरुदेव म जस्तै बालक स्वभावको बनिदिनुभयो। उहाँको स्वभावलाई देखेर गुरुदेवको स्वरूपलाई बिर्सन सकिन, गुरुजीको मधुर वाणी सुन्दा हृदय गद्गद् हुन्थ्यो र माता-पिता, भाइ-बन्धु सबैलाई भुलेर म जस्तो अज्ञानी बालकले पनि झोला बोकेर पछि-पछि हिड्न थालें; गुरुजीसंग हिड्दा गुरुजीका व्यवहार सबै अलौकिक नै थिए अथवा लोकमा रहिकन पनि लोकोत्तर व्यवहार देखिन्थ्यो। जस्तै-कुनै पनि विद्यालयमा अध्ययन नगरीकन नै पुराण उपनिषद्, वेद-वेदान्त आदिको व्याख्या गर्न पछि नहट्ने।

गुरुजीका अगाडि विशिष्ट विद्वान्हरू तथा अत्यन्त नास्तिकहरू पनि झुकेको यस्ता अनेकौं लोकोत्तर व्यवहार देख्दा म जस्तो बालकलाई पनि अचम्म लाग्दथ्यो। उहाँका महानवाणीहरू सुन्दथें ती महावाणीहरू कस्ता थिए त ? अज्ञान रूपी अन्धकारलाई हटाउन सूर्य समान, चिन्तारूपी अग्निको ज्वालालाई हटाउन जल समान, कुविचार रूपी झाडिलाई काट्ने बञ्चरो समान थिए भने सुविचार रूपी वृक्ष हुर्काउन मल समान थिए। अब व्यवहार कस्तो थियो त ? सानाबाट-ठूलासम्म उद्धार गर्ने भावना रूप क्रिया-कलाप, कुनै पनि साम्प्रदायिक भावनारहित अथवा संकीर्ण विचारदेखि टाढा रहेर वैदिक सनातन धर्मको उत्थानको साथै कर्म उपासना, ज्ञानको मार्गबाट ब्रह्मतत्व प्राप्ति गर्ने थियो। फलतः जो

सौभाग्यशाली व्यक्तिले दर्शन पायो भने त्यो धन्यवादको पात्र बन्दथ्यो। हामीलाई त यस्तो प्रतीत हुन्छ कि पूज्यपाद गुरुदेव ब्रह्मनिष्ठत्वको विग्रह नै हुनुहुन्थ्यो।

केही तत्त्वज्ञानको लागि साधनचतुष्टय सम्पन्न मुमुक्षुजनहरू परमपूजनीय गुरुमहाराजको चरणारविन्दमा जीवन समर्पित गर्दथे भने कोही धर्म, अर्थ, कामको लागि छट्पटाउँदै गुरुमहाराजको अगाडि आर्त स्वरमा प्रार्थना गर्दथे। यस रूपबाट हेर्दा कल्पवृक्षको भान पर्दथ्यो, किनकि जस्ले जे जस्ता भावनाहरू बोकेर अगाडि पुग्दथ्यो सोहि कार्य पूरा गर्दथ्यो। गुरुमहाराजको साथमा भएको जुन अलौकिक सम्पत्ति भने कसै-कसैले मात्र देख्दथे अथवा प्राप्त गर्दथे। त्यो चीज के हो त? 'तत्त्वज्ञान'। पूज्य गुरुमहाराजको अगाडि विचित्र शक्ति थियो। जस्ले जस्ता भावनाहरू मनमा राखेर हेर्दथ्यो त्यस्ले त्यही रूपमा आधारित बन्दथ्यो। जस्तै गोकुलबाट मथुरातर्फ जाँदा भगवान् श्री कृष्णलाई आ-आफ्ना भावनाऽनुसार देख्दथे।

मल्लानामशनिर्नृणां नरवरः स्त्रीणां स्मरो मूर्तिमान्  
गोपानां स्वजनोऽसतां क्षितिभुजां शास्ता स्वपित्रोः शिशुः।  
मृत्युर्भोजपतेर्विराडविदुषां तत्त्वं परं योगिनां  
वृष्णीनां परदेवतेति विदितो रङ्गं गतः साग्रजः॥

तर भगवान् ती सबैका भावनादेखि अलग हुनुहुन्थ्यो त्यस्तै गुरुमहाराज पनि ती सबैका भावना देखि अलग नै हुनुहुन्थ्यो। यो कुरा कुनै-कुनै विद्वान्, ज्ञानीजनहरूले मात्र जान्दथे किनकि वेदान्तको श्रवण, मनन, निदिध्यासन पश्चात् तत्त्व साक्षात्कार हुन्छ, तदनन्तर भूमिका परिपक्व हुन्छ, जस्को फलस्वरूप त्यो तत्वनिष्ठ महापुरुषको मुखमण्डलप्रति उसलाइ निष्ठाको प्रतिभा स्पष्ट उद्भासित हुन्छ। गुरुदेवबाट ब्रह्म-विद्या प्राप्त गरेर अनेकौं यति एवं सद् गृहस्थजनहरूले आफ्नो जीवनलाई मात्र धन्य बनाएनन् अपितु ब्रह्मविद्याको संरक्षण एवं प्रचार-प्रसारमा उनीहरूको अनुपम भूमिका देखिन्छ। त्यस्तो अलौकिक तत्त्वज्ञान कहाँबाट प्राप्त गरेर 'ब्रह्मविद् ब्रह्मैव भवति' बन्नु भयो त? बाल्यावस्थादेखि नै तपोमूर्ति छवि प्रकाशानन्द गुरुज्यूबाट प्राप्त योगाभ्यासद्वारा नै जड़-चेतनको ग्रन्थिलाई भेदन गरेर तत्त्वज्ञान प्राप्त गर्नुभयो सोही तत्त्वज्ञान आज मुक्त भावबाट आजीवन वितरित गरिराख्ने गुरुदेवको महान् लक्ष्य देखिराखेका थियौं। आफ्नो चिन्तन द्वारा वेदान्त जगतलाई एक नयाँ दिशातर्फ लगाउनु भयो, जो कि गुरुदेवका रचित पुस्तकहरूलाई अवलोकन गर्दा स्पष्ट रूपमा प्रतीत हुन्छ वेदान्त प्रदीप, प्रवचनमाला गुरुद्वारा रचित पुस्तकहरू हुन्।

जीवनमा गरिएका कर्म नै सामाजिक, धार्मिक तथा ज्ञान, वैराग्य एवं भक्तिले अनुपम संमिश्रण गुरुदेवमा देखिन्थे। अब संसारमा जस्ले पूज्यपाद गुरुदेवको व्यवहारलाई मात्र अध्ययन गर्दछ भने अवश्यमेव त्यस्को जीवन सफल हुन्छ भन्ने हामीलाई पूर्ण विश्वास लाग्दछ। दिब्रुड्देखि देवघाटसम्म जे जति मठ, मन्दिर, आश्रमहरू स्थापना भए ती सम्पूर्ण संस्थाहरूबाट भक्तजनहरूका लागि पर्याप्त रूपमा सौविध्य मिलिराखेको छ। किन्तु सन्तहरू एवं भविष्णु साधु, विद्यार्थी सद्गृहस्थहरूका लागि यथावत् स्थिति रहिरहोस् भन्ने उद्देश्यले समय-समयमा कुनै न कुनै कार्यक्रमहरू राखी विचारलाई ताजा गरिदिने गुरुदेवको व्यवहार सिद्ध नै थियो। आशा छ कि पूज्यपाद गुरुदेवको वचनामृतलाई शिरोपर धारण गर्नेवाला साधु, विद्यार्थी एवं सद्गृहस्थहरूले श्री गुरुदेवको पद चिन्तन गर्दै अव्यक्त स्वरूप गुरुदेवद्वारा आशीर्वाद प्राप्त गरेर बैराग्य तथा ब्रह्मनिष्ठामा सम्पन्न भएर आफ्नो जीवनलाई कृतार्थ बनाउनेछन्।





# ❋ त्यागमूर्ति स्वामी परमानन्द सरस्वती ❋

**खेमराज केशवशरण**
शरणागति आश्रम देवघाट, चितवन

सन्तहरू मानवसमाजका लागि तीर्थ हुन्छन्। उनीहरूले गरेका कार्यहरू, बोलेका वाणीहरू र राखेका आदर्शहरूले संस्मरण गर्नेहरूलाई पावन बनाइदिन्छन्। उनीहरूका सम्पूर्ण चेष्टाहरूमा मानवको मनमस्तिष्कलाई प्रेरित गर्ने चिन्मय शक्ति हुन्छ। त्यसैले नदीका सङ्गमहरू, देवालयहरू र अन्य सुयोगबाट बन्न गएका तीर्थहरूभन्दा पनि श्रेष्ठ ठहर गरेर सन्तहरूको प्रशस्ति गाइएका प्रसङ्गहरू श्रीमद्भागवतजस्ता मूर्धन्य धर्मग्रन्थहरूमा वर्णित गरिएका छन्। भक्तशिरोमणि अक्रूर, शुकदेव जस्ता आफ्ना उपासकहरूका सामु स्वयं सच्चिदानन्दघन भगवान् श्रीकृष्णले भन्नुभएको छ।

**न ह्यम्मयानि तीर्थानि न देवा मृच्छिलामयाः।**
**ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः॥**

भा० १०।४८।३१

अर्थात् जलधाराहरूले गर्दा बनेका तीर्थहरू भए, माटो, ढुङ्गो आदिले बनेका भगवद्विग्रहहरू स्थापित गरिएका देवालयहरू भए तिनले पनि पवित्रता दिनु पर्दा केही समयको निरन्तर यात्रा श्रम र लगनको अपेक्षा राख्दछन्। परन्तु सन्तरूप तीर्थहरूलाई जङ्गम तीर्थ मानिएको छ। अरू तीर्थ स्थावर हुन्छन् ती एकै ठाउँमा बसिरहन्छन्। तिनीहरू भएका ठाउँमा आफैं धाएर, खर्च गरेर, श्रम गरेर, समय लगाएर जानुपर्छ अनिमात्र पवित्र भइन्छ। तर सन्तहरू चाहिं सधैं विचरण गरिरहन्छन् र जहाँ जहाँ जान्छन् त्यहाँ त्यहाँ सबैलाई पवित्र बनाइदिन्छन्। त्यसैले रामचरित मानसमा गोस्वामी तुलसीदासजी भन्नुहुन्छ—'मुद मंगलमय सन्त समाजू। जिमि जग जंगम तीरथराजू॥' अर्थात् जगतमा सन्तहरू आनन्दका र मंगलका साकार रूप नै हुन्छन्। सबैमा आनन्दको संचार गरिदिनु सबैको जीवन मंगलमय बनाइदिनु यो सन्तहरूको विशेषता नै हुन्छ। उनीहरू हिंड्ने डुल्ने तीर्थराज हुन्।

पूज्य स्वामी परमानन्द सरस्वतीज्यू एकजना त्यस्तै जङ्गम तीर्थराज हुनुहुन्थ्यो। उहाँको प्रेरणाबाट कतिले जीवन सुधारे। कतिको जीवनले अमङ्गलकारी बाटो छोड़ेर मङ्गलमय लक्ष्यतिर अभिमुख बन्ने सौभाग्य प्राप्त गऱ्यो। केवल भौतिक आकाङ्क्षाको भुमरीमा परेको कतिको अन्धकारपूर्ण जीवनमा उहाँले आध्यात्मिक चेतनाको अमर उज्यालो बालिदिनुभयो। उहाँको प्रेरणाबाट ठूलाठूला यज्ञ यागादि र धार्मिक अनुष्ठानहरू ठाउँ ठाउँमा भए। नारायणी, गण्डकी, लुम्बिनी र धौलागिरी अञ्चलका अनगिन्ती ठाउँहरूमा उहाँले आफ्नो सत्प्रेरणाबाट विशाल धान्याचल सहितका यज्ञानुष्ठानहरू सम्पन्न गराउनुभयो र आफू पूर्ण रूपले निरपेक्ष रही समाजकल्याणको निमित्त नै ती सबै शुभ अनुष्ठानहरू सम्पन्न गराउनुभयो। तिनबाट आर्जन हुने सम्पूर्ण धनराशिको सदुपयोग समाजहितका निमित्त नै उहाँले गराउनुभयो जसबाट ठूला ठूला शिक्षालय भवन, मन्दिर, आश्रम, गुरुकुल, छात्रावास जस्ता समाजकल्याणका प्रेरणास्थलहरू खड़ा भए। सनातन हिन्दूधर्म तथा संस्कृतिको उत्थान र विकासको शुभ भावनाले उहाँबाट भएको योगदान इतिहासमा स्वर्णिम अक्षरले अङ्कित हुने छ भन्नेमा सन्देह रहन्न। हिन्दू अधिराज्य नेपालको महत्तम तीर्थ देवघाट धाम तनहूँमा अवस्थित भगवान् श्रीहरिहरको विशाल एवं भव्य मन्दिरले उहाँको अमर योगदानलाई युगौं-युगका निम्ति सुकीर्तिमय बनाइराख्ने कुरामा सबैलाई आश्वस्त तुल्याएको छ।



मैले जाने बुझेसम्म स्वामीज्यूले पढ़ाइ र लेखाइको क्षेत्रमा धेरै अघि बढ़ने मौका पाउनुभएको थिएन। साधारण गाउँले शिक्षापछि सुयोग्य गुरुको सान्निध्य उहाँले बाल्यावस्थामैं प्राप्त गर्नुभयो र आध्यात्मिक साधनाको क्रममा क्रमशः प्रगति गर्दै एउटा प्रखर तपस्वी साधुको रूपमा उहाँले आफूलाई विकसित तुल्याउनुभयो। प्राचीन साधनाशास्त्रहरूको सङ्केतले पनि केवल शब्दब्रह्ममा नै रमिरहनेमा भन्दा परब्रह्ममा रमिरहनेमा नै बढ़ी आध्यात्मिक उत्कर्ष रहने तथ्य संझाएको छ। सत्यको अनुभूति गर्न कोरा पढ़ाई सहयोगी बन्न नसक्ने कुरा अर्वाचीन युगका जीवन-पारखीहरूले पनि एक स्वरले स्वीकार गरेका छन्। कबीरदासको उक्ति प्रसिद्ध छ —

पढ़ता पढ़ता जग मुआ पण्डित हुआ न कोय।
ढाई आखर प्रेमके पढ़े सो पण्डित होय॥

परमात्मामा साँचो प्रेम, जीवनको आध्यात्मिक मूल्यप्रति सजगता, समष्टिकल्याण प्रतिको समर्पित निष्ठा यी यस्ता आधारभूत कुरा हुन् जसले मानवलाई पढ्ने, लेख्ने धेरै अवसर नमिले पनि सत्यको निकट पुगेर एउटा असली साधु बन्न सघाउ पुऱ्याइदिन्छन्। स्वामीज्यू त्यस्तै एउटा असली साधु हुनुहुन्थ्यो। 'भक्ति ठूलो कि ज्ञान' जस्ता कुरालाई लिएर उहाँ विवादमा कहिल्यै अल्मलिनु हुन्नथ्यो। ज्ञानहिभक्ति हि नहीं कछु भेदा। उभय हरहिं भवसंभव खेदा' भन्ने समन्ववादी आस्थामा उहाँ विश्वस्त हुनुहुन्थ्यो। त्यसैले उहाँको सम्पर्कमा कर्मयोगी, भक्तियोगी, ज्ञानयोगी सबै रमाइरहेका हुन्थे। उहाँका लागि सनातन वैदिक धर्मका सबै सम्प्रदायहरू आदरणीय प्रतीत हुन्थे। सबैलाई चित्त बुझ्नेगरी खरो र टड्कारो बोलीमा उहाँ आफ्नो मन्तव्य प्रस्तुत गर्नुहुन्थ्यो। हिन्दूत्वको रक्षा निम्ति उहाँ सधै संवेदनशील रहनुहुन्थ्यो। उहाँले बोलेका बेलामा हिन्दूसंस्कृतिको मर्मज्ञ कुनै प्रखर वक्ताले बोलेको प्रतीति हुन्थ्यो।

विगत २०३५ सालदेखि नै प्रत्यक्ष सम्पर्कमा नपुगिसकेको भए तापनि उहाँको स्नेहभाजन बन्ने सौभाग्य मैले पाएको थियें। उहाँले कयौं पटक विभिन्न जिल्लाका धार्मिक अनुष्ठानहरूका लागि बोलाउने गर्नुहुन्थ्यो तर, राजधानीका बहु आयामिक व्यस्तताहरूले मलाई लामो समयका लागि बाहिर निक्लने अनुकूलता मिल्दैनथ्यो। असमर्थता जनाएर बराल्नु परेकामा मलाई खल्लो लागिरहन्थ्यो। आखिरमा विश्वविद्यालयको प्राध्यापक पदबाट पनि स्वेच्छया राजीनामा दिई सनातनधर्मसेवा समितिको अध्यक्ष पद पनि योग्य विद्वान्लाई जिम्मा लगाएर पहिलेको तुलनामा धेरै मुक्त भई धार्मिक र सामाजिक क्रियाकलापमैं बाँकी जीवन बिताउन संकल्प लिएको अवस्थामा गत २०५२ साल पौषको अन्तिम हसामा केवल एक पटकका लागि गुल्मीको चोरकाटे(हाल परमानन्दनगर) मा मैले उहाँका स्नेहपूर्ण आह्वानलाई साकार तुल्याऊँदै उहाँका सान्निध्यमा आफ्नो वाङ्मय सेवा प्रस्तुत गर्ने मौका पाएँ। त्यही नै उहाँको साथको पहिलो र अन्तिम पनि अनुष्ठानमूलक वाङ्मय सेवा हुन सक्यो। अहिले उहाँ हामीबीच हुनु हुन्न भन्ने मान्नुपर्दा हृदयमा शून्यताको अनुभूति हुन्छ तर, उहाँको तपोमय भौतिक मूर्ति लीन भएको भए पनि उहाँको कहिल्यै ननिभ्ने आध्यात्मिक चेतनाको अखण्ड प्रकाश हाम्री सामु सदा विद्यमान छ। मलाई त देवघाटको सम्झना हुना साथ यस पावन तीर्थको गरिमातर्फ ध्यान दिएर केही गर्न उहाँले दिने गर्नुभएको साग्रह प्रेरणा सबैभन्दा पहिले मनमा प्रस्फुरित हुन्छ। उहाँ ब्रह्मलीन हुनुहुँदा वास्तवमा देवघाटको एउटा अनुपम निधि नै हराए जस्तो अनुभव हुन्छ। म संझन्छु धेरैलाई यो अनुभूति समान रूपले हुँदो हो।

सन्तहरू राष्ट्रका निधि हुन्छन्। सामान्य प्राणी सांसारिक स्वार्थमा हराइरहेको हुन्छभने सन्त जनहरू निःस्वार्थ लोकहित प्रति समर्पित हुन्छन्। सामान्य प्राणीको 'स्वत्व' सानो परिवेशमा टुङ्गिने गर्दछ तर सन्तहरूको 'स्वत्व' विश्वव्यापी हुन्छ चिन्तनको विशालता र व्यवहारको उदारताले नै सन्तहरूलाई सबै निम्ति आदरणीय बनाउने गर्दछ यही उज्ज्वल आध्यात्मिक आस्था र आचरणले नै उनीहरू सबैका निम्ति पूज्य बन्दछन्। अन्तमा साधुताको उज्ज्वल आदर्शप्रति

महाकवि भवभूतिले दर्शाएको रमणीय छविलाई हृदयङ्गम गर्दे परमपूज्य ब्रह्मलीन स्वामीज्यूमा आफ्नो भावपूर्ण श्रद्धाञ्जलि अर्पण गर्न मन लाग्यो। साधुहरू कस्ता हुन्छन्?

**प्रियप्राया वृत्तिर्विनयमधुरो वाचि नियमः। प्रकृत्या कल्याणी मतिरनवगीतः परिचयः।**
**पुरो वा पश्चाद् वा तदिदमविपर्या सितरसं। रहस्यं साधूनामनुपधि विशुद्धं विजयते॥**

उनीहरूको वर्ताउमा एउटा विलक्षण प्रियता एवं माधुर्य छाएको हुन्छ। बोलीमा विनयको मिठासपूर्ण भाव नियमतः झल्किने गर्दछ। सामुमा मात्र होइन पछिल्तिर पनि वर्ताउको मिठासमा कहिल्यै अन्तर आउन पाउँदैन। साधुहरूको यो निश्छलतापूर्ण विशुद्ध रहस्य सधैं र सर्वत्र प्रशंसनीय छ।

# ❋ गुरु परमानन्द मेरो सम्झनामा ❋

**रामचन्द्र पौडेल**
**पूर्व संभामुख**

गुरु परमानन्द नेपालका ती थोरै मानिसहरू मध्ये पर्नुहुन्छ, जसले एउटा उद्देश्यपूर्ण र पवित्र जीवन बाँचिएको थियो। गुरुलाई भेट्दा यस्तो लाग्दथ्यो कि वहाँ भित्र एउटा अध्यात्मको ज्योति जगमगाइरहेको छ। ज्ञानको आलोक छर्ने ज्योति, शान्तिको शीतलता वर्षाउने ज्योति–चन्द्रमाको रश्मि जस्तो।

सदा स्मरणीय गुरु संगको मेरो सान्निध्य अत्यन्त अल्प समयको मात्र हो। तर छोटो समयमा पनि यौटा अमिट छाप सधैं रहिरहने अनुभव मैले गरिरहेको छु।

गुरु परमानन्दलाई केवल ज्ञानी सन्त महात्माको रूपमा मात्र नभएर एक समाज सुधारक र महान् शिक्षाप्रेमीका रूपमा पनि नेपालीले सम्झिरहने छन्। नेपालका गाउ–गाउमा आफ्नो पूजामा जम्मा भएको अन्न–पैसाहरूलाई स्कूलहरू खोल्ने कार्यमा प्रयोग गरेर वहाँले असंख्य गरीब परिवारका बाल बालिकालाई उपकार गर्नुभएको छ।

देवघाट धामको सन्दर्भमा कुरा गर्ने हो भने यस पवित्र तीर्थ–स्थलप्रति दुनियाको ध्यान आकर्षित गराउने कार्यमा वहाँको ठूलो योगदान रहेको छ। प्रसिद्ध हरिहर मन्दिर लगायत देवघाटमा भएका अनेक निर्माण कार्यहरूमात्र हैन वहाँबाट कल्पवासी र यत्र तत्र बाट आउने श्रद्धालु जिज्ञासु भक्तजनताहरूको ज्ञान पिपासा शान्त गराउन र मुक्ति मार्ग सपार्न निरन्तर हुने गरेका आध्यात्मिक प्रवचनहरू हाम्रो वायु मण्डलमा अहिले पनि गुञ्जिरहेका छन्।

वीर अस्पतालको विरामी कोठामा जब मैले वहाँलाई भेटें। त्यत्रो प्राणान्तक रोगले ग्रसित हुँदा पनि वहाँको मुख–मण्डल शान्त सौम्य र निर्विकार पाएँ। उपचार वारे कुरा गर्दा स्पष्ट भन्नु भयो। यो सबै लोकको चित्त बुझाउन भैरहेको छ, म देखिरहेको छु कि अब यहाँ मेरो रहने समय सकियो आफ्नो वास्तविक रूपमा नै रहने समय आयो। नभन्दै त्यस्तै भयो भविष्य वहाँले जान्न सक्नुभएको रहेछ।



# ❋ स्वामी परमानन्द सरस्वती र दैवी सम्पदा ❋

**दीनबन्धु अर्याल**
भ.न.पा.-७, कृष्णपुर, चितवन

मन, वचन र कर्मको एकता पवित्रता, जोडिन्छ भने त्यही योग मानिन्छ। श्रेयमार्गको अवलम्बन गर्ने व्यक्तिलाई कुनै प्रकारको डरले सताउँदैन। आफू र अरु एउटै ब्रह्मको अंशबाट बनेको ठान्नेले क्षुद्र व्यक्तिगत स्वार्थमा लाग्नै पर्दैन। दृढ़ विश्वास र संसारका प्राणीहरू भगवान्का सन्तान हुँदा उनीहरूको कल्याण निम्ति केही गर्नु आफ्नो कर्तव्य ठान्ने स्वामी परमानन्द सरस्वतीज्यूले कठोर तपस्या गरेको देखेर प्रभावित नर-नारीहरूमा ध्यान-योग र सत्कर्म को प्रेरणा प्राप्त भएको थियो। गुरुज्यूले धान्याचल जस्ता यज्ञ गर्दा उठेका अन्न र धन विद्यालय, पाटी, पौवा, चौतारी आश्रम र देवालय निर्माणमा खर्च गराउनुभयो। गुरुका यस्ता कार्यले स्वार्थी व्यक्तिहरूलाई निजी स्वार्थ छोड़ने प्रेरणा मिलेको हुनुपर्छ।

आस्था, विश्वास र भक्ति ज्ञानीहरूलाई मात्र होइन वैज्ञानिक एवं राजनीतिज्ञहरूलाई पनि चाहिने अन्तर्मुखी प्रवृत्ति हुन्। यस्ता प्रवृत्ति बहिर्मुखी भएर परिलक्षित पनि हुने गरेका छन्। धर्मको शाब्दिक अर्थ 'धारण' हो भने यसको मर्म सूक्ष्म वा स्थूल जे भए पनि कर्त्तव्य-पालन हो। नारायणले नरको सृष्टि गरेर ब्रह्माण्ड सञ्चालनमा नरको सहयोग लिनु भयो भन्नु र शिव-संकल्प गर्नु, शिव-चिन्तन गर्नु, शिव-चिन्तनबाट आत्म-शक्ति प्रकाश गर्नु र सबल हुनु, आध्यात्मिक अर्थमा एकै कुरा र उस्तै-उस्तै प्रसंग हुन आउँछन्। आगो छोड़ेर, काम नगरेर, पहेंलो वा गेरुवा वस्त्र लगाएर मात्रै संन्यासी बनिने होइन। गृहस्थीका श्रीमान् र श्रीमती छोरा र छोरी समेतको एउटा सानो परिवार हुन्छ भने संन्यासीले घर छोड्छ तर संसार छोड्दैन, संसारका प्राणीको जिम्मा लिन्छ। संसारका मानिसमा असल विचारको प्रचार गर्नु, मानिसहरूमा ऊर्ध्वगामी विचार जगाउनु, शारीरिक, मानसिक र आध्यात्मिक स्वास्थ्य रक्षा गर्नु गराउनु संन्यासीको कर्तव्य हो, जिम्मेवारी हो, भनेर विवेकानन्दले भन्नुभएको थियो। गुरुज्यूले पनि यही उदात्त विचार र आचरणमा आफ्नो समग्र जीवन लगाउनुभयो।

संन्यासीले आफ्नो नाम समेत बदल्नुपर्छ। नाम अनुसारको कामको संकल्प लिनुपर्छ भन्ने विश्वास बोक्नु भएका स्वामीज्यूले परम आनन्दको स्रोतको खोजी गर्नुभएको थियो। स्वामी बन्नु भनेको मालिक हुनु हो। मानिस के को मालिक? मालिक त परमात्मा हुनुहुन्छ। परमात्माको भक्ति गर्ने व्यक्तिले इन्द्रिय जित्यो भने त्यो जितेन्द्रिय अर्थात् गोस्वामी बन्छ, छोटकरीमा स्वामी हुन्छ र मानिस इन्द्रियको वा व्यसनको दास बनेन भने स्वामी हुन्छ, लोभ, क्रोध अभिमान, अज्ञानको अभाव हुँदै जाँदा व्यक्ति निन्दा र स्तुतिमा तुल्य देखिन्छ भने त्यो स्वामी भनिन सुहाउँछ। परमानन्द गुरुलाई स्वामी भनेको हामीहरूले हो। हाम्रा अन्तर्मनले, उहाँलाई स्वामीको पद चढायो। जन-मनको श्रद्धा आर्जन गर्न सफल परमानन्द गुरुलाई श्री ५ महाराजाधिराज सरकारबाट पनि 'गोरखा-दक्षिण-बाहु' ले विभूषित गर्नुका पछाडि दैवी प्रेरणा हुन सक्छ। वेद-वेदाङ्ग अध्ययन गराइने विद्यालयलाई गुरुको सहयोग पुग्यो भने अंग्रेजी विद्यालय निर्माणका लागि पनि उहाँबाट प्रशस्त सहयोग पुगेको पाइन्छ, पर्वतीय क्षेत्र तपोभूमि बनाएर बस्दा उहाँ छोडेको प्रभाव पनि छ र नारायणी अञ्चलको चितवन

जिल्ला भरतपुर लङ्कूमा लक्ष्मी माध्यमिक विद्यालय निर्माणमा पनि गुरुजीको योगदान स्मरणीय छ। देवघाट हरिहर-संन्यास-आश्रम गण्डकी अञ्चलमा पर्छ। आमा पृथ्वी (पार्वती), पिता शिव, सम्पूर्ण प्राणीहरू बन्धु र तीनै भुवन स्वदेश मान्ने[1] सन्तलाई यो, ऊ आफ्नो र पराई भन्ने भेद-दृष्टि नै रहँदैन। मठ-मन्दिर र वेद-वेदाङ्ग-संस्कृत विद्यालय स्थापना गरेका गुरुज्यूले अंग्रेजी विद्यालय निर्माणमा पनि योगदान गर्नुका पछाडिको उद्देश्यमा घोरिंदा मलाई लाग्यो ''भाषा अपवित्र हुने होइन भाव-दृष्टि दोषयुक्त छ या दोष-मुक्त, त्यो हेरिने विषय हो।

आमा बाबु लाई संस्कृत नाम दिउँ या अंग्रेजी नाम तर देवत्वको भावले सम्मान र सेवा जरूरी छ। धर्म, पालन गरिने विषय हो भने सत्य बोलिने विषय हो। धर्म भाषण या निबन्ध-लेखन प्रधान होइन, आचरण-प्रधान हो। धर्मका विषयमा निबन्ध लेख्न हुन्छ, तर धर्म आचरणबाट पारदर्शी हुनै पर्छ। मानवता विरोधी धर्म, धर्म नै होइन। पूजा, दक्षिणा, हवन जस्ता कृत्यले मात्रै धर्म पूर्ण हुँदैन। मानव-सेवा, गो-सेवा र सत्वृत्ति सत्प्रेरणाका लागि आफ्नो जीवन-दान गर्न गुरुले आधुनिक शिक्षालय हरूमा पनि पाश्चात्य शैलीमा अध्ययन-अध्यापन हुने विद्यार्थीहरू गुरु भक्त, देशभक्त कर्मठ एवं विनयी बनून् भन्ने इच्छाले नै दान-राशि जुटाउनु भएको हो। गुरु भक्त भइसक्नुभएको छ, प्रकाश स्वरूप भएर।

देवी देवताका नाउँमा पशुहरूको वध गर्ने कुरा शास्त्र सम्मत पनि छैन र गुरुको मतमा पनि पशु-बलि चढाउने कुरा मान्य भएन। व्यक्ति-व्यक्तिको आनन्द मिलेर भगवान् समक्ष पुग्ने चेष्टा परमानन्द हो। मानव, पशु पञ्छी समेत सबैले त्यस आनन्दमा सम्मिलित हुन पाउनुपर्छ। वनस्पति र जीव-जन्तु प्राणधारी हुन्। चराचरका मालिक भगवान् शिवका सम्पूर्ण प्राणी करुणाका पात्र, सन्तान हुनाले परस्परमा बान्धव हुन्। गुरुज्यू आज हामीहरू समक्ष हुनुहुन्न ब्रह्मलीन हुनुभएको छ। म कहिल्यै मर्दिन, प्रकाशले अन्धकार मेट्दै जान्छ भन्ने गुरुले हामी साधकहरूलाई परमशान्तिमय प्रकाश छरिदिनुभएको छ।

स्वामीज्यूका लोकहितैषी भावना र सेवामय सत्कर्महरूको अनुसरण गर्दै आफ्नो जीवन सुधार्नु नै वहाँका प्रति सच्चा श्रद्धाञ्जलि हुनेछ।

---

१. *माता च पार्वती देवी पिता देवो महेश्वरः। बान्धवाः शिवभक्ताश्च स्वदेशो भुवनत्रयम्।*



# ❃ स्वामी परमानन्दको सन्देश र हाम्रो कर्तव्य ❃

—डा० माधव भट्टराई
प्राध्यापक : महेन्द्र संस्कृत विश्वविद्यालय,
सचिव : विश्व हिन्दू महासंघ, नेपाल।

परमपूज्य स्वामी श्री १००८ परमानन्द सरस्वती नेपालका त्यस्ता सन्त हुनुहुन्थ्यो, जसले सेवा र कर्मको सतत अभ्यासद्वारा समग्र जीवन समाजका निम्ति अर्पण गर्नुभयो। हिन्दु धर्म-संस्कृतिका विविध पक्षमा आएका शिथिलता, कमजोरी र चुनौतीको पहिचान गरी तिनको निराकरण गर्दै सनातन हिन्दु धर्मका उच्च आदर्श र मूल्यहरूलाई जनसमक्ष प्रस्तुत गर्न उहाँ सदा-सर्वदा दत्तचित्त र क्रियाशील रहनुभयो। यही पवित्र उद्देश्यले उहाँले स्थापना गर्नुभएका आश्रम, संस्कृत विद्यालय र मन्दिरहरू उहाँको कर्मिष्ठ योगमय जीवनका प्रतीकस्तम्भ बनेका छन्।

स्वामी श्रीपरमानन्दजीसंग निकटमा रहेर खास काम गर्ने अवसर नपाए पनि यस पङ्क्तिकारले उहाँको जीवनलाई एउटा कर्मिष्ठ तपस्वीको अनुभव गरेको हुँदा आस्थावश आफ्नो विचार राख्नु कर्तव्य सम्झेको छु। उहाँले दिनुभएका सन्देशमध्ये मूलतः आजको परिप्रेक्ष्यमा हिन्दुहरूमा आउनुपर्ने जागरण र हिन्दु-संस्कृतिका अनेकानेक शाखा, सम्प्रदाय, मत, वाद र प्रचलनका बीच सामान्य विचार-भेद रहे पनि सामूहिक कल्याण र शक्ति-संचयका लागि एकता हुनुपर्ने उहाँको अत्यन्त प्रबल सन्देश थियो। उहाँले जीवनपर्यन्त गर्नुभएका क्रिया-कलापबाट स्पष्टतया यही कुरा छर्लङ्ग हुन्छ।

स्वामीजी जनताका माझ लोकप्रिय हुनुहुन्थ्यो। जनतासंग उहाँको निरन्तर सम्पर्क थियो। जनताकै सहयोगबाट उहाँले एक दर्जनभन्दा बढी संस्कृत पाठशाला तथा अनेक मन्दिर र आश्रमको स्थापना गर्नुभयो। आज हामीले उहाँको मार्गदर्शन अनुसार आफ्नो अस्तित्व रक्षाका खातिर सारा हिन्दुहरूलाई जगाउने काममा लाग्नुपरेको छ। यसका निमित्त हिन्दुमात्रमा एकता स्थापित गर्नु परमकर्त्तव्य भएको छ भने रचनात्मक कार्यहरू गरेर सर्वसाधारण जनताका माझ पुग्नु अनिवार्य दायित्व भएको छ।

हिन्दु यति पुरानो छ कि यसलाई अनादि भनिन्छ। सधैं रहिरहने अर्थमा यसलाई सनातन भनिन्छ। समस्त धर्मको उद्गम स्रोत यही धर्म हो। लामो समयको अन्तरालमा यसमा यति धेरै थरी भेद-उपभेदहरू भए कि ३३ करोड़ देवताको गणना गरियो जसमध्ये कुनै एकको पूजा-अर्चना गर्न सकिने भयो। फलतः परस्परमा अन्तर देखिने अवस्था आयो। आधुनिक समयसम्म यस धर्ममा अझ थप रीति र मान्यता विकसित हुँदै गएका छन्। तर "नृणामेको गम्यस्त्वमसि पयसामर्णव इव" (सारा पानीको गन्तव्य स्थल सागर भएजस्तै जुनसुकै मार्गका अनुयायी भए पनि सबै मानिसका प्राप्तव्य तपाईं भगवान् नै हुनुहुन्छ) भन्ने स्पष्ट धारणा हाम्रो धर्मले राखेको छ। त्यसैले यसमा ईश्वरवादी र अनीश्वरवादी दुवै थरी पर्दछन्। ईश्वरवादीमा पनि द्वैतवादी, अद्वैतवादी, आर्यसमाजी जुनसुकै मान्यता राख्नेहरू पनि सजिलै अटाउँछन्। शैव,

---

*१. शिवमहिम्नः स्तोत्र श्लो. ७*

शाक्त, वैष्णव, सौर, गाणपत आदि विभिन्न द्वैतवादी परम्पराका अनुयायीहरूमात्र होइन, "ॐ" को उच्चारण गर्ने, बौद्ध, जैन, सिखसमेत यस संस्कृतिमा आबद्ध हुन्छन्।

हिन्दू धर्मले अँगालेका आदर्श संसारका जुन्सुकै मतांवलम्बीहरूका निम्ति पनि स्वीकार्य एवं अनुकार्य छन्। मनुस्मृतिमा धर्मको लक्षण गर्ने सन्दर्भमा औंल्याइएका दशसूत्र जोसुकैले पनि जहिलेसुकै र जहाँसुकै अपनाउन सक्छ। जस्तै :

**धृतिः क्षमा दमोऽस्तेयं शौचमिन्द्रियनिग्रहः।**
**धीर्विद्या सत्यमक्रोधो दशकं धर्मलक्षणम्॥**

हिन्दु-संस्कृतिको सच्चा अनुयायी आदर्श विश्व नागरिक हुन्छ किनभने यसमा जस्तो उदारता अन्त छैन। **"वसुधैव कुटुम्बकम्"** (विश्व नै परिवार हो) अथवा **"ईशावास्यमिदं सर्वम्"** (सम्पूर्ण संसार ईश्वरले व्याप्त छ) भन्ने धारणा कति फराकिलो छ, भनिरहनु पर्दैन। त्यस्तै परोपकारको महत्त्व, कर्ममय जीवनको अवधारणा र त्याग वा दानको महिमा हिन्दु-संस्कृतिका अजेय पक्ष हुन्।

यति उच्चतम आदर्श भएको हिन्दु-संस्कृतिलाई विधर्मीहरूले आज होच्याइरहेका छन्। धर्म-परिवर्तनको दुश्चक्र चलाएर हिन्दुहरूलाई कमजोर बनाउने काम तिनले गरिरहेका छन्। हिन्दुहरूमाथि आफ्नो सांस्कृतिक उपनिवेश कायम गर्न धन, शक्ति र सीपको उपयोग गरिरहेका छन्। नेपालजस्ता गरीब मुलुकमा जात, जाति, वर्ग, वर्ण, लिङ्ग आदिका बीच विभाजनका रेखा कोर्न तिनीहरू लागिपरेका छन्। आफ्ना देशमा नारीलाई भोट हाल्ने अधिकार नदिने र बुर्का लगाएर कोठामा थुनिन बाध्य पार्नेहरू नेपालजस्ता देशमा आएर मानव अधिकारका उपदेश छाँटिरहेका छन्। अरूलाई परस्पर लडाएर आफ्ना हतियारको गलत व्यापार गर्नेहरू यहाँ सहयोगको बहानामा दास बनाउने दाउ खेलिरहेका छन्। नारीलाई भोगको साधन पुतलीमात्र मान्ने भोगवादी नव-धनाढ्यहरू एकातिर कलिला नानीहरूको खरीद-बिक्री गराएर समाजमा एड्सजस्तो डरलाग्दो महामारी फैलाइरहेका छन् भने अर्कातिर तिनीहरू नै नारी अधिकारको बेढंगी नारा अलापिरहेका छन्। तिनीहरू मानवमात्रमा आध्यात्मिक प्रेम र हार्दिक सद्भावमाथि पटक्कै विश्वास गर्दैनन्। पशु-संस्कृतिमा रमाउने ती भौतिकवादी परधर्मीहरूको जाल चुँडाउन हामीले गर्नुपर्ने कर्तव्यको निर्देश आचरणद्वारा स्वामी परमानन्दले दिनुभएको छ। तिनको पालना गर्न सके हिन्दुसमाजको कल्याण हुने कुरामा शंका छैन। खास गरेर स्वामीजीको जीवनचर्यालाई आधार मानेर भन्ने हो भने हिन्दुहरूले निम्नानुसारका रचनात्मक कार्य गर्दा हिन्दु-परिवार र सम्पूर्ण समाजकै भलाइ हुनेछ। जस्तैः

(क) पौरखी पुर्खाहरूले बनाई धरोहरका रूपमा छाडिगएका मन्दिर, मठ, पाटी, पौवा, धर्मशाला, तीर्थक्षेत्र आदिको सम्भार, सुधार र सरसफाइमा ध्यान नदिंदा त्यहाँको वातावरण दूषित भई मानिसको श्रद्धासमेत घट्न जाने हुँदा तिनको सरसफाइ, मर्मत, सुधार र संरक्षणमा दत्तचित्त रहनुपर्दछ।

(ख) हिन्दु-परिवारमा एकता र मित्रता कायम राख्नुपर्दछ। यसको निम्ति ऊच-नीचको भेदभाव त्यागी सबैमा परस्पर सद्भाव र सहयोगको वातावरण बनाउनुपर्दछ।

(ग) तीर्थ, मन्दिर आदि धार्मिक स्थलहरू र अन्य उपयुक्त ठाउँहरूमा प्रवचन, पुराण, भजन-कीर्तन, धर्मगोष्ठी, धार्मिक प्रशिक्षण, शिविर आदि संचालन गर्नुपर्दछ।

(घ) विधर्मीहरूले हिन्दुहरूमाथि बराबर कुत्सित व्यवहार गरिरहेका हुँदा त्यसमा नियन्त्रण गर्न सजग रहनुपर्दछ। खास गरेर धर्म-परिवर्तन गर्ने-गराउने वा हिन्दू-संस्कृतिको उपहास गर्ने अवस्था देखिएमा आफ्नो समाज मिलेर वा प्रशासनको मद्दत लिएर भए पनि त्यस्तो दुष्कर्म हुन दिनुहुँदैन।

(ङ) हिन्दुत्वको महत्त्वबारे प्रचार-प्रसारगर्न ससाना पुस्तिका, पर्चा, लेख प्रकाशित गरी वितरण गर्ने का श्रव्यदृश्य सामग्रीको माध्यमबाट सर्वसाधारणलाई जानकारी गराउने व्यवस्था मिलाउनुपर्दछ।

(च) जिल्ला, गाउँ, टोल आदिमा हिन्दु-समुदायका शाखा, उपशाखा खोल्ने, घर-घरमा गई हिन्दु-संघको सदस्यता बढाउने र हिन्दुहरूको उच्च मर्यादाबारे जानकारी गराई कर्तव्यबोध गराउने कार्यक्रम अभियानकै रूपमा चलाउनुपर्दछ।

(छ) बाल-बालिका र युवा-युवतीलाई सन्मार्ग देखाउने मुख्य आधार शिक्षाप्रणाली भएकोले शिक्षाको व्यवस्था गर्न आफ्नो तहबाट सबैले सक्तो प्रयास गर्नुपर्दछ।

(ज) प्रत्येक हिन्दुले हिन्दुत्वको मर्यादा अनुरूप वेशभूषा, खानपिन, आचार-विचार, बोलीचाली आदिको आचरण गरेर देखाउनु पर्दछ जसबाट अरुले पनि शिक्षा पाऊन्।

(झ) साधु-सन्त र नारीवर्गको उचित सम्मान गर्नुपर्दछ। संभव भएसम्म आदर्श चरित्र भएका व्यक्तिहरूको सम्मान र संरक्षणका खातिर पुरस्कार र प्रोत्साहन गर्ने व्यवस्था गर्नुपर्दछ।

(ञ) गोरक्षा, वेद वा संस्कृत पाठशाला स्थापना, मठ-मन्दिर-आश्रमको निर्माण, वृक्षरोपण, दुर्व्यसन नियन्त्रण, सरसफाइ, सदाचार, नारी वा प्रौढ शिक्षा जस्ता कार्यमा अग्रसर भई कार्य गर्नुपर्दछ।

यी यस्ता बुँदा हुन् जसको कार्यान्वयन गर्नेतर्फ हामीले केही कदम चाल्न सक्यौं भने परम आनन्दमा लीन परमानन्द स्वामीको जीवनको लक्ष्य पूरा गर्न योगदान दिएको ठहर्नेछ, किन भने ''कुर्वन्नेवेह कर्माणि'' भन्ने उपनिषद् वाक्यलाई आदर्श मानी रचनात्मक कार्यद्वारा हिन्दुत्वको उत्थान र आत्मशुद्धिमा दत्तचित्त हुने ती महात्माको सङ्कल्प पनि यही नै रहेको विश्वास पंक्तिकारले राखेको छ।





# ❃ वैदिक कर्मका व्यावहारिक व्याख्याता : स्वामी परमानन्द ❃

**पं० इन्द्रप्रसाद भट्टराई**

महासचिव

वै०ध०प० नेपाल

आजको बदलिँदो परिवेश अर्थकेन्द्रित हुँदै गइरहेको छ। समाजलाई आर्थिक उत्थानको मार्ग निर्देशन गर्दै धार्मिक रूपमा सुसंगठित गरी वैदिक विधिले यज्ञ-यागादि गराई वेदद्वारा प्रतिपादित कर्मयोग तर्फ जन-उन्मुख गराउन ब्रह्मलीन स्वामी परमानन्दज्यूले गर्नुभएका कार्यहरू आज पनि त्यत्तिकै स्मरणीय छन्। ग्रामीण जनताको आध्यात्मिक चरित्र निर्माण गरी शिक्षाको ज्योति फिँजाउन उहाँले धान्याचल महायज्ञको परम्परा नै बसालिदिनुभयो जुन परम्पराको प्रतिफल नवलपरासी कावासतीको कुमारवर्ती क्याम्पस जस्ता उच्च शिक्षणसंस्था, मठ-मन्दिर, स्कूल, पाटी-पौवा, दर्जनौं आश्रमहरू निर्माण भए। उहाँको अनुपस्थितिमा आज यस परम्परालाई वैदिक-धर्म-परिषद्ले पनि सहयोग पुऱ्याउँदै आएको छ। उहाँले जीवनका अन्तिम क्षणतिर भनिरहनु हुन्थ्यो ''मेरो अनुपस्थितिमा 'वैदिक धर्म परिषद्'ले पनि यस परम्परालाई जीवन्त र अक्षुण्ण राखोस्।'' वस्तुतः आज हामीलाई उहाँको अनुपस्थिति खट्किरहेको छ। तर उहाँका मार्ग-दर्शन शिक्षा र कर्म परायणताले कर्मक्षेत्रतिर प्रेरित गरि नै रहन्छ। वहाँले दिएका मार्गनिर्देशन मध्ये वैदिकमार्गको कर्मयोग पद्धति प्रस्तुत गरी ब्रह्मलीन स्वामीज्यूप्रति श्रद्धा-सुमन अर्पण गर्दछु।

परमेश्वरले एक बाट अनेक हुने संकल्प लिई आफ्नै पराप्रकृति मायालाई सृष्टि गर्ने प्रेरणादिनुभयो। प्रकृतिले काल, कर्म, स्वभावादिको सृष्टि गरिन्। त्यसपछि पञ्चतन्मात्रा र पञ्चमहाभूतको उत्पत्ति भयो। यिनै सामग्रीको संयुक्त स्वरूप देवता इन्द्रिय र विषय बनाई स्थूल अण्डको निर्माण भयो। यसैद्वारा ब्रह्माण्डका ग्रह, नक्षत्र, योग, राशि, करण, द्वादशादित्य, अष्टवसु, एकादशरुद्र, दुई अश्विनीकुमार, उन्पचास वायु, अग्नि, सम्पूर्ण लोक, पर्वत, सरोवर, नद-नदी, सागर, स्वेदज, उद्भिज्ज, जरायुज र अण्डज यी चार प्रकारका प्राणीको उत्पत्ति भयो।

ईश्वरले सास लिँदा समग्र शास्त्रको मूल 'वेद' को उत्पत्ति भयो, आँखा खोलेर हेर्दा पञ्चमहाभूत सहितको सृष्टि सामग्री तयार भयो, परमात्मा मुसुक्क मुस्कुराउँदा जगत्-प्रपञ्चको रचना अनि शयन गर्दा प्रलय हुने भयो। यही प्रक्रिया नै ईश्वरीय गुण मानिन्छ। जगत् स्थूल स्वरूप हो त्यसलाई बुझाउन शरीररूपी पिण्डको निर्माण भएको छ। संसारको सार-तत्त्व बोध आफ्नै शरीरको बनोट, सप्तधातु, इन्द्रिय, विषय, प्राण, मन, बुद्धि, अरिषड्वर्ग, हर्ष शोकादि अहंकारका सात भूमिकाबाट गर्न सकिन्छ। यी सबै ज्ञान प्राप्तगर्न आफूद्वारा गरिएका अनियमित कर्मको फल भोग्न प्राणीहरू चौरासीलाख योनिमा घुम्दछन्। सत्वगुणी देवताहरूको छायाँ हुदैन र ती अदृश्य रूपमा रही शुभ कर्मको उपभोग गर्न दिव्य लोकमा रहन्छन्। यी सबै देवताहरू कर्मका अधिकारी नभई कर्मका फलदाता हुन्छन्। तथापि अदृश्य रूपमा देवताहरू पनि तीर्थ, व्रत आदि पुण्य कर्म पर्व-पर्वमा गर्ने गर्दछन्।

दानवहरू मूलतः तमोगुणी हुँदा भोग-विलासमा नै मस्त रही अतलादि विल स्वर्गमा निवास गर्दछन्। तिनको आसुर स्वभाव हुँदा सात्विक देवतासंग उनीहरू विरोधी रहन्छन्। शास्त्रको मर्यादा पालन गर्ने दानव-कुलका केही प्रह्लाद, बलि, बाणासुर, रावण, विभीषण आदिले आफ्ना कीर्ति उच्चस्थानमा पुऱ्याएका छन्। सत्व र रजोगुणको मिश्रित अवस्थमा

मानव जीवन प्राप्त छ। यदि शास्त्र र सद्गुरुको संगत प्राप्त गरेमा त्यो नरनारायण रूपमै एकाकार बन्न पुग्दछ। त्यही मानव इन्द्रियहरूको वश परी तमः प्रवृत्तिमा लागेमा त्यस्तालाई शास्त्रोचितकर्मद्वारा सात्विक एवं देवतुल्य मानव बनाउन सकिन्छ। यसरी मानवले गर्नु पर्ने तीन कर्म (मार्ग) लाई शास्त्रादिले प्रमुखरूपमा औंल्याएका छन्। दयावीर दानव उच्चकोटिका मानिएकाछन्। त्यस्तै विद्या, बुद्धि, ज्ञान, भक्ति, अन्न, वस्त्र, कन्या, गाई, भूमि, तिल, र अभयदान दिने मानव दानवीर हुन् र यी उच्च कोटिका मानव भित्र पर्दछन्।

ब्रह्मलीन गुरुमहाराज (परमानन्द स्वामी) नररूपमा नारायण यद्वा शिव हुनुहुन्थ्यो। मानव जीवनलाई सार्थक बनाउन जनतालाई शास्त्रोक्त कर्म-योगमा प्रेरित गर्न, न्यायदर्शन, वैशेषिक दर्शन, योगदर्शन, सांख्ययोग, मीमांसादर्शन, वेदान्तदर्शन, ज्ञानमार्ग, भक्तिमार्ग, कर्मयोग, हविर्याग, सोम-याग र दानयज्ञलाई स्वामीज्यूले प्रत्यक्ष व्यवहारमा उतार्न मार्ग निर्देशन गर्नुहुन्थ्यो। वैदिक सनातन मार्गले बताएका बार, साता, पक्ष, मास, ऋतु, अयन, र वर्ष यी सबैलाई ईश्वरीय रूप मानिन्छ। ३६० टुक्रा शरीरको हाडलाई नसा मासुले जोडेर शरीर या जीव तयार पारेको छ। त्यसमा ईश्वरीय सत्ता रहुञ्जेल जीव जीवात्मा रहन्छ। ईश्वरीय सत्ताले छोड़ेपछि जीव जड़ बन्दछ र लाश हुन पुग्दछ। यही वास्तविकता जनमानसमा बोध गराएर प्रस्थानत्रयी (भक्ति, ज्ञान, र कर्मयोग) मध्ये कुनै एकको मात्र अवलम्बन गरे मानव नैतिक र चारित्रिक रूपमा उच्चकोटीको व्यक्तित्व हुन पुग्दछ।

ब्रह्मलीन स्वामीज्यू विशेष गरी कर्म गरेर ईश्वरमा भक्ति जगाई ज्ञान दिनुहुन्थ्यो। मानव जीवनका विकृत मनोभाव हटाई व्यक्ति स्वयंलाई विश्वासी र श्रमशील बनाउँदै प्रज्ञाशील वैदिक समाज सृजना गर्नु उहाँको प्रमुख योगदान रहेको छ। सर्वसाधारण व्यक्ति वैष्णव संन्यासी सबैमा ऐकात्म्य भाव राखेर सानो ठूलो अरूको, आफ्नो भन्ने भेद कहिल्यै गर्नुभएन। बरू जस्तो सुकै परिवेश वा परिस्थितिमा पनि सुगम या दुर्गम सबै ठाउँमा श्रद्धा र स्नेह साथ पुगेर जगत कल्याणका निम्ति समर्पित हुनुभयो। पतिव्रता नारी र पत्नीव्रत पुरुषको गृहस्थाश्रमलाई उच्चकोटिको जीवन भन्ने उद्घोषण गर्दै परिवार समाज र देशको सेवा गर्न उपदेश दिनुहुन्थ्यो। वैदिक धर्मको आन्तरिक मर्मलाई प्रष्टपार्दै मानव समुदायलाई कर्मयोगमा लगाउने प्रवृत्ति नै स्वामीज्यूको अनुकरणीय कार्य थियो। त्यस्तो महापुरुषत्व हिन्दूराष्ट्र नेपाललाई अब पुनः प्रतीक्षाको विषय भएको छ। अस्तु!





# ❋ ब्रह्मलीन स्वामी परमानन्द सरस्वती : मेरो स्मृतिमा ❋

**—प्रा० जगन्नाथ शर्मा त्रिपाठी**
**.............काठमाण्डौ**

**जायन्ते च म्रियन्ते च धरण्यां क्षुद्रजन्तवः।**
**अनेन सदृशो लोके न भूतो न भविष्यति॥**

परिवर्तनशीलता संसारको धर्म हो र सामान्य प्राणीको निधन त्यस्तै परिवर्तनको एउटा पृष्ठ हो भने ज्ञानी मानवको देहवियुक्ति शाश्वत स्थिति हो। ज्ञानपूर्वकको वैराग्य जीवन्मुक्ति हो। पतञ्जलि भन्दछन्—'**दृष्टानुश्रविकविषयवितृष्णस्य वशीकारसंज्ञा वैराग्यम्।**' जीवन्मुक्त ज्ञानीहरूको पनि देह र गेह देखिन्छ। विषयको भोग पनि अरु प्राणिहरूले जस्तै उनीहरू गर्दछन्। अरु प्राणीहरूका विषय-भोगका पदचिह्नहरू अङ्कित नै रहन्छन् भने, पानीमाथि हिंडेको नौकाले पदचिह्न नछोडे झैं ज्ञानीहरू विषय-भोगका पदचिह्नहरू छोड्दैनन्। अर्को शब्दमा भन्ने हो भने कमल वा कर्कलाको पात जल बिन्दुबाट असम्पृक्त रहे झैं विषय-वासनाबाट असम्पृक्त रहन्छन्।

स्वामी परमानन्द सरस्वती जीवन-कालमा नित्य व्यस्त झैं देखिनुहुन्थ्यो, तर त्यो व्यस्तता यथार्थमा उहाँमा थिएन, किन भने विषयमा व्यस्तहरू सधैं अस्त रहन्छन्। अस्त रहनु भनेको स्वानुभवबाट पृथक् हुनु हो। स्वानुभवबाट पृथक् रहेका मानिसहरूका चित्तमा प्रसन्नता रहँदैन। चित्त प्रसन्न नहुनेको बुद्धि ठेगानमा हुँदैन। बुद्धि ठेगानमा नहुने मानिसको बदनमा तेजस्विता र प्रसन्नता देखिँदैन। वदनमा प्रसन्नता न देखिने मानिसमा साधुता र सौम्यता हुँदैन। तर परमानन्दजी अति सौम्य, अति प्रसन्न र अति दर्शनीय महात्मा हुनुहुन्थ्यो।

उहाँसंगको मेरो परिचय धेरै पुरानो होइन, सप्तपदीन मैत्री झैं हामी थोरै समयमा ज्यादै घनिष्ठ बनेकौ थियौं। वि.सं. २०५० को मार्ग महिनामा देवघाटको गलेश्वर आश्रममा बल्खु-निवासी पद्मशङ्कर घिमिरेको यजमानत्वमा सप्ताहविधिले अष्टादश महापुराण, चतुर्वेद पाठ र सप्ताहव्यापी हवनकार्य सम्पन्न भएको थियो। पच्चीसजना विद्वान्हरू त्यस ब्रह्मकर्ममा वरण गरिनुभएको थियो। त्यस महायज्ञमा सौभाग्यले प्रमुख आचार्यको पदवी मलाई प्राप्त भएको थियो। पहिले कोटिहोम भएको अष्टादशपुराण-वाचन भएको मण्डपमा थियो र जहाँ अहिले पक्का मण्डप बनेको छ, त्यहाँ एउटा हवनकुण्ड मात्र थियो, त्यहाँ हामीले चतुर्वेद पाठ र हवन गरेका थियौं र स्वामी परमानन्दजीकै आज्ञाले पद्मशंकरजीकै सक्रियतामा त्यो यज्ञमण्डप तयार भएको हो।

दिनभरि पुराणवाचन हुन्थ्यो र वेलुका सत्सङ्ग चल्दथ्यो। स्वामी रामानन्द गिरिजी देवघाटमा आइसक्नुभएको थिएन। परमानन्द स्वामी र योगिराज तपस्वी जीवन्मुक्त स्वामी नारायण गिरि त्यहाँका दर्शनीय र स्मरणीय व्यक्तिहरू हुनुहुन्थ्यो। बेलुका हुने त्यस सत्संगमा अनुरोधपूर्वक त्यस यज्ञमण्डपमा उहाँहरूको पदार्पण गराउँथ्यौं र उहाँहरूबाट आत्मोपदेशामृत पान गर्ने गर्दथ्यौं र त्यसै अवसरमा मैले पनि आफ्नो भाव व्यक्त गर्ने सौभाग्य पाएको थिएँ, तर अज्ञान-जनित मेरो त्यस तोते बोलीले पनि एक जना वेदान्तका सागर अनि अर्का योगधुरन्धर-दुवै महात्मालाई तृप्त बनाउन सकेछ र म दुवै महात्माको स्नेहभाजन बन्न सकें। पहिले त सत्सङ्ग पाउनु नै ठूलो भाग्योदय हो। भनेकै छ—

'भाग्योदयेन बहुजन्मसमर्जितेन
सत्सङ्गमञ्च लभते पुरुषो यदा वै।
अज्ञान हेतुकृतमोहमदान्धकार-
नाशं विधाय हि तदोदयते विवेकः॥'

—त्यसमाथि पनि म त स्नेह पात्र नै बन्न सकें। त्यस भाग्योदयको वर्णन म शब्दले गर्न सक्तिन।

आत्मज्ञान उहाँमा पूर्ण थियो तर जान्दछु भन्ने अभिमान थिएन। आफ्ना लागि सम्पूर्ण कुरा उहाँले त्याग्नु भएको थियो तर लोक कल्याणका निम्ति उहाँ नित्य सक्रिय रहनुहुन्थ्यो। सम्मानित हुन होइन, सम्मान गर्न उहाँ चाहनुहुन्थ्यो। कल-बल-छलले यस्ता पदहरू हत्याइन्छन् र आफूले आफैंलाई 'म फलानो आचार्य हूँ' भनेर आफ्नो परिचय दिइन्छ, आचार्य गुरु आदि शब्दहरू हाम्रो परम्परामा ज्यादै महत्त्वपूर्ण शब्द हुन्, तर यी कुठाउँमा परेर यिनको अर्थापकर्ष हुन थालेको छ। तर स्वामीजी को इच्छा थियो रे मलाई विधिपूर्वक आचार्य बनाउने। गलेश्वर आश्रम र हरिहर आश्रमका तत्त्वावधानमा एउटा औपचारिक सभा गरेर मलाई आचार्यको पदवी दिन चाहनु हुन्थ्योरे। तर मलाई ठूलो संकोच लागेको थियो।

स्वामीजीका सज्जनता र उदारताका यस्ता अनन्त उदाहरण छन्। उहाँ ब्रह्मलीन हुनुभयो, सीमितताबाट असीम बन्नुभयो। यसैले भन्न मन लाग्छ—

'नामातीतोऽपि परमानन्दरूपः सनातनः।
रूपातीतो दर्शनीयो गुणातीतो गुणात्मकः॥
शब्दातीतोऽपि श्रोतव्यः सज्जनैर्गीतसत्कथः।
पूजार्हो निरुपाधिः सन् धारणीयः सदा हृदि॥
स्पर्शातीतोऽपि स गुरुः सेवनीयो निरन्तरम्।
त्यक्तसर्वरसत्वेऽपि 'रसो वै स' इतीयते॥'





# ❋ भविष्यद्रष्टा स्वामी परमानन्द सरस्वती ❋

**चक्रबन्धु अर्याल**
पूर्व रक्षा सचिव
लाजिम्पाट, काठमाण्डौ

सहनशील, त्याग, धीरता, वीरता, पवित्रता, स्नेह, सहयोग एवं सद्‌भाव जस्ता गुणहरूका आधारमा नै मानिस उच्च श्रेष्ठ र महान् समेत बनी सत्प्रेरणाको स्रोत बन्न पुग्दछ। यिनै विशेषताले विभूषित देवता र महापुरुषहरू हाम्रा लागि पूजनीय वन्दनीय र अनुकरणीय हुन्छन्।

वर्तमान समयमा देखापरेका सामाजिक विसंगति एवम् भौतिक विलासिताले धर्म, संस्कृति, राष्ट्र तथा राष्ट्रियता प्रति उदासीन हुँदै गएको समाजलाई कठिनतम तपस्या गरी धार्मिक पुनर्जागरणको उद्‌घोष गर्दै सुषुप्त समाजलाई जागृत गराउने निष्काम कर्म योगी सन्तहरू मध्ये स्वामी परमानन्द सरस्वतीज्यू महाराज पनि एक हुनुहुन्छ।

परम आदरणीय श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू सँग मेरो पहिलो भेट २०२९ सालमा गुल्मी जिल्लाको विकट दिब्रुङ्ग लेकमा भएको थियो। अत्यन्त शान्त, सौम्य, निस्वार्थी राजा र राष्ट्रप्रति पूर्ण आस्थावान् सच्चा राष्ट्रवादी भद्रपुरुष देखेर म वहाँप्रति आकर्षित भएको थिएँ। वहाँको सामीप्यमा धार्मिक क्षेत्रका धेरै कुराहरू गर्ने अवसर मिल्यो। 'आश्रम, तीर्थस्थल, मठ, मन्दिर, गुरुकुल-विद्यालयहरू मुलुकका गौरवपूर्ण धरोहरका साथै धार्मिक क्षेत्रका महत्त्वपूर्ण निधि हुन्। आज जसको संरक्षण संबर्द्धन गरिनु पर्ने हो तिनै विषयहरूमाथि बेवास्ता बढ्दै जानाले भोली राष्ट्र कुन स्थितिमा पुग्ला जस्ता अत्यन्त मर्मस्पर्शी दुःख लाग्दा कुराहरू वहाँबाट सुन्दा अत्यन्त चिन्ता लाग्यो। 'पुर्खाले कायम गरेको गुठी व्यवस्था रैकरमा परिणत गरी मास्नु तथा निजी स्वार्थ-सिद्धिका लागि प्रयोग हुनु जस्ता कार्यले हिन्दू संस्कारलाई मर्माहत तुल्याएको छ। यस्तै क्रम भविष्यमा पनि रहेमा मठ, मन्दिर, देवालय; शिवालय, शंख, घण्ट, धूप-दीप, पूजा-आजा आदिको अन्त्य भई अत्यन्त विकराल स्थिति उत्पन्न हुनसक्दछ। अतः यस किसिमका असंगतिपूर्ण कार्य हुन नदिन जे जस्तो सकिन्छ प्रयास गर्दै जानु पर्दछ' भन्ने जस्ता धेरै कुराहरू भए। लामो संगतका सबै कुरा लिपिबद्ध गर्न गाह्रो पर्ने हुँदा खास खास कुरामात्र यहाँ प्रकाश पार्ने प्रयास गरेको छु। स्वामीज्यूका सत्प्रेरणाबाट जीवनमा केही मात्र भए पनि सार्थक कार्यहरूमा सहयोग पुऱ्याउने अठोट मैले गर्दै गएँ। मेरो सेवाबाट उहाँ प्रसन्न हुनुहुन्थ्यो भने म वहाँबाट प्रभावित थिएँ। जीवनका अन्तिम क्षणहरू देवघाट नै बिताउने मनसायले मैले त्यहाँ जग्गा लिने विचार पनि उहाँसंग व्यक्त गरें। शुरुमा स्वामीज्यूबाट केही आज्ञा भएन। जब म घडेरी खरीद गर्नका लागि पुनः देवघाट पुगें वहाँबाट भोलीपल्ट 'बन्धुजी नरिसाउनुस् है ! म यौटा कुरा भन्दछु-घडेरी किन्नु घर बनाउनु अनि आवश्यकीय वस्तु संचय गर्न थाल्नुपछि उस्को भन्दा मेरो राम्रो आदि विषयले पछ्याउन थाल्दछन् जस्ले आध्यात्मिक चिन्तनभन्दा भौतिक सुखतिर आकर्षित भइन्छ। त्यसैले आश्रममै रहन र आश्रमकै मर्यादा र आचरणमा रही आध्यात्मिक चिन्तन गर्न राम्रो हुन्छ, त्यसैबाट सुखप्राप्ति हुन्छ। तपाईंले आफैं साँचो राखी आफ्नो कोठा बन्द गर्नुहोस् वा आफ्ना सामान दराजमा राखी बन्द गरेर साँचो आश्रममा दिनुहोस्, तपाईको खुशी एक कोठा तपाईको जीवन पर्यन्त म तपाईलाई उपलब्ध गराउँदछु' भन्ने कस्तो सरल आदर्श र निस्वार्थ भावना। त्यसपछि मैले देवघाटमा घडेरी लिने कुरा छोडें।



देवघाटधामलाई सांच्ची नै देवघाट बनाउने उहाँको कल्पना र अठोट थियो। वहाँद्वारा सञ्चालित अन्य आश्रमहरू जस्तै देवघाट क्षेत्रलाई पनि मद्यपान, मांस-भक्षण, जूवा-तास खेल्ने जस्ता दुर्व्यसन र कुलत हटाई आदर्श समाजको निर्माण गर्ने सत् संकल्प वहाँको थियो। 'म ताक्छु मूढो बन्चरो ताक्छ घुँडो' भने जस्तै सरकार कमजोर हुनु धार्मिक क्षेत्रलाई संरक्षण र प्रोत्साहन नहुनु, जनतामा उच्छृङ्खलता र उद्दण्डता बढ्नु, हरेक कुरामा राजनैतिककरण हुनुका साथै नोट र भोटको खेलले सामजको विशृङ्खलता बढिरहेकै अवस्थामा वहाँको देवघाट प्रवेशले एउटा नयाँ गति प्राप्त गर्‍यो। चाहे विकास निर्माणका क्षेत्रमा होस, वा आश्रमीय परम्परामा, छोटो समयमानै वहाँबाट यस क्षेत्रमा भए-गरेका कार्यहरूबाट नै वहाँ असामान्य व्यक्तित्व भएको महापुरुष हुनुहुन्थ्यो भन्न सकिन्छ। तर विधिको विडम्बना असमयमै वहाँ ब्रह्मलीन हुनपुग्नुभएकोले हामीमाथि असह्य वेदनाको वज्रपात हुन पुग्यो। हामी अत्यन्त दुःखित र मर्माहित हुनपुग्यौं।

छोटो समयमा स्वामीज्यूबाट बाग्लुङ्ग, म्याग्दी, पर्वत, गुल्मी, रूपन्देही, नवलपरासी, चितवन आदि जिल्लामा मन्दिर, आश्रमहरू र वेद-वेदाङ्ग-संस्कृत गुरुकुल विद्यालयहरू स्थापना एवम् सुसञ्चालन गरेर कीर्तिमान कायम गर्नु चानचुने कार्य र व्यवहार थिएन। थौरै समयको ठूलो प्रगतिको द्योतक हरिहर संन्यास आश्रम देवघाट पनि ज्वलन्त उदाहरणको नमूना हो। राष्ट्रलाई अझै केही वर्ष वहाँको खाँचो थियो तर के गर्नु! राम्रो चीज जस्लाई पनि प्रिय हुँदो रहेछ जुन् कुरा कसैले कल्पनासम्म पनि गर्न सकेका थिएनौं, आखिर त्यही भयो। उहाँका थुप्रै सहकर्मी सहधर्मी आत्मीय मित्र र थुप्रै शिष्यगण जो संन्यासी र गृहस्थहरू पनि छन्, सबैले वहाँका आदर्श जीवनका गुणहरूको अनुकरण गरी प्रतिबद्ध भएमा वहाँबाट पूरा हुन बाँकी रहेका कार्यहरू पूरा हुन जानेछन् भन्ने कुरामा मलाई पूरा विश्वास छ। स्वामीज्यूले उपदेशका क्रममा भन्नुहुन्थ्यो ''भौतिक जगत् र सुख सुविधा बारम्बार प्राप्त हुन्छन् र विनाश पनि, तर आध्यात्मिक प्रकृति यो जगत् जस्ताको तस्तै रहिरहन्छ। धार्मिक जीवनमा कठिनाइ आएमा अधार्मिक गतिविधि बढ्दछन्। जो पतनको मार्ग हो जसलाई त्यागेर कठिनै भएपनि धार्मिक कार्यमै लाग्नु पर्दछ। धार्मिक सिद्धान्तको पालना गर्नाले जति सुख र आनन्द प्राप्त हुन्छ त्यो अरु कुनै विषयबाट प्राप्त हुन सक्दैन भन्ने कुरा मनमा राख्नु राम्रो हुन्छ'' जस्ता अत्यन्त शाश्वत आनन्दमय र ज्ञानमय आदर्श भावनाहरू ऐंले पनि बारम्बार स्मरण भइरहन्छन्।

वहाँको जीवनका अन्तिम क्षणभन्दा केही घण्टा अगाडिका कुराहरू स्मरण गर्दा वहाँ सिद्ध र भविष्य-द्रष्टा पनि हुनुहुदोरहेछ भन्ने कुरा थाहा भयो। पुरानो वानेश्वरमा किशोर गौतमको छतमा घाम ताप्दै फलफूल खाँदै गर्दाको अवस्थामा उहाँले 'अब म धेरै बाँच्दिन' मेरो देह देवघाटमा नै त्याग गर्ने विचार थियो, तँलाई सन्चो हुन्छ' भनी तपाईहरूले यहाँ ल्याउनुभयो; मलाई घृत-छायाँ, काल-दर्पण र अन्य कतिपय लक्षणले अवश्य धेरै समय रहन्न भन्ने लाग्दछ। विधिको विडम्बना यहीं प्राण गए पनि मेरो शरीर देवघाट पुगोस्' भन्ने उहाँका शब्दहरू ऐले पनि मेरा कानमा घुमिरहन्छन्। नभन्दै वहाँले भन्नु भएको २४ घण्टामै उहाँको पार्थिव शरीर पशुपतिनाथको सान्निध्यमा सदाका लागि बिदा भयो। दैवको त्यस्तै इच्छा रहेछ, स्वामीज्यू जानुभयो, वहाँका उत्तराधिकारी साथी र हामी शिष्यगणले दृढ निश्चयका साथ कहिल्यै विचलित नभै वहाँले अनुकरण गर्नुभएको मार्ग अवलम्बन गरी उद्देश्य पूरा गर्न सकौं। भगवान्को जो इच्छा!

# ❋ सन्त र समाज ❋

**चेतोनाथ शर्मा आचार्य**
काठमाण्डौ......

**सन्तः साश्चर्यचर्या जगति बहुमतः कस्य नाभ्यर्चनीयाः।** —भर्तृहरि

संसाररूपी सागरमा भावनात्मक रूपले अवगाहन गरी त्यसको इयत्ता पत्ता लगाउँन खोज्नेहरूले यस बारे आ-आफ्नो रूपको अनुभव व्यक्त गरेका छन्। त्यस किसिमका अन्वेषकहरूको भनाइ मा एकरूपता त पाँइदैन, तर पनि यसलाई सर्वथा सुखकर सार युक्त चाहिं कसैले भनेको देखिंदैन। स्मृति ग्रन्थ गीताको यसमा समर्थन छ- **अनित्यमसुखं लोकम्।** यसै गरी अरू विचारक को पनि कथन छ कि-यो संसार असार हो। असार भन्नुको अर्थ जाग्रत् अवस्थामा सावधिक रूपले देख्नमा आउने। अन्त्य अवस्थामा ठोस या सार रूपले केही हात नलाग्ने भएर पनि जीवन कालमा अनेक किसिमका दुःखले झेलिनु पर्ने सताइनु पर्ने।

साख्य दर्शनको शुरुआत पनि आधिभौतिक, अधिदैविक र आध्यात्मिक गरी तीन किसिमका दुःखबाट छुट्ने उपायकै लागि भनेर बताइएको छ। **दुःख त्रयाभिघाताज्जिज्ञासा तदपघातके हेतौ,** दुःखबाट छुट्नको लागि दृष्टदेखि वैदिक उपाय समेत प्रसिद्ध छँदा छँदै फेरि सांख्य दर्शनद्वारा निर्दिष्ट उपाय किन? भन्ने बारे सांख्यको अभिमत छ-अरुद्वारा ऐकान्तिक र आत्यन्तिक रूपले दुःख निवृत्ति सम्भव छैन, त्यसैले सांख्यदर्शन नै यसको आवश्यक उपयोगी उपाय हो, जस्ले प्रकृति र पुरुष बीचको भेदबोध गराइदिन्छ। यस किसिमको बोधपछि दुःख सर्वथा हट्छ।

यता न्यायदर्शनमा नव्य शैलीका उद्भावक गङ्गेशोपाध्याय ले आफ्नो प्रसिद्ध चिन्तामणि ग्रन्थमा महामुनि गौतमले आन्वीक्षिकी विद्याको प्रचार-प्रसार तत्त्वज्ञानद्वारा निःश्रेयसमा पुऱ्याई सदाको लागि दुःख विनिर्मुक्त पार्नको लागि नै गरेको भन्ने कुरा यसरी उल्लेख गरेका छन्-**'जगदेव दुःखपङ्कनिमग्नमुद्दिधीर्षुः'** आदि।

यसबाट संसार दुःखमय नै छ भन्ने कुरामा चाहीं सबैको सहमति बुझिन्छ। बौद्ध दर्शनमा दुःखको अस्तित्व बडो स्पष्ट रूपमा अनुभव गरी त्यसबाट छुटने उपाय बताएको छ। आचार्य शङ्कर चर्पटमञ्जरिकामा संसारको परिवर्तनशीलता दर्शाउँदै गोविन्द भजनतिर आकर्षित पार्दै भन्छन्-**प्राप्ते सन्निहिते मरणे नहि नहि रक्षति डुकृञ् करणे।** संसार दुःखबहुल हुनमा मानवीय मनःस्थिति र बीच-बीचमा घट्ने घटना विशेष मात्र कारण नभै यसको स्वरूपगत स्वभाव पनि कारण छ। किनभने सृष्टलोक मध्ये कहाँ कुन गुणको विशेषता या प्रमुखता छ त? यसबारे भनिएको छ-**ऊर्ध्वसत्त्वविशालस्तमो विशालश्च मूलतः सर्गः। मध्ये रजो विशालः।** मध्य लोक भनेर यस मर्त्य लोकलाई नै लिइन्छ। माथिल्लो सृष्टि सत्त्व प्रधान सुखात्मक, तल्लो तमः प्रधान मोहात्मक र बीचको चाहीं रज प्रधान भएकोले राग बढ़ाउने दुःखात्मक छ। त्यसो हुँदा दुःख बहुल हुनु विलक्षण नभै स्वाभाविक भन्नुपर्छ।

कुनै व्यक्ति वस्तु या फल विशेष जे जस्तो गुण या स्वभावको छ त्यसलाई अरु किसिमको गुण र स्वभावको वस्तुसित मेलन गराई अनुकूल प्रतिकूल पारिन्छ, पार्न साकिन्छ। नीतिको कथन छ-संसार यौटा विषको वृक्ष हो, रुख हो। तर त्यस विष वृक्षमा पनि दुइटा फल चाहिं अति नै मधुर र रसदार फलेका पाइन्छन्। त्यस्ता रस हुन काव्यामृत यद्वा साहित्यिक रसास्वादन र अर्को हो सज्जन समागमबाट हुने र मिल्ने आनन्द। संसारको यात्रा गर्न आउने मानवलाई यहाँको यात्रा सुखकर भन्दा बढी कष्टकर नै अनुभव भएको र हुँदै रहेको पनि होला। तर यस किसिमको क्लेश बहुल कटु र तितो

अनुभव गर्न बाध्य भएकाहरूलाई पनि साहित्यकारहरूले बुझाउने संझाउने गरेका छन्-सधैं सुख र सधैं दुःख एक नास रहने कुरा होइन। यो त सबारीमा जोडिएको पाङ्ग्रो या चक्का जस्तो हो, जो आउने जाने तल माथि पर्ने भइरहन्छ।

सांसारिक घात प्रतिघातबाट हताश बनी निराश भएका देखिन् लिएर विकृत संस्कार एवं मलिन मन मस्तिष्क भएका सम्मलाई तिनको विद्यमान स्थिति र अवस्थाबाट सान्निध्यमा पुग्दा—आउँदा परिवर्तित तुल्याई अर्कै रूपमा मोडिदिने काम साधुसन्तले गरेका छन्। त्यस्ता साधुहरूको महत्त्व र प्रभाव के कस्तो हुन्छ र छ यस बारे भागवतको कथन छ–गङ्गा यमुना मानसरोवर जस्ता जलीय तीर्थ र धातु एवं शिलाद्वारा रचित निर्मित देव मूर्तिहरूमा अवगाहन गर्ने, दर्शनार्थ आउनेहरूलाई पवित्र पार्ने, उद्धार गर्ने क्षमता कहिले के कति छ त्यति ठेगान छैन। तर, सच्चा साधुको सङ्गत सान्निध्यले चाहिं व्यक्ति तत्काल पवित्र बनिहाल्छ, विह्वल अवस्थामा पुगेको भए पनि समस्थितिमा आउने गरी समालिइहाल्छ, यसमा न त कुनै शंका छ, न त द्विविधा। त्यसो हुँदा भगवान्ले भन्नु भएको छ **साधूना हृदयं मह्यम्,** याने साधु सन्तको हृदय र मेरो भावमा फरक छैन।

जहाँ तीर्थ छ साधु सन्त त्यहीं रहन्छन्, जहाँ साधु सन्त रहन्छन् त्यो तीर्थ हुन्छ। महाभारत वन पर्वमा यसका उदाहरण धेरै छन्। दुर्योधनसित विवाद परेकोले संग्रामको बेला विदुर तीर्थ यात्रामा निस्कन्छन्। उनी फर्कदा युद्ध समाप्त भएर युधिष्ठिर राज्यारोहण भै सकेका हुन्छन्। तीर्थयात्राबाट फर्केका विदुरप्रति उनको उद्गार यस प्रकारको छ—

**भवद्विधा भागवतास्तीर्थभूताः स्वयं प्रभो।**
**तीर्थीकुर्वन्ति तीर्थानि स्वान्तःस्थेन गदाभृता॥**

यहाँ प्रयोग भएको तीर्थीकुर्वन्ति पद च्विप्रत्यान्त हो र यसले अभूततद्भाव याने पहिले नभएको र पछि भएको भन्ने अर्थ द्योतन गर्छ। यसबाट सन्तको सान्निध्य एवं निवासले पहिले तीर्थ रूपले प्रसिद्ध नभएको भए पनि तीर्थ बन्छ। कुँनै पनि कुशल व्यक्तिले गरेको विशिष्ट रचनाको औचित्य अनौचित्य सन्तको परीक्षणबाट खुटिने भएकोले महाकवि कालिदास रघुवंश महाकाव्यको प्रारम्भमा भन्छन्, **तं सन्तः श्रोतुमर्हन्ति,** याने साधु सन्त नै मेरो यो रचना सुन्न लायक छन्। सन्तको लक्षण उनी अगाडि गर्छन् **सदसद् व्यक्ति हेतवः**। अर्थात जो सत् या ठीक र असत् या बेठीक छुट्याउन सक्तछन्। यसबाट सन्तको स्थान कति उच्च र जिम्मेवारी पूर्ण रहेछ बुझ्नसकिन्छ। पद्मपुराणमा श्रीकृष्णबाट राजा उग्रसेन-लाई सन्तको स्वभाव बारे यसरी उल्लेख भएको छ कि–नित्यप्रति अरुको कल्याण गर्नमा संलग्न, पापको लेशले पनि नछोइएको, जति सुकै अरूको उपकार गरे पनि न अघाउने, तृप्त नहुने सन्तको स्वभाव हुन्छ।

दुःखमय संसारमा जन्मेर जति सुकै घात प्रतिघातलाई पनि झेल्दै र सहँदै जीवनमार्गमा अघि बढ्ने साहस दिलाउनमा प्रत्यक्ष रूपले हुन सक्ने सन्तको सान्निध्य अथवा उनीहरूद्वारा अभिव्यक्त वाणी मात्रले पनि धेरै सहयोग पुऱ्याएको देखिन्छ। त्यसैले साधन-पञ्चकमा आद्यशंकरको कथन छ–'सङ्ग सत्कै गर्नु पर्छ, असत्को होइन।' हिन्दी साहित्यमा वीरगाथा कालपछि भक्ति काल जन्म्यो। जस्मा अनेक सन्त पैदा भए। यस्ता सन्तमा राम भक्तिधारामा तुलसीदास र कृष्णभक्तिधारामा सूरदास अति प्रसिद्ध भए। यिनमा समाज निरपेक्ष बनी भावधारामा बग्ने सूरदास भए भने समाजसापेक्ष रूपमा भक्ति रचना प्रस्तुत गर्ने तुलसीदास। सन्त तुलसीले आफ्नो अतिप्रसिद्ध विशिष्ट रचना रामचरितमानसमा सन्त असन्तको स्वभाव बडो मार्मिक रूपले उल्लेख गरेका छन्। त्यसको सन्त सम्बन्धी एक उदाहरण मात्र यहाँ प्रस्तुत गरिन्छ-

***सठ सुधरहिं सत सङ्गति पाई। पारस परस कुघात सुहाई॥***

अर्थात् मूर्ख एवं जड व्यक्तिले पनि साधु सन्तको सङ्गत गर्न पाए भने पारसमणिको स्पर्शले फलाम सुन बने झै त्यो पनि प्रबुद्ध बनी मनुष्य लायक सुमार्ग अवलम्बन गर्ने बन्ने छ।

एतावता संसार जतिसुकै नीरस, कष्टकर एवं उराठ लाग्दो भए पनि परहितमा समर्पित साधक साधुसन्तले परिष्कृत





वाणी र खँदिलो अनुभवद्वारा यसलाई सरस तुल्याउने काम गरेका छन्। जसरी दाशरथि रामलाई किशोर अवस्था पार हुँदा नहुँदै अनपेक्षित वैराग्यले ग्रस्त पारी पौरुषहीन पार्न खोजेको थियो, तर गुरु वसिष्ठले जीवनको लक्ष्य के हो ? यो के गर्दा पूरा हुन्छ भन्ने कुरा अनेक उदाहरणद्वारा संझाएर उनलाई असमयको पलायनबाट भावनात्मक रूपले मोडी सक्रियतापूर्वकको सफल जीवन यापन गर्ने भाव जागृत पारे। समर्थ रामदासले शिवाजीलाई, राम कृष्ण परमहंसले नरेन्द्रलाई के कस्तो उपदेश दिई, सन्मार्गमा प्रवृत्त गराए त्यो इतिहास प्रसिद्ध छ।

हरेक देश र समाजमा भएका साधुसन्तले आफ्नो समकालिक अवस्था र स्थितिको पहिचान गरी तात्कालिकदेखि दीर्घकालिकसम्मका लागि मार्गदर्शन गर्नेदेखि हित हुने सम्मका काम कुरा गरेको देखिन्छ। हाम्रो देश नेपालमै सीमाबद्ध भएर हेर्दा पनि विगतमा धेरै साधु सन्त भएका र तिनीहरूबाट भावनात्मकदेखि भौतिकरूपका समेत निर्माणात्मक काम कुरा भएका पाइन्छन्। जस्का केही उदाहरण हुन्-मठ, मन्दिर विद्यालय, घाट, सदावर्तको निर्माण र व्यवस्थापन साधु सन्तलाई भोजन, गरीब-गुरुवालाई अन्नदान आगन्तुक अतिथि अभ्यागतको स्वागत सत्कार आदि। यसै गरी भावनात्मक र बौद्धिक रूपका कामबाट पनि साधुसन्तले निजी विशेषता दर्शाई सामाजिक सन्तुलन कायम राख्न प्रशस्त मद्दत पुऱ्याएका थिए र अझै पुऱ्याइरहेछन्। साधु सन्तले पुऱ्याएको, प्रदान गरेको भावनात्मक उपदेश भनौं या सहयोग निकटमा आउने, सान्निध्यमा पुग्नेहरूले अनुभव गर्ने र गर्न सक्ने कुरा हो। भौतिक सर-सामग्री प्रयोग गरी अड्याइएका र निर्माण भएका आश्रम, मठ-मन्दिर, पाटी-पौवा र विद्यालय चाहीं जोसुकैले देख्ने भोग्ने र प्रयोग गर्ने रूपमा समेत रहेर कालान्तरमा नष्ट-भ्रष्ट भए भने केही त अझै दृष्टिगोचर हुँदैछन्।

नेपालको तराईक्षेत्र महोत्तरी जिल्लाको मटिहानीमा अवस्थित लक्ष्मीनारायण मन्दिर र मठ तस्मैया बाबाको योगदानबाट बनेको हो भने बारा जिल्लाको सिद्धेश्वर मन्दिर र विद्यालय गोपाल बाबाको योगदानबाट। पूर्वी नेपालको दुर्गम पहाड़ी भेक दिङ्लामा बालागुरु षडानन्दले सीताराम गुठी, विद्यालय, मन्दिर र पोखरीहरू बनाए। पशुपति बासुकिगुफामा रहने ब्रह्मचारीबाट वेदान्त दर्शनको शिक्षा, विद्यार्थीलाई सहयोग, उपचार सेवा र सूर्यघाटको निर्माणमा योगदान पुगेको थियो। महामण्डलेश्वर ईश्वरानन्दबाट गीताको प्रचार प्रसारको साथ गीता प्रतिष्ठानको स्थापनमा अत्युत्तम योगदान पुगेको थियो। परमहंस सच्चिदानन्द सरस्वती (खप्तड स्वामी) बाट मिलेको बौद्धिक र आध्यात्मिक योगदान त ताजै हुनुको साथ अतुलनीय पनि छ। यहाँ साधु-सन्त बाट भएका भौतिक, बौद्धिक र आध्यात्मिक रूपका यी केही उदाहरण हुन्। साधु-सन्तको यस्तै आगमन-गमन क्रममा श्री १००८ स्वामी परमानन्द सरस्वतीजी महाराजको पनि आफ्नो रूपमा साधनामय जीवन निर्वाह भई अवसानको अबस्थामा पुगेको छ। स्वामीज्यूले आफ्नो जीवन कालमा व्यक्तिगतदेखि सामाजिक हितसम्मका जे जति कार्य गर्नु भो त्यो यौटा सन्त जीवनको मूर्तिमान् उदाहरण थियो। विशेष गरी सप्तगण्डकीको मिलनस्थल देवघाटक्षेत्र उहाको योगदानबाट बढी उपकृत छ। यसपछिका उत्तरवर्ती सन्तले उहाँको योगदानमा अरु सहयोग पुऱ्याउनेछन्।

जन्मको साथ मृत्युको सम्बन्ध सानादेखि ठूलासम्म समान रूपले जोडिएको हुँदा उहाँको पनि भौतिक शरीर आयु समाप्तिको साथ आत्मा ब्रह्मलीन बन्यो। यसले गर्दा समसामयिक समाज एक साधक सन्तबाट वञ्चित बन्यो। तर नसकारी नहुने विधिको यस अकाट्य विधानलाई स्वीकार गर्दै दिवंगत आत्माप्रति श्रद्धाञ्जलि अर्पण गर्दछु।

# ❀ दर्शनको क्षेत्रमा स्वामी परमानन्द ❀

**आचार्य गुरुप्रसाद सुवेदी**
देवघाट, चितवन

पाश्चात्य दृष्टि अनुसार दर्शनशब्द अंग्रेजीको फिलोसोफी शब्दको अनुवादको रूपमा मानिन्छ, जसको अर्थ ज्ञानप्रति अनुराग या प्रेम भन्ने हुन्छ। तर पूर्वीय चिन्तन-प्रक्रिया अनुसार दर्शन संस्कृतको 'दृशिर्-प्रेक्षणे' धातुबाट भावमा ल्युट् प्रत्ययं लगाउँदा सिद्ध हुन्छ। यसको अर्थ बाह्य दृष्टिले हेर्नुमात्र होइन आन्तरिक दृष्टिले देख्नु भन्ने हुन्छ। अर्थात् कुनै पनि विषयको चिन्तन मनन गरी सही निष्कर्ष निकाल्नु नै दर्शन हो। यस दृष्टिले हेर्दा पाश्चात्य चिन्तनमा भन्दा बढी पूर्वीय चिन्तनमा दर्शनलाई व्यापक र गम्भीर रूपमा लिएको पाइन्छ। यथार्थमा विचार गर्दा दर्शन भनेको केवल तद्विषयक ज्ञान या ज्ञानप्रतिको अनुराग मात्र होइन यथार्थ चिन्तनको गहिराई र निष्कर्ष हो भन्नुपर्ने हुन्छ।

वेद उपनिषद् र स्मृतिमा पनि यस्तै अर्थमा दर्शन शब्दको प्रयोग गरिएको छ। उपनिषद्मा ***आत्मा वा अरे द्रष्टव्यः*** भनी आत्मादर्शनको महत्त्व बताइएको छ। गीतामा सबै विद्या भन्दा श्रेष्ठ विद्या भनी अध्यात्मविद्याको चर्चा गरिएको छ भने मनुस्मृति मा सम्यग्दर्शन गर्न नसक्नेलाई कर्मको बन्धनले बाँध्ने या संसारको चक्रमा परिरहनुपर्ने कुराको उल्लेख छ। यहाँ दर्शनको तात्पर्य कुनै सम्प्रदायविशेषको सिद्धान्त या पाश्चात्य चिन्तनमा जस्तो बौद्धिक विलासमात्र होइन अपितु परमतत्त्वको अनुशीलन र साक्षात्कार हो।

यहाँ यौटा जिज्ञासा हुन सक्छ—यदि यौटै परमतत्त्वको अनुशीलन र साक्षात्कार नै दर्शन हो भने पूर्वीय दर्शनको रूपमा भिन्न-भिन्न विषयका प्रतिपादक अलग-अलग सिद्धान्तहरू किन प्रसिद्ध छन् त? यौटै नै दर्शन र यौटै नै सिद्धान्त हुनुपर्ने; यसको समाधान हो—प्रक्रियाको भेदले दर्शनहरू भिन्न-भिन्न भएपनि सबै पूर्वीय दर्शनमा आत्यन्तिक दुःखबाट छुटकारा पाउन जिज्ञासा राखिने र तत्त्वज्ञानको लक्ष्य दुःख निवृत्ति या सुख प्राप्तिलाई मानिएको छ। तत्त्वज्ञानलाई नै मुक्तिको हेतु मानिएको छ। यसरी गम्भीर भएर विचार गर्दा पूर्वीय दर्शनमा प्रक्रिया र सिद्धान्तहरू भिन्न देखिए पनि सबै दर्शनको अन्तिम लक्ष्य यौटै नै हुन जान्छ। त्यो हो—**'सर्वं खल्विदं ब्रह्म'**। अर्थात् यो सबै ब्रह्म हो।

यो सबै ब्रह्म किन हो? कसरी हो? हुन सक्छ कि सक्दैन, यस्ता विषयमा पर्याप्त चिन्तन मनन गर्ने अवसर हामीलाई प्राप्त छ। उपनिषद् मा **तद्विजिज्ञासस्व** भनी जिज्ञासाको छूट दिइएको छ भने चिन्तन गर्दा ठीक ठहरेमा मात्र सिद्धान्तलाई स्वीकार गर्न सकिने शास्त्रको अनुमति छ। **हृदयेनाभ्यनुज्ञातः यो धर्मस्तं निंवोधत, स्वस्य च प्रियमात्मनः** आदि भनाइहरू यसै तथ्यलाई समर्थन गर्दछन्।

उक्त सर्वं खल्विदं ब्रह्म भन्ने औपनिषद् सिद्धान्तलाई नै व्यास, शुक, शङ्कराचार्य आदि विद्वत्परंपराले विचारको मधानीले मथेर स्वीकार गरे। शङ्कर-सम्प्रदायका **स्वामी परमानन्द सरस्वती** यसै परम्पराका प्रखर विचारक एवं उपनिषद् दर्शनका प्रबल प्रचारक हुनुहुन्थ्यो। उहाँका भनाइहरू परम्परागत सूत्रका अपार जञ्जालमा जेलिएका हुँदैनथे अपितु, स्पष्ट सरल एवं सहज रूपमा स्वीकार गर्न सकिने हुन्थे।

पूज्य स्वामीजी महाराजले उपनिषद्को **सर्वं खल्विदं ब्रह्म** भन्ने वेदान्त सिद्धान्तलाई जीवन दर्शनको रूपमा अँगाल्नु भएको थियो। आफ्नो प्रत्येक भाषण र मन्तव्यमा उपनिषद् गीता या योगवाशिष्ठका अद्वैतसिद्धान्त-परक ठेट वाक्यलाई

स्थान दिने पूज्य स्वामीज्यू शाब्दिक चमत्कृतिको माध्यमबाट होइन विचारको गहिराइको माध्यमबाट दर्शनको गहिराइमा पुग्न सफल हुनुहुन्थ्यो। दर्शनको उद्देश्य नै पूर्णताको प्राप्ति हो र दर्शन अपरोक्ष अनुभूतिसँग नै सम्बन्ध राख्छ। स्वामीज्यू पनि आफ्नो दर्शनलाई यस्तै रूपमा नै स्वीकार्नु हुन्थ्यो। यसरी उपनिषत्सिद्धान्तलाई आफ्नो जीवनमा आत्मसात् गर्दा उहाँको जीवनमा उक्त सिद्धान्त आफ्नो व्यापक व्यावहारिक र समसामयिक बनेर देखापरेको थियो। स्वामीज्यूका जीवनमा देखिएका यस्ता उपलब्धिमूलक केही उदाहरणहरू यस प्रकार छन्—

- सर्व खल्विदं ब्रह्मको सिद्धान्तले व्यवहारमा समरसता कायम हुँदो रहेछ। स्वमीज्यूको जीवनमा ठूलो–सानो, धनी–गरीब, ऊच–नीच इत्यादि भेद–भावजन्य पक्षपातको आभाससम्म पनि थिएन।
- वर्तमानमा सर्वत्र फैलिएको कुसम्प्रदायवाद वैमनस्य र प्रतिस्पर्धा आदि अनपेक्षित कटुताले तथाकथित धार्मिक जगत् पनि अछूतो रहेन। यसलाई निराकरण गर्न स्वामीज्यूको चिन्तनले ठूलो प्रयास गर्‍यो। वहाँले सबै किसिमका व्यक्तिहरूलाई चिन्तनको त्यो साझा चौतारीमा निम्त्याउनुहुन्थ्यो।
- आफ्नो भनिने सारा सम्पत्ति शुरुमै त्यागेर निजी वस्तुको संग्रह र ममतालाई नै छोड़ी केवल सामाजिक सेवामा समर्पित बन्न सक्नु यस चिन्तनको अर्को विशेषता हो। राजनीतिक जीवनमा त्यागमा पनि भोग स्वार्थको प्रधानता रहन्छ। यस्तो निःस्वार्थ समर्पण केवल निष्काम कर्मयोगबाट नै सम्भव हुन्छ जो आध्यात्मिक जीवनको प्रथम अवस्था हो।
- सुप्रसिद्ध दार्शनिक डा० राधाकृष्णन्को भनाइ थियो–भारतीय दार्शनिकको उद्देश्य सामाजिक र आध्यात्मिक विकास गर्नु हो। हुन पनि आजको विशृङ्खलित समाजमा उन्नतिको अपेक्षित आधारभूत प्रारम्भ उक्त व्यावहारिक वेदान्तका बहुमूल्य आदर्शको अध्ययन र अनुशीलनबाट मात्र सम्भव देखिन्छ। यस क्षेत्रमा पनि पूज्य स्वामीज्यूले कदम चाल्न शुरु गर्नुभएको थियो।
- महान् वैज्ञानिक आइन्सटाइनले अध्यात्म र धर्मविना विज्ञानलाई अपूर्ण देखेका थिए। धर्म र अध्यात्मले नै मानवमा त्याग, सेवा, परोपकार मैत्री, करुण र विश्वास आदि सद्गुणको विकास गराउँदछ।
- समाजमा आएर उपलब्ध भौतिक उपकरणको सदुपयोगका साथ साथै आध्यात्मिक सद्गुणको विकास गर्ने स्वामीज्यूले समाजलाई अवश्य पनि विज्ञान र अध्यात्मवादको समन्वय देखाउन चाहनुभएको थियो। जो आजका युगको आवश्यकता र माग पनि हो।
- आजको यो संस्कृतेतर शिक्षाले मनुष्यको अपेक्षित आवश्यकतालाई पूर्ण गर्न सक्रे देखिएन। प्लेटोले शिक्षाको उद्देश्य मनुष्यलाई पूर्ण बनाउनु हो भनेका थिए। मनुष्यलाई पूर्णतामा पुऱ्याउन उक्त आध्यात्मिक शिक्षाको आवश्यकता सबैले अनुभव गरेकै छन्। यो आध्यात्मिक शिक्षाका महत्त्वलाई हृदयङ्गमगरी पूज्य स्वामीज्यूले संस्कृत शिक्षामा जोड दिनुभयो।
- भौतिक विज्ञानले त मनुष्यलाई शरीर र मनको इकाइमा मात्र सीमित गर्दछ। मनुष्य त्यतिमात्र होइन, जति भौतिक विज्ञानले देखाएको छ। विज्ञानले वस्तुको स्थूल परिचय दिन सक्छ तर आफ्नो (मनुष्यको) यथार्थ परिचय दिन सक्दैन किनभने त्यो त्यसको क्षेत्र होइन। मनुष्यताको यथार्थ परिचायक दर्शन हो वेदान्त। यसले अयमात्मा ब्रह्म भन्दै यथार्थ पूर्णतामा पुऱ्याउँछ। यो आफ्नो परमात्मक चिनारी गराउने अध्यात्मशास्त्रको एकान्त प्रेमी साधुलाई

जत्तिकै विकसित हुन चाहने समाजलाई पनि आवश्यक छ। यो आवश्यकतालाई पूज्य स्वामीज्यूले बुझ्नुभएको थियो र नै आफ्नो सम्बन्धमा भन्नुहुन्थ्यो 'म कहिल्यै मर्दिन मेरो देह मर्नेछ' इत्यादि।

☆ यसरी आफ्नो जीवनमा वेदान्तदर्शनलाई आत्मासात् गर्दा पनि अरु दर्शनका मर्यादाहरू समन्वित नै थिए। उहाँको साधनापथमा तत्त्वविवेक गर्दा सांख्य दर्शनको साहरा लिए जस्तो देखिन्थ्यो भने मन निरोध गर्ने वेला योगदर्शन अगाडि बढ्थ्यो।

कर्म र यज्ञादि गराउदा मीमांसादर्शनले स्थान पाउँथ्यो भने विचारको क्रममा अनुमानादि साधन खोज्न न्याय वैशेषिक काम लाग्थे। भजन कालमा भक्ति देखा पार्थ्यो र **भक्त्यर्थं कल्पितं द्वैतमद्वैतादपि सुन्दरम्** भन्ने मधुसूधन सरस्वतीको भनाइले पनि स्थान पाउँदथ्यो। यो पूर्वीय दर्शनको समन्वित हुन सक्ने विशेषता स्वामीज्यूका जीवनमा झल्किन्थ्यो।

हाम्रा प्राचीन पूर्खाहरूको दार्शनिक चिन्तनलाई सिंहावलोकन गर्दा हामीहरू चिन्तनको क्षेत्रमा धेरै अगाडि थियौं भन्ने तथ्य स्पष्ट हुन्छ तर इतिहासको अन्तराल पछिको अशिक्षा र उपेक्षाको दोछायामा पनि उनै आदर्श ओर्केल्न थाल्दा चिन्तन र व्यवहारको दूरी झन् लम्बिँदै गएको हो। यस तथ्यलाई नियालेर हाम्रा पूर्वीय दर्शनका व्यवहारिक परिणामलाई समाजमा ल्याउनु आजको युगको माग हो। आजको युगमा बाहिर फर्केर हेर्दा चारै तिर झन् अरु असङ्ख्य समस्याहरूले ताँती लगाएर मानवलाई घेरी रहेका छन्। राजनीतिक समस्य:, पर्यावरण समस्या, बेरोजगारीको समस्या जनसंख्या वृद्धिको समस्या, गरीबीको समस्या आदि आदि। तर कुनै पनि समस्यालाई निराकरण गर्न समस्यादेखि बाहिर दौडेर सकिंदैन। रोग निको पार्न रोगको निदान पत्तो लगाई उपचार गर्नु आवश्यक भए झैं, समस्यालाई निराकरण गर्न समस्याको मूल कारणमा पुग्नुपर्ने हुन्छ। खोज्दै जाँदा वास्तविक उन्नतिका अवरोधक समस्याहरू मध्ये ८५ प्रतिशत समस्याहरू मानवले आफैंबाट नै उत्पन्न गराएका सिद्ध हुन्छन्। त्यसको निराकरण गर्न केवल चिन्तन र आन्तरिक पर्यालोचनको आवश्यकता हुन्छ जो केवल अध्यात्मिक दर्शनले मात्र पूरा गर्न सक्दछ। स्वामी परमानन्दजी यसरी चिंतनद्वारा आन्तरिक पर्यालोचन गर्न निपुण हुनुहुन्थ्यो। त्यसैले उहाँको सामु कुनै पनि समस्याहरू विकटरूपमा उपस्थित हुन्नथे। सहसा समाहित हुन्थे।

यस्ता कतिपय व्यवहारोपयोगी विशेषताहरू स्वामीज्यूको जीवनमा देखिन्थे जो आध्यात्मिक दर्शनको गहिराइमा पुगनुका परिणाम थिए। यस्ता आध्यात्मिक चिन्तनका परिणाममा जन्मिएका व्यावहारिक पक्षहरूलाई समाजमा अझै विस्तृत रूपमा ल्याउन पाए यो नै आध्यात्मिक क्षेत्रका पथिकहरूले समाजलाई दिएको अपूर्व उपलब्धि हुने थियो। यो उपलब्धिलाई भविष्यले इतिहासको अमर पन्नामा स्वर्णाक्षरले अङ्कित गर्ने थियो। अस्तु

**पूर्णमदः पूर्णमिदं पूर्णात्पूर्णमुदच्यते।**
**पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते।**





# ❋ वैदिक धर्मोद्धारक महापुरुष ❋

पं. डिल्लीनारायण पाण्डेयः
बीर्घा, स्याङ्जा

वैदिक धर्म अत्यन्त प्राचीन समयदेखि चलिआएकाले सनातन भनिन्छ। आज देखिने सबै ईशाइ, बौद्ध आदि मतहरूको प्रादुर्भाव हुनुभन्दा धेरै पहिलेदेखि नै यो धर्म संसारमा थियो। अपौरुषेय वेद नै यस धर्मको मूलग्रन्थ हो। वेदानुसारी स्मृति इतिहास र पुराणहरू पनि यसै धर्मका आधार हुन्।[1]

अपौरुषेय अर्थात् कुनै व्यक्तिद्वारा नबनाइएको वेद अनादि मात्र नभई नित्य पनि छ। न यसको रचना कसैले कहिल्यै गऱ्यो, न यसको नाश नै हुनेछ, अतः यो नित्य भयो। यस्ता नित्य वेदद्वारा प्रतिपादित हुनाले यो धर्म पनि नित्य नै भयो। नित्य भन्नु सनातन भन्नु एकै कुरा हो। यस सनातन (नित्य) धर्ममा ह्रास या वृद्धि भने हुने गर्छ। तमोगुणको प्रचुरता भएको समयमा यस धर्ममा ह्रास हुन्छ भने सत्वगुणको प्रचुरता भएको समयमा यसमा वृद्धि पनि हुन्छ, यसको सर्वथा नाश (अत्यन्ताभाव) भने पटक्कै हुन्न। यो कुनै व्यक्तिले (महापुरुषले) बनाएको नभएकाले यसको रक्षाको भार स्वयं सर्वनियन्ता परमात्मामा नै रहेको छ। त्यसकारण कृष्ण भगवान् स्वयं आज्ञा हुन्छ—'जब जब धर्म को हानि र अधर्मको उत्थानको अवसर आउँछ तब तब म आफैं आफ्नो सृष्टि गर्दछु।'

यहाँ विचारणीय कुरा के छ भने 'आत्मानं सृजामि' 'म आफैलाई सृष्टि गर्दछु' यो के भनेको हो? ईश्वरले आत्मा भनेको स्वयं आफैलाई हो वा अरु कसैलाई? यस प्रश्नको उत्तर दिन सकिन्छ आफैलाई पनि हो र अरुलाई पनि।

भगवान् अधर्म नाश गरी धर्मको रक्षा गर्न स्वयं पनि अवतार लिनुहुन्छ, आफ्ना अत्यन्त प्यारा भएकाले आत्मभूत ज्ञानी महात्मालाई अवतरित बनाएर पनि धर्मरक्षा गर्नुहुन्छ। भगवान्ले '[2]ज्ञानी त मेरो आत्मा नै हो' भनी ज्ञानीलाई आफ्नो आत्मा नै, मान्नु भएकाले, ज्ञानीको अवतार पनि भगवान्का झैं नै धर्मरक्षार्थ हुने गर्छ। यसरी वैदिकधर्मोद्धारकता भगवान्मा झैं नै ज्ञानी भगवदात्मभूत महापुरुषमा पनि रहने भयो। यस्तै वैदिक धर्मोद्धारक महापुरुषमध्ये गुरुवर श्रीपरमानन्दज्यू पनि अन्यतम हुनुहुन्थ्यो।

वैदिक धर्म परिषद् आदि संस्था संरक्षण र विविध मठ-मंदिर आदिको निर्माण गरी गुरुमहाराजले आद्य शंकराचार्यज्यूले झैं नै वैदिक धर्मको पुनरुद्धार गर्ने शुभ कार्यको हिन्दूराष्ट्र नेपाललाई केन्द्रबिन्दु बनाई थालनी गर्नुभएको

*१. श्रुतेरिवार्थ स्मृतिरन्वगच्छत्— (रघुवंश-२/२)*

*२. ज्ञानी त्वात्मैव मे मतम्। (गीता ७/८)*

हो। वहाँको विचार अत्यन्त परिपक्व सुव्यवस्थित र समयानुकूल पनि थियो। वहाँ अत्यन्त सरल र उदार स्वभावका सन्त हुनुहुन्थ्यो। आज जहाँ देख्यो त्यहाँ सन्तै सन्त छन् भनिन्छ, तर सत् या सन्त शब्दले कस्तो व्यक्तिलाई बुझाउँछ भन्ने कुरामा गंभीर ढंगले चिन्तन गरिएको भने पटक्कै हुन्न। उपयुक्त ठाउँमा शब्दको प्रयोग भएको छ भने मात्र त्यो शब्द सार्थक हुन्छ,—सत् या सन्त शब्दको वास्तविक वाच्यार्थको रूपमा स्वामी परमानन्दजी महाराज जस्ता महापुरुषलाई नै लिन ठीक पर्छ।

संस्कृतमा एक सुभाषित प्राप्त छ, जसको भाव यस प्रकार छ—'जसका मन, वचन र शरीर पुण्यरूपी अमृतले निरन्तर सिंचिएका हुन्छन् विविध प्रकारले पटक-पटक गरिने उपकारहरूद्वारा संसारका सबै प्राणीहरूलाई जसले सारै नै प्रसन्न पारेका छन्, त्यतिमात्र नभएर जसले अरुमा रहेका दोषलाई पटक्कै ध्यान न दिई उनीहरूमा रहेका अणु जत्रा साना गुणलाई पनि पर्वत जति ठुलो मानी तिनै गुणको अनुभव गरी समय यापन गर्दछन् सज्जन (सन्त) त अत्यन्त थोरै नै हुन्छन्।' यसै प्रकारको सन्तपना गुरुमहाराजमा थियो। यसै कारणले समाजमा वहाँको प्रभाव अमिट रूपमा रहिरहेको छ। यो प्रभाव भविष्यमा पनि यथावत् रही रहने छ। जति जति वहाँका गुण र कर्महरूको अनुशीलन हुँदै जाला, उति-उति वहाँका सत्, चरित्रहरूको प्रभाव समाजमा बढ्दै जाला।

गुरुमहाराजले यज्ञद्वारा जनताको हित हुने बुझी सबैलाई यज्ञको लागि प्रेरित गर्नुभयो। धान्याचल जस्ता बहुयजमानक यज्ञहरू गराई जनहित गर्ने परम्परामा सर्वप्रथम स्थान ओगटने यस्ता विश्ववन्द्य महापुरुषका विषयमा जे जति भने पनि कमी नै रहन्छ।

गुरुमहाराज संसारका जनको दुःख देखेर संधै चिन्तित देखिनुभयो। दुःखीको दुःख निवारण नै सर्वान्तर्यामी परमेश्वरको असली पूजा हो। श्रीमद्भागवतमा 'परदुःखबाट दुखी भई उनीहरूको दुःखलाई हटाउन प्रयास गर्नु नै साधुको लक्षण' मानिएको छ। गुरुवर स्वामी श्रीपरमानन्द सरस्वतीजी महाराज उच्चकोटिका साधु, वैदिक धर्मोद्धारक महापुरुष हुनु हुन्थ्यो, वहाँका विचारधारा एवं कृतिहरूलाई गतिशीलता प्रदान गर्नु प्रत्येक वैदिक सनातन हिन्दु धर्मावलम्बीको कर्तव्य हो।

---

१. *मनसि वचसि काये सूक्तिपीयूषपूर्णास्त्रिभुवनमुपकारश्रेणिभिः प्रीणयन्तः।*
*परगुणपरमाणून् पर्वतीकृत्य नित्यं, निजहृदि विकसन्तः सन्ति सन्तः कियन्तः॥ (सुभाषितम्)*





# ❋ स्वामी परमानन्दप्रतिको अनुभूति ❋

**आत्माराम पौडेल**
जावलाखेल, ललितपुर

त्यसो त आबल ब्रह्मचारी श्रद्धेय स्वामी श्री परमानन्द गुरुजीलाई मैले धेरैवर्ष देखि चिने जानेको र वहाँसग वस-उठ गरेको पनि होइन। तथापि वि० सं० २०५० सालतिर माघ महिनामा देवघाट धाम आइपुगेको थिएँ। स्वामी परमानन्द सरस्वती त्यतिखेर गलेश्वर आश्रमको पीठाधीश हुनुहुँदो रहेछ। त्यस पछि वहाँ तीर्थ यात्रामा चार धाम गर्न भारततर्फ जानुभएकोले भेटघाट हुन पाएन।

परमानन्द गुरुसंग भेटघाट हुन नपाएको मा मेरो मनमा वहाँसंग भेटघाट गर्ने इच्छा छंदै थियो। परमतपस्वी त्यस्ता ब्रह्मनिष्ठ योगी भित्र के के कुराहरू होलान् जान्न सुन्न पनि पाइएन एक किसिमले त्यसको खुल्दुली पनि लागि रह्यो। मनुष्यलाई नदेखेको वस्तु देख्न र अप्राप्त वस्तु प्राप्त गर्ने इच्छा पनि रहिरहन्छ। मेरो कल्पनामा परमानन्द गुरु एउटा मोटोघाटो हृष्ट-पुष्ट शरीरभएको, शिरमा पगडी गुतेको, भव्य र आकर्षक दामी पहिरनमा २/४ ओटा मोटा वालिष्ट अगल वगलमा राखेर थुप्रै साधु सन्तबाट घेरिएर वाक्लो र लोभ लाग्दो गद्दामा बसेको र आउने जाने भक्तसंग कम बोलेर आशीर्वादको वर्षा भने धेरै छरिरहेको खाल्को ममा वरावर आइरहन्थ्यो। कल्पना त हो त्यो त्यसैगरी आइरहन्छ आउनुमा पनि त्यसको के दोष भयो र।

स्वामीज्यू तीर्थयात्राबाट देवघाट धाम आइपुगेको खबर थाहा पाएर म दोस्रो पटक देवघाट आएँ। वहाँको दर्शन गरें। आउने जाने महानुभाव तथा भक्तहरूसंग त्यो सौम्य व्यक्तिले एउटालाई पनि नबिराई सबैसंग हार्दिक रूपमा कुराकानी भलाकुसारी गरेको पनि मैले प्रत्यक्ष देखें। मेरो पनि वहाँसंग धेरैबेर कुरा भयो। मेरो पृष्ठभूमि संग परिचित हुनुभएपछि वहाँले तत्काल मलाई आफ्नो सेवा देवघाट धाममा लगाउने विशेष कृपा पूर्ण वचन पनि प्रदान गर्नुभयो। वहाँ बिल्कुलै सरल, सामान्य पहिरनमा विश्वास गर्ने, तडकभडक कत्ति पनि नरुचाउने, राष्ट्रिय चिन्तनामा दह्रो आस्था राख्ने, बोलेको कुरा हरहालतमा पूरा गरेर छाड्ने, सबै अवस्थाका व्यक्तिहरूसंग आत्मीय हुन सक्ने मिलनसार तथा विभिन्न प्रेरणाको मूलश्रोत नै वहाँ हुनुहुँदो रहेछ। केही दिनको बसाइमा नै म वहाँसंग अत्यन्त निकट पनि हुन पुगें।

झण्डै साठी वर्षजतिको उमेरमा नै ब्रह्मलीन हुनपुगनुभएका स्वामी परमानन्द सरस्वतीको जीवन एक ठाउँमा, एक दिनमा र एक छिनमा बनेको कदापि होइन। बाग्लुङ् जिल्लाको एउटा अनकण्टार गाउँको सम्पन्न परिवारमा जन्मेर पनि सांसारिक सुख भोगलाई लात मारी लाऊँ खाऊँ भन्ने १९ वर्षकै कलिलो उमेरमा नै वहाँले घरबार त्यागी हिंड्नुभयो। तपोमय जीवनको शुरुआत गर्ने क्रममा शुरुका केही वर्षहरू छोडेर एक्लै बाग्लुङ् गुल्मीका कतिपय उच्च एवं विकट लेकहरू वहाँले चाहार्नु भयो। अन्तमा गुल्मी जिल्लाको दिब्रुङ् भन्ने लेकमा तपस्वी जीवन विताइरहेको वेला वहाँ एउटा महान् तपस्वी हुनुहुँदो रहेछ भनेर सबैले चाल पाए। त्यस वेलादेखि नै जनताको आग्रहमा वहाँले आफुलाई सार्वजनिक गर्न थाल्नुभएको हो। झण्डै तीन दशकको लामो तपस्वी जीवनमा वहाँ ले कहाँ कसरी के के काम कुरा गर्नु भयो त्यो एक किसिमले सबैका लागि एउटा खुला किताब नै बनेको छ। बाग्लुङ्, तनहुँ, चितवन, गुल्मी, नवलपरासी, रूपन्देही, कपिलवस्तु, बाँकि, म्याग्दी तथा पोखरा आदि ठाउँमा थुप्रै आश्रम, देव-देवालय, मन्दिर, विद्यालय, पाटी पौवा आदि खडा गर्नु भएको छ भने विभिन्न सामाजिक एवं धार्मिक सेवाहरूको पनि वहाँले संचालन गर्नुभएको छ। यो कथासंग सबै



परिचितै छन्। विशेष गरी रामकोट, दिव्रुङ्, रूपाकोट, रिडी, देवघाट, शरदपुर आदि क्षेत्रमा वहाँले पुऱ्याउनु भएको सक्रिय योगदान कदापि बिर्सन सकिंदैन। वहाँ अहिले हाम्रो बीचमा नरहनुभए तापनि वहाँले स्थापना गर्नु भएका संस्था तथा संचालन भैरहेका सेवाहरूले अनन्त कालसम्म वहाँको मीठो संझना रं झझल्को गराइ नै रहनेछन्।

परमानन्द गुरुजी बहुपक्षीय परमधनी हुनुहुन्थ्यो, कुनै विद्यालय, महाविद्यालय तथा विश्वविद्यालयबाट वहाँले औपचारिक डिग्री प्राप्त नगर्नुभएतापनि हाल मुलुकमा विद्यमान केही उच्च पठित विद्वान्हरूभन्दा कम हुनुहुन्नथ्यो। दीर्घ तपस्वी जीवनमा गुरुका साथ हुँदा र नहुँदाका सबै अवस्थामा वहाँले सतत अध्ययन र अध्यवसाय गर्न कहिल्यै छाड्नुभएन। हिन्दुधर्मका पवित्र उच्च ग्रन्थदेखि लिएर वेदान्तमा चर्चित प्रसिद्ध प्रकरण ग्रन्थहरूसम्म सबैमा वहाँको दक्खल र पहुँच थियो। वेदान्तको जटिल विषयलाई पनि व्यावहारिक शैलीमा जनजिब्रोको भाषा नछोडी एकदम सरल र सरस किसिमले श्रोता तथा साधकहरूलाई राम्ररी बुझाउन सक्ने जो कोहीमा प्राय: नपाइने अनौठो खालको विशेषता वहाँमा थियो।

अनुभवका अत्यन्त धनी स्वामी महाराजसंग बितेका आत्मीय क्षणहरूमा वहाँको श्रीमुखबाट थुप्रै रोचक एवं मीठा र घतलाग्दा अनुभवहरू मैले सुन्ने सौभाग्य पाएको हूँ। ती सबैलाई यो सानो लेखमा व्यक्त गर्न सकिने कुरा पनि भएन। हेर्दा सामान्य जस्तो लाग्ने केही महत्वपूर्ण घटना यहाँ प्रस्तुत गर्ने मेरो सानो प्रयास पाठकहरूलाई रुचिकर नै लाग्ला भन्ने मैले ठानेको छु।

चक्कूलाई ब्रह्म बनाएको एउटा रोचक प्रसंग छ। गुल्मीमा एउटा शान्तिपुर भन्ने बजार छ। त्यहाँ परमानन्द गुरुका भक्तहरूले गुरुको प्रवचन सुन्न एउटा प्रवचन सभाको आयोजन गरेछन्। वहाँ शाङ्कर वेदान्तको कट्टर अनुयायी हुनुहुन्थ्यो। वहाँको प्रवचन भाँड्न भनेर त्यहाँ पण्डितको मुकुण्डो भिरेका तथाकथित केही व्यक्तिहरूले 'यो दिव्रुडेजोगी केही जान्दैन, उसले केही पढे लेखेको पनि छैन, उसको प्रवचन सुन्न नजानुहोस् बरु हाम्रो प्रवचन सुन्न आउनु होस्' भनेर उनीहरूले त्यहीँ एउटा छुट्टै सभाको आयोजना गरी परमानन्द गुरुजीको प्रवचन सभा भाँडन खोजेछन्। त्यहाँ वेदान्त जानेका र बुझेका केही व्यक्तिहरू पनि रहेछन्। त्यो कुरा चाल पाई स्वामी महाराज तथाकथित व्यक्तिको मञ्च अगाडि पुगी म एउटा प्रस्ताव राख्छु त्यो प्रस्तावलाई तपाइँहरूले सिद्ध गर्न सक्नुभयो भने म तपाइँहरूको अनुयायी बन्छु होइन भने म प्रस्ताव सिद्ध गर्दछु तपाइँ मेरो अनुयायी बन्नुपर्छ भनेर भन्नुभएछ। तिनीहरूले वहाँको प्रस्ताव मानेछन्। यसो छामछुम गर्दा त्यतिवेला आफूसंग खल्तीमा एउटा चक्कू रहेछ। तपाइँहरू यही चक्कुलाई ब्रह्म साबित गर्नुहोस् भनेर निकालेर दिनुभएछ। उनीहरूको वेदान्त विद्यामा पकड़ थिएन। गाउँ घरमा पुराण आदि भन्ने र पूजा गराउने कर्मकाण्डीहरूको त्यो जमात थियो। उनीहरूले प्रस्ताव मुताबिक चक्कूलाई ब्रह्म सिद्ध गर्न सकेनछन् र अन्तमा हार स्वीकार गरेर स्वामीजीलाई नै ब्रह्म साबित गर्न लगाएछन्। गुरुले पनि वेदान्त-प्रक्रियानुसार यथार्थ कुरा एक एक गरेर बताई सर्वप्रथम त्यो चक्कु पार्थिव वस्तुहरूबाट बनेकोले त्यसलाई पृथ्वीमा, पृथ्वीलाई जलमा जललाई तेजमा, तेजलाई वायुमा, वायुलाई आकाशमा, आकाशलाई पंच महाभूतमा, पंच महाभूतलाई पंच तन्मात्रामा, पंच तन्मात्रामालाई अहंकारमा, अहंकारलाई महत्तत्त्वमा, महत्तत्त्वलाई प्रकृतिमा र प्रकृतिलाई ब्रह्ममा लय गराई अब यो चक्कु ब्रह्म बन्यो कि बनेन त भनेर सोध्नुभएछ। सबैले कुरा बुझी हाले, हार स्वीकार गरी ती व्यक्तिहरू स्वामीजीका अनुयायी बनेछन्। ती मध्ये केही व्यक्ति हाल वहाँको कट्टर अनुयायी बनेका छन् भने उनीहरूमा वेदान्तको पकड पनि राम्रो बनेको छ। उता स्वामीज्यूले चक्कु जस्तो सामान्य वस्तुलाई पनि ब्रह्म बनाउन सक्नुहुँदो रहेछ भन्ने हल्ला पहाड़का गाउँघर सर्वत्र फैलिन गै यो घटनाले वहाँको ठूलो नाम र कीर्ति पनि चले छ।





नेपाल भित्रै घटेको अर्को घटना हो। नेपालमा कतै एक पटक वेदान्त विषयक उच्च खालको प्रवचन सभाको आयोजन गरिएको रहेछ। स्वामीज्यू पनि संयोगवश त्यस निमन्त्रण मा सामेल हुन पुग्नुभएछ। त्यहाँ सबै विद्वान् वक्ताहरूमात्र भएकाले उनीहरूको कुरा सुन्नमा नै वहाँलाई ठूलो आनन्द आएछ। बोल्ने क्रममा एक जना प्रतिष्ठित विद्वान्ले गहन रूपमा उच्च अध्ययन नगरेको र उपाधि प्राप्त नगरेको व्यक्तिले वेदान्त आफु बुझ्न र अरुलाई समेत बुझाउन सक्तैन भनेर प्वाक्क बोलेछन्। वहाँलाई सक्‌सक् लागेछ। त्यस कुराको खण्डन गरी केही न केही त वोल्नै पऱ्यो भन्ने ठानेर आयोजकहरूसंग समय माग्नुभएछ। समय प्राप्त भएपछि म त नपढे 'लेखेको व्यक्ति' शास्त्रको कुराको समेत मलाई त्यति धेरै विघ्न ज्ञान छैन' भन्दै स्वामीजीले लाटो पाराले आफ्नो प्रवचन शुरु गर्नु भएछ। धारा प्रवाहको रूपमा चलेको प्रवचन सिलसिलामा वहाँले गहनरूपमा उच्च अध्ययन नगरेको र तद्विषयक शैक्षिक उपाधि प्राप्त नगरेको व्यक्तिले वेदान्त बुझ्न र बुझाउन सक्तैन भन्ने भनाइसंग आफ्नो सहमति नरहेरको कुरा उल्लेख गर्दै 'त्यसो भए कबीर, गुरु नानक, देवहूति, प्रह्लाद, मीरा, वामदेव, शुकदेव, स्वामी रामकृष्ण आदिले के के उच्च अध्ययन र शैक्षिक उपाधि प्राप्त गरेका थिए त ? भनेर उल्टै जोडदार रूपमा आफ्नो प्रश्न राख्नुभएपछि उपस्थित सबै विद्वान् आश्चर्य चकित परेछन्। सबैलाई त्यो प्रवचन चाखलाग्दो पनि भएछ। आफ्नो प्रवचनको क्रममा यस अघि प्वाक्क बोल्ने ती विद्वान्ले पनि सबैका सामु वहाँसंग क्षमा माग्नु परेछ। स्वामीज्यू स्वयं त्यति पुस्तक पात्राको पछि पर्ने व्यक्ति नभए पनि वहाँ अनुभवको ठूलो धनी हुनुभएकोले वास्तबमा विद्वत् मण्डलीमा पुग्दा पनि वहाँमा कहिल्यै हीनताबोध देखिंदैन थियो। शास्त्र र अनुभवबाट सिद्ध भएको कुराको विपरीत कसैले लंगडो तर्क राखेमा वहाँ उसमाथि विजय प्राप्त गरेरै छाड्नुहुन्थ्यो।

योगी परमानन्द गुरु राष्ट्रिय चिन्तनमा अति नै रमाउने व्यक्ति हुनुहुन्थ्यो। जे गर्नुपरे पनि वहाँ आफू हुर्के-बढेको विकट पहाडका कुना कन्दरा र आफ्नो मुलुकमा लोक र समाजको भलो हुने काम गर्न बढी रुचाउनुहुन्थ्यो।

आफ्नै देश, समाज, धर्म, संस्कृति, कुल, परम्परा र आफ्नो भेषभूषामा नेपालीहरू सदैव रमेको वहाँ देख्नचाहनुहुन्थ्यो। रामकोटदेखि लिएर देवघाट र त्यसपछि काठमाडौसम्म पनि थोरै समयभित्र वहाँले छाड्नुभएका क्रियाकलापका छाप नै हाल ती कुराहरूको प्रत्यक्ष उदाहरण बनेका छन्। वहाँ प्रायः भारततिरका साधु सन्तहरूको चर्चा यस प्रसंगमा उठाइरहनुहुन्थ्यो। भारतीय साधु सन्तहरूको जस्तो सोख-सयल सुविधा र मानमनितो नेपाली महात्माहरूले नपाए पनि हामी त्यतातिरको सुविधातर्फ आकर्षित हुनुहुँदैन, दुःख-सुखजे भए पनि हामीले आफ्नै देशमा केही न केही सानो-ठूलो सेवामूलक कार्य गरिरहनु पर्छ, म पनि यहाँको झण्झट छाडेर भारततिर लागेको भए कतै न कतै त्यति ठूलो देशमा केवल मठाधीश मात्र होइन मण्डलेश्वरसम्म पनि हुन सक्ने थिएँ, आफ्नो जीवनलाई आरामदायी बनाउन पनि सक्थें तर मैले त्यसो गरिन किनकि मातृभूमि त्याग्नु मात्र साधुत्व होइन भन्ने जस्ता कुरा वहाँ बराबर नेपाली महात्माहरूलाई प्रायः सुनाइ रहनु हुन्थ्यो। यतिमात्र होइन वहाँ जे गर्नु पर्छ आफ्नो देशमा गर्नु पर्छ, यहाँ आफ्नो देशमा काम बिग्रेर गाल पर्दैन। आर्काको मुलुकमा देहत्याग गर्नु भनेको खहरे खोला गंगाजीमा मिले जस्तो हो। आफ्नो छुट्टै पहिचान रहँदैन। आफ्नो मुलुकमा नै हामी योगीहरूले देह छाड्दा गौरव बढ्छ र अरुलाई पनि कार्य गर्न प्रेरणा मिल्छ भनेर भनिरहनुहुन्थ्यो। स्वामी डा० रामानन्द गिरिजी तथा स्वामी आत्मानन्द गिरिजी दुबैलाई सम्भवतः देवघाटमा कार्य गरिदेखाउने प्रेरणा स्वामी परमानन्दजीबाटै प्राप्त भएको हुनुपर्छ। गुरुजीलाई आफ्नै देशमा देह छाड्ने इच्छा रहेको कुरा त मद्रास उपचार गर्न पुग्दा पनि त्यहाँ बसी उपचार गर्न नमानी स्वदेश देवघाट धाममा नै फर्केको प्रसंग अविस्मरणीय छ।

पीठाधीशको हैसियतमा गुरुजीले गलेश्वर आश्रम संचालन गर्न थालेपछि नै देवघाट धाममा बिजुली, खानेपानी, बाटो घाटो, विद्यालयको नियमित संचालन एवं वटुहरूका लागि भोजनको यथोचित प्रबन्ध, साधुसन्त एवं अतिथिहरूको आवास र भोजनको प्रबन्ध, कल्पवास क्षेत्रको व्यवस्था र विभिन्न विकास निर्माण कार्यआदिको समुचित व्यवस्था हुन सकेको देखिन्छ। भव्य हरिहर मन्दिरको निर्माण पनि वहाँबाटै भएको हो यी सारा कार्यमा वहाँलाई थुप्रै गृहस्थी, वानप्रस्थी तथा संन्यासीहरूले साथ दिएका हुन्। यिनै सहयोगी मध्ये एक जना गृहस्थी पूर्व न्यायधीश गोपीकृष्णको नाम विशेष उल्लेखनीय छ। उनी निकै कर्मठ, सक्रिय र साधुसन्त प्रेमी व्यक्ति हुनुका साथै वर्तमान देवघाटधामको पूर्वाधार विकासमा उनको ठूलो रुचि पनि रहेछ। खानेपानी, वाटोघाटो र यत्र तत्र रहेका सिंढी आदिको निर्माणमा उनको विशेष योगदान रहेको चर्चा परिचर्चा अद्यापि सबैले गरेका छन्। गुरुजीको निर्देशनमा रही उनी स्वयं आर्थिक सहायता संकलन गर्ने कार्यदेखि लिएर स्वयं जे जस्ता कार्य गर्नेमा पनि विशेष क्षमता राख्दा रहेछन्। एक दिन अचानक उनको मृत्यु भएछ। परमानन्द गुरु एउटा विशिष्ट ब्रह्मज्ञानी साधु भएर पनि ती गोपीकृष्ण न्यायाधीशको मृत्युले वहाँमा विशेष किसिमको पीडा उत्पन्न गराएछ। यस प्रसंगमा स्व० गोपीकृष्णजीको मात्र कुरा होइन काम गर्ने विशेष क्षमता राख्ने प्रत्येक व्यक्तिलाई वहाँले एकपल्ट देख्ने बित्तिकै चिन्नुहुन्थ्यो र यथोचित विशेष आदर गर्नुहुन्थ्यो। त्यस्तो पहिचान गर्न सक्ने पूर्ण क्षमता वहाँमा विद्यमान थियो। राम्रो साधकलाई तत्कालै चिन्न सक्ने खूबी पनि वहाँमा यथेष्ट मात्रामा थियो।

ब्रह्मलीन स्वामी महाराज एउटा महान् तपोनिष्ठ साधु हुनुहुन्थ्यो। देवधाट क्षेत्रलाई भारतको हरिद्वार र ऋषिकेश जस्तो रूप दिनु पर्दछ; यस क्षेत्रलाई तपोवन र तपोभूमिको रूप दिनु पर्दछ; विधर्मीहरूलाई यहाँ छिर्न दिन पनि हुँदैन; सनातन वैदिक धर्म, संस्कृति र गुरुकुल-परम्पराले यहाँ स्थान पाउनुपर्दछ भन्ने कुरामा वहाँको मान्यता थियो र यस कुरामा वहाँ बहुतै दृढ पनि देखिनुहुन्थ्यो।

अन्तिम पटक थप उपचार गर्न काठमाण्डौ जानुअघि वहाँलाई विदाइ गर्न हरिहर मन्दिरमा पुगेका हामी केही व्यक्ति हरूसंग म काठमाडौंबाट फर्केर आएपछि हाल देवघाट क्षेत्रमा दिन परदिन बढ्दै गएका विकृतिहरू हटाउन ठूलो सन्त सम्मेलनको आयोजन गरी संबन्धित सबैपक्षमा दबाव दिने कार्य गर्नु गर्दछ भन्ने कुरासम्म गर्न पनि वहाँले छाडनुभएन। वहाँको त्यस्तो पुनित इच्छा विधातालाई भने कुनै हालतमा पनि मान्य हुन सकेन तापनि आफ्नो वैदिक सनातन धर्म, संस्कृति र गुरुकुल परम्परालाई जोगाउन वहाँमा देखिएको विशेष जोश, जाँगर लगनशीलता र क्रान्तिकारिताको कुरा सुन्दा निश्चय नै हामी सबै वहाँप्रति सदा सर्वदा नतमस्तक भैरहनु पर्छ। वहाँ उच्च तपोबल भएको सन्तको रूपमा एउटा महापुरुष नै हुनुहुन्थ्यो। अस्तु।

# ❋ श्रीस्वामिपरमानन्द-वैभवचतुःश्लोकी ❋

पं० सिद्धिनाथः पाण्डेयः
श्रीपरमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुल,
बिहूँ, बाग्लुङ्

देवारामे विबुधरमणे पुण्यकीर्तिर्युवा यः
साधुर्दृष्टो विपुलविनयो ब्रह्मचर्येण दीप्तः।
शान्तो दान्तो ह्युपरति-तितिक्षादिभिः शोभमानः
सोऽयं दिव्यो वसति हृदये सिद्धिनाथस्य कान्तः॥ १॥

मैत्र्या दीप्तं नयंविनयतो भूषितं वै दयाया-
मित्रं, सद्यः निखिलहृदयाकर्षकं प्रीतिपूर्णम्।
यत् संस्पर्शात् स्फुरति विरतिज्ञानभक्त्यादि, सर्वं
शीलं तद् वै श्रयति मधुरं सद्गुरोः सिद्धिनाथः॥ २॥

यस्याः सर्वं किल समगमत् पोष्यतां भूतजाते
यत्संपर्कात् ह्रसति मनसो मांसलोभः पुराणः।
दीनो हीनो व्रजति च यया मित्रतां भेदहीनाम्
क्षान्त्या युक्तां प्रणमति दयां तां गुरोः सिद्धिनाथः॥ ३॥

द्वैतातीतं भवजलनिधित्रायकं शान्तरूपं
ब्रह्मध्यानाभ्यसनवशतः प्रोज्वलत् पुण्यपुञ्जम्।
सर्वस्वं मे जगति परमानन्द-शुद्धाभिधानम्
पूर्णं तेजः स्फरतु हृदये जन्म-जन्मान्तरेऽपि॥ ४॥



# ❋ वाक्यपुष्पोपहारम् ❋

**प्रा० कोमल प्रसाद शर्मा**
नेपाली संस्कृत महाविद्यालय
मंगलागौरी, वाराणसी

धन्याः सन्तः प्रकृतिमधुराः साधवः शुद्धभावाः
आत्मारामास्त इह परमानन्दकन्दं भजन्तः।
तत्रास्माकं जयति परमानन्द एवेश्वरो यः
संस्कारं संस्कृतिमपि शिवं संस्कृतं रक्षितुं सः॥ १॥

श्रीनेपालेऽथ धवलगिरावञ्चले मञ्जुलेऽस्मिन्
बाग्लुङ्गाख्ये शुभजनपदे गण्डकीपश्चिमे वै।
पुण्ये ग्रामे सुकृतबलिते व्योमकूटे पवित्रे
धन्या माता तमिह जनयामास गङ्गेव भीष्मम्॥ २॥

श्रीमान् शान्तः सरसहृदयः शुद्धसत्त्वो यतीन्द्रः
द्वैतातीतः स इह परमानन्दनामा महात्मा।
मोहातीतो जगति परमानन्दमात्मानमेकं
ज्ञातुं त्यक्त्वा गृहमनुपमं निर्गतो रागशून्यः॥ ३॥

आसीत् कश्चित् बुधवरजगत्ख्यातकीर्तिस्तपस्वी
लामीछानेबुधवरमहापुण्यपुञ्जो विरक्तः।
तस्यावासे मुसुङ इति सन्नामके पुण्यवर्द्धिः
प्राप्ये देशे शिखरिशिखरे प्रोच्चके प्राप योगी॥ ४॥

विद्याभ्यासैरथ च महतः सेवया देशिकस्य
स्वान्तं कृत्वा कलुषरहितं कर्मभिः शास्त्रदृष्टैः।
ध्यात्वा देवं हरिहरमयं प्राप्य सिद्धिं प्रसन्नः
स्वात्माभिन्नं हरिमुपगतो धन्यधन्यो महात्मा॥ ५॥

एवं नीत्वा मुसुङशिखरे निर्जने सप्तवर्षान्
सर्वं विश्वं भगवति विभौ भासमानं निरीक्ष्य।
मोहान्मुक्तो निखिलमपि तत् पैतृकं दायजातम्।
आनीयादात् गुरुवरसुपुत्राय नारायणाय॥ ६॥

यस्यां जातः खलु स जगतां देशिको सा हि धन्या
माता, धन्या तदनु हि धरा व्योमकूटाभिधाना।
यस्याः कूले समभवदयं गण्डकी सापि धन्या
यस्मिन् जातः कुलमपि च तत् वन्दनीयत्वमाप॥ ७॥

यच्छायायां प्रभवति तपोऽनुत्तमं सोऽपि शैलः
देवात्मासौ हिममयवपुः सेवनीयो हिमालः।
देशश्चायं जयतु नितरां हिन्दुधर्मस्य गोसा
नेपालाख्यो हिमगिरिनदीपुण्यतोयैर्निषिक्तः॥ ८॥

कूटान् ताँस्तानमररमणान् सिद्धपूतान् हिमाद्रेः
भ्रामं भ्रामं विपुल तपसा दीप्यमानोऽसमानः।
शान्तो दान्तो ह्युपरतियुतः पुण्यपुञ्जो महात्मा
देवारामं विबुधरमणं श्रृङ्गमुख्यं जगाम॥ ९॥

तस्मिन्नद्रौ घनवनमये तप्यता वृक्षमूले
सर्वो लोकश्चकितचकितो यूथशः तं ददर्श।
तत्राभूवन् जनबलवशात् देवछात्रादिवासाः
यज्ञाः पुण्या बहुविधियुताः साधुसेवा च भव्या॥ १०॥

साधोः शक्तिं किल निरुपमां मन्यमानो जनौघः
स्वं स्वं ग्रामं विमलचरितं योगिनं तं निनाय।
ताँस्तान् ग्रामान् विकटपदवीन् प्राप्य धर्मोपदेशात्
हिंसा नष्टा प्रणयमुदितामित्रता वृद्धिमापुः॥ ११॥

विद्याशालाः शतश इह संस्थाप्य पुत्रान् पितेव
छात्रान् यत्नात् स खलु सदयः पाठयामास विद्याः।
इत्थं कुर्वन् निखिलजगतः सेवनं निश्छलं तत्
दिव्यं तेजः स्वपदमगमत् लोकचित्तं विकर्षत्॥ १२॥

को वा सन्तं तमिह सरसं विस्मरेत् संप्रसिद्धं
तस्यैवं वा गुणगणनिधेः संसहेद् विप्रयोगम्।
शून्यं जातं त्रिजगदखिलं यस्य निर्वाणतो वै
हा! हा!! दुःखं समधिकमिदं दुःसहं प्राप्तमद्य॥ १३॥

मायामात्रे तदपि रुचिरे दृश्यमाने ह्यसारे
संसारेऽस्मिन् न च गृहधनाद्येषु चित्तं यदीयम्।
ब्रह्मण्यैक्यं विरजसि परे संगतायार्पयेऽहं
तस्मै रम्यं सुमहिमवते वाक्यपुष्पोपहारम्॥ १४॥



# ❋ स्वामिपरमानन्द-वन्दना ❋

कृष्णनाथ पौडेलः
नवलपरासी

श्रीगुरुं परमान्दं योगिनां परमं गुरुम्।
तपोनिष्ठं मुनिं वन्दे परमार्थरतं सदा॥ १॥

तस्मै नमोऽस्तु गुरवे तपसि स्थिताय।
यस्यैव दिव्यचरितं जगतां हिताय॥
श्रीज्ञानरूपवपुषे करुणालयाय।
लोकोपकारनिरताय सतां प्रियाय॥ २॥

जातो हि यो पावितव्योमकूटे।
कण्डेलवंशे सुचरित्रयुक्ते॥
एकाकिनाऽरण्यगतेन तेन।
कृता तपस्या वयसीह बाल्ये॥ ३॥

पश्चादभूल्लोकहिताय पान्थो,
नैकत्र धान्याचलयज्ञकर्ता।
ज्ञानप्रदानेन ह्यसौ महात्मा।
जगाम धाम्नि त्रिदिवञ्च भित्वा॥ ४॥

देहो ह्यनित्यः शतसन्धिजर्जरो,
नश्यत्यवश्यं न हि तत्र सौख्यम्।
देहिन्! भज स्वं गिरिशं विमोक्तुं,
इत्यादिशत्तं हि 'गुरुं' भजेम॥ ५॥

# ❋ सन्तशिरोमणि परमानन्द र देवघाट धाम ❋

पं० सोमनाथ शर्मा घिमिरे 'व्यास'
देवघाट, चितवन

काली सेती बुढी धेरै नदी सङ्गम भो जब।
नारायणी हुँदै बग्छिन् गण्डकी तीर्थ भो अब ॥ १ ॥

गण्डकी तटका ढुङ्गा काला चक्र भए कति।
शालग्रामै पूज्य भए पूजेमा सप्रने मति ॥ २ ॥

विश्वमा जति छन् हिन्दु प्रजा वा देव मन्दिर।
शालग्राम बिना जागा हुँदैनन् यो छ निश्चय ॥ ३ ॥

शिर पार्थिव नेपाल शिरका मणि भूषण।
शालग्राम शिला नै हुन् भन्दछन् सर्वसज्जन ॥ ४ ॥

सङ्लो स्वाद सुधा जस्तै यहाँको जल शीतल।
हिमाल प्रान्त नेपाल कपाल मोदिनी शिर ॥ ५ ॥

बग्दै जाँदा पछि भए खारा अपेय छन् तिनै।
ऊर्ध्व मूलमधः शाखा गीताका अर्थ हुन् यिनै ॥ ६ ॥

धेरै यज्ञ हुने क्षेत्र प्रयाग जन भन्दछन्।
यो देवघट्टमा सारा देवता यज्ञ गर्दछन् ॥ ७ ॥

धेरै भक्त भई भेला परमानन्द छन् सब।
स्वामी-संगममा मिल्छन् धन्य हो नाम-गौरव ॥ ८ ॥

नवगंगा मिली पुण्या शिरोधाम बन्यो यहाँ।
त्यस्तै 'शिरोमणिः' साक्षात् सन्तको बन्नु भो वहाँ ॥ ९ ॥

शालग्राम-सरी भक्तहरूमा मुक्ति-दा न-दी।
उदाए धाममा हाम्रा परमानन्दका रवि ॥ १० ॥

परमानन्दले सारा बुझेर वास गर्नु भो।
आफ्नो पार्थिवको देह यसैमा लीन गर्नुभो ॥ ११ ॥

# ❋ स्वामी परमानन्द-स्मृतिमाला ❋

जनार्दनाचार्य
देवघाट धाम, चितवन

धन्या भाग्यवती भूमि धन्य नेपाल देश यो।
त्यस्मा बाग्लुङ हो धन्य धन्य झन् बिहुँकोट हो॥ १॥

रामको पुर त्यो धन्य पौवाडाँडा अझै बन्यो।
प्रादुर्भाव भयो जस्मा परमानन्द स्वामिको॥ २॥

परमेष्ठी-चक्रधारी-चन्द्रमौली उपासक।
धन्य हुन् पुण्यवान् वंश धन्य हुन् कुलदेवता॥ ३॥

भाग्यशाली पिता धन्य धन्य हुन् जननी अहा!
जसले दिनुभो जन्म धर्मात्मा पुत्रसम्पदा॥ ४॥

भारद्वाजर्षि झन् धन्य जसका कुलमा ठुला-
जन्मे सुदीप सत्पुत्र परमानन्द नामका॥ ५॥

हाम्रो वैदिक धर्म विश्वबिचमा उच्चा छ जो पावन
यस्मा ज्ञान-विराग-भक्ति र दया श्रद्धा क्षमा साधन।
अष्टाङ्गादिक योग छन् फल दिने ऐश्वर्य मोक्षादिक।
बन्नूभो यस सत्यधर्म-धनको स्वामी स्वयंसेवक॥ ६॥

विप्र-क्षत्रिय-वैश्य-शूद्र सबको सद्धर्मको सत्यको।
त्यस्तै आश्रम-ब्रह्मचर्य र गृही-वानस्थ-संन्यासको॥
श्रीरामायण-चार वेदहरूको पौरस्त्य सत्शास्त्रको
लौहस्तम्भ बनेर भार सबको धर्नू भयो धन्य हो!॥ ७॥

क्रीश्चीयन् मुसलीम धर्म सब यी नेपालमा फैलिँदा।
पन्छाई यिनलाइ अग्रसर भै शास्त्रीय व्याख्या दिँदा॥
सम्झे सज्जनले रहस्य यसको शङ्का, अशान्ति, भ्रम।
पन्छे, वैदिक धर्मका जहिंतहीं बाजा बजे घन्घन॥ ८॥

ब्रह्मा-विष्णु-शिवादि-देव-गुरुमा विश्वास-भक्ति स्थिर।
श्रद्धाश्रोत अथाह प्रेम मनमा निष्ठा थियो सुस्थिर।
पुण्यात्मा अति शुद्ध शान्त हँसिला लोकोपकारी सदा।
निर्लोभी र उदार भाव सबमा दानी दयालु अहा!॥ ९॥

सप्ताहयज्ञ शिवयाग र विष्णुयाग।
धान्याचलादि शुभमङ्गल यज्ञराज।
रुद्राभिषेक अनि-लक्ष र कोटिहोम।
पूरा गराउनुभयो सुख-शान्तिकाम॥ १०॥

ती विद्यालय देव-मन्दिर हरू सद्धर्मशाला पुल।
बाटो क्याम्पस पोखरी मठ अरु धारा बगैंचा स्कूल।।
साराको सहयोग पाइ गुरुजी बन्दै स्वयं सेवक।
ठाउँ ठाउँ गई गराउनुभयो आफै बनी कर्मठ॥ ११॥

काम क्रोध र लोभ मोह मद यी मात्सर्य ईर्ष्या मद।
पारी ध्वस्त बिदा छिटै दिनुभयों आत्मा थियो निर्मल॥
यस्ता पावन पुत्र पाइ पृथिवी नेपाल माता पनि
गद्गद् हर्षभरी प्रसन्न रहनु-हुन्थ्यो सुधन्या बनी॥ १२॥

सारा जीवन ब्रह्मचर्य व्रतमा सद्धर्मको पालन-
गर्दै चिन्तन-ज्ञान-ध्यान प्रभुको आराधना पावन,
राख्दै आउनुभो सुसाधनहरू एकत्व पारी मन।
संन्यासी भइ अन्त्यमा रहनुभो झन् धन्य भो जीवन॥ १३॥

प्रवचन जब हुन्थ्यो स्वामिको भावपूर्ण।
सुजनहरू झुमिन्थे धर्मको सुन्न मर्म।
बुझि सबजनले त्यो ज्ञान-वैराग्य सार।
हरि-हर-पद भक्ति पाइ त्याग्थे विकार॥ १४॥

यस्ता सन्त उदार धर्मगुरुको सत्कीर्तिको वर्णन-।
थोरै हुन्छ जती गरेपनि यहाँ सक्नेछ को तौलन।
हे नारायण भक्तवत्सल हरे यो देश नेपालमा।
यस्तै जन्म हवोस् महापुरुषको बिन्ती छ यो नाथमा॥ १५॥

'स्मृति-माला' रची नाथ! पहिराई सहर्षण।
गर्दैछू प्रेमको भेट श्रद्धासाथ समर्पण॥ १६॥

# ❋ शब्द श्रद्धाका सुमन ❋

हरि पाण्डेय "पथिक"
अर्घाखाँची

हे हिन्दूका मटु सकलका ढुक्ढुकी आर्यताका
नेपालीका तिमि नजरका ज्योति आनन्ददाता।
तारा जस्तै अरु वरिपरि देशका चन्द्रमा हौ
आत्माज्ञानीहरू सकलका पूज्य हौ सद्गुरु हौ ॥ १ ॥

हे हिन्दूका प्रखर प्रतिभा धर्मका मूर्ति द्यौता
आएथ्यौ कि तिमि पृथिविमा विष्णुका रूप यौटा।
पापी बढ्लान् जब पृथिविमा भार हर्नेछु फेरि
भन्ने बाचा धरणिसंगको पूर्ण पारी गयौ कि ॥ २ ॥

हुन्थे स्वाहा विधिवत यहाँ वेदका मन्त्रद्वारा
गाउँ गाउं शहरहरूमा यज्ञयागादि सारा।
के गाउँले अनि शहरिया धर्मको अर्थ जाने
लाग्थे मान्छे किन कुपथमा सत्य सन्देश पाए ॥ ३ ॥

आत्मा ज्ञानीहरू कति बने ज्ञान धारा पिएर
कोही त्यागीहरू पनि भए सत्य शिक्षा मिलेर।
मूर्ख ज्ञानी, गरिब धनवान्, दुष्ट साधु बनाई
लाग्यौ आफू तर पृथिवीका प्राणी सारा रुवाई ॥ ४ ॥

अस्तायो त्यो जब बदनको ज्योति संसार रोयो
काँपिन् थर्थर् अब धरणि नै काख रित्तो भएर।
यौटै थुँगा कल कल थियो रित्तियो यो बगैंचा
यो सृष्टिमा किन सरसता देख्न दिन्नस् विधाता ॥ ५ ॥

यी नेपालीहरू खुसी थिए धर्मका मूर्ति पाई
सारा मान्छेहरू खुसी थिए शान्तिका दूत आई।
फक्रे जस्तो दिन दिन थियो सृष्टिको यो वगैंचा
यो धर्तीमा कलकल थुँगा फुल्न दिन्नस् विधाता ॥ ६ ॥

आफू दुःखै सहिकन पनि यो जगत् नै हँसायौ
बन्दै त्यागी अरुकन ठुलो त्याग शिक्षा दिलायौ।
छाड्यौ झट्टै किन अब यहाँ भक्त रोई रहेछन्
तिम्रै निम्ती नजर सबका आँशुमा तैरिएछन् ॥ ७ ॥

मान्छे हामी अब बिरहको सागरैमा डुबेर
खोज्छौं बाटो छ कि कहिं भनी दीनका हे सहाय।
छाड्यौ एक्लै विजन वनको माझमा आत्तिंदै छौं
धारा झार्दै नयन-दुइका अञ्जुली अर्पिंदै छौं॥ ८॥

यै ठाउँमा अघि शिशु छँदा बाललीला गरेर
खेल्थ्यौ प्यारा सहचर लिई भीर पाखा डुलेर।
खेलेका यी वन चहुरले काखमा फेरि खोज्छन्
हुर्काएका सबथल निकै दुःखमा मग्न बन्छन्॥ ९॥

अग्ला दिब्रुङ् शिवधुरि मुसुङ् सोलिघोप्टे पहाडी
यस्तै शान्तस्थल र वनका कन्दरामा चहारी।
बिर्सी जन्मस्थल र सुख ती साधनामा रमाई
भेट्यौ आत्मा कण कण विषे ज्ञानको ज्योति पाई॥ १०॥

इच्छा जाग्यो अब जगतमा ज्ञानको ज्योति छर्ने
अज्ञानीका हृदयबिचका बन्द आँखा उघार्ने।
डुल्दै सारा विकट जनका बस्ति यागादि गर्दै
धुम्रे इच्छा सफल पनि भो सत्य सन्देश छर्दै॥ ११॥

कस्तो पापी विधि छ निठुरी कोपिला चट्ट चुड्ने
लाखौंका यी नजरहरूमा आँशुका भेल भर्ने।
देख्दा हौ कि नजरहरूका आँशु त्यो देशबाट
पुग्दा हुन् कि अलिअलि त्यहाँ वेदना औ पुकार॥ १२॥

हेर्छन् डाँडा वन र पहरा काँ पुगे हौ भनेर
डाक्छन् उच्च स्वरसँग नदी फर्क आऊ भनेर
खल्लो सारा प्रकृति पनि यी स्तब्ध औ मौन झैं छन्
छोडी जाँदा बिचारि पृथिवी पुत्रको शोकमा छन्॥ १३॥

फेरी भोली पनि धरणिमा धर्मको युद्ध पर्ला
त्यो बेलामा सब जगत नै दुःखमा डुब्नु पर्ला
हेरे पृथ्वी तिर पनि यता धर्म डुब्दा झरे है!
रोलिन् आमा धरणि उनका आँशु फेरी पुछे है॥ १४॥

हामी खाली अवनितलका भारमात्रै रहेछौं
छाड्यौ एक्लै अब त टुहुरा बाल जस्तै बनेछौं।
अज्ञानी छौं अबुझ शठ छौं के अरु गर्न सक्छौं
आँशू राखी अँजुलि भर यी शब्द-श्रद्धा दिंदै छौं॥ १५॥

ॐ



# ❋ के छ यो जिन्दगानी !...... ❋

*(सत्य-सन्देश)*

**आचार्य कृष्णमणि शर्मा 'पहारी'**
सूर्यपाल-६, लमजुङ्ग हाल-देवघाट-२ तनहूँ

देखौं प्राणी सब प्रकृतिमा ईशको नै निवास
देख्छन् ज्ञानी हृदयतलमा, ध्यानले त्यो प्रकाश॥
छाडी देऊ विषय जगका, चित्तमा राख होश,
रागी द्वेषी नबन, अनि छन् जानिने आशुतोष॥ १॥

तिम्रो सच्चा निज-घर कहाँ? को थियौ? पूर्व-काल-
जान्ने चेष्टा गर, सुजन हो! के छ कर्तव्य आज?
आफ्नै पारौं जगतभरका वस्तु भन्ने छ आश,
छोड्नै पर्ने नियम नबुझी, गर्नु केमा विलास?॥ २॥

तिम्रा पूर्खा यस धरणिमा राख्दथे तीव्र आशा
तेरो-मेरो, धन-जन, भनी खेल्दथे कूट पाशा॥
देख्यौ आफ्नै नयनअघि नै च्वाट्ट छोडी गएका,
राख्छौ आशा, तर पनि उही खै विरागी भएका? ॥ ३॥

के ल्याएथ्यौ यस धरणिमा आउँदा गर्भबाट?
लामो यात्रातिर चलिदिँदा के कुरा जान्छ साथ?
सारा स्वप्नोपम जगतको नित्य गर्नू विचार।
सोचे यस्तो किन मनुजले पाप गर्थ्यो हजार॥ ४॥

भन्छौ मेरा तनय, दुहिता, मित्र औ बन्धु-भाइ,
नाता गोता विविध बटुली धेर घेरा लगाई।
सेवा-मेवा जबतक तिनी पाउँदा स्नेह गर्छन्।
बन्दा खाली धनबल गई, दूर आफैं हुनेछन्॥ ५॥

बुझ्नू स्वार्थी सब छ जगतै आफनो को छ आज,
पेशा यै हो लिनु दिनु सबै स्वार्थको यो समाज।
छोडी तृष्णा विधिवश जती मिल्छ त्यस्मा रमाई।
जस्ले पायो परम समता, त्यो सुखी हो नि भाइ!॥ ६॥

बाल्यावस्था पनि बितिगयो धूलिमा खेलदाको,
तृष्णा मोहादि बश हुनगै, काल जाने युवाको।
पीडा नाना, विविध दुखले जान्छ रे वृद्धकाल,
कैले होला सब सुख मिली काटिने दुःखजाल?॥ ७॥

यस्तो जानी, जन! समयमै बन्नु है होशियार,
गर्नेछौ के जब परिगए कालको त्यो प्रहार?
विद्वत्ता औ धनजन सबै, मान प्यारो जवानी,
आत्मा निस्की जब उडिगए बन्छ सारा खरानी॥ ८॥

'जीवन्' भन्ने कमलदलका बीचको रै'छ पानी।
पोखीने हो कुन समयमा-'के छ यो जिन्दगानी'!
जान्नू, हिंसा सरि अति ठुलो पाप केही हुँदैन।
सारा प्राणीहरू प्रति दया तुल्य क्यै धर्म छैन॥ ९॥

तिम्रो आत्मा अमर छ भनी तत्त्वमस्यादि वाक्य
भन्छन्, सारा जगत र तिमी ईशको रूप खास।
यौटै त्यो हो, नभन दुइटा, ब्रह्ममा द्वैत पर्ला।
को आफ्नो हो कुन पर भनौं ईशको भाव पर्दा॥ १०॥

आफैं आफ्नो रिपु पनि बन्यो काम क्रोधादि राख्ने,
चेष्टा भित्रै शुभ लिइ बसे मित्र आफैं छ जान्ने।
छन् भित्रै ती दुइथरि कुरा चेतना औ विकार,
छुट्याऊ त्यो परहित हुने कार्य औ मुख्य सार॥ ११॥

यो स्वप्ना झैं जगत बुझनू, दुःखले पूर्ण भारी,
ब्यूँझी हेर्दा लय सब हुने, तैपनी कष्टकारी।
मेरो तेरो सब रहित त्यो धेर राम्रो सुषुप्ति।
खुल्दा निद्रा छटपट भयो फेरि उस्तै विपत्ति॥ १२॥

जस्तै प्यासो हरिण मरुको बालुवामा चहारी,
पानी खोज्दै वर-पर, त्यसै मर्छ त्यो दुःख पाई।
त्यस्तै प्राणी पनि विषयमा रंगिई दौडनाले,
थाकी मर्छन् सकल जगका कष्टमा पिल्सिनाले॥ १३॥

यस्ता नानाविध दुख हुने देह पायौं सबैले,
जाऊँ ज्ञानीसित, हृदयको ताप मेट्नू छ ऐलै॥
जीवात्मा औ परमचितिकौं भेद-पर्दा हटाइ-
दिन्छन्, सच्चा गुरुजन, सफा ज्ञानगङ्गा बहाई॥ १४॥

यस्तै दिव्यामृत भरिदिने ज्ञानका जन्मदाता,
हाम्रा साक्षात् जनक प्रभु हौ देवता भाग्यदाता।
चम्क्यो सारा धरणितलमा नाथको दिव्य नाउँ।
अर्पौं के नै, चरणतलमा भाव-माला चढ़ाऊँ॥ १५॥

# ❀ यो अन्याय भयो ❀

**कृष्णप्रसाद कण्डेल**
**बाग्लुङ बिहुँ, लामखुम**

ज्योति श्री गुरुदेव देशभरका, हे धर्मका चिन्तक!
राजादेखि लिएर रङ्क तकमा जान्थ्यो नि त्यो मस्तिक।
देशै यो रजनी समान अहिले वत्ती बिना शून्य छ,
स्वामी श्रीगुरुदेवका चरणमा मेरो नमस्कार छ॥ १॥

देशै मात्र न भै सबै जगतमा चिन्ता गहीरा परे,
बालैदेखि लिएर वृद्ध तकले रोई पुकारा गरे।
विद्वान्देखि लिएर मूर्ख सब ती आश्चर्यमा नै परे,
भन्छन् रोइकराइ धर्म पथमा लैजान्छ कस्ले हरे!॥ २॥

हे सर्वज्ञ गुरो! चटक्क यसरी त्यागेर जानूभयो,
हामी छौं टुहुरा अनाथ अहिले रोईरहेछौं विभो?॥
हाम्रो रोदनलाइ सम्झि दिनहूँ आशीष दी बक्सियोस्।
छन् दुःखी जनता यहाँ प्रभु निकै, फर्की कृपा बक्सियोस्॥ ३॥

केही काल अघी यसै धरणिमा आई प्रभूले यहाँ,
लीला गर्नुभयो क्रिया, मन सबै गिरीशमा नै थियो।
साक्षात् श्री शिवका सदा स्मरणले ईशत्वमा पुग्नुभो,
हाम्रा श्रीगुरुजी यसै जगतमा व्यापी बनी बस्नुभो॥ ४॥

भो भूकम्प पनी खपी नसकदा रोएर काँपिन् धरा।
रोए देव, मनुष्य, यक्ष, ऋषि ती छोड्दा वहाँले बरा।
कस्ले बिर्सन सक्छ आज जगमा ती धर्मका रक्षक,
स्वामी श्री गुरुदेवका चरणमा मेरो नमस्कार छ॥ ५॥

रातै हो कसरी भनूँ गगनमा हिंड्दै थिए ती रवि।
अन्धाधुन्ध भयो त्यसै बखतमा आएछ त्यो निर्दयी॥
कस्तो क्रूर कठोर काल बलियो बाच्छा छुटे गौ लग्यो,
'यो अन्याय भयो' सबै मनुजमा, रोएर नै के भयो?॥ ६॥





त्यो चोला सबलाइ ज्ञान दिनमा हर्दम् तयारै थियो
जानेनौं सँगमै थियौं तर अहो! अज्ञानले ढाकियो।
त्रेता, द्वापर, सत्य जत्ति अहिले धन्यै भयो यो कलि।
स्वामी श्री गुरुदेवका चरणमा अर्पन्छु श्रद्धाञ्जलि॥ ७॥

सबै नै स्वामीले शरण लिनु भो पालक बनी,
मिल्यो प्रज्ञा ठूलो तर पनि रहेछौं तममनि।
बनून् ज्ञानी सारा भनिकन त विद्यालय पनि,
बनाई छाड्नुभो असल सबका बालक बने॥ ८॥

प्रभो! सानैबाटै तन र घरको याद नगरी,
रही ती टापूमा हरचरणको अर्चन गरी,
त्यहीं बस्दा चोखा हरित रुख राम्रा घर भए।
संगै बोल्ने खेल्ने पशु र खगका लस्कर थिए।

मिली सारा हामी सबदिन सुसङ्कल्प प्रभुको,
पुरा गर्नेछौं, हे वरद! वर पाऊँ हजुरको।
हजुर्का सारा ती मठ दिनहुँ लाखौं चलिरहून्।
सबै नै धर्मैका प्रति रुचि बढी दिव्य बनियून्।

गुरो! फर्की आऊ धरणि जननी पालन गरी,
दिलाऊ ज्योति त्यो श्रुतिवचनको वाचन गरी।
म बिन्ती गर्दैछु अवतरणको आश अझ ली,
लिई आँसू-गुच्छा अब यसरि श्रद्धाञ्जलि दिई।

जस्ले पिता सरि भई सबलाई पाली
शिक्षाहरू दिनुभयो उपकार जानी।
हर्दम् परिश्रम गरीकन पालनू भो,
सारा रुवाई प्रभु चट्ट हराउनू भो।

कस्तो हरे! विधि-विधान, छुटेछ प्राण,
काँपे शरीर मुटु थर्थर भै तमाम।
सम्झेर आँसु गहमा म बहाउँदै छु।
श्रद्धाञ्जली हजुरमा म चढाउँदै छु॥

# ❋ श्रद्धार्चना ❋

—भागीरथ सापकोटा
अर्लाङकोट गुल्मी

हे विद्यापति हे अनाथहरुका! हे नाथ! देवेश्वर
सन्तात्मा! सबमा अभिन्न रूपले हेर्नुभयो सादर।
साराका मनमा बसी हजुरले सन्मार्ग पैदा गरी,
पाल्नू भो शिवलोकमा, हरघडी सम्झन्छु पाऊ परी॥ १॥

हिन्दू धर्म जगाउने प्रण गरी आएर हाम्रा हरि,
विद्याका गहिरा प्रज्ञान गतिला छाँटेर बुझ्ने गरी।
बाली ज्ञान-दियो, विनास तमको पारेर चारैतिर।
चम्कायौ विधिको विधान जगमा संझीरहौं आखिर॥ २॥

हिन्दू धर्म र कर्मका मनुजको कर्तव्य संझाउँदै,
घुम्नु भो दिनरात यो धरतिमा त्यागेर माया सबै।
आत्मा जो सबका रहन्छ तनमा, द्यौता त्यही हो भनी,.
गर्नू ध्यान महेशको र, पछि यो मिल्ने छ आत्मा बनी॥ ३॥

पायौं जो गुरुबाट ज्ञान जति यो लेखेर लेखिन्न रे!
कस्तो पर्न गयो प्रहार गहिरो छेकेर छेकिन्न रे।
हामी छौं टुहुरा अनाथ, प्रभुजी छोडी दिनाले सब,
तिम्रै शास्वत ज्ञान आर्जिन सके हुने थियो गौरव॥ ४॥

हा हा दैव! कसोरि क्रूर गतिले आएर सारा हरी,
लैजान्छस्, अब लौ कसो गरि बसौं पाहाडिया जिन्दगी।
संझाऊँ कसरी अधीर मन यो संझिन्न केही गरी।
हे सर्वज्ञ गुरो! सदैव गहमा सम्झन्छु आँसू भरी॥ ५॥





# ❃ कविहरुका दृष्टिमा स्वामीज्यू ❃

स्वामीज्यूका धर्म-यात्राको उपलब्धिलाई कवि आचार्य जगन्नाथ शर्मा कण्डेलको 'गुरुचरितमानस' (शोककाव्य)मा यसरी चित्रण गरिएको छ—

जब भाषण श्रीगुरुको हुनगो, तब पालित धर्म र कर्म भयो।
गुरुदेव हुँदा सब खूश भए, गुरुदेव हिंडे सब खिन्न बने।
कति वेद पढे कति धर्म बढ्यो, कति ज्ञान चढ्यो कति भक्ति पस्यो
कति कर्म भए कति जीव बँचे, कति धूम चले कति हूम चले।

गाउँ गाउँ घुमी गरिएको धर्म प्रचारले प्रभावित हुँदै 'परमानन्द स्मृति' (शोक काव्य) कार आचार्य खेमराज केशवशरणज्यू पनि स्वामीज्यूको विरह वेदनालाई यसरी पोख्नुहुन्छ—

जता पाउ लम्के सुजनहरूको जम्घट हुने। अती मीठो बोली अमृत सरि भै हिर्दय छुने।
दिंदै हिड्ने यस्ता अति मधुर सन्देश हितका। कहाँ भेटौंला ती चरणपरमानन्द गुरुका॥

चेतराज कण्डेल भित्रको युवा कवित्व एक्ला स्वामीज्यूको सेवाका सामु सरकारद्वारा गरिने सामजिक सेवाले पनि पराजित भएको महसूस गर्दै असमयमा नै समाज-सेवी स्वामीज्यूको जीवन चुड्ने विधिका विधानलाई आक्षेप लगाउँदै भन्दछ—

सक्दैन्थ्यो सरकारले पनि यहाँ त्यो काम एक्लै भयो
भत्ता खान्छ र छक्क पार्छ दुनिया त्यो मात्र नेता भयो।
कस्तो यो विधिको विधान किन यो जान्दैन त्यो लेख्न कि
जो निस्किन्छ यहाँ विचित्र प्रतिभा पाउन्न त्यो बाँच्न कि?

यस्तै 'श्री परमानन्द चरितामृत' नामक श्लोक संग्रहका रचयिता कवि श्री होमनाथ सुवेदीज्यूको गुरु-भक्त आत्मा पनि धर्मप्रचारक गुरुवरका वियोगले यसरी रोएको छ—

यो कानून मनुष्यको भइदिए फेर्ने थियौं तत्क्षण
पापीलाई पठाउँथ्यौं अति छिटै बाँच्थे सबै सज्जन
साटो गर्न मिलेन दिन्छ जसले फिर्ता लियो के गरौं
रोई बाँचुरहेछ दुइ दिन यो पीडा कसोरी सहौं॥

त्यस्तै सर्वप्रथम वि. सं. २०३५ सालमा 'आबाल ब्रह्मचारी जीवनी' नामको गुरुगीत लोकलयमा गाउने श्यामलाल सुवेदीको हँसिलो दिल स्वामीज्यूद्वारा धर्मप्रचारकै सिलसिलामा गुल्मी दिब्रुङमा भएका धान्याचलमहायज्ञको वर्णन गर्दै यस प्रकार रमाएको छ—

यता चन्छन् भजनहरू उता सतसङ्ग, भक्तजनमा अनौठा छन् हर्षका उमङ्ग।
उतातिर शास्त्रसार गुरुवर्गबाट, हारविन मुरलीका स्वर फेरी सात॥
अर्कातिर धानै धानको हो कि! धान्याचल, इन्द्रपुरी समानै छ देवरूम स्थल।
यथाशक्य अतिथिमा स्वागत यतातिर, चारैतिर रमझम छ हेरौं जतातिर॥

❃



# ❋ गुरुकुलको महत्त्व र स्वामी परमानन्द सरस्वती ❋

-श्रीराम सापकोटा
पूर्व प्राचार्य : रुरु संस्कृत विद्यापीठ
बिडी, गुल्मी

अध्यात्मज्ञान साधनाको केन्द्र भगवान् पशुपतिनाथद्वारा संरक्षित हिन्दू राष्ट्र नेपाल जहाँ प्रत्येक घरघरमा पूजाहरू चल्दछन्, जन्मदेखि मृत्युसम्मका संस्कारहरू वैदिक परम्परा अनुसार हुने गर्छन्। जहाँका गुफा, वन, हिमालय देवताका आवासस्थल हुन्, जहाँ **एको देवः केशवो वा शिवो वा** र **'सर्वे भवन्तु सुखिनः** जस्ता मूलभावनाकोको शङ्खघोष वेदहरूले गरेका छन् त्यो देश नेपाल विश्वकै इतिहासमा धन्यतम मानिएको छ। म खाऊँ मै लाऊँ, हिंसा, अशान्ति द्वारा पीड़ित सबै प्राणीहरूको एक मात्र मुक्तिको साधन यहाँको दर्शन हो। जुन दर्शनको प्रभाव र साधनाबाट ऋषि-मुनिहरू कालजयी त्रिकालदर्शी र चिरञ्जीवी भई उच्चतम स्थानमा पुगेका छन्। 'सत्य बोल, धर्म गर, मातृ, पितृ र गुरु भक्त बन जस्ता ज्ञानका भण्डार रहेका वेद, उपवेद, उपनिषद्, पुराण, महाभारत, रामायण इत्यादिको अध्ययनले नारद वशिष्ठ शंकराचार्य जस्ता महामुनिरूले यसै स्थलमा अपवर्ग प्राप्त गर्न सफल भएका हुन्। अपवर्ग भन्नाले पवर्ग रहित अथवा पतन, फलाशा, बन्धन, भय र मरणका अभाव ज्ञान हुनु हो। ज्ञान विना मुक्ति हुँदैन। सफा चित्तमा ज्ञान प्राप्ति हुन्छ। सफा चित्तको लागि कर्म गरिन्छ। कर्म शब्दले वेद प्रतिपादित नित्य र नैमित्तिक रूपमा गरिने कार्य बुझिन्छ जसको अध्ययनको भूमिका यंस देशमा पराकाल देखि नै गुरुकुलको रूपमा सञ्चालन भइरहेको छ। गुरुकुलको प्रभावले नै नचिकेता सशरीर यमलोक पुगी यमद्वारा ब्रह्मविद्या प्राप्त गरे। भगवान् श्रीकृष्णले सहपाठी सुदामाका साथ गुरुकुलमा रही ६४ दिनमा सबै शास्त्र कला प्राप्त गर्नुभएको थियो। जसको प्रतापले हात्ती, रुख, डढेला, कालीयनाग आदिलाई वशीकरण गरी दुष्टात्मा मामा कंशलाई संहार गरी गुरु दक्षिणाको रूपमा गुरूको मृत-पुत्र वरुणलोकबाट ल्याई हस्तान्तरण पनि गर्नुभएको थियो। यसै गरी व्यास, वाल्मीकि, पुलस्त्य, पुलह, भृगु, स्कन्द, रुद्र, अङ्गिरा, मनु, परशुराम आदि ऋषिहरूले गुरुकुलकै माध्यमबाट अनेकौं पुराण उपपुराणादि ग्रन्थ रचना गर्न र तत्वबोध गर्न गराउन सफल भएका थिए। गुरुकुलकै प्रभावद्वारा दत्तात्रयले पृथिवी आदि २४ गुरु अपनाएर सबैलाई नेत्र-ज्योति प्रदान गरे। यसरी सृष्टिको प्रारम्भदेखि अहिलेसम्म गुरुकुल शिक्षा प्रणाली मानवीय अमूल्य निधिको दातृ-संस्थाको रूपमा रहेको पाइन्छ।

पुण्यात्माहरूद्वारा वैदिक कालदेखि चल्दै आएको गुरुकुल शिक्षाले विभिन्न चरणहरू पार गर्दै वर्तमान समयमा पनि निरन्तरता पाइरहेको छ। भोजन र आवासको सुविधायुक्त संस्कृत गुरुकुल र त्यसमा निहित ज्ञान उपासना र कर्मकाण्डको उत्थान गर्नेमा दिङ्ला संस्कृत पाठशालाका संस्थापक बालगुरु षडानन्द, स्वर्गद्वारी महाप्रभु का साथै अर्का युगपुरुष हुनुहुन्छ स्वामी परमानन्द सरस्वतीज्यू महाराज। धर्म, संस्कृत शिक्षाको प्रचार र सामाजिक विकासको लागि निरन्तर लाग्नु भएका स्वामी परमानन्द महाराज, जसलाई नेपाली इतिहासमा अग्र-गण्य व्यक्तिका रूपमा आज हामी पाउँछौं। देशका विभिन्न ठाउँमा संस्कृत गुरुकुल, आश्रम, पाटी, पौवा, बाटो, पुल, खानेपानी, मा. वि. क्याम्पस स्थापना गर्नु भएका स्वामी महाराज जहाँ-जहाँ पुग्नु भयो ती ती ठाउँले आफू विकसित हुने अवसर पाए।

'गुरुकुल, मठ, मन्दिर, आश्रमहरुलाई संरक्षण संवर्धन गर्नु सबैको कर्तव्य हो'-वहाँ सबैलाई यही भन्नु हुन्थ्यो हिन्दू धर्म तथा संस्कृत भाषा प्रचारक स्वामीजी महाराजले अन्तिम उपदेशमा पनि यिनै कुरा राख्नुभएको थियो। वहाँको उक्त उपदेशलाई हामी सबैले साकार पार्यौं भने मात्र वहाँ प्रतिको सच्चा स्मृति ठहरिने छ। अस्तु। ❋



# ❋ गुरुमहाराजसँगका अन्तिम क्षणहरू ❋

**ब्रह्मचारी शोभाकर**
श्रीहरिहर संन्यास आश्रम,
देवघाट धाम।

अखण्डमण्डलाकारं व्याप्तं येन चराचरम्
तत्पदं दर्शितं येन तस्मै श्रीगुरवे नमः॥

संसाररूप जंगलमा कलिरूप डढेलोले सन्तप्त भएका प्राणीहरूमा ज्ञानामृतको वर्षा गरी चेतनाको नवजीवन प्रदान गर्न नै गुरुमहाराजले हिमवत्खण्डमा अवतार लिनुभएको रहेछ। पहाडका टाकुरा, गुफा र वृक्षका छहारीको मात्र आश्रयमा तपोमय जीवन यापन गर्ने इच्छा हुँदा पनि वहाँमा संसारका प्राणीहरूको उद्धार गर्ने सहज करुणाभाव जागेकोले लोककल्याणार्थ संसारतर्फ दृष्टि दिनुभयो। तर लोक कल्याणार्थ कर्महरू गर्दा पनि वहाँ ब्राह्मी स्थितिमा नै रहनुहुन्थ्यो। सांसारिक सुविधा युक्त सामग्रीहरू मिल्दा पनि कत्ति इच्छा राख्नु भएन। वहाँलाई ऋषि मुनिहरूका झैं रुखमुनिको वास, कन्दमूलको आहार र तृणको शैय्या नै प्रिय थिए। ब्रह्मज्ञानमा पारंगत हुनुहुन्थ्यो, त्यसलै वहाँ बह्म नै हुनुहुन्थ्यो। किनभने–'ब्रह्मविद् ब्रह्मैव भवति' भन्ने उपनिषद्को भनाइ छ।

जसरी भाष्यकार भगवान् शङ्कराचार्य अनेकौं भाष्य र प्रकीर्ण ग्रन्थहरूको रचना गरी, भारतको चार दिशामा चार प्रमुख मठहरूको स्थापना गरी आफ्नो कीर्तिद्वारा अनन्तकालका लागि अमर हुनुभयो त्यस्तै गुरुमहाराजले पनि ठाउँ–ठाउँमा प्रवचन सदुपदेश तथा अनेकौ गुरुकुल आश्रम र मठमन्दिरहरूको स्थापना गरी सनातन धर्मको प्रोज्वल ध्वजालाई फहराउनुभयो। यस्ता गुरुमहाराजका कीर्ति पताकाहरू सबका सामु छन्।

आफ्नो शरीरको वास्था समेत न गरी अरुको भरण–पोषण गर्ने वहाँको स्वभाव थियो। आफ्नो समीपमा आउने भक्तलाई सधैं सन्मार्गको उपदेश गर्नुहुन्थ्यो, समाजको ठूलो उन्नति गरेर पनि आफ्नो लागि एक पैसाको पनि सञ्चय गर्नुभएन। उहाँबाट आज्ञा हुन्थ्यो–जसले जन्मदियो, आमाको गर्भमा पालन गऱ्यो र जन्मदासाथ माताको स्तनमा दुधको व्यवस्था गऱ्यो त्यसैले पालन गर्छ।

'शरीरं व्याधिमन्दिरम्' भने अनुसार शरीरका धर्म भएका रोगव्याधिहरूले उहाँको शरीरलाई पनि आक्रमण गर्न आए तर उहाँ रोगलाई प्रकट गर्न चाहनुहुन्नथ्यो। भक्तहरूलाई भने यो कुरा ठूलो चिन्ताको विषय बन्यो। उहाँले नचाहदा पनि उपचारार्थ विविध औषधालयहरूमा लगियो। यसै क्रममा भारतको चिन्नै(मद्रास) शहर पुग्दा त्यहाँका डाक्टरहरू ठूलो श्रद्धाका साथ वहाँको उपचारकार्य गर्न संलग्न भए। रोगको भयानक परिस्थितिमा पनि उहाँको चेहरामा कुनै परिवर्तन नदेखिँदा डाक्टरहरू नै चकित हुन्थे। यस्तो अवस्थमा पनि मुहारमा अपूर्व तेजस्विता झल्किन्छ भने यी साधारण मनुष्य होइनन् भन्ने चर्चा डाक्टरहरूको बीचमा चल्दथ्यो। त्यहाँका विशिष्ट डाक्टरहरू प्रतिदिन हस्पिटलको कार्य शुरुगर्नु भन्दा पहिले स्वामीज्यूको उपचार कक्षमा आउथे र भाषिक कठिनाईको कारण अरू केही सम्वाद नगरे पनि 'ॐ नमः शिवाय'

भनेर प्रणाम गर्ने गर्दथे। गुरुमहाराजले आफ्नो शरीरको अन्तिम अबस्था बुझेपछि स्वयं स्वदेश फर्किने इच्छा गर्नुभयो। 'अब यो शरीर रहने वाला छैन, डाक्टरहरू कसैको प्रारब्ध बदल्न सक्दैनन्'-वहाँको भनाइ थियो।

यस प्रकार मद्रासबाट आएपछि देवघाटमा भक्तलाई अन्तिम उपदेश गर्दै वहाँले भन्नुभयो-'यो प्रवचन अन्तिम हुनेछ, तर मेरा उपदेशहरू सधैं रहने छन्। यी हाम्रा मठमन्दिर र गुरुकुलको संरक्षण गर्नू, राम्ररी सञ्चालन गर्नू, मर्ने म होइन-मेरो शरीर हो ! शरीर लिएपछि अवश्य छोड्नु पर्छ। यो त पञ्चमहाभूतहरूको एक पिण्ड हो, जहाँबाट आयो वहीं जान्छ। यसमा हामी विचलित हुनु हुँदैन' यस्ता दिव्य उपदेश दिंदै हामीलाई बारम्बार सम्झाइरहनु हुन्थ्यो।

यसपछि भक्तहरूको आग्रहले गुरुमहाराजलाई पुनः काठमाण्डौ लगियो। वहाँ उपचारकालमा पनि उहाँको दृष्टि त्यता रहेन। भक्तहरूको जाने आउने र भेट गर्ने क्रम जारी नै थियो। यसै क्रममा श्री५महाराजाधिराजसरकारका निजी सचिव पशुपति महर्जनले गुरुजीसंग भेट गरी धर्मपरायण श्री५महाराजधिराजको अभिप्राय अनुसार विशेष उपचार गर्न विदेश पठाउने व्यवस्था गर्न इच्छा व्यक्त गर्दा स्वामीज्यूले-अब मेरो शरीर रहँदैन, अहिले सम्म त यिनीहरूको (भक्तको) आग्रहमा उपचारार्थ हिंडिदिएको मात्र हूँ, अब कहीं पनि जाने इच्छा छैन भन्नुभयो। यो प्रसङ्ग २०५३ माघ १५ गतेको हो। त्यस पछि माघ १८, वेलुका श्रीमहाराजधिराजसरकारसंग दर्शन भेटको कार्यक्रम थियो। तर विधिको विधान भने अर्कै रहेछ। यो कुरा गुरुमहाराजलाई थाहा रहेछ। हामीलाई स्पष्टै सङ्केत गर्नुभएको थियो, तर हामीले भने वहाँको साङ्केतिक भाषा बुझेनौं। भगवान् पशुपतिनाथले आफ्ना लीला समाप्त गरिसक्नुभएका प्रतिनिधिलाई बोलाई आफैंमा लीन गर्नुभएछ, हामीले यो कुरा जान्न सकेका रहेनछौं।

माघ १८ गते बिहान दिव्य ज्योतिरूप त्यो आत्मा पशुपतिमा लीन हुनगयो, शरीर त्यही नजीकको संन्यासवेदीमा राखिएको थियो। यो समय हाम्रो लागि पानी सुकेर तातो वालुवामा छटपटाइरहेको माछोको जस्तो कष्टकारक भयो। माताको वियोगमा निराधार भएका शिशुजस्ता भएका हामीहरूले त्यस समयलाई स्वप्न हो या जाग्रत् भनी छुट्याउन सकिरहेका थिएनौं। त्यसपछि वहाँको शरीरलाई देवघाट ल्याई समाधिस्थ गराइयो भन्ने कुराको केही समयपछि मात्र मलाई विश्वास भयो।

वहाँ साक्षात् भगवदीय महापुरुष हुनुहुन्थ्यो। जसको महत्ता मेरो मन र वचनको गतिदेखि टाढाको विषय छ। बाल्यकालदेखि नै वहाँको संरक्षण र कृपादृष्टिमा हुर्केका हामीहरूको लागि वहाँको वियोग एक वज्रप्रहारको रूपमा आएको छ। तर गुरुमहाराजकै उपदेशको अनुसरण गरी वहाँका कीर्तिपताकारूप सन्मर्यादाको संरक्षणमा समर्पित हुन सके अवश्य पनि कृपामात्र बन्न सकिएला मलाई त यसै कुरामा दृढ विश्वास छ; अस्तु।





# ❋ सद्गुरुको स्मृति ❋

**रविचैतन्य ब्रह्मचारी**
त्रिपुरेश्वर शिवाश्रम, बिहूँ रामकोट, बाग्लुङ्ग

**ध्यानमूलं गुरोर्मूर्तिः पूजामूलं गुरोः पदम्।**
**मन्त्रमूलं गुरोर्वाक्यं मोक्षमूलं गुरोः कृपा॥**

यदि कसैले आफ्नो जीवनमा केही महत्वपूर्ण वस्तु प्राप्त गरी जीवन सार्थक बनाउन चाहन्छ भने सांसारिक विषय भोगबाट सर्वप्रथम आफ्नो मनलाई हटाउनु पर्छ। यसरी परमार्थ तिर फर्किएको मनलाई सद्गुरुका समीपमा लगेर आफुमा भएका असल वा खराब सबै स्वभाव गुरुका पाउमा चढाएर उपरोक्त श्लोकानुसार गुरुको वास्तविक स्वरूपको ध्यान, चरणको पूजा (सेवा) र गुरुको आज्ञाको पालन गर्दै ती वाक्यरूपी मन्त्र जप गरेर गुरुको जो कृपा हुन्छ त्यसमा आफु सन्तुष्ट रहनु वा सेवामा रमाउनु नै मोक्ष हो, यही नै प्राप्य हो। अतः ईश्वरानुग्रह विना जिज्ञासुलाई सत्गुरु प्राप्त हुन नै असम्भव हुन्छ।

यस्तो जताततै अज्ञानमय अन्धकार फैलिएरशास्त्रोक्त मर्यादाहरू दिनानुदिन घट्दै घट्दै गइरहेको अवस्थामा **''परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्, धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे॥''** भन्ने आफ्नो प्रतिज्ञावाक्य पूरा गर्न र धर्मरक्षा गरी सम्पूर्ण भक्तहरूको कल्याण गर्न परम श्रद्धेय गुरुमहाराजले नेपाल आमाका पावन काखमा अवतरण गर्नुभयो।

उहाँले गाउँ गाउँ घुमेर-''ईश्वरको भजन-गर, साँचो बोल, मातृदेवो भव, पितृदेवो भव, अतिथिदेवो भव'' गुरुदेवो भव भन्ने महान् वाक्यरूलाई मनमा राख, सद्व्यवहार गर, सबै प्राणीमा दया माया गर, भन्दै यस्ता अनेकौं उपदेश दिएर ईश्वर के हो? धर्म के हो? भन्ने कुरा सबैलाई चिनाएर सत्मार्गमा लगाउँदै विकट विकट ठाउँहरूमा आश्रम बनाई सिद्ध तीर्थस्थल बनाउनुभएका यस्ता सद्गुरु पाउनु मैले आफुलाई भाग्यवान् ठानेको छु। लामोसमयसम्म गुरुमहाराजका साथमा रहेर ती अमृतरूपी वाणीहरू श्रवण गर्दै सेवा गर्न पाएर यो नाशिने शरीरको सदुपयोग भएको अनुभव गरेको छु।

गुरुमहाराजको हरेक कथा प्रवचनमा, मर्ने त शरीरमात्र हो म हैन, म भनेको आत्मा हो भन्नु हुन्थ्यो, तर मैले त हामी सबै मर्छौं, गुरुको त मृत्यु नै छैन भन्ने ठानेको थिएँ। निर्दयी कालले हामी सबैका प्राणस्वरूप गुरुलाई टप्प टिपेर लग्यो, कतिले रोएर दिन काटेका छन्। ज-जस्ले उहाँलाई आफ्नो सर्वस्व ठानेका थियौं, त्यस्ता हामी सबैले उहाँको मृत्युलाई नआइज भनी विन्ति गऱ्यौं, आफ्नो शरीर पनि दिन तयार भयौं तर लीला परमेश्वरकै रहेछ, जति कार्यका लागि आउनुभयो त्यति कार्य सम्पन्न गरेर स्वधाममा जानुभएछ, हामीलाई वज्र परे जस्तो भयो।

उहाँ ब्रह्मलीन हुनाले राष्ट्रकै ठूलो क्षति भयो, एउटा हिन्दुधर्मको उज्वल ताराको अस्त भयो। लाखौं भक्तहरूको आधार खोसियो, जे परे पनि सहनु नै पर्दो रहेछ। शरीररूपले गुरुमहाराज नरहे पनि सबै आश्रम देवालय र भक्तहरूका हृदयमा अदृश्यरूपमा रहनुभएको छ। उहाँले दिएका शिक्षा-दीक्षालाई आत्मसात् गर्दै हामीले उहाँले देखाएको बाटो लागेर यी गुरुका मूर्तिरूपले रहेका आश्रम, विद्यालय, मठमन्दिरहरूको संरक्षण गरेमा हामीलाई गुरुको कृपा भइरहने छ।

शरीर त निश्चय जाँदो रहेछ। अतः तँ, तेरो, मँ, मेरो गरेर अमूल्य नरजन्म खेर लफाल्नु नै हाम्रो प्रमुख कर्तव्य हो; जीवनको सार हो।

❋



# ❋ 'प्रेरणाका स्रोत गुरु' ❋

**चन्द्रमणि कण्डेल शास्त्री**

अमरापुरी ६ नवलपरासी

राष्ट्रिय रूपमा धार्मिक उद्घोषणा गर्ने ब्रह्मलीन स्वामी महाराज पवित्र भावना र विचारका धनी हुनुहुन्थ्यो। आफ्नो लक्ष्य अनुरूप पिछडिएका विभिन्न ठाउँहरूमा मठ-मन्दिर र विद्यालयहरूको स्थापना संवर्धन धार्मिक विकास एवं आध्यात्मिक जागरण फैलाउने क्रममा हाम्रो नवलपरासीको अमरापुरी गा.वि.स.मा २०४४ फाल्गुनमा पदार्पण गर्नुभयो। सोही गा.वि.स. वार्ड नं. ५, १६ नं चोक स्थित काठको सानो मन्दिरको प्रांगणमा स्थानीय भक्तजनहरूबाट विशाल सत्संग समारोहको आयोजना गरिएको थियो।

उक्त समारोहलाई सम्बोधन गर्दै पुराणहरूको वास्तविक सारतत्वलाई अति सरल व्याख्याद्वारा सर्वसाधारण भक्तजनहरूको भ्रमलाई दूर पार्ने परमज्ञानी महापुरुष गुरुदेवले साम्प्रदायिक झमेला, बाहिरी आडम्बर, संकुचित भावना आदि जस्ता सामाजिक विकृति हुने खालका आचरणहरू पन्छाई वास्तविक भगवत्तत्त्व सम्बन्धी व्याख्याबाट भक्तहरूको मनोबल बढाउने खालका मार्मिक शिक्षा प्रदान गर्नुभएको थियो।

वहाँका यस्ता सामाजिक एवं धार्मिक विकासका भावनायुक्त मार्मिक वाणीहरूबाट यसक्षेत्रका भक्तहरू ज्यादै प्रभावित भए। ज्ञानी जनहरूको सत्संगमा प्रेम, धर्ममा आस्था र विश्वास देखेर परमदयालु स्वामीज्यूबाट शिवमंदिरको निर्माण गर्ने प्रेरणा भयो। सोही दिन उक्त कार्यक्रमकै शुभ अवसरमा वहाँका कर कमलबाट शिलान्यास कार्य सम्पन्न भएको थियो। अत्यन्त उत्साह र उमंगका साथ भक्तजनहरूको आग्रह अनुसार यसै अमरापुरी-६ मा पनि राम मन्दिर निर्माणको लागि आज्ञा दिनुभएको थियो। यसरी वहाँको आज्ञानुसार यस समाजले २०४४ साल देखि वार्ड नं. ५ मा एक शिवमन्दिर र धर्मशाला, वार्ड नं. ६ मा श्रीराममन्दिरको निर्माण कार्य, ०४८ सम्ममा सम्पन्न गरेको थियो र स्वयं तपोमूर्ति यतिवरको संयोजकत्वमा २०४८ साल फागुन महाशिवरात्रिको शुभअवसरमा शिव महापुराण पारायण, विशाल समारोहका साथ शिव मन्दिरको प्राणप्रतिष्ठा, नर्मदेश्वर शिवलिंगको स्थापना भएको थियो। समारोहको अन्त्यमा शिवालयको अक्षयकोषको लागि वहाँसंग भएको सबै रकम प्रदान गरी अक्षय कोषको स्थापना गर्नुभएको थियो।

एक वर्षपछि सन्तशिरोमणि स्वामीज्यूको प्रेरणाबाट पुनः अमरापुरी-६ मा २०४९ चैत्र शुक्ल प्रतिपदादेखि श्रीराम-मन्दिर प्राण-प्रतिष्ठाको कार्यक्रम प्रारम्भ भयो। रामनवमीसम्म अध्यात्म रामायण पारायणका साथै विधिपूर्वक सीता, राम, लक्ष्मण, हनुमान तथा नर्मदेश्वर शिवलिंगको पनि प्राणप्रतिष्ठा सम्पन्न भएको थियो। समारोहको अन्त्यमा विशाल जन समुदायको सहभागितामा रथयात्रा कार्यक्रम सम्पन्न गरी मूर्तिहरू मन्दिरभित्र स्थापना गर्ने काम वहाँकै कर कमलबाट गरिएको थियो। कार्य विसर्जन समारोहमा भक्तजनहरूबाट श्रद्धा भक्तिपूर्वक परमादरणीय गुरुमहाराजका श्रीचरणमा अभिनन्दन समर्पण गरिएको थियो।

अक्षयकोष एवं सन्त भवन निर्माण आदिको उद्देश्यलाई लिई पुन: २०५० पौष १८ गते गुरुवरको संयोजकत्वमा विश्वशान्ति धान्याचलको आयोजन गरियो। ७ दिन सम्मको उक्त महायज्ञमा विद्वान्, साधु, सन्त, महन्त आदि लाखौं भक्तजनहरूको सहभागिता रह्यो। मुक्तात्म यतीश्वरको मुखारविन्द बाट प्रवाहित अमृत वाणीहरूबाट सबै भक्त जनहरू अत्यन्त लाभान्वित भए। अन्त्यमा पौष २४ गते विसर्जन समारोहमा धर्मावतार श्रीगुरुमहाराजको चरण कमलमा विशाल जन-समुदायको बीचमा श्रद्धा भक्तिपूर्वक अभिनन्दन गरिएको थियो। दूरदर्शी महात्मा गुरुदेवको आज्ञानुसार यज्ञशिष्ठामृतबाट सन्तभवन निर्माण पूरा गरी बाँकी रकम अक्षयकोषमा राखिएको थियो।

वहाँका सत्प्रेरणाबाट यहाँका शिव तथा राममन्दिरमा नित्यपूजा सञ्चालनका साथै शिवरात्रि, रामनवमी, श्रीकृष्णजन्माष्टमी एकादशी आदि जस्ता पुण्य पर्वहरूमा हजारौं भक्तजनहरूको सहभागितामा रथयात्रा, उत्सव, व्रत, पूजा, रामायण पाठ, सत्संगत, भजन, कीर्तन, रूद्राभिषेक आदि जस्ता शुभ कर्महरू हुँदै आएका छन्।

आफ्नो राष्ट्रियता, वैदिक सनातन हिन्दू धर्म, संस्कृति, सभ्यता, समाज आदिका शुभ चिन्तक नेपाल आमाका सपूत स्वामीजी महाराज शरीरको कुनै प्रवाह नगरी जीवनको अन्तिमसम्म समाज उद्धारक मानवोपयोगी शिक्षा दिँदा दिँदै २०५३ माघ १८ गते अष्टमी तिथिमा ब्रह्मलीन हुनुभएकोमा यस क्षेत्रका धर्मप्रेमी सज्जनवृन्दबाट धार्मिक क्षेत्रको मात्र नभई नेपाल राष्ट्रकै एक अपूरणीय क्षति भएको महसूस हुनु स्वाभाविकै हो। साथै २०५३ चैत्र अष्टमीमा वहाँको स्मृतिमा विशाल श्रद्धाञ्जलि कार्यक्रम एवं भण्डाराको पनि आयोजन गरियो।

अत: वहाँको यस क्षेत्रमा भएको अमूल्य योगदानबाट यो समाज अत्यन्त ऋणी छ। वहाँका पवित्रतम क्रियाकलापहरूबाट अत्यन्त प्रभावित यो समाजले वहाँलाई एक धर्मावतार, सन्तशिरोमणि, राष्ट्रिय विभूति एवं ईश्वरांशको रूपमा स्वीकारेको छ।

# श्रद्धाका मुटु परमानन्द गुरु

ऋषिराम खरेल
रूपाकोट गुल्मी

महापुरुषहरूको जन्मले केवल आफ्नो जीवनको मात्र उद्धार नगरी समाज राष्ट्र र संसारलाई उद्धार गर्दछन्। त्यस्ता महापुरुष मध्ये त्यागमूर्ति तपोमूर्ति सन्तको नाम हो गुरु परमानन्द। समाज सेवा राष्ट्रोत्थान र वैदिक धर्म संस्कृति रक्षाका क्षेत्रमा स्वामी परमानन्द सरस्वतीज्यूबाट भएको योगदानलाई लेख्नु भनेको हावालाई मुठीभित्र राख्ने दुस्साहस गर्नु जस्तो मात्र हो। धर्मको पहिलो अध्याय भनेको आफूले आफूलाई चिन्नु हो। देह त परमेश्वरको घर हो, अतः आफ्नो शरीर र पारिवारिक मोहमा मात्र समय बिताई मानव जीवन जस्तो अत्यन्त पवित्रतम जीवनलाई भिल्लको मणि जस्तो त्यसै खेर नफाल। मलाई समाज र राष्ट्रले के दियो भन्नु भन्दा मैले राष्ट्र र समाजलाई के दिन सकें भन्ने भावनालाई अगाडि बढाऊ भन्ने जस्ता अत्यन्त मार्मिक र राष्ट्रोत्थान वादी पवित्रतम निस्वार्थ कर्म गर्न समाजलाई सदा प्रेरित गरिरहनुभयो। आफै खाडलमा खसेको व्यक्तिले अर्को खाडलमा खसेको व्यक्तिलाई त्यहाँबाट तिमीलाई म बाहिर निकाल्छु भन्नु मूर्खता हो। अतः समाजमा हामी आफू नै अग्रसर भई उदाहरण बनेर देखाउनु पर्दछ। 'केवल वाक्यले मात्र हैन कार्य द्वारा उदाहरण बन्न सक्नु पर्दछ' जस्ता महान् उद्गार र व्यवहार समेत स्वामीज्यूले स्वयं उदाहरण बनेर देखाउनुभयो। जस्तै भनिएको छ—

'भाग्योदयेन बहुजन्मसमर्जितेन सत्संगमं च लभते पुरुषो यदा वै'।
'शैले शैले न माणिक्यं मौक्तिकं न गजे गजे। साधवो नहि सर्वत्र चन्दनं न वने वने।

साधु–संतहरू सानो तपस्या र पुण्यका प्रभावले प्राप्त हुँदैनन् र सबै ठाउँमा भेटाउन पनि सकिंदैन। गुरुमहाराज यस क्षेत्रका 'दीपक' सबैका आत्मा र ढुक्ढुकी हुनुहुन्थ्यो। वहाँका यो जनसमूहप्रतिको प्रगाढ़ स्नेह नै आज हाम्रो जीवनको मार्गदर्शक बनेको छ। यही नै राष्ट्र–उत्त्थानको मुख्य सन्देश र प्रेरक तत्त्व हो।





# समाजसुधारक स्वामी परमानन्द सरस्वती

**हरिप्रसाद कण्डेल**
प्र.अ.अमर उच्च.मा.वि.
बिहूँ बाग्लुङ्ग

हाम्रो धर्म, संस्कृति र परम्परामा रहेका अनेकौं विसंगति तथा विकृतिलाई हटाई सभ्य र सुसंस्कृत समाजको निर्माणका लागि स्वामी परमानन्द सरस्वतीज्यूबाट पुगेको योगदानलाई जत्ति नै मुक्तकण्ठले गाउँदा पनि अपूर्ण रहन्छ। स्वामीज्यूबाट धर्म, संस्कृति, मठ-मन्दिरको निर्माण र अज्ञानी व्यक्तिहरूमा ज्ञानको सञ्चार गर्ने काम मात्र नभई अत्यन्त विकट र पिछाड़िएकास्थानहरूमा वैदिक विद्यालयहरूको स्थापना र सुसञ्चालन गरिएका जिउँदा उदाहरणहरू प्रस्तुत नै छन्।

आफ्नो धर्म, संस्कृत, संस्कृति र परम्परा अन्तर्गत हिन्दूहरूले अनिवार्य गर्नुपर्ने षोडश संस्कारलाई समेत विधि पूर्वक गर्नु गराउनु पर्ने प्रचलनलाई विस्तारै विस्तारै कतिपय ठाउँहरूमा अज्ञान, अचेतना बढेर सुयोग्य विद्वान्‌हरूको अभावले अल्मलिन लागेको समाजमा स्वामीका कृपापूर्ण उपस्थिति र दृष्टिले मृतसंजीवनी शक्ति प्राप्त भएको कुरा व्याख्या गरिरहनु पर्दैन। जुन् ठाउँहरू नाङ्गा डाँडाका रूपमा केही वर्ष अघि देखिन्थे, जुन् गाउँहरूभरि नै कुनै वैदिक आचरण र विधिपूर्वक पूजा अर्चना गर्ने कुनै स्थान थिएनन्, आज त्यस्ता ठाउँहरू प्राकृतिक छटाले भरिपूर्ण भएका रमणीय स्थान र वेदध्वनिले गुञ्जायमान गुरुकुल आश्रमका रूपमा मौलाउन पाएका हुन्।

स्वामीज्यूले संस्कृत गुरुकुल शिक्षाको सञ्चालन, प्रचार-प्रसार, मठ-मन्दिर निर्माण तथा जीर्णोद्धार मात्र नगरी सयौं साधारण माध्यमिक विद्यालय र कैयौं क्याम्पसहरूको आर्थिक अवस्था र भौतिक साधनबाट समेत सम्पन्न गराई शिक्षाका क्षेत्रमा अतुलनीय योगदान पुऱ्याउनुभयो भने कैयौं मठ मन्दिर, अतिथि निवास, पिउने पानी, पाटी, पौवा, बाटो, पुल-पुलेसा, आदिका निर्माणबाट विशिष्ट सामाजिक योगदान समेत स्वामीज्यूले स्थापना गरेका गुरुकुल वेद वेदाङ्ग विद्यालय बाट हजारौं विद्यार्थी हरू उच्च शिक्षा हासिल गरि राष्ट्र निर्माण र धर्म संस्कृतिको रक्षाको लागि सुयोग्य नागरिक बनिसकेका अवसरलाई कुनै विश्वविद्यालयबाट पुगेको योदगान भन्दा कम महत्वपूर्ण मात्र सक्दिैन।

यसै सिलसिलामा आध्यात्मिक चिन्तन र सामाजिक जागरण का लागि ठाउँ ठाउँमा यज्ञयागादिको आयोजनमा स्वामीज्यूका व्यवहारिक र वेदान्तसम्बन्धी प्रवचनबाट तत्काल प्रभावित भई समाजका विकृति र विसंगति हटाई सभ्य साथ सुसंस्कृत समाजको निर्माण गर्न समेत अतुलनीय योगदान पुगेको पाइन्छ। सुसभ्य समाजबाट नै सुयोग्य नागरिक बन्न सक्ने र सुयोग्य नागरिकबाट नै समाज, राष्ट्र र धर्मको रक्षा हुन्छ भन्ने कुरालाई नै प्रमुख ठान्नु हुने स्वामीज्यूले आफू धार्मिक अनुष्ठानमा जाँदा र भक्तहरूबाट गुरुभेटीका रूपमा प्राप्त भएको दक्षिणालाई समेत स्थानीय अवस्था र आवश्यकता अनुसारका कार्यलाई सघाउ पुऱ्याउने उहाँको प्रमुख महत्वपूर्ण कार्य थियो।

आफ्नो भौतिक शरीर कैयौं पटक शल्यक्रिया गरी अत्यन्त शिथिल हुँदा समेत कुनै पनि दिन र कुनै पनि क्षण भक्त र समाजले राखेको आग्रहलाई आफ्नो व्यस्तता देखाई कतै कसैलाई पनि निराश पार्नु भएन। जीवन भर धर्म संस्कृति को प्रचार प्रसार र समाजसेवा लाई नै जीवनको वास्तविकता बनाउनुभएका स्वामीज्यू दृढ़ तपस्वी, त्यागमूर्ति, अत्यन्त संयमशील, भविष्यद्रष्टा, मृदुभाषी, अत्यन्त सरल र सरस शैलीयुक्त प्रखर एवं प्रष्टवक्ता, भक्ति, ज्ञान, वैराग्यका साक्षात् प्रतिमूर्ति र समाज सुधार र निर्माणका कल्पतरु नै बन्नुभयो।



# परमपूज्य स्वामी परमानन्द सरस्वतीज्यू महाराज एक अद्‌भुत विभूति

**हीरामणि अर्याल**
आँपचौर गुल्मी

यो विशाल ब्रह्माण्ड परमेश्वरको प्रकर्ष कृति भएकै कारणले यसको नाम प्रकृति रहन गएको हो। प्रकृति भित्रको एउटा रचना पृथ्वी हो। यो युगैंदेखि सत्-असत्, ज्ञान-अज्ञान आदिको बीचमा एउटा द्वन्द्व चल्दै आएको छ। घोर पापी र दुराचारी पुरुषको जन्म पनि यसै पृथ्वीमा भएको छ भने अत्यन्त सदाचारी सन्त महापुरुषहरूको जन्म पनि यसै भूतलमा भएको छ। अति दुर्गन्ध युक्त कीचड़ पनि यहीं छ। अति सुगन्धित मनोहारी पुष्पवाटिकाहरू र बहुमूल्य मणि-माणिक्यादि रत्न वस्तुहरू पनि यहीं छन्। हरेक युगमा जन्मने प्रत्येक मानिसले सुख र शान्तिकोलागि नै अथक प्रयास गरेको तथ्य इतिहासबाट अवगत हुन्छ। भौतिक भोग विलासको अधिकतम उपयोगबाट पनि सुख र शान्तिको अनुभव नपाए पछि वास्तविक सुखको खोजीमा मानिसहरू भौंतारिएका देखिन्छन्।

पूजा-पाठ, जप-तप र ध्यान गर्दा पनि जीवनमा व्याप्त अतृप्ति कसरी हटाउन सकिन्छ? ध्यान र योगको अनुभव कसरी प्राप्त गर्न सकिन्छ? आफू भित्र निहित आत्मानन्दको ढुकुटीलाई कसरी खोल्ने? व्यावहारिक जीवनमा मानिसलाई सताइरहने भय, चिन्ता, निराशा आदिलाई भगाई निश्चिन्तता निर्भयता र निरन्तर प्रसन्नता कसरी प्राप्त गर्ने? हाम्रा प्राचीन शास्त्रहरूमा वर्णित आनन्दमय ईश्वरको अस्तित्वको झलक आफ्नो हृदयमा कसरी फेला पार्ने? के आज पनि यो सब कुराहरू सम्भव छन्?

अवश्यमेव सम्भव छन्। मानिसका यी सम्पूर्ण चिन्तायुक्त प्रश्नहरूको समाधान निश्चित साधनाहरूको माध्यमबाट गराउँदै पिपासु साधकहरूको जीवनलाई ईश्वराभिमुख गराई त्यसमा मधुरता प्रदान गर्ने ऋषि-महर्षि र सन्त महापुरुषहरू हिजो आज पनि समाजमा विद्यमान छन्। पृथ्वीले मानव मात्रको कल्याणको लागि अनेकौं रत्नहरूलाई जन्माएकी छन्। 'बहुरत्ना वसुन्धरा'। सन्त महापुरुषहरूको यस सुगन्धित हार-मालामा स्वामी परमानन्दज्यू महाराज एउटा पूर्ण विकसित सुमधुर पुष्प हुनुहुन्छ, जसको सुगन्धित महकले समस्त मानवलाई मुग्ध बनाएको छ।

लुम्बिनी अञ्चलभित्र पर्ने गुल्मी जिल्लाको पूर्वोत्तर क्षेत्रमा दक्षिण मोहोड़ा भएको एउटा पर्वत छ जसको शिखरलाई दिब्रुङ् भनेर चिनिन्छ, यो पर्वत यस भेगको एउटा विशाल जंगल भएको क्षेत्र हो। उच्च पहाड़, घनघोर जंगल, चीसो बतास, हिंसक वन्यजन्तु आदि कुराहरूले दिब्रुङको विकटतालाई अझ विकट बनाएका थिए। तर, त्यही निर्जन र विकट पहाड योग साधनाको परम पावन भूमि बन्न सक्दछ भन्ने कुरा कसैको कल्पना भित्र पनि पर्न सक्दैनथ्यो। ईश्वरको कृपादृष्टि त्यस पहाडमा पर्न गयो। गुरुज्यूले गृहत्याग गरेर तपस्याको निम्ति पहाडी वन शृंखलाहरू खोज्दै जाँदा त्यस ठाउँमा आए पछि उहाँकै शब्दमा किन हो किन त्यो ठाउँ अति रमणीय लाग्यो र त्यहीं एउटा खर्सूको रुखमुनि उहाँ ध्यानमग्न हुनुभयो। ध्यानमै बसेको अवस्थामा घाँस दाउराको लागि वनमा गएका गाउँलेहरू वनमा पुगे, उहाँको दर्शन गरे, परिचय लिए र उहाँको योग र समाधिको अत्यधिक एकाग्रतालाई बुझे पछि गाँउले हरूले नै एउटा सानो कुटी तयार गरी गुरूलाई त्यस कुटीमा विराजमान गराए।





त्यसपछिका दिनहरूमा क्रमशः टाढा-टाढाका गाउँहरूमा समेत गुरुज्यूको योग साधनाको प्रचार फैलियो। मानिसहरू हुलका हुल भएर गुरु दर्शनको निमित्त आउन थाले। जति आए सबैले गुरुका मुखमण्डलमा देदीप्यमान ईश्वरीय आभाको प्रत्यक्ष दर्शनको अनुभव लिएर फर्के। आफ्नो कुटीमा मानिसहरूको आवागमन बढी हुन थालेपछि गुरुको मनमा दूर-दूरबाट आउने भक्तहरूलाई कमसे कम एक रात विश्राम गर्ने एउटा धर्मशाला बनाउनु पर्ने महसूस भयो। उहाँले स्थानीय बासिन्दाहरूसँग आफ्नो आशय व्यक्त गर्नुभयो र एउटा धर्मशाला तयार भयो। जति-जति दिन महिना र वर्ष व्यतीत हुँदै गए उति उति गुरुको तपश्चर्याको प्रभाव बढ्दै गयो। मानिसहरूको हृदयमा धर्मको बीज रोपिंदै गयो। गाउँलेहरूमा गुरुभक्तिको भावना ओतप्रोत हुँदै गयो। खर्सूको रूखमुनिको त्यो सानो योग शिविर त्यो पर्णकुटी एउटा सुन्दर शान्त र भव्य आश्रमको रूपमा परिणत भयो। धर्मको द्वार अर्थात त्यस क्षेत्रको धार्मिक संसारमा प्रवेश गर्ने पहिलो ढोकाकै प्रतीक संझेर आश्रमको नाम पनि धर्मद्वारी ब्रह्मचर्याश्रम भनेर राखिएको थियो।

गुल्मी जिल्लाको मान-चित्रमा उच्चशिखरको रूपमा र धार्मिक दृष्टिवाट पनि ऋष्यश्रृङ्ग मुनिको तपोभूमिको रूपमा परिचित रेसुङ्गा पर्वतको हाराहारीमा जस्तै भएर दिब्रुङ् पर्वत रहेको छ। यसको आफ्नै सौन्दर्य र छटाले भरिपूर्ण काखमा अवस्थित यस पावन आश्रमको अध्यात्म पोषक वातावरणमा हजारौं साधकहरूले ज्ञान र भक्तियोगको परम लाभ ग्रहण गरेर आपनो पारमार्थिक जीवनलाई उन्नत एवं आनन्दमय बनाइरहेका छन्।

प्राचीन ऋषिकुल एवं गुरुकुलहरूको स्मरण मराउने यस पावन आश्रममा संचालन हुने दैनिक भगवत्पूजन, हवन, पाठ, कीर्तन र सत्संगले व्यावहारिक झोंज झमेलाहरूले थकित भएका मानिसहरूलाई बेला बखतमा आध्यात्मिक सुख-सागरमा डुबुल्की लगाई जीवनलाई सार्थक र उद्देश्यमूलक बनाउनमा प्रेरणाको श्रोतको काम गरेको छ।

नेपाल विश्वको एकमात्र हिन्दू अधिराज्य हो। विश्वका विविध धर्महरू मध्ये हिन्दू धर्म एउटा आदर्श र उत्कृष्ट धर्म मानिन्छ। सत्यं, शिवं र सुन्दरं को स्वर्णिम सन्देश अरु कुनै धर्मले दिन सकेका छैनन्। हिन्दू धर्म र संस्कृतिको जन्म स्थल नेपालमा यसको विकास जुन् रूपमा हुनुपर्ने हो त्यस रूपमा हुन सकेको देखिंदैन। छिमेकी भारतवर्षमा विविध धर्महरू को बाहुल्य छ र पनि हिन्दुत्व को परिचय गराउने थुप्रै संघ-संस्थाहरू मजबूत भै सकेका छन्। आर्य धर्म र संस्कृतिको अवलम्बनमा शास्त्रीय सिद्धान्त र मान्यताहरूको प्रतिपालनमा विशेष ध्यान पुग्नु पर्दछ। हामी नेपालीहरू आर्य संस्कृतिका पूर्ण अनुयायी हुँदाहुँदै र वैदिक सनातन धर्मका पूर्ण पक्षपाती हुँदा हुँदै पनि शास्त्रोक्त सिद्धान्त एवं निर्देशन अनुरूपको आचरण गर्न सकिरहेका छैनौं। वेदाध्यायी ब्राह्मण कुलमा जन्मेर पनि मांसवलि चढाउने वा मांसाहारी हुने जस्ता विपरीत-धर्मी आचरणहरू नेपाल भरि नै देखिन्छन्। ती आचरणहरू निन्दनीय हुनुपर्नेमा मान्यताप्राप्त परंपराको रूपमा समाजमा प्रचलित भइरहेका छन्। यसो हुनाको एउटा मुख्य कारण अशिक्षा हो। शिक्षाको अभावमा मानिस रूढीग्रस्त बन्न पुगेको छ। पूर्वीय दर्शनको दिग्दर्शन गराउने विद्वान्हरूको अभावले पनि हाम्रा आचरण, आहार-विहार, चिन्तन प्रणाली आदि सबै कुराहरूमा संकीर्णताले घेरा हालेको छ। सभ्य संस्कार बन्न सकेको छैन। समाजको यस प्रकारको वस्तु-निष्ठ सत्यलाई गुरु परमानन्दज्यूले राम्ररी हृदयंगम गर्नुभएको थियो।

आश्रममा आयोजना हुने विशाल यज्ञहरूको माध्यमबाट होस् वा भक्तहरूको घर गाउँमा आयोजित सत्संगको माध्यमबाट होस् वैदिक सनातन धर्मको मूल मर्म र रहस्य को स्पष्ट उद्घाटन गरी सुषुप्त बनिरहेको हिन्दू दर्शन र चिन्तनलाई मूर्त्त गराउनु लाई उहाँले एउटा अभियान बनाउनु भएको थियो। दिब्रुङ्को आश्रमवाट- योग-साधना प्राप्ति पश्चात् भक्तहरूको आग्रहमा गुरुजी गाउँ हरूमा पनि जाने गर्नुहुन्थ्यो। जुन गाउँमा गए पनि भक्त हरूको भीडले उहाँलाई



घेरी हाल्थ्यो। त्यस अवस्थामा आफ्नो सरल तथा सरस शब्द-शैलीयुक्त प्रवचनको माध्यमबाट धर्म र यसको रक्षाको बारेमा विशद व्याख्यान दिनुहुन्थ्यो। गृहस्थीको आचरण संबन्धमा र गृहस्थी भएर पनि पारमार्थिक सुख प्राप्तिका लागि उनीहरूले गर्नुपर्ने धार्मिक अनुष्ठानहरूका संबन्धमा उहाँले दिएका दिव्य उपदेश हरूले हिन्दूधर्मका अनुयायीहरूमा प्रबल धार्मिक जागरण उत्पन्न गरेको छ। जहाँ जहाँ गुरुजीका पवित्र चरणहरू पुगे त्यहाँ त्यहाँ वेद-पुराणहरूको पारायण, साधु सन्तहरूको सेवा, विद्वान् हरूको कदर, दीन दुःखी उपर दया, शंख घण्टहरूको सुमधुर नाद जस्ता कार्यहरू प्रतिस्पर्धाको रुपमा आयोजित हुन्थे। धर्मको, देव देवी, र संपूर्ण प्राणीहरूको जय जयकार हुन्थ्यो।

गुरुजीका जीवनमा पाइने विशेषताहरू मध्ये एउटा प्रमुख विशेषता उहाँको शिक्षाप्रतिको अनुराग पनि हो। आफ्ना ब्रह्मज्ञानी गुरुदेव (छवि प्रकाशानन्दज्यू) को सेवा गर्दागर्दै उहाँको अन्तःकरणमा समस्त ब्रह्मविद्याको आविर्भाव भएको थियो। उहाँले विद्याको महत्त्वलाई राम्ररी बुझ्नुभएको थियो। त्यसै भएर नै विद्यालय र विद्यार्थीहरू माझ उहाँ अति नै रमाउनुहुन्थ्यो। देशमा प्रचलित आधुनिक शिक्षा प्रणालीबाट मात्र हिन्दू धर्मको रक्षा गर्न सक्दैन। हाम्रा प्राचीन मूल्य, मान्यता र आदर्शहरूको रक्षा गर्ने कुनै योजना आधुनिक शिक्षा प्रणालीमा देख्न पाइँदैन, त्यसैले प्राचीन आर्य संस्कृतिको संरक्षणको निमित्त ऋषिकुलमा आधारित संस्कृत तथा धार्मिक शिक्षामा विशेष ध्यान पुर्‍याउनुपर्दछ भन्ने कुरामा उहाँ प्रतिबद्ध हुनुहुन्थ्यो। तर आधुनिक (अंग्रेजी) शिक्षा दिने शिक्षण संस्थाहरू प्रति उहाँको दृष्टिकोण कहिल्यै नकारात्मक भने रहेन। उहाँले जति योगदान संस्कृत विद्यालयहरू को स्थापनामा दिनु भयो त्यति नै अंग्रेजी हाईस्कूलहरू र क्याम्पसको स्थापनामा र स्थापित विद्यालयहरूलाई आर्थिक एवं भौतिक दृष्टिले सक्षम बनाउनमा समेत अविस्मरणीय योगदान पुर्‍याउनुभएको छ।

गुल्मी, बाग्लुङ, म्याग्दी, पर्वत, नवलपरासी, रूपन्देही, पाल्पा, तनहुँ, चितवन आदि जिल्लाका थुप्रै विद्यालयहरूमा धान्याचल (धान्यपर्वत) हुँदा जनताहरूले ईश्वरीय आनन्दमा समाहित भई गुरुजीको सान्निध्यबाट वेदान्तरसको आस्वादन गर्ने अहोभाग्य प्राप्त गरे भने अर्कातर्फ विद्यालयहरूले आफ्नो आर्थिक एवं भौतिक अवस्थालाई समृद्ध बनाई ज्ञानपिपासु विद्यार्थीहरूको भविष्य उज्जवल बनाउने सौभाग्य पाए।

व्यक्तिगत जीवनको सुख र समुन्नतिको लक्ष्य लिई गाउँ घरका मानिसहरूबाट गरिने सामान्य पूजा-पाठ यज्ञयागादिबाट मात्र हिन्दूत्वको आभास पाइने प्रचलित परंपराले धर्मलाई व्यक्तिगत स्वार्थ पूर्तिको साधनको रूपमा मात्र सीमित गर्दछ। जबकि धर्मको क्षेत्र व्यष्टि मात्र नभई विशाल ब्रह्माण्डकै समष्टिगत दुःख कष्टहरूको निवारण गरी विश्व शान्ति तर्फ लक्षित भएको हुन्छ। पूज्यपाद स्वामीज्यूले संपूर्ण चराचर जगतका प्राणीहरूको एक मात्र मुक्तिको माध्यम 'धर्म' लाई सामाजिकीकरण तर्फ उन्मुख गराउनुभएको कुराहरू उहाँले स्थापना गर्नुभएका आश्रमहरूबाट छर्लङ्ग हुन्छ। उहाँले स्थापना गर्नुभएका आश्रमहरू संपूर्ण समाजका लागि सत्संगका केन्द्र बनेका छन्। दिब्रुङ्को धर्मद्वारी आश्रम, रूपाकोटको नर्मदेश्वर आश्रम, रुद्रवेणीको आश्रम आदि सबै आश्रमहरूले साधुसन्तहरूलाई मात्र आश्रय दिएका छैनन् अपितु ती ती क्षेत्रका संपूर्ण नरनारीहरूले प्रत्येक आश्रमवाट अति दुर्लभ ज्ञान गुरुभक्ति, ईश्वरीय चिन्तन र सत्संग सुमन प्राप्त गरेका छन्। दूर-दूर देशका तसहृदयी साधकहरू आश्रमका नाम सुनेर जब त्यहाँ पुग्छन् उनीहरूले एउटा अद्वितीय सुख र शान्ति को अनुभव गर्दछन् भने सबै साधकहरू र यात्रीहरू त्यहाँबाट फर्कँदा धर्म समाज कल्याणको निमित्त गर्नुपर्दछ; व्यक्तिगत स्वार्थ साधनाको निमित्त होइन भन्ने स्वतःस्फूरित प्रभाव आफ्नो हृदयमा लिएर फर्कन्छन्।





आफ्नो जीवनको अत्यन्त छोटो अवधिमा उहाँले यति धेरै आश्रमहरूको स्थापना गरिदिनु भयो कि त्यस परिस्थिति र अवस्थामा त्यति धेरै गर्न सक्ने महापुरुष नेपालमा उहाँ अद्भूत र अद्वितीय नै हुनुहुन्छ। उहाँले स्थापित गरेका प्रत्येक आश्रमहरूलें संस्थागत रूपबाट हिन्दू धर्मको महान् आदर्शलाई चिनाउने प्रसंशनीय योगदान दिएका छन्। यी आश्रमहरू मानिसलाई योगी (जोगी) बनाउनमा उद्देशित छैनन् बरु वर्णाश्रम व्यवस्था अनुरूपका ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास यी प्रत्येक अवस्थामा मानव मात्रले पालन गर्नुपर्ने कर्तव्यहरूको दिग्दर्शन गराई प्रत्येक अवस्थामा मानिसलाई ईश्वराभिमुख गराउँदै तत् तत् अवस्थामा सुखी र खुशी तुल्याउने उपायहरूको उद्घोष भइरहेका छन्। यद्यपि भारतमा र नेपालमा संचालित आश्रमहरूको व्यवस्थापकीय पक्षको तुलना हुन सक्दैन, नेपाली भक्तहरू वा दाताहरूको सामाजिक, सांस्कृतिक र आर्थिक पृष्ठभूमि र भारतका दाताहरूको उक्त पृष्ठभूमिमा नै व्यापक अन्तर छ, त्यसले गर्दा तदनुकूल बृहत् प्रवन्धको परिकल्पना गर्न सकिंदैन तर पनि नेपाली समाजको परिवेशमा स्थापित यी आश्रमहरूमा साधु, सन्त एवं यात्रीहरूको भोजन र आवासको लागि आश्रम परिसरमा परिमित भए पनि व्यवस्थापन गरिनुले अतिथि सत्कारको हाम्रो संस्कृतिलाई झल्काउँदै उत्कृष्ट व्यवस्थापन तर्फको आकांक्षाको संकेत मिल्दछ। घरद्वार श्रीसंपत्तिको मोहबाट मुक्ति लिई सांसारिक प्रपञ्चबाट अलगिएका योगीहरूले आफ्नो आश्रममा आएका गृहस्थी पाहुनाहरूलाई कुनै न कुनै वस्तुबाट सत्कार गर्नुबाट गृहस्थीहरूलाई ठूलो शिक्षा प्राप्त भएको छ।

स्वामीजी एक अद्भूत विभूति नै हुनुहुन्थ्यो। कुनै पनि मानिस एक पटक उहाँको नजीक पुगेपछि परमश्रद्धालु भक्त बनेर फर्कन्थ्यो। उहाँको वाणीमा सुमधुर अद्भूत रस रसाउँदथ्यो। उहाँका आँखाहरूमा चमक थियो। मानिसलाई एकपटक हेरेपछि उसका अन्तर्मनमा पुग्ने अद्भूत दिव्य शक्ति थियो। कस्तै नास्तिकहरू पनि उहाँको तेजोमय व्यक्तित्व बाट हतप्रभ हुन्थे। के वालक, के वृद्ध, के धनी, के गरीब, के परिचित, के अपरिचित सबैसंग समदर्शी बनेर सबैका सहृदयी मित्र बन्न सक्ने अद्भूत कला उहाँमा विद्यमान थियो।

व्यवहारिक प्रपञ्चबाट विरक्तिएका मानिसहरू मात्र उहाँका अनुयायी थिए भन्ने कुरा होइन। सामाजिक जीवनका विभिन्न क्षेत्रमा लब्ध प्रतिष्ठित व्यक्तिहरू समेत उहाँका अनुचर भएका थिए। जुनसुकै अनुष्ठानमा जाँदा उहाँले प्रसिद्ध विद्वानहरूलाई आफ्नो साथमा लिएर हिंड्नुहुन्थ्यो। उहाँ हिन्दू धर्म भित्रको अनेकतालाई एकताको सूत्रमा आबद्ध गरेर संपूर्ण संप्रदायका सन्त महन्त एवं विद्वान्हरूलाई एउटै मञ्चमा राखेर धार्मिकताको शंखनाद गर्ने एक अद्भूत व्यक्ति हुनुहुन्थो।

जनताको मत बटुले निहित स्वार्थ राख्ने कुनै श्रोत या धनले संपन्न राजनैतिकले पनि त्यति सामाजिक काम गर्न सक्दैनन् जति गुरुजीले गर्नुभएको थियो। जुन् जुन् समाज र समुदायले उहाँको खोजी गऱ्यो ती ती ठाउँमा पुगेर समाजले आवश्यक ठानेका कुराको परिपूर्तिका लागि उहाँ अनवरत संलग्न रहनुभयो। पिउने पानी, बाटो घाटो, विद्यालय, धर्मशाला, चौतारो आदि कुनै पनि कुराको निर्माणमा धार्मिक यज्ञ अनुष्ठानको आयोजनाबाट आफूलाई प्राप्त हुने दक्षिणाको भागबाट सामाजिक निर्माणका कार्यहरू संपन्न गराउने यस्ता परमत्यागी योगी पाउनु दुर्लभ नै हुन्छ। वास्तबमा भन्ने हो भने उहाँको जीवनको मूल आदर्श नै त्याग थियो। त्यही त्यागले नै उहाँलाई उच्चताको यस शिखरमा पुऱ्याएको हो। आफ्ना भक्त वा शिष्यहरूले भेटी स्वरूप चढ़ाएको दक्षिणा पनि उहाँले आफूसंग राख्नुभएन। जुन ठाउँमा त्यो प्राप्त भयो त्यही ठाउँको कुनै सामाजिक संस्थालाई अर्पण गरेर संस्थाभित्र शिवस्वको प्रत्यारोपण गर्नुहुन्थ्यो। समाज सेवाको निमित्त मानिसमा अध्यात्म-बीज रोपिनु पर्दछ भन्ने उहाँको विचार थियो। भौतिक भोग विलास र आडम्बरमा लीन भएका मानिसहरूबाट

समाजको कल्याण हुन सक्दैन। उनीहरूमा परोपकार र परमार्थ चिन्तनको लेश पनि रहेको हुँदैन। कण-कण. र घटघटमा ईश्वर को अंश देख्न सक्ने धार्मिक पुरुषले मात्र समाजको वास्तविक सेवा गर्न सक्दछ।

ईश्वरको महती अनुकम्पाले मैले पनि गुरुजीको अति सन्निकट भएर उहाँका दिव्य उपदेशहरूको श्रवण र मनन गर्ने मौका पाएको छु। उहाँका उपदेशहरूमा आध्यात्मिक चिन्तन पाइन्छ। उहाँका धारावाहिक प्रवचनहरूमा ज्ञान गंगा बगिरहेको हुन्छ। उहाँ संग नजीकै बस्ता चैतन्यलोक तुल्य अद्भूत शान्तिको अनुभूति हुन्छ। उहाँका प्रत्येक वाणीहरू जीवनका समस्याहरूको निदानमा प्रेरक हुन्छन्। उहाँले जीवनमा अनेक आरोह अवरोह पार गर्दै आफूलाई एउटा प्रमुख सन्त व्यक्तित्वको रूपमा राष्ट्रमा प्रतिष्ठित गर्नुभएको छ। नेपाल सन्त समाजको अध्यक्षको रूपमा रहेर राष्ट्रलाई संन्त हरूको नतृत्व प्रदान गर्नुभएको छ। सन्त समाजको अध्यक्ष बन्नु आफैंमा कुनैं आश्चर्य वा अनौठो कुरा होइन तर त्यस तहसंम उहाँलाई पुऱ्याउने उहाँका कृत्यहरू प्रत्येक व्यक्तिका लागि अनौठा लाग्न सक्छन् अनि तिनै अनौठा कृत्यहरूले प्रेरणादायी श्रोत प्रदान गर्दछन्। उहाँका प्रत्येक कार्यमा तपस्या, योग र साधना प्रतिबिम्बित छन्। यसले हामीलाई कुनै पनि कार्यको सफलताको शिखरमा पुग्न साधना र तपस्याको बोध गराउनंछ।

बेला बखतका प्रवचनहरूमा राष्ट्रिय चिन्तनका कुराहरू उठाएर उहाँले राष्ट्रिय चिन्तनको रूपमा पनि आफूलाई उभ्याउनुभएको छ। आजको मानिस धर्म र ईश्वरबाट किन यसरी विमुख हुँदै गएको छ। आज देशभरि हिंसा र अधर्म व्याप्त छ, दुराचार र असत् बढ्दो अवस्थामा छ। छल-कपट र बेइमानीले चरमचुली छोएको छ। पिता-पुत्र, पति-पत्नी, भाइ-भाइमा झगड़ा भइरहेको छ। खान-पान, रहन-सहन, भेष-भूषा, आचार विचार सबैमा विदेशको प्रभाव परेको छ। हिन्दू भनेर चिन्न सकिने कुनै चिह्न नै छैनन्, संस्कृतिको लोप भइरहेको छ, यो सम्पूर्ण राष्ट्रकै चिन्ताको विषय हो। तर राज्यले यी कुराहरूमा अलिकति पनि चिन्ता लिनुको सट्टा यिनैको प्रोत्साहनमा ध्यान दिएको कुरामा गुरुजीले ठूलो चिन्ता प्रकट गर्नुहुन्थ्यो। कसैले हिन्दू धर्मलाई कुनै चुनौती दिन्छ भने सारा साधु-सन्तहरू यसको रक्षाका लागि जुर्मुराउने छन् जस्ता विचारोत्तेजक प्रवचनबाट सबैलाई सचेत मालुम हुन्थ्यो।

उहाँको दुःखद अवसानबाट राष्ट्रकै अपूरणीय क्षति हुनपुगेको छ। यस्ता महापुरूषहरूको जन्म सधैं हुँदैन, शताब्दियौंमा पनि नहुन सक्छ। तसर्थ वर्तमानमा हाम्रो प्रमुख दायित्व गुरुजीका सम्पूर्ण उपदेशरूको संकलन गरी ती उपदेशहरूलाई मानवजातिको समुन्नति र समृद्धिका लागि चरितार्थ गर्नु हो। ब्रह्मनिष्ठ गुरुदेवका योग सिद्ध अमृत वर्षाको संग्रह गर्ने कुनै पनि व्यक्तिको अल्प पुरूषार्थ पनि व्यर्थ जाने छैन। इति।





# स्वामी परमानन्द, एक असल व्यक्तित्व

**प्रेम छोटा श्रेष्ठ**
कालिका न. पा. बाग्लुङ्

देदीप्यमान हिमशिखरको नामबाट प्रसिद्ध भएको धवंलागिरि अञ्चल भौगोलिक दृष्टिले विकट भएपनि पौराणिक र ऐतिहासिक महत्त्वले परिपूर्ण छ। जस्को उदाहरणमा राजा जडभरत, पुलस्त्य ऋषि, जैमिनि ऋषि र गलेश्वर बाबा जस्ता महापुरुषहरूको नाम लिन सकिन्छ। यस्तो महत्त्वलाई आत्मासात् गर्दै यस क्षेत्रमा आएका महापुरुषका जीवनको सम्बन्धमा सोध खोज गर्नु आवश्यक छ।

यसै सिलसिलामा वर्तमान युगका सिद्धयोगी आजीवन ब्रह्मचारीका रूपमा परिचित हुनुभएका श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराज हाम्रा लागि गौरवका प्रतीक हुनुहुन्छ। वहाँको सामाजिक योगदान र त्यागमय जीवनका महत्त्वपूर्ण पक्षलाई प्रस्तुत गर्नु प्रशंसनीय कार्य हो।

स्वामी परमानन्दज्यू महाराजको जीवनीबाट आजको समाजले ठूलो मान्छे हैन, असल मान्छे कसरी बन्न पर्छ भन्ने पाठ सिक्नुपर्दछ। ठूलो मान्छे बन्न गाह्रो छैन तर असल मान्छे हुनलाई निकै शिखर उक्लनु पर्छ। आजको सन्दर्भमा समाज र राष्ट्रमा आदर्शको नाममा आफ्नो नाम बिकाएर उदाहरण बन्न चाहने व्यक्ति प्रसस्त पाइन्छन्। तर यदि तिनले सही अर्थमा आफू जन्मेको थलो, समाज र राष्ट्रोत्थानलाई सर्वोपरि स्वार्थ ठानी काम गरेनन् भने ती ढोंग मात्र ठहर्छन्। यस्ता मानिस कहिल्यै पनि सत्यताको नजीक पुग्न सक्दैनन्

जस्ले जीवनमा आफ्नो लागि भनेर केही पनि सोचेन र सेवा नै धर्म हो भन्ने मूलमन्त्रलाई सदैव पालन गऱ्यो, त्यस्ता स्वामी परमानन्दज्यूका त्यागमय जीवनका उल्लेखनीय झिल्काहरू आज हाम्रो सामु प्रत्यक्ष छन्।

आज संसारका तिनै महापुरूषको नाम इतिहासमा अङ्कित छ जसले आफ्नो लागि होइन समाज र राष्ट्रकालागि सोच्यो। साथै आत्मबोध र लक्ष्यप्राप्तिका निम्ति हमेशा समर्पित हुने व्यक्तिले नै निर्वाण प्राप्त गरेकोहुन्छ। यसै क्षेत्रमा अग्रसर पूज्य स्वामीज्यू महाराज आज हाम्रो सामु हुनुहुन्न तर पनि वहाँको उच्च चिन्तन र विनयशील सच्चरित्रले गर्दा वहाँ सबैका हृदयमा सधैंको लागि अमर हुनुहुन्छ।

# व्योमकूट (बिहूँ) मा स्वामीज्यूको योगदान

**हरिप्रसाद श्रेष्ठ**

कालिका न. पा. बाग्लुङ्‌वजार

आफ्ना धवल कीर्तिको बिहानीले केबल बिहूँ मात्र होइन अपितु समस्त पर्वतीय भेगलाई सजाउने प्रातः स्मरणीय ब्रह्मलीन श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराजका सत्प्रयासबाट भएका लोकमाङ्गलिक कार्यहरु यहाँ उल्लेख गर्नु सान्दर्भिकै ठहर्ला। वहाँका यी अमूल्य पवित्र कार्यहरू समयको प्रवाहमा लुप्त हुन नपाऊन् र यसवाट भावी सन्ततिले सत्प्रेरणा पाउन् सकून् भन्ने मेरो अभिप्राय हो।

सर्वप्रथम स्वामीज्यूको सक्रियतामा बिहूँ-६ रामकोटको शिखरमा ग्रामीण जनताको सहयोगवाट २०३० सालमा शिवमन्दिरको नवनिर्माण गरी शिवलिङ्गको प्रतिष्ठा र दैनिक पूजाको सुव्यवस्था भयो।

२०३३ साल मार्ग महिनामा शिवमन्दिरकै प्रांगणमा विश्वशान्ति धान्याचल यज्ञ सम्पन्न भयो। यज्ञशेष रकम अक्षयकोषमा जम्मा गरी सोको व्याजवाट संञ्चालन हुने गरी ''श्रीपरमानन्द वेदवेदाङ्गसंस्कृत विद्यालय''को स्थापना भयो। श्री पं० सिद्धिनाथ पाण्डेय लगायतका विद्वान् गुरुहरूले वेदव्याकरण र ज्योतिष शास्त्रको अध्ययन गराउनुहुन्थ्यो। त्यतिवेला २०० जना सम्म छात्रहरू त्यहाँ भरना भई पढ्दथे। अहिलेको छात्रसंख्या लगभग ५० छ।

उपरोक्त कार्यसञ्चालन गर्न स्वामीजी महाराजकै अध्यक्षतामा ''वेदोक्त धर्मसेवा समिति''को गठन भएको हो र अहिलेसम्म सो समितिद्वारा नै सम्पूर्ण कार्यहरू सञ्चालित छन्। शिवमन्दिरको नाममा २३६ रोपनी वन समेतको जग्गा दर्ता भएको छ। वन संरक्षण समितिद्वारा वनको संरक्षण पनि भएको छ। वन्य पशुपक्षी हरा-भरा वनस्पतिहरूले यहाँको शोभा वढाउँछन्॥ मन्दिरमा नित्यपूजा सञ्चालन गर्न गुठीको पनि व्यवस्था छ।

मद्रासमा वस्ने यसक्षेत्रका श्रद्धालु भक्तहरूले संयुक्तरूपमा, पटक पटक गरी शिवजी, गणेश, लक्ष्मीनारायण, आदिका बहुमूल्य मूर्तिहरूल्याई शिवमन्दिरमा प्रतिष्ठापित गराएका छन्। यो काम २०३९ साल जेष्ठ ११ गते भएको थियो। अत: प्रतिवर्ष यसै दिन यहाँ ठूलो मेला लाग्दछ। यस मेलामा यहाँको विशिष्ट सांस्कृतिक झलक देख्न पाइन्छ।

यस आश्रममा समय समयमा चल्ने पूजा-आजा चाड-पर्व यज्ञ यागादि र सत्सङ्गको सञ्चालन गर्दै आउनुभएका पूज्य गुरुजीका शिष्य स्वामी दुर्गानन्द सरस्वतीजी रहनुहुन्छ। पूज्य गुरुमहाराजको प्रतिनिधित्व गर्दै यहाँले यसक्षेत्रका विकासकार्यलाई सघाउ पुऱ्याउनु भएको छ॥

वि. सं. २०४५ सालमा सप्त-पुराण-पारायण र प्रवचन कार्यको आयोजना गरियो। सो यज्ञबाट बचेको रकम केही मन्दिरमा जम्मा गरी अरु स्थानीय श्रीअमर माध्यमिक विद्यालय बिहूँलाई प्रदान गरिएको थियो। यस प्रकार स्वामीज्यूले आश्रमको समीपवर्ती गाउँका खानेपानी विद्यालय, बाटो आदिलाई समुन्नत पारी यस क्षेत्रको कायाकल्प नै गराउनुभयो।

२०५१ सालमा गुरुमहाराजले अवतार लिनुभएको ठाउँमा मर्यादा पुरुषोत्तम भगवान् रामको मन्दिर बनाउने सदिच्छा भक्तहरूको हृदयमा उत्पन्न भयो र प्रभुकै कृपाले सङ्कल्प पूरा भई रामको मन्दिर बन्यो। अहिले त्यहाँ प्रतिष्ठापित भगवान् रामको नित्य-पूजा आराधना चलिरहेको छ। अति सुन्दर यस स्थानमा समय-समयमा मेला लाग्दछ।

जुन शिक्षाले मानिसको चरित्र निर्माण हुन्छ मातृ पितृ गुरुजन एवं मान्यजनको आदर सत्कार गर्न र प्राणीमात्रमा परमेश्वरको निवास छ भनी सेवाकार्य गर्न सिकाउँछ, त्यस्तो शिक्षाको आज उपेक्षा गरिँदैछ। यसको परिणाम पनि समाज या राष्ट्रले भोगी रहेकै छ। तथाकथित शिक्षा दिने र प्रमाणपत्र दिने शिक्षालयहरू पर्याप्त मात्रामा छन् तर सो अनुरूपको शिक्षाको गुणस्तर भएन। चरित्र निर्माण वा शिष्टाचार आदि सद्गुणहरू हराउँदै गए।

यस्तो राष्ट्रीय संकटको अवसरमा पूज्य स्वामीज्यूबाट जो शिक्षा संस्कृतिको प्रचार गर्ने अपूर्व कार्य गर्नुभयो त्यो वहाँले समाजलाई दिएको अविस्मरणीय उपहार हो। यस कार्यबाट निश्चित अवधिका लागि नभई अनन्तकाल संमका लागि सनातन वैदिकधर्मको उज्वल ज्योति बलिरहने छ। स्वामीज्यूका अथक प्रयासवाट स्थापित भएका यी आश्रमहरूको संरक्षण संवर्द्धन गर्नु हामीहरूको प्रमुख कर्तव्य हो।

श्रद्धेय स्वामीज्यूको जीवनलाई मनन गर्दा वहाँ एक सच्चा त्यागी तपस्वी र निष्काम कर्मयोगी हुनुहुन्थ्यो। परोपकारकै लागि वहाँको जीवन व्यतीत भयो। अहिले वहाँको अभाववाट राष्ट्रकै अपूरणीय क्षति हुन गएको छ। परमत्यागी तपस्वी र वैदिकधर्मका संरक्षक ब्रह्मलीन स्वामीजी महाराजको स्मृतिमा सादर श्रद्धाञ्जलि अर्पण गर्दछु।



# स्वामीज्यूको संरक्षणमा हुर्केको संस्कृत पाठशाला

**हेमराज शर्मा पौडेल**
अध्यक्षः
लक्ष्मी नारायण संस्कृत पाठशाला (वेद विद्याश्रम)
पैयूँपाटा, बलेवा, बाग्लुङ

(बाग्लुङ जिल्ला स्थित बलेवा पैयूँपाटा सातविशे भन्ने ठाउँमा पूज्य स्वामीज्यूको प्रयासले स्थापित एवं सञ्चालित विद्यालयको संक्षिप्त परिचय)

हाम्रो यस क्षेत्रमा संस्कृत पाठशालाको स्थापना २००६ सालमा नै भएको हो। त्यसको उन्नति गर्ने क्रममा २०१४ सालमा शिक्षकको पनि व्यवस्था मिलाइयो। अन्य विषय पनि समावेश गर्दा संस्कृत विषय गौण हुन पुग्यो। संस्कृतको पनि यथावत् पढाई गर्ने भनी ०१९ सालमा छुट्टै दरबन्दी कायम गरिएको थियो, तर युगको प्रभावले संस्कृतका कर्मकाण्ड, व्याकरण, ज्योतिष आदि विषयको पढाइलाई अगाड़ि बढाउन सकिएन। त्यसपछि पैयूँपाटा संस्कृत पाठशाला म्याग्दीमा सञ्चालन गर्न खोजियो तर त्यो पनि सफल भएन। यस अवसरमा परमपूज्य श्री१००८ स्वामी परमानन्दज्यू महाराजबाट बिहूँ रामकोटमा छुट्टै संस्कृत वेद विद्यालयको सञ्चालन भएको र त्यसको प्रगति भएको देख्दा हामीलाई पनि पुनः संस्कृत शिक्षाप्रति प्रेरणा मिल्यो।

पूज्य स्वामीज्यूको सत्सङ्गबाट बलेवाको जैमिनिघाटमा २०४०-२०४१ देखि ''जैमिनि संस्कृत पाठशाला''को सञ्चालन सुरुभयो। पूज्य स्वामीज्यूकै योगदानबाट समय-समयमा पञ्चपुराण, धान्याचक्, लक्ष्य, हवन आदि यज्ञको सञ्चालन गरियो र त्यसबाट जुटेको रकमले विद्यालयको स्थिति मजबूत बन्यो। आज अक्षयकोषमा रहेको यही रकमको ब्याजले दमेक-१ शिवपुरीमा सो पाठशाला चलिरहेको छ।

स्वामीज्यूले सत्सङ्गक्रममा -पैयूँपाटामा पनि यस्तै संस्कृत पाठशाला सञ्चालन गर म मद्दत गर्छु भनी आज्ञा भएकोले २०५० सालमा लक्ष्मीनारायण संस्कृत पाठशाला(वेद विद्याश्रम)को स्थापना गरियो। वहाँकै आज्ञा अनुसार- २०५१ सालमा धान्याचल एवं लक्षहोम महायज्ञको आयोजना गरियो र यज्ञशेष रकम यो पाठशालाको सञ्चालनमा नै लगाइयो। गुरुमहाराजको सत्प्रेरणा र जनसहभागिताबाट चलिरहेको यस पाठशालामा हाल ४५ जना विद्यार्थीहरू संस्कृत वेदवेदाङ्गको शिक्षा प्राप्त गरिरहेका छन्।

यस संस्थाका संस्थापक एवं संरक्षक यतिकुलभूषण श्रीस्वामीज्यू महाराज ब्रह्मलीन हुनुभए पछि षोडशीको अवसरमा हरिहर मन्दिर देवघाटधाममा श्रद्धाञ्जलि समर्पण गर्न हाम्रो पाठशाला परिवार पनि उपस्थित थियो। भावपूर्ण हार्दिक श्रद्धाञ्जलि चढ़ाएका थियौं। पूज्य गुरुमहाराजको उत्तराधिकारीको स्थानमा विराजमान श्री १००८ स्वामी ज्ञानानन्द सरस्वतीजी महाराजबाट आगामी दिनमा यस पाठशालाले संरक्षण प्राप्त गरोस्, भनी पूज्य स्वामीज्यूका श्री चरणमा सादर अनुरोध चढ़ाउँछौं।





# ❋ श्रद्धाका केन्द्र : स्वामी परमानन्द गुरुमहाराज ❋

**पूर्णबहादुर भुजू**
सचिव : हरिहर संन्यास आश्रम
देवघाटधाम

मानिसलाई कुनैपनि मान, प्रतिष्ठा, धन आदि भौतिक वस्तुले वास्तविक शान्ति दिन सक्दो रहेनछ। जीवनको लामो सरकारी सेवापछि आत्मशान्तिका लागि देवघाट क्षेत्रमा गई आध्यात्मिक चिन्तन गर्ने तीव्र इच्छाले पहिलो पटक २०४८ सालकोपुषमा देवघाट तीर्थको दर्शन गर्ने सौभाग्य मलाई प्राप्त भयो। देवघाट जस्तो पवित्र र रमणीय स्थल देख्दा कसको मन नलोभिएला र? मलाई त्यहीं बस्ने इच्छा जागेर आयो। घरेडीका लागि यत्रतत्र बुझ्न थालें। तत्कालीन गलेश्वर आश्रमका पीठाधीश पूज्य गुरुदेव श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराजले दिए विनामूल्य नै जग्गा प्राप्त हुन्छ भन्ने सुनेर वहाँ समक्ष पुगें। वहाँको दिव्य तेज र ओजले धपक्क बलेको मुहारको दर्शनले जग्गा माग्न त परै जाओस् अगाडि सरेर बोल्ने हिम्मतसम्म पनि आएन। सौभाग्यवश २०४८ सालको माघे संक्रान्तिमा देवघाट धाममा धान्याचल यज्ञको आयोजना गरिएको रहेछ। त्यस कार्यक्रममा नियुक्त कोषाध्यक्ष अस्वस्थ भएकोले गुरुमहाराजले सो कार्यको जिम्मेवारी मलाई दिनुभयो। त्यसै अवसरमा बहाँको सत्सङ्गबाट प्रभावित भई जीवनको वास्तविक मार्गलाई भुलिरहेको अनुभव मलाई भयो। यता आश्रममा व्यवस्थित रूपमा हिसाब राख्नका लागि कुनै व्यक्तिको आवश्यकता रहेछ। उक्त धान्याचलका हिसाब-किताबको पारदर्शिताबाट प्रभावित भई गुरुज्यूले तत्काल आश्रममा तपाईं जस्ता व्यक्तिको खाँचो थियो, परमात्माले पठाइदिनु भएछ भन्दै त्यसै दिनबाट आश्रमको सचिवालयको सम्पूर्ण जिम्मेवारी मलाई सुम्पिनुभयो। त्यसै अवसरबाट स्वामीज्यूको सान्निध्यमा रही यस आश्रममा सेवागर्ने सौभाग्य प्राप्त भयो जुन् कार्य अद्यावधि विद्यमान छ।

धर्म र संस्कृतिको पुनर्जागरण, मठ-मन्दिरको निर्माण तथा जीर्णोद्धार, विद्यालय सञ्चालन आदि व्यवस्था गर्नु वहाँका जीवनका प्रमुख कार्यहरू हुन् भने देवघाटलाई उदाहरणीय धार्मिक क्षेत्रको रूपमा विकसित गरी यहाँ आउनेहरूका लागि निवास र अन्नक्षेत्रको स्थापना गर्ने, तथा विशिष्ट गुरुकुल विद्यालय संचालन गर्ने लक्ष्य समेत स्वामीज्यूले राख्नुभएको थियो।

स्वामीज्यू सिद्ध पुरुष हुनुहुन्थ्यो। वहाँले गर्नुभएका संकल्पहरू निर्विघ्न रूपमा अति छिटो नै सम्पन्न हुन्थे। देवघाट स्थित हरिहर संन्यास आश्रमदेखि लिएर वहाँबाट निर्माणभएका मठ, मन्दिर, विद्यालय तथा अन्य सामाजिक

सेवाका कार्यहरू यसका ज्वलन्त उदाहरण हुन्। वहाँ यति शान्त, सरल र आकर्षक व्यक्तित्वका धनी हुनुहुन्थ्यो कि वहाँका अगाडि पर्ने जस्तो सुकै मूर्ख व्यक्ति पनि तत्काल नम्र भइहाल्दथ्यो। मृगौलाको रोगले पीडित हुँदा पनि आफ्नो पीडा कहिल्यै व्यक्त गर्न चाहनुभएन। जीवनमा वहाँले कसैको आशा र माग अपूर्ण छाड्नु भएन। वहाँको अवस्थालाई हेरेर भक्तहरूले विशेष अनुरोध गरी उपचार गर्न मद्रास पठाइयो। त्यहाँको उपचार पश्चात् देवघाटमा फर्के पछि पनि निको नभएकाले पुनः भक्तहरूको विशेष आग्रह पश्चात् काठमाण्डौ लगियो। त्यतिखेर आफूलाई वहाँका दर्शनबाट ठगिएको संझी म पनि काठमाण्डौ गुरुमहाराजको दर्शन गर्न पुगें। वहाँबाट उपदेश हुँदाहुँदै अचानक वाक्य बन्द भयो। विधिको विधान भनौं या के भनौं, जहाँ पनि राम्रो वस्तुको र व्यक्तिकै खाँचो हुँदो रहेछ। त्यसैले होला २०५३ साल, माघ १८ गतेका दिन श्री पशुपतिनाथको सान्निध्यमा वहाँको पार्थिव शरीर सदाका लागि अस्ताउन पुग्यो। यस्ता परम श्रद्धेय, परमपूजनीय, ब्रह्मलीन गुरुमहाराजका चरणकमलमा हार्दिक सभक्ति श्रद्धाञ्जलि अर्पण गर्दछु।

## ❋ लोकोद्धारक धर्ममूर्ति गुरुमहाराज ❋

**रामकृष्ण पन्त**

रूपाकोट, गुल्मी

तपोभूमि नेपालको उत्तराखण्ड व्योमकूट (बिहूँ) मा लोकोपकारका निमित्त अवतरित हुनुभएका परमश्रद्धेय स्वामी परमानन्द सरस्वती गुरुमहाराज नेपाल जननीका भाग्यवान् सपूतको रूपमा चिनिनुहुन्छ। जीवनको प्रारम्भिककालदेखि नै माता-पिताको काख र सांसारिक भौतिक पदार्थ प्रति अनास्था पैदा गराउने सुदृढ वैराग्य धारणा गर्ने स्वामीज्यूलाई निर्जन ऐकान्तिक कन्दरा, छहारी र पहाडी चुचुराका गुफाहरू नै आश्रम स्थल बने। जङ्गली कन्दमूल फल जल आहार बुटाका बोक्रा झुलपात आदिका वस्त्र धारणा, अन्तःकरणमा परमेश्वरको ध्यान, यस्तो कष्टसाध्य तपस्याद्वारा 'एकंब्रह्म द्वितीयं नास्ति' यसश्रुतिवाक्यानुसार जड र चेतनको भेदग्रन्थि भेदन गरी ब्रह्ममयी स्थिति प्राप्त गरी लोकोपकारका निमित्त लोकतिर फर्केको जीवन-भूमिका भक्त समक्ष प्रत्यक्ष नै उपस्थित छ।

गुरुमहाराजबाट ठाउँ-ठाउँमा कर्म र ब्रह्मको उपदेश गर्ने कार्य अविरल गतिले चलिसकेको थियो। त्यही क्रममा अव्यक्त परमेश्वरको प्रेरणा द्वारा यसठाउँका भक्तहरूका आकांक्षा पूर्तिका लागि हाम्रो रूपाकोट गाउँमा पनि आइबक्सियो २०२८ कार्तिक मैनामा। गुरु महाराजको अलौकिक दर्शन पाएका भक्तहरूले नयाँ जीवनको अनुभूति

गरे। त्यसै समयमा रूपाकोट दमुका गैरी पोखरा भन्ने ठाउँमा भव्य सत्संगको आयोजना गरियो गुरु महाराजको आध्यात्मिक सामाजिक भौतिक अनेक रसले युक्त प्रवचन सुन्दा सबै मन्त्र मुग्ध भए, त्यही समयमा नै यो ठाउँमा एक शिवालय र धर्मशाला निर्माण गर्ने निर्देशन पनि दिनुभयो, साथै स्वयंले नै शिलान्यास गर्नु भयो। यहाँ एक ऐतिहासिक कार्य उल्लेख गर्न मन लाग्यो-पवित्र नदी रुद्रावतीको तटमा रहेको खेती गर्न योग्य तर भूक्षयको कारणले केही समयदेखि यता खाली रहेको तीनसय रोपनी जग्गा सामाजिकीकरण गर्ने इच्छाले त्यहाँका जनसमुदायको एक विशेष भेला तयार गरी घोषणा गर्दै भन्नुभयो-यो ठाउँमा एक पोखरी (तलाउ) निर्माण गरी मान-सरोवर नामकरण गरी यो जमिनलाई नून छरी गौचरनमा परिणत गर्न चाहन्छु; तपाईहरू के भन्नु हुन्छ? भन्ने प्रश्न गर्दा सबैले करतल ध्वनिका साथ स्वीकार गरियो। यो महान् कार्यको सम्पूर्ण गुल्मीवासीहरूले प्रशंसा गरे। आज त्यो तलाउ तीर्थको रूपमा र जमीन गौचरतको रूपमा रहेको छ। त्यस पछि यो ठाउँमा अनेक धार्मिक कार्यक्रमहरू र शास्त्रीय दिन चर्याहरू चल्न थाले। दमुकामा शिवालय तयार भएपछि २०३५ मा र २०४२ मा बृहद् दुई धान्याचल महायज्ञहरूको आयोजन गरी अतिथि निवास सन्त निवास आदि निर्माणका साथै गुठी व्यवस्था समेत भयो। अन्त्यमा गुरुकुल (विद्यालय) स्थापनाका लागि शिलान्यास समेत भएको थियो, परन्तु समुद्घाटनकार्य गर्नको लागि भने विधातालाई सह्य भएन, सो कार्य वहाँका गुरु परमश्रद्धेय श्री १००८ स्वामी सत्यप्रकाशानन्द सरस्वतीज्यू महाराजका करकमलद्वारा २०५३ चैत्र ३ गते उद्घाटन गरी पूरा भयो।

त्यही ठाउँ सोतामा राममन्दिरको पनि निर्माण गराई समाजलाई देव भावनामा प्रवेश गराउन ठुलो कृपा गर्नु भएको छ। १० वर्षको अवस्थादेखि नै गुरुमहाराजको सान्निध्य पाई अहिले वियोगको झाडीमा अल्झेको महसूस गर्दा मनमा रहेका अनन्त वेदना प्रकट गर्न सक्दिन।

## ❋ सफल व्यक्तित्वका रूपमा स्वामी परमानन्द ❋

**किशोर कुमार गौतम**

बानेश्वर, काठमाण्डौ

पूज्य गुरुवर स्वामी परमानन्द सरस्वतीज्यू महाराज वैदिक सनातन धर्मका उद्धारक समाज र राष्ट्रका मार्गदर्शक एवं प्रखर व्यक्तित्वका निधि हुनुहुन्थ्यो। गुरुमहाराजले 'सेवा हि परमो धर्मः' भन्ने उक्तिलाई चरितार्थ गर्दै देशका दुर्गम पहाडी भेगदेखि लिएर शहरसम्म यज्ञादि द्वारा समाजलाई धर्मको मार्गदर्शन गराउँदै 'सर्वे भवन्तु सुखिनः सर्वे सन्तु



निरामया:। सर्वे भद्राणि पश्यन्तु मा कश्चिद् दुःखभाग् भवेत्' आदि उत्तम उपदेश गर्दै अज्ञानीलाई ज्ञानी र मूर्खलाई सज्जन बनाउनुभयो।

वास्तवमा गुरुमहाराज थौरै नै समयमा पहाडी कन्दराबाट उठेर समस्त प्राणीमात्रको हित, राष्ट्र-सेवा र धर्म संस्कृतिको रक्षा गर्ने राष्ट्रकै अद्वितीय महान् व्यक्ति बन्न पुग्नुभयो। वहाँले गरेका समस्त काममा दैवी प्रेरणा र ईश्वरीय सहयोग हुन्थ्यो। यथार्थमा महापुरुषहरू भगवान्का अंशावतार हुन्छन्। अत: वहाँका कार्यमा दैवी शक्ति प्राप्त हुनु पनि स्वाभाविकै थियो। यसैले वहाँका कुनै पनि कार्यमा असफलता कहीँ देखिएन। वहाँले यज्ञ आयोजन गरेर यज्ञशेषद्वारा समाजका आवश्यकता अनुसार मठ-मन्दिर, संस्कृत पाठशाला, बाटा, ठाँटी, पौवा, धर्मशाला आदि निर्माण गरी धर्म र समाज सेवाका विशिष्टतम काम गर्नुभयो।

गुरुमहाराज बाल्यादस्थादेखि नै आफ्ना गुरु छवि प्रकाशानन्दका सेवा सहितको सत्सङ्ग, निरन्तर ब्रह्म चिन्तन र योगाभ्यासतिर लाग्दै हिमालयका टाकुरा, र कन्दराहरूमा कन्दमूलमात्र खाएर तपस्या गरी जीवनलाई आध्यात्मिक साधनाको उच्चतम शिखरमा पुऱ्याउन सफल हुनुभयो। वहाँको साथमा लामो समयसम्म रहेर सत्सङ्ग गर्ने र वहाँका कृपाले कार्यक्रमहरूमा सम्मिलित हुन पाउँदा मलाई गौरवको अनुभूति भयो। गुल्मीको चोरकाटे भन्ने ठाउँमा २०५२ सालमा अपूर्व धान्याचल भएको थियो। उक्त यज्ञको उद्देश्य निम्न मा.वि. लाई मा. वि. बनाउनु थियो। उक्त कार्यक्रम एक ऐतिहासिक रूपमा सम्पन्न भयो। त्यस यज्ञबाट त्यहाँ उपस्थित सबैले परम आनन्दको अनुभव गरे, अत: यो ठाउँ पनि आनन्दमा प्राप्त भयो भन्दै यसको नाम पनि गुरुमहाराजको नामबाटै हुनुपर्दछ भनी 'चोरकाटे' भन्ने ठाउँलाई परमानन्द नगर भन्ने नाम दिइयो। आज उक्त स्थान त्यसनामबाट प्रख्यात छ। यस्ता पुण्यात्मा महापुरुषहरूको नामस्मरणले मात्र पनि आनन्द दिने हुँदा ठाउँ-ठाउँमा यस्तै नाम परिवर्तनको आवश्यकता देखिन्छ।

आजीवन राष्ट्रको अटूट सेवा पुऱ्याउने त्यागमूर्ति, महान् तपस्वी, अध्यात्मसाधक, विलक्षण प्रतिभा सम्पन्न, सम्पूर्ण प्राणीका हित-चिंतक, श्रोत्रिय ब्रह्मनिष्ठ पूज्य गुरुमहाराजलाई राष्ट्रिय विभूतिका रूपमा पाउँछौ। तर विधिको विधान आराध्य राष्ट्र-देव श्रीपशुपतिनाथमा असमयमैं लीन भएको देख्नु पऱ्यो। गुरुमहाराज नेपाल सन्त समाजका केन्द्रीय अध्यक्ष, वैदिक धर्म परिषद् नेपालका प्रधान संरक्षक र विश्व हिन्दु महासंघका प्रमुख सल्लाहकार आदि धेरै पदहरूबाट पनि विभूषित हुनुहुन्थ्यो। यस्ता गुरुमहाराज आज हाम्रो बीचमा हुनुहुन्न।

वहाँबाट प्राप्तभएका उपदेश हाम्रो जीवनमा मार्गदर्शक बन्नेछन्, अन्त्यमा ब्रह्मलीन गुरुमहाराजप्रति विश्वहिन्दू महासंघ, नेपाल संत समाज र आफ्नो समेत तर्फबाट स्मृति स्वरूप यी शब्दसुमन अर्पण गर्दछु।

# ❋ आदर्श पुरुष ❋

**डा. आत्माराम गौतम**
भीमापोखरा गा. वि. स.
बाग्लुङ

पूज्यपाद गुरूज्यू 'श्री १००८ स्वामी परमानन्द सरस्वती' एक महान् आदर्श पुरुष हुनुहुन्थ्यो। उहाँका आदर्शता स्मृतिरूपमा अमर रहनेछन्।

समयको आकार, प्रकार, तरवार, कस्ता छन् कसैलाई ज्ञान हुँदो रहेनछ, यस्तै दुर्भाग्यको प्रसाद समयको फल सम्झी सबैले भोग्नुपर्दो रहेछ। दैवयोगात् आज उहाँको पार्थिव शरीर पञ्चतत्वले आ-आफ्नो सम्पदालाई असमयमा नै समेटी दिँदा म आफूलाई अनाथको अनुभव गर्दछु। तर उहाँका अमृतमय उपदेशहरू र आदर्शमय कीर्तिहरू मानव जगत्मा चिरकालतक रहीरहने छन्।

समय नै वलवान् हो, मेरो परमसौभाग्यको अवसर थियो, सम्वत् २०३३, मा धान्याचल यज्ञ सम्पन्न गराई संकलित धनबाट वाग्लुङ विहुँ गा. वि. स. रामकोट आश्रम (जहाँ पूर्व यज्ञस्थल थियो) मा श्री परमानन्द संस्कृत वेदवेदाङ्ग विद्यालयको स्थापना गर्नुभयो, कर्ण परम्परया सवै ठाउँमा प्रचार हुंदै गयो, मलाई पनि संस्कृत अध्ययनको इच्छा प्रबलथियो, परन्तु घरको परिस्थिति अर्कै हुँदा मेरा अनुकूल कार्य बन्न सक्दैनथ्यो इच्छामा मग्न रहन्थे। एक दिन त्यो समय पनि आयो, एक छात्रका रूपमा विद्याध्ययनको उद्देश्यले गुरुज्यूका चरणनेर पुग्न पायें, यही नै मेरो प्रथम दर्शनको शुभावसर थियो, उहाँदेखि नै मार्गदर्शनपाई काशीमा रही अध्ययन गर्ने उपदेशका साथ आशीर्वाद मिल्यो आज उहाँका गुणस्मृति लहरमा लेख्नी उठाउनु कालीदासको उक्ति चरितार्थ जस्तै हो—

"तितीर्षुर्दुस्तरं मोहादुडुपेनास्मि सागरम्"

उहाँ एक महान् "योगी" हुनुहुन्थ्यो, त्यागी हुनुहुन्थ्यो वैदिक सनातनधर्मका रक्षक समाज सुधारक, षडङ्गवेदादिशास्त्रहरुका प्रेमी, असामान्य विद्वान् तथा सिद्ध, हुनुहुन्थ्यो। गुरुज्यूको तूलना वर्तमान समयको परिप्रेक्षमा कतै मिल्न सक्ला भन्ने आशा लाग्दैन ईश्वरका सृष्टिमा कुनै कुराको अभाव त रहदैन तर पनि ईश्वरकै विशेष अनुग्रह नभई कलिकालमा महापुरुषहरुको आगमन पनि हुदैन।

यस प्रकारको ईश्वरीय तारतम्य कुनै विशेष महापुरुषमा नै हुन्छ, यस्तो असामान्य प्रभुत्व पाएपछि उहाँका नजीकमा सामाजिक धन, मान, सम्मान, सत्कार स्तुति आदर कति मिले जो बैरागीलाई अनुरागी बनाउन क्षण मात्र लग्दैन, तरपनि गुरुज्यू स्वरूपतः त्यागी रहिरहनु भयो। साथै सामाजिक व्यक्ति जस्तो भयेर समाज हितमा चिन्ताराखी यज्ञ याग धर्मसंस्कार आदिका बारेमा निरन्तर शिक्षा दिंदै रहनुभयो। आकस्मिक आफूले पायेको धनराशि सनातन धर्मसंस्कार रक्षाका निम्ति समर्पित गर्नुभयो जसबाट कतिपय संस्कृत विद्यालयहरू निर्माण भये जहाँ ब्राह्मणबटुहरू निरन्तर शिक्षा पाईरहेका छन्, यस्तै उहाँका उपदेशले समाजका कतिपय कुरीति, अशिष्टता, हिंसा, मादक पदार्थ सेवन जस्ता आचरणको अन्त्यभयो।

समस्त जड़चेतन भृत-प्राणीस्वरूप विराट् शरीरको शिर-स्वरूप विवेक तथा ज्ञानको भण्डार ब्राह्मण वर्गमा यदि संस्कार तथा आचार विहीन पागलपनाले अँठ्यायो भने सर्वनाश हुन्छ, तसर्थ सुख शान्ति दया उदारता परोपकार आदि पृथ्वीबाट उठ्ने छन भन्ने व्यापक धारणा राखि वर्णाश्रम धर्मरक्षाका निम्ति गुरुकुल विद्याश्रम, तथा संस्कृत विद्यालयहरुको स्थापना गर्नुभयो, यस्तै समाज हितमा देवालय, शिवालय पौवा कति कति बने आज उहाँको शरीर पञ्चतत्वमा विलीन भए पनि यिनै आदर्शहरुले मानव समाजलाई दया, दान, उदार, परोपकार, सदाचारको स्मृति दिदैंछ।

॥ शिवार्पणमस्तु ॥

# ❋ गुरु प्रतिमूर्तिः आश्रमहरू ❋

—पं. पीताम्बर पँगेनी
देवघाट कल्पवास

गुरुर्ब्रह्मा गुरुर्विष्णुर्गुरुर्देवो महेश्वरः।
गुरुः साक्षात् परब्रह्म तस्मै श्रीगुरवे नमः॥

प्रातः स्मरणीय ब्रह्मलीन श्री १००८ स्वामी परमानन्द सरस्वतीज्यू महाराजका कोमल पाउले स्पर्श भएयता देवघाट धामको महिमा अझै बढ्दै गएको तथ्य सबै व्यक्तिका सामू प्रष्टै छ। हुनत यस भन्दा अघि पनि देवघाट धाममा मेरो आवतजावतको क्रम चलेकै थियो तापनि स्वामीज्यूको यहाँ आगमन भएपछि भने वहाँकै प्रेरणाबाट हरिभजन गरी यहीं बस्ने मनमा इच्छा बढ्दै आयो। फलस्वरूप श्रीगुरूदेवकै कृपाबाट मलाई गायत्री पुरश्चर्या आदि अनुष्ठान सम्पन्न गर्ने सौभाग्य प्राप्त भयो।

आजको अर्थप्रधान युगमा व्यक्तिले जति सुख, समृद्धि, र प्रतिष्ठा आदि नाशवान वस्तु प्राप्त गर्दछ, ऊ यदि गूरुमुखी नभएर प्रमादी बन्दछ भने उसको छिटै अधःपतन हुन्छ। त्यसकारण मृत्यु पश्चात साथमा नजाने धनलाई सदुपयोग गर्न "परोपकारः पुण्याय" को पाठ सबैले सिक्नु पर्दछ। यिनै विषयलाई लोकोपकार स्वामीज्यूले उपदेशको माध्यमबाट म खाऊँ मै लाऊँमा मात्र नभुलेर वेद, संस्कृति, धर्म र दीन दुःखीहरूको सेवा गर्ने कार्यमा जाग्नु पर्दछ भन्ने महामन्त्र दिएर जानुभयो।

श्री गुरुमहाराज आज हाम्रा सामू नभए पनि वहाँका दिव्य उपदेशलाई हृदयमा धारणा गर्न सकेमा हामी टुहूरा पर्ने छैनौं।

गुरुदेवद्वारा संस्थापित गुरुकुल मठ–मन्दिर र विद्यालय गुरुको संरक्षण र संवर्द्धन गर्नु

आश्रम सञ्चालन परम्परालाई साक्षात् श्रीगुरुमूर्ति संझी निरन्तर सेवामूलक कार्यमा सर्वतोभावने सहयोग पुऱ्याउनु हामी सबैको कर्तव्य हो।



दक्षिणभारतको तीर्थयात्राक्रममा समुद्रतटवर्ती
शिलामा बसेर त्यहाँको मनमोहक दृश्यावलोकन
गर्नुहुँदै : स्वामीज्यू महाराज।



# ❁ तीर्थीकुर्वन्ति तीर्थानि स्वान्तःस्थेन गदाभृता ❁

**-निरञ्जनपीठाधीश्वर आचार्य महामण्डलेश्वर**
**श्री १००८ स्वामी पुण्यानन्द गिरि जी महाराज**
-विश्वनाथ .संन्यास आश्रम, दिल्ली

वैसे शास्त्रों में यत्र-तत्र सत्सङ्ग की महिमा वर्णित है। इस सत्सङ्ग शब्द में महान् अर्थ अन्तगर्भित है। 'सत्सङ्ग' पद के भीतर जो सत् शब्द है, वह भी विशेष अर्थ रखता है। भगवान् वेद-व्यास ने इसी सत् शब्द के साथ पर शब्द को जोड़कर मानव मात्र के ही नहीं प्राणी मात्र के भी परम ध्येय के रूप में वर्णन किया है।

जैसे—**सत्यं परं धीमहि** ( श्रीमद्भागवत १.१.१ ) इस परम सत्य का हम ध्यान करते हैं। वह परम सत्य कौन और कैसा है ? इस प्रश्न के उत्तर में स्वयं व्यासजी कहते हैं कि '**जन्माद्यस्य यतः**' समस्त जगत् का उत्पत्ति, स्थिति एवं संहार जिससे, जिसमें ही होता है वह ही परम सत्य है। जैसे—कुम्भकार के द्वारा घड़े का निर्माण होता है, लेकिन घड़े के बनने के बाद कुम्भकार ( घड़ा बनाने वाला) घड़े को अपने सिर पर लेकर हमेशा नहीं चल सकता, लेकिन जगत् को निर्माण करने वाला जो परम सत्य है वह अपने से भिन्न जगत् के अस्तित्व को नहीं बनाता है, जैसे धागे में कपड़ा। धागा कपड़ा तो बनाता है, पर अपने से भिन्न कोई दूसरी वस्तु नहीं बनता, अर्थात् धागा ही तो कपड़े के रूप में दीख रहा है। यही उदाहरण ब्रह्म से बने हुए जगत् के विषय में भी समझना होगा। ब्रह्म से स्फुरित दिखाई देने वाला यह जगत् वास्तव में ब्रह्म से भिन्न कहीं कुछ नहीं। कपड़े में जिस प्रकार कारणभूत धागे का ही अस्तित्व स्फुरित है, ठीक उसी प्रकार कार्यभूत इस संसार में भी अपने ही स्वरूप में विवर्तित उसी कारण स्वरूप परम सत्य ( ब्रह्म) की सत्ता ही परिलक्षित होती है। जिस प्रकार कपड़ा धागे में ही स्थित है, उसी प्रकार यह जगत् भी उसी परम सत्य में ही स्थित है।

जिस प्रकार आग लग जाने पर नाम, रूप एवं उपादान सहित समस्त वस्त्र अपने वास्तविक उपादान स्वरूप पृथ्वी में राख के रूप में परिणत होकर विलीन हो जाता है इसी प्रकार नामरूपात्मक यह चराचर जगत् भी अन्त में उसी परमात्मा में समाहित होता है। इस जगत् का अभिन्ननिमित्तोपादानकारण वही परम सत्य है। उसके द्वारा निर्मित समग्र संसार को प्रकाशित होने के लिए दूसरे किसी प्रकाश की आवश्यकता होती है, लेकिन प्रकाश स्वरूप उस सत्य को प्रदर्शित करने के लिए दूसरे किसी प्रकाश की आवश्यकता नहीं होती है।

इसी प्रकार जो स्वयं प्रकाश होता हुआ समग्र जड़ प्रपञ्च को भी अपने विलक्षण ज्ञानशक्ति से प्रकाशित कर रहा है, और जिसकी शोभा को बढ़ाने में समग्र संसार मिलकर भी समर्थ नहीं होता है, और जो स्वयं सारे चराचर जगत् में अपनी महिमा से मण्डित होता हुआ स्वयं के प्रकाश से जगत् को प्रकाशित कर रहा होता है, ऐसा परम सत्य समग्र प्राणिओं के हृदय के अन्दर '**अहमस्मि**' '**मैं हूँ**' इस प्रकार अभिव्यक्त हो रहा है।

जिस परम सत्य में विवर्त्तित होने वाली आदि संकल्प-श्क्ति जिसको शास्त्रकारों ने अपनी-अपनी भावना के अनुसार, माया, प्रकृति, प्रधान, आद्याशक्ति इत्यादि रूपों में परिकल्पित किया है वह, उसी परम्र सत्यकी अमोघ इच्छा शक्ति है अथवा उसको संकल्पशक्ति भी कहा जा सकता है। जिसके अमोघता ( अव्यर्थता के) सम्बन्ध में स्पष्ट प्रतिपादन करनेवाला अनादि सम्प्रदाय परम्परा से प्राप्त वेद शास्त्र है, जो समग्र अज्ञात अर्थों का ज्ञापक होकर शास्त्रत्व उपाधि से विभूषित है, वह अत्यन्त दुरूह भी है। जिसके अर्थ चिन्तन में बड़े-बड़े बुद्धिमानों की बुद्धि भी भ्रमित हुआ करती है। ऐसा विलक्षण ज्ञानका भण्डार अपौरुषेय वेदराशि, जिसका उपदेष्टा सृष्टिके आदिकाल में दूसरा कोई नहीं था। फिर भी उस परम सत्य के आदिकाल में दूसरा





सत्को विकासमा, अस्तित्वको विकास, चित्को विकासमा ज्ञानको विकास र आनन्दको विकासमा सुखको विकास हुन्छ। यी तीनै वस्तुको विकासको भाव मनुष्यमा देखिन्छ। सृष्टिमा आफु बनिरहन चाहनु नै सत्को विकास हो। यसरी सदा बनिरहने आकांक्षा अरु प्राणीमा हुँदैन।

मनुष्यमा सतत नवीन-नवीन वस्तुहरूको जानकारी राख्ने आकांक्षा नै ज्ञानको विकास हो। यस्तो आकांक्षा अन्य प्राणीमा देखिँदैन। सतत् सुखी रहने इच्छा नै आनन्दभावको विकास हो। सबै समयमा सबै ठाउँमा र सबै वस्तुद्वारा आनन्दित हुनु स्पष्ट देखिन्छ। प्रकृतिले मनुष्यलाई आफ्नो तर्फबाट जति विकसित गर्नुथियो सो गरी दिएकी छिन्, साथै यस-भन्दा अधिक विकास गर्न चाहेमा पनि गर्न सक्ने सामर्थ्य प्रकृतिले दिएकी छिन्। मनुष्यले चाहेमा सत्, चित् र आनन्दको पूर्ण विकास गर्न सक्दछ। यसरी सच्चिदानन्द भावको पूर्ण विकास गरेमा मनुष्य आफ्नो अल्पभावलाई परित्याग गरी पूर्ण ब्रह्मरूप हुन सक्दछ र यस जीवनमा नै पूर्ण आनन्द, सर्वज्ञता र अविनाशीभावको पनि अनुभव गर्न सक्दछ। वस्तुतः-मनुष्यले स्वयं चाहेर पनि मनुष्य जीवन प्राप्त गर्न सक्दैन। यो त पूर्वजन्मकृत पुण्यकर्म र ईश्वरको अनुग्रहले मात्र प्राप्त हुन्छ। अतः मनुष्यजीवन अत्यन्त दुर्लभ छ।

श्रीमद्‌भागवतमा वर्णन गरिएको छ कि परमेश्वरले आफ्नो योगद्वारा वृक्ष, पशु, पक्षी, कीट, पतङ्ग आदि नाना-प्रकारका प्राणी बनाउनु भयो, परन्तु सन्तोष भएन र परमात्माले मनुष्यको रचना गर्नुभयो। आफुले रचेका मनुष्यमा परब्रह्म परमात्मालाई स्वात्मारूपमा अनुभव गर्न सक्ने सामर्थ्य देखी वहाँ प्रसन्न हुनुभयो। हुन पनि अन्य सबै प्राणीहरू केवल ऐन्द्रियक विषयहरूलाई मात्र जान्न सक्दछन्। अतीन्द्रिय वस्तुके परब्रह्म परमात्मा जो कि आफ्नै स्वरूप हो, उसलाई जान्न सक्दैनन्। अतीन्द्रिय वस्तु परब्रह्म परमात्मालाई जान्ने साधन जो 'प्रमाणवृत्ति' हो, त्यो एक मात्र मनुष्यमा छ। अन्य कुनै प्राणीहरूमा छैन। अन्य प्राणीहरूमा न साधनचतुष्टयको अभ्यास छ, न शास्त्रश्रवणको योग्यता छ, न 'अहं ब्रह्मास्मि' इत्याकार वृत्ति उदय गर्ने सामग्रीहरू छन्। अतः मनुष्य भन्दा अतिरिक्त अन्य कुनै पनि प्राणीहरूमा ब्रह्मानुभव गर्ने योग्यता छैन। परमात्माको ठूलो अनुग्रहयो छ कि हामीहरूलाई मनुष्य शरीर प्रदान गर्नु भएको छ। यस्तो दुर्लभ मनुष्य शरीर पाएर पनि मुक्तिमार्गमा नलाग्ने मानिस आत्मघाती हो भनी भगवान् शंकराचार्यले भन्नुभएको छ-

**'लब्ध्वा कथञ्चिन् नरजन्म दुर्लभं तत्रापि पुँस्त्वं श्रुतिपारदर्शनम्। यः स्वात्ममुक्तौ न यतेत मूढधीः स ह्यात्महा स्वं विनिहन्त्यसद्‌ग्रहात्।** मनुष्य भएर पनि मुमुक्षु बन्नु यो दुर्लभ कुरा हो।

**मुमुक्षत्व दुर्लभ छः—**

**'ईश्वरनुग्रहादेव पुंसामद्वैतवासना।**
**महाभयपरित्राणा द्वित्राणामुपजायते॥'** (अवधूत गीता)

अर्थात् ईश्वरको अनुग्रहले नै मनुष्यको हृदयमा अद्वैत-वासना उदित हुन्छ। त्यो पनि सयकडौंमा दुई-तीन जनाको हृदयमा मात्र। जसको हृदयमा यो अद्वैत-वासनाको उदय हुन्छ, उसलाई ठूलो भयबाट बचाउँछ। सबभन्दा ठूलो भय मृत्यु हो-यसैबाट बचाउँछ। यसै गरी गीतामा मुमुक्षुत्वलाई दुर्लभ बताइएको छ-

**'मनुष्याणां सहस्त्रेषु कश्चिद्यतति सिद्धये।**
**यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्वतः।'**

हज्जारौं मनुष्य मध्ये कोही कोही मनुष्य ईश्वर प्राप्तिको लागि प्रयत्न गर्छन्। ती प्रयत्नशील मध्ये कोही कोही मात्र मेरो यथार्थ स्वरूपलाई जान्न सक्दछन्।



जुन् जुन् बन्धनमा मनुष्य फँसेको छ, त्यही त्यही बन्धनबाट मुक्त हुने इच्छालाई मुमुक्षुत्व भनिन्छ। 'मोक्तुम् इच्छा मुमुक्षा'। यो मोक्ष इच्छा जसमा रहन्छ, उसैको नाम मुमुक्षु हो।

अब विचारणीय विषय यो छ कि मनुष्य कुन् कुन् बन्धनमा फँसेको छ? वास्तवमा मनुष्य कुनै पनि बन्धनमा फँसेको छैन, तर जुन् बन्धन अनुभवमा आउँछ त्यो सबै मानसिक बन्धन मात्र हो। मनको स्वभाव छ कि स्वयं विषयको कल्पना गरेर त्यससंग बाँधिएको हुन्छ। जो विषय कल्पित हुन्छ उससितको सम्बन्ध पनि कल्पित नै हुन्छ। बाह्य सम्पदाले आजसम्म कसैलाई बाँधेको छैन। तर स्वयं मनसम्पदासंग बाँधिन पुगेको छ। सम्पदाले त आफ्नो भोक्तालाई चिनेको छैन। त्यसै गरी सम्पदाको मनुष्यहरूसंग मानसिक सम्बन्ध नै हो। वास्तवमा त कोहीसंग कसैको सम्बन्ध नै छैन। विषयहरूमा सत्यत्व बुद्धि सुखको बुद्धि ले तत्-तत् विषयहरूमा राग, द्वेषलाई उत्पन्न गरेर बन्धनको कल्पनालाई जन्माउँछन्। त्यसैले बन्धन खडा हुन्छ। मनुष्य जब बन्धनमा नै सुख ठान्न थाल्द छ, तब त्यसबाट उसको छुट्ने इच्छा नै समाप्त हुन्छ।

त्यसकारण मुमुक्षुको आरम्भ त्यहाँबाट हुन्छ, जहाँ विवेकबाट सुख-दुःख आरम्भ हुन्छ। जहाँ जहाँ दुःखको प्रतीति हुन्छ त्यसलाई मनुष्य छोड्दै जान्छ र जहाँ जहाँ सुखको प्रतीति हुँदै जान्छ त्यसलाई समात्ने प्रयत्न गर्दछ। सुखदायी पदार्थ पनि आगमापायी छ भने त्यसलाई पनि मनुष्य छोड्दै जान्छ। मनुष्य जब दुःख र अनित्यता देखेर ती पदार्थबाट वैराग्य उत्पन्न गर्छ तब मात्र वास्तविक मुमुक्षुत्व उत्पन्न हुन्छ। मनुष्य प्रथमतः अनित्य र दुःखदायी पदार्थलाई छोड्ने चेष्टा गर्दछ त्यो मनुष्यको अवरवैराग्यको अवस्था हो यसलाई अपरिपक्व मुमुक्षुत्व भनिन्छ। जसमा यो अवरवैराग्य उत्पन्न भएको छ, त्यसले अझ अन्तःकरण द्वारा पनि मुक्त हुने इच्छा गर्दछ भने त्यसलाई उत्तम वैराग्य भन्दछन्। यसलाई तीव्र मुमुक्षा पनि भनिन्छ। यो उत्तम मुमुक्षुको लक्षण हो।

जसबाट राग-द्वेष उत्पन्न हुन्छ त्यस्ता अन्तःकरणको नै निवृत्ति भएमा बन्धनको आत्यन्तिक निवृत्ति हुन्छ। योगवाशिष्ठमा देवगुरु बृहस्पतिले आफ्ना छोरा कचलाई उपदेश दिंदै भन्नु हुन्छ-हे पुत्र! तिमी परमानन्दको कामना गर्दछौ भने त्यसका लागि त्याग गर। पिताको यो वाक्य सुनी कचले घरबार छोडेर हातमा दण्ड- कमण्डलु लिएर कौपीन मात्र धारण गरी एक वर्षसम्म भ्रमण गरे तर परमानन्द प्राप्ति (अनुभव) गर्न सकेनन् उल्टै अशान्ति र दुःखको मात्र अनुभव भयो। फर्केर घर आएर पिताजीसंग सोधे हजुरका आज्ञाले परमानन्द प्राप्त गर्न सम्पूर्ण घरबार त्याग गरेर हिंडें, तर परमानन्द प्राप्तगर्न सकिन, शान्ति प्राप्तिकालागि के गर्नुपर्छ?, बृहस्पतिले पुनः त्यही उपदेश दिनुभयो। अर्को पटक पनि त्यागकै उपदेश पाएर कच विचार गर्न लागे, अव के त्यागुँ? मसंग यही दण्ड-कमण्डलु र कौपिन मात्र छन्; शायद पिताजीले यही त्यागगर भन्नुभएको होला? भनि तिनै वस्तुलाई त्यागेर एकदम अवधूत भेषमा हिंड्न लागे। एक वर्षसम्म त्यसरी हिंडेपछि कच पुनः बृहस्पतिको समक्ष उपस्थित भए। बृहस्पतिले सोध्नु भयो, पुत्र के तिमीलाई परमानन्द प्राप्त भयो? कचले भने-मैले दुईपटकसम्म सबै वस्तु त्याग गरें, तर सुख शान्ति र परमानन्दको अनुभव गर्न सकिन। कृपापूर्वक उपायको आज्ञा हवस्। बृहस्पतिले पुनः त्यागबाटै परमानन्द प्राप्ति हुने कुरा बताउँदै ठीकसंग त्याग गर भन्नु भयो। तेस्रो पटक पनि त्याग गर्ने कुरा सुन्दा कच विचार गर्न लागे-अब मसंग के वस्तु छ भएका सबै वस्तु त्यागी सकें फेरि पनि पिताजीले त्याग गर भन्नुभयो। शायद मसंग बचेको यही स्थूलशरीरलाई त्याग गर भन्नु भएको होला! यस्तो विचार गरेर नदीको किनारामा गई चिता तयार गरी उसमा जलेर स्थूल शरीरलाई त्याग गर्न तयार भए। यो कुरा थाहापाई बृहस्पतिले विचार गर्न थाले अहो! कचले अझै त्यागको अभिप्राय बुझेन स्थूल वस्तुमात्र त्यागेर परमानन्द प्राप्त कहाँ हुन्छ र? कचलाई वास्तविक त्यागको अर्थ सम्झाई दिनुपर्‍यो। यस्तो निश्चय गरेर नजीकमा गई कचको हात समातेर भन्नु भयो-पुत्र!

तिमीले यो के गर्न लागेको ? यस्तो त्यागले त्यागको प्रयोजन सिद्ध हुन सक्दैन वास्तवमा धन–सम्पत्ति, दण्ड–कमण्डलु, कौपीन तथा स्थूल शरीर आदि दुःख अशान्तिका कारण होइनन्। दुःख अशान्तिको कारण त ती वस्तुसंग चित्तको राग र द्वेष नै हो; अतः पदार्थका प्रति राग र द्वेष उत्पन्न गराउने चित्तलाई त्याग्न सकेमा मात्र वास्तविक सुख वा परमानन्द प्राप्त गर्न सक्दछौ। अतः बन्धनको कारण भएको चित्तलाई। त्याग पिताको यो आज्ञा सुनी कचले चित्तलाई नै त्यागेर परमानन्द प्राप्त गरे। हो, चित्त त्याग नै वास्तविक त्याग हो।

यसरी सम्पूर्ण अनर्थको कारण भएको चित्तलाई त्याग्ने इच्छा हुनु नै मुमुक्षा हो। चित्त त्याग (वासना त्याग) गर्नु नै परमेश्वरको अनुभव गर्नमा हेतु हो। ईश्वरानुग्रह नभई चित्तमा मुमुक्षाको उदय हुन सक्दैन। जसलाई परमात्माले आफ्नो अपरोक्ष अनुभव गराउने इच्छा गर्नुहुन्छ, उसैको हृदयमा कृपा गरेर मुमुक्षात्व उदय गराउनुहुन्छ। त्यसकारण मुमुक्षुत्व दुर्लभ छ।

**महापुरुष–संश्रय दुर्लभ छः**–महापुरुषको संश्रयण (शरणा गति) द्वारा मात्र मुमुक्षुत्वको सिद्धि हुन्छ। यो महापुरुषको आश्रयण पनि अत्यन्त दुर्लभ छ। संसारमा प्रत्येक मानिस दुःखबाट छुट्न चाहन्छन्। तर सांसारिक उपायले सधैंका लागि कष्टनिवृत्ति हुन सक्दैन। सामान्य विषय भोगबाट दुःखलाई बिर्सिएको हुन्छ। अथवा बेहोश भएको बेलामा वा समाधिमा रहेको बेलामा दुःख बिर्सिएको हुन्छ। परन्तु यो दुःखनिवृत्ति वास्तविक होइन, दुःखको तत्कालीन उपचार मात्र हो। यस्तो उपचारले मुमुक्षु सन्तुष्ट हुँदैन। यी साधनाद्वारा जो दुःखनिवृत्ति र सुखप्राप्ति हुन्छ, त्यो सहज हुँदैन। जब–सम्म मनुष्यलाई सहज र वास्तविक सुखको अनुभव हुँदैन, तबसम्म मुमुक्षु सन्तुष्ट हुँदैन। सहज सुखको अर्थ परमानन्द हो। सहज सुख केवल दुःखको अभाव वा अनर्थको निवृत्ति र परमानन्दको साक्षात्कार पनि हो। समाधिमा जो परमानन्दको प्राप्ति हुन्छ र दुःखत्रयको निवृत्ति पनि हुन्छ.तर दुःखत्रयको आत्यन्तिक निवृत्ति हुँदैन, किञ्चित्कालीन मात्र हुन्छ। अतः त्यसलाई पनि सहज सुख भनिदैन।

वास्तवमा आफ्नो अधिष्ठानरूप आत्म चैतन्यसित पृथक भएर दुःखत्रयको आत्यन्तिक निवृत्ति हुन सक्दैन। आनन्दरूप सच्चिदात्माको अनुभूति नै सहज परमानन्द हो। अतः मोक्ष अविद्या–निवृत्ति द्वारा उपलक्षित आत्माको नै नाम हो। अज्ञानद्वारा नै आत्मामा बन्धनको अनुभव हुन्छ। वास्तवमा त नित्य मुक्त नै छ। अज्ञानद्वारा जो सिद्ध हुन्छ त्यो वास्तविक हुन कदापि सक्दैन। अतः आत्मामा बन्धन छँदै छैन र मोक्ष उसको वास्तविक स्वरूप हो।

यसरी मुमुक्षाको परिसमाप्ति मोक्षको अनुभवमा गएर हुन्छ। मोक्षको अनुभव ज्ञानद्वारा नै हुन्छ। यो ज्ञान न कर्माङ्ग हो न उपासनाङ्ग न योगाङ्ग। यो त आफ्नो बन्धनभावको निषेधबाट हुने हो। बद्धभावको निषेध प्रमाण वृत्तिद्वारा हुन्छ। प्रमाण वृत्ति पनि भ्रम, प्रमाद, करणापाटव एवं विप्रलिप्सा आदि दोषद्वारा मुक्त वेदोक्त महावाक्य जन्य अखण्डार्थधीद्वारा सम्बन्धित हुनुपर्दछ। यस्तो अखण्डार्थधी पनि कुनै महापुरुषको शरणागति द्वारा मात्र सम्भवं छ, अन्य केही उपाय छैन।

व्यवहारमा जसरी धनी व्यक्ति धनीसंग, नेता नेतासंग सम्बन्ध राख्दछ यसै गरी ब्रह्मविद्यामा परिपक्वता प्राप्त गर्न चाहनेले ब्रह्मज्ञानीहरूको सङ्गत गर्नुपर्दछ। यसलाई महापुरुषसंश्रय भनिन्छ।

महापुरुषसंश्रयको अर्थ हो अभिमान छोडेर सत्पुरुषको अर्थात्, ज्ञानीपुरुषको शरणागति स्वीकार गर्नु। उपनिषद्को पनि यही आज्ञा छ–

**'तद्विज्ञानार्थं गुरुमेवाभिगच्छेत् समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्'**

परमात्मालाई अपरोक्ष रूपमा जान्ने इच्छा भएको मुमुक्षु समित्पाणि भएर श्रोत्रिय ब्रह्मनिष्ठ सद्गुरुको शरणमा जाओस्।

**'आचार्याद्धयेव विद्या विदिता साधिष्ठं प्रापयति' (छा.उ.)**

आचार्यद्वारा जानेको विद्या नै प्रतिष्ठित हुन्छ, अर्थात् फलीभूत हुन्छ। यसैले कार्य सहित मूल अज्ञानलाई नष्ट गरेर परमानन्दको अपरोक्ष अनुभव गराउन समर्थ हुन्छ। तत्त्वज्ञान गर्ने शास्त्रीय विधि यही हो। हुन पनि नबलेको बत्ती बलेको बत्तीसंग लगेर जोडिदिने हो भने जसरी तुरून्त बल्दछ, त्यसै गरी कुनै आत्मज्ञानी सत्पुरूषको सान्निध्य प्राप्त गरेपछि मात्र आत्मज्ञान प्राप्त हुन्छ। महापुरुषसंग जस्तो प्रकारको सम्बन्ध भए पनि मुमुक्षुहरूलाई कल्याण नै हुन्छ।

आद्यगुरु शंकराचार्यजीका एक शिष्य तोटकाचार्य पढे लेखेका थिएनन्, तर श्रद्धापूर्वक गुरुसेवा गरिरहन्थे। एक दिन भगवान् शंकराचार्य आफ्नो साधनामा बसिरहनुभएको थियो, अरु शिष्यहरूले अन्य समयमा झैं उपहास गर्न थाले जसले गर्दा तोटकाचार्यको मनमा ठूलो दुःख लाग्यो र भगवान् शंकराचार्यको समक्ष गएर दुःखी मनले हेर्न लागे। शंकराचार्यले आँखा खोलेर हेर्दा आफ्नो शिष्यलाई दुःखी देख्नु भयो र सोध्नु भयो तिमी लाई के भयो ? तोटकाचार्य बोल्न सकेनन्। यत्तिकैमा उनलाई गुरुको कृपादृष्टि प्राप्त भयो र उनले तोटक छन्दमा विरचित वेदान्तको रहस्यले भरिएको स्तोत्रले गुरुको स्तुति गरे। यो सद्गुरुका सम्पर्कको महिमा हो। यस्ता अनेक उदाहरण शास्त्रमा छन्।

प्रह्लादले नारदजीबाट गर्भावस्थामै ज्ञान पाएका थिए र पछि अद्वितीय भगवद्भक्त बन्ने श्रेय प्राप्त गरे, अतः भाग्य नभई महापुरुष-संश्रय कसैलाई पनि मिल्दैन। शास्त्रमा उल्लिखित वाक्य पनि यस्तो छ—

**भाग्योदयेन बहुजन्मसमर्जितेन,**
**सत्सङ्गमं च लभते पुरुषो यदा वै।**
**अज्ञानहेतुकृतमोहमदान्धकार-**
**नाशं विधाय हि तदोदयते विवेकः॥**

सन्त तुलसीदासजीले पनि ईश्वर अनुग्रहले मात्र महापुरुष सुलभ हुन सक्दछन् भन्नु भएको छ—

**''विनु सतसङ्ग विवेक न होई, विनु हरि कृपा सुलभ न सोही।''**

अतः महापुरुषसंश्रय अत्यन्त दुर्लभ छ।





# ❋ पुराण-विवेचन ❋

**प्रा० दत्तात्रेय शर्मा दाहाल**
पूर्व कुल सचिव
महेन्द्र संस्कृत विश्वविद्यालय, दाङ्

पुराणहरू हाम्रा अमूल्य निधिहुन्। यसबाट हाम्रो समाज सभ्य, सुसंस्कृत, नियमित र प्रतिष्ठित हुँदै आएको छ। विश्वमा आर्यजाति जसलाई हिन्दुजाति पनि भन्दछन् सबै भन्दा पुरानो जाति भएकोले यसको पृष्ठभूमि ज्यादै पुरानो छ। त्यसैले पुराण आर्यजातिको अतिप्राचीन ऐतिहासिक साहित्य हो। पुराणको अर्थ हुन्छ पुराना कुरा भएको अथवा पुराना कुरा बताउने[१] अथवा पुरानो भएपनि नवीनता दिने[२]। यसरी हामी पुराणबाट धर्म, दर्शन, साहित्य, संस्कृति, सभ्यता तथा सामाजिक, राजनैतिक, आर्थिक, शैक्षिक, गतिविधिका साथै प्राचीन, खगोल, भूगोल आदि को ज्ञान गर्न सक्छौं। हाम्रो सांस्कृतिक स्वरूप पुराणहरूमा सुरक्षित छ। भक्ति, ज्ञान र उपासनाद्वारा मानव जीवनको प्रधान लक्ष्य भगवत् प्राप्तिको साधन, परोपकार, सदाचार सृष्टि देखिका पूर्वजहरूको यथार्थ विवरण महापुरुषहरूको आदर्शमय जीवन छ, ऋषि-मुनिहरूको लोककल्याणकारी उपदेश, जसबाट मानवसमाजले आफ्नो जीवन उज्वल बनाउन सक्छ आदि कुराहरू पुराणमा पाइन्छन्। वास्तवमा पुराण सामाजिक जीवनको दर्पण हो। पुराण विनाको अध्ययन अपूर्ण रहन्छ[३]। पुराणहरूमा धर्म, दर्शन, कला इतिहास मात्र हैन भौतिक विज्ञानको पनि कँही सूत्ररूपमा र कँही विस्तृत रूपमा चर्चा भएको पाइन्छ। विज्ञानको विशेष प्रचारले ज्ञानको महत्त्व घटी भोगवादी प्रवृत्ति बढ्ला भनेर पुराणहरूमा विज्ञानको प्राधान्य नरहेको हो। धार्मिक दृष्टिकोणले पुराणको महत्त्व त छँदै छ किन्तु सामाजिक महत्त्व पनि कम छैन। प्राचीन समाजको स्वरूप पुराणबाटै जान्न सकिन्छ। भौगोलिक दृष्टिकोणले पर्वत, समुद्र, नदी र तीर्थहरूको वर्णन महत्वपूर्ण छ। यसबाट भूगोलको पनि राम्रो ज्ञान हुन्छ। डा० कप्तान स्पीकले मिश्र (इजिप्ट) को नील नदीको अन्वेषण पुराणको सहायताले गरेका थिए भन्ने कुरा एशियाटिक रिसर्चको तेस्रो भागमा मुद्रित छ। पुराण वेद जत्तिकै पुरानो मानिएको छ। ऋग्वेद र[४] उपनिषद्हरूमा पुराण शब्दको उल्लेख छ। पाश्चात्य विद्वान्हरूले समेत पुराण ज्यादै पुरानो स्वीकार गरेका छन्। पुराण पछिको महाभारत हो। वेदव्यासले पुराण बनाए पछि महाभारतको रचनागरे।[५] यी सबै प्रमाणबाट पुराण प्राचीन हुन आउँछ।

**पुराण र इतिहासमा भिन्नता**—पुराणहरूमा प्राचीन अनेक ऐतिहासिक सामग्री विद्यमान छन्। पुराण नामबाटै पुरानोपन सिद्ध हुन्छ। इतिहासको अर्थ हो (इति+ह+आस) ''यस्तो भएको थियो'' यसरी विचार गर्दा पुराण र इतिहासमा फरक देखिदैन तापनि अन्तर पाइन्छ। इतिहासमा भूत र वर्तमान कालका घटना मात्रको विवरण पाइन्छ भने पुराणमा भविष्यत्कालका कुराहरू पनि लेखिएका हुन्छन्। पुराणमा भविष्यमा हुने राजवंशको वर्णनदेखि बुद्धकाल सम्मको वर्णन

---

*१. पुरा अतीतान् अर्थान् अणति कथयति तत् पुराणम्।*

*२. पुरा नवं भवतीति पुराणम्। निरुक्त अ. ३ व. ४ ख. १९*

*३. यो वेद चतुरो वेदान् साङ्गोपनिषदो द्विजः। न चेत् पुराणं संविद्यात् नैव स स्याद् विचक्षणः॥*

*४. ऋचः सामानि छन्दांसि पुराणं यजुषा सह। (ऋग्वेद)*
*पुराणं पञ्चमं वेदानां वेदम्। (उपनिषद्)*

*५. अष्टादश पुराणानि कृत्वा सत्यवतीसुतः। पश्चाद् भारतमाख्यानं चक्रे तदुपबृंहितम्॥*

छ। साथै पुराणमा सृष्टि, प्रलय, ऋषिवंश र राजवंशको परम्परा, मन्वन्तर (मनुहरूको शासन समय), ऋषिहरूको र राजाहरूको चरित्र[६], यी पाँच विषय अनिवार्य रूपमा रहने हुनाले ''पुराणं पञ्चलक्षणम्'' भनिएको हो।

सृष्टि कसरी बन्यो ? जड चेतनात्मक तत्त्वको उत्पत्तिक्रम के हो ? सृष्टिको लय कसरी हुन्छ उत्पत्तिबाट लय कति प्रकार को छ, सृष्टि कति किसिमको हुन्छ लय कति प्रकारको छ, कुन् कुन् वंश चल्यो, कुन् कुन् ऋषि र राजा हरू भए, कसको चरित्र कस्तोथियो, मनुहरूको शासनकाल कतिको हुन्छ, कुन् कुन् मनु हुन्छन् आदि प्रश्नहरूका उत्तरहरू पनि छन्। विशेष गरेर सप्तर्षिवंश, सूर्यवंश र चन्द्रवंश, स्वायम्भुव मनुवंश र वैवस्वत मनुवंश प्रसिद्ध छन्। वास्तवमा इतिहास पुराणको अङ्ग हो, पुराण अन्तर्गत थियो।

अति प्राचीन कालमा पुराण मात्र हुँदा त्यसैबाट इतिहासको पनि ज्ञान हुन्थ्यो। पछि इतिहास पनि ठूलो हुँदै जाँदा इतिहासलाई अलग गरियो।

हाम्रो संस्कृत वाङ्मयमा रामायण र महाभारतलाई इतिहास भनिन्छ। रामायण काव्य हो तापनि ऐतिहासिक काव्य भन्न सकिन्छ। यो इतिहास दुई किसिमको मानिएको छ-परक्रिया र पुराकल्प। परक्रियामा एक नायक रहन्छ। पुराकल्पमा अनेक नायक रहन्छन्। यसबाट रामायण परक्रिया इतिहास भयो। महाभारत पुराकल्प इतिहास भयो। अघि पुराण सूत (पुराणवक्ता) र मागध (राजवंशावली गाउने) का हातमा थियो। पछि ब्राह्मणका हातमा गयो। ब्राह्मणका हातमा आए पछि इतिहास भन्दा धार्मिकताको बढ़ी पुर दिइन थाल्यो। यसबाट धर्म र जातितिर पुराण ज्यादा ढल्क्यो। यहाँसम्म कि क्षत्रियको उपाख्यानमा पनि ब्राह्मणको महत्त्व भयो। यसबाट पनि इतिहास अलग्गिन गयो।

**वेद र पुराणमा अन्तर :—** वेद हाम्रो ज्ञानको भण्डार हो वेदको भाषा दुर्बोध र शैली रूपकमय छ। यसलाई पढ्न बुझ्न ठूलो मनोयोग र धैर्य चाहिन्छ। पुराणको भाषा सरल छ किन्तु शैली भने अतिशयोक्तिमय छ। वेदको अध्ययन गर्न स्त्री र शूद्रलाई निषेध रहेकाले यसबाट जनताको एक ठूलो समुदाय ज्ञानबाट वञ्चित हुने देखी व्यासले वेदको रहस्य बुझाउन भाषा र शैलीमा परिवर्तन नगरी पुराणहरूको रचना गरे। पुराणका भाषा सुबोध र शैली सरल बनाए। अब पुराणबाटै वेदको अर्थ खुल्यो।[७] सामान्य ज्ञान भएका मानिसहरूलाई बहिरङ्गवर्णनबाट अन्तरङ्ग तत्त्वसंग सम्बन्ध स्थापित गर्न सरल उपाय भयो। यो वेदव्यासको मानवप्रतिको ठूलो उपकार हो। क्षत्रियबाट ब्राह्मणीमा जन्मेका सूतज्यूलाई स्वयं वेदव्यासज्यूले पुराण पढ़ाउनुभयो। सूतज्यूबाट अब सर्वसाधारण सबैले आफ्नो धर्म र संस्कृति बारे पढ्न र थाहा पाउन थाले। समाजमा सूतज्यूको ब्राह्मणको भन्दा ठूलो सम्मान भयो। पुराणबाट भक्तिमार्ग र ज्ञानमार्ग सबैलाई खुला भयो। विभिन्न सम्प्रदायका मानिसहरू पनि पुराणको प्रभावले एकतामा आबद्ध भए। विष्णु र शिवतत्त्व एउटै हो भन्ने भावना जागृत भयो। वेदमा प्रकृतिको निरूपण गरेको छ भने पुराणमा प्रकृतिलाई देवीको रूपमा लिइएको छ। वेदभन्दा पुराणमा अधिक लेखिएको[८] र वेद पुराणमा अडिएको कुरा नारद पुराणले भनेको छ। वेदको अर्थ पुरा गर्ने हुँदा[९] पुराण भनिएको हो। वेदमा चार जाति मात्र छन् भने पुराणमा धेरै जाति देखिन्छन्। वेदको मुख्य विषय यज्ञ हो भने पुराणको मुख्य विषय भक्ति हो। वेदको ब्रह्म (ईश्वर) निर्गुण निराकार छ। निराकारलाई चित्तमा अड्याउन कठिनपर्ने हुनाले उपासकहरूलाई सजिलो होस् भनेर पुराणले विशेषतः ब्रह्मका साकार रूपको वर्णन गऱ्यो। पुराणको ईश्वर साकार (शरीरधारी) भएर भक्तहरूको रक्षागर्ने, दुष्टहरूको संहार गर्ने,

---

*६. सर्गश्च प्रतिसर्गश्च वंशो मन्वन्तराणि च। वंशानुचरितञ्चैव पुराणं पञ्चलक्षणम्॥ (भागवत)*

*७. इतिहासपुराणाभ्यां वेदं समुपबृंहयेत्।*

*८. वेदार्थादधिकं मन्ये पुराणार्थं वरानने। (नारदपुराण)*

*९. यच्छास्त्रं वेदार्थं पूरयति तत् पुराणम्।*





उपदेश दिने, कतै ब्रह्मचारी, कतै गृहस्थ, कतै संन्यासी; यहाँ सम्म कि माछो, कूर्म, बँदेल, सिंह समेत हुँदै शङ्खचक्रगदा-पद्मादि लिएका चतुर्भुजादिस्वरूप हुँदा उपासकभक्तहरूलाई पूजा, अर्चना, ध्यानमा चित्त लगाउन सजिलो भएको छ।

**वेदव्यास र पुराण :**—पुराण निर्माता महर्षि वेदव्यासको नाम कृष्ण द्वैपायन, बादरायण आदि छन्। यिनलाई भगवान्‌को अवतार मानिन्छ। वशिष्ठका पनाती शक्तिका नाती पराशरका छोरा शुकदेवका पिता वेदव्यासको जन्म माझीकी छोरी सत्यवतीका गर्भबाट पराशर मुनिद्वारा यमुना नदीको एक टापुमा भएकाले यिनलाई द्वैपायन भनिएको हो। वेदको विभाजन गरेकाले वेदव्यास नाम रहन गयो। आदिकालमा एउटामात्र वेद थियो त्यसलाई ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद यी चार भागमा विभाजन गरे। यिनमा अपरिमित ज्ञान भएकोले चारमुख न भएका ब्रह्मा, दुई हात भएका अर्का विष्णु, निधारमा तेस्रो नेत्र नभएका शम्भु भनेर भनिन्छ। यिनका गुरुको नाम जातूकर्ण्य थियो। यिनले कलियुगमा मानिसहरूको बल, बुद्धि, र आयु कम हुने भएकाले सोचेर हरेक द्वापर युगको अन्तमा जनकल्याणको लागि पुराणहरूको रचना गर्दछन्। भनिन्छ प्राचीन कालमा सयकरोड़ श्लोकको एउटा मात्र[१०] पुराण थियो। यति ठूलो ग्रन्थको ज्ञान अल्पबुद्धि भएका मानिसद्वारा संभव नहुँदा यसको सारतत्त्व चारलाख श्लोकमा लेखेर १८ भागमा विभाजन गरी ब्रह्मपुराण, पद्मपुराण, विष्णुपुराण, वायुपुराण, लिङ्गपुराण, गरुड़पुराण, नारदपुराण, भागवतपुराण, अग्निपुराण, स्कन्दपुराण, भविष्यपुराण, ब्रह्मवैवर्तपुराण, मार्कण्डेयपुराण, वामनपुराण, वाराहपुराण, मत्स्यपुराण, कूर्मपुराण, ब्रह्माण्डपुराण[११] यी १८ पुराणहरूको रचना या सम्पादन गरे। कसैले रचना गरे भन्छन्, कसैले संपादन गरे भन्छन्, यो अलग् विषय हो। ठाउँ-ठाउँमा पुराणसंहिताको पनि उल्लेख गरेको हुनाले निश्चय नै पुराणसंहिता पुराणको प्राथमिक सुव्यवस्थित रूप हो। धेरै लामो समय हुँदा यत्र तत्र छरिएर रहेका नष्ट-भ्रष्ट भएका पुराणहरू संकलन गरेर वेदव्यासले पुराणका विकासको नयाँ थालनी गर्नुभएको बुझिन्छ। पुराण संकलन गर्दा वेदव्यासलाई आख्यान, उपाख्यान गाथा, कल्पशुद्धिको सहारा लिन परेको थियो। पुराण संहिता स्वयं वेदव्यासको कृति हुनुपर्दछ। आफ्ना शिष्य लोमहर्षण (सूत)लाई पढाएर पुराणको प्रचार गराए। पुराण संहिताको विस्तृतीकरण नै वर्तमान १८ पुराण हुन्भन्ने भनाइ छ। अवश्य नै चतुःसहस्त्रश्लोकात्मक (४०००) पुराण संहिताको आधारमा पछि १८ पुराणहरूको रचना या संकलन सम्पादन गर्न वेदव्यासलाई पनि सजिलो पऱ्यो होला।

पुराणसंहिताकै आधारमा १८ उपपुराण १८ औपपुराणको पनि रचना भयो। आजको यत्रो विशाल पुराण साहित्यको भण्डार जो उपलब्ध छ त्यो वेदव्यासको देन हो। वेदव्यास उदारमना ब्रह्मज्ञानी हुनुहुन्थ्यो। वहाँको समदृष्टि थियो। पछि केही महत्वाकांक्षी र संकुचित व्यक्तिहरूले केही पुराणहरूमा थपथाप गरेरा समाजलाई विभाजन गर्ने खालका प्रकरणहरू पनि यत्र तत्र देखिन्छन्। तर ती प्रक्षिप्त हुनाले अग्राह्य भइसकेका छन्। विद्वान्‌हरूको भनाइ यो छ कि-सबै पुराणमा प्रायः विषय मिल्ने भएकोले एउटै वेदव्यासले रचनागर्दा विषय दोहरिनु नपर्ने हुँदा ''व्यास'' यो पदवी हो नाम हैन, विभाजन गर्ने हुनाले व्यास भनिएको हो भन्ने पनि छ। वेदव्यासका छोरा शुकदेव ठूला पौराणिक थिए, यिनले महापुराण भागवतको विस्तार गरी भगवत्तत्त्व सुनाएर राजा परीक्षितलाई मुक्त गराए।

**पुराणमा अवतारवादः**—कुनैपनि शक्ति सम्पन्न भगवान् या देवता माथिल्लो लोकबाट तल्लो लोकमा उत्रनु तथा मानव या अमानव रूप धारण गर्नु अवतार हो। विश्वलाई नियमित र संतुलित राख्नेवाला धर्म हो। जुन् बेला धर्मको हानि र अधर्मको उदय हुन्छ त्यसबखत भगवान् ले विश्वमा आविर्भूत भई धर्मरक्षा र अधर्मको नाश गर्नुहुन्छ। भगवद्गीता

---

*१०. पुराणमेकमेवासीच्छतकोटिप्रविस्तरम्।*

*११. मद्वयं भद्वयञ्चैव ब्रत्रयं वचतुष्टयम्। अनापलिङ्गकूस्कानि पुराणानि विदुर्बुधाः॥*



यसको प्रमाण हो। यदि भगवान्‌को प्राकट्य भूतलमा नहुँदो हो त धर्म-संस्कृति र सभ्यताको व्यवस्थापन र उच्चज्ञानको वितरण हुन सक्ने थिएन। कपिल अवतार यसको उदाहरण छ। भगवान्‌द्वारा प्राणीहरूलाई सन्मार्गमा डोऱ्याएर जीवलाई मुक्त गराउने मार्ग बताइन्छ र दुष्टहरूको संहार गरिन्छ।

अवतारको संख्या कहीं दश, कहीं चौविस पाइन्छ। यसमा एकमत छैन। प्रचलितरूपमा मत्स्य, कच्छप, वराह, नृसिंह, वामन, परशुराम, रामचन्द्र, बलराम, बुद्ध र कल्कि[१२] यी दश अवतार मानिन्छन्। भगवान्‌को निम्ति सबै प्राणी समान हुनाले सानो योनि मत्स्यावतार, कच्छप अवतार र त्यसपछि वराह, नृसिंह आदि अवतार हुँदै गएका छन्। अरु अवतार भगवान्‌का अंशावतार र कृष्णावतार भगवान्‌को पूर्णावतार हुँदा दशावतारमा उल्लेख भएन। डार्विनको विकासवाद सिद्धान्तले पनि यही सिद्ध हुन आउँछ। यस प्रकार अवतारको कल्पना त्यसका विविधरूप तथा चरित्र र लीलाको वर्णन पुराणको प्रधान विषय हो, यी अवतार लोक कल्याणका निमित्त हुने गर्दछन्।

**पुराणमा भक्तिमार्ग :—** पुराणमा भक्तिमार्गको प्रधानता छ, यसको मुख्य उदाहरण श्रीमद्भागवत् महापुराण हो। भगवान्‌मा अनन्य प्रेम अथवा अनन्य ममता हुनु भक्ति हो। पूर्ण भक्तिमा भगवदाकार वृत्ति रहन्छ। भक्तिमा श्रद्धाको ठूलो आवश्यकता हुन्छ। भक्ति हुने क्रम श्रद्धा, त्यसपछि रति, त्यसपछि भक्ति हो। भक्तिमा कामना हुँदैन प्रेमको पराकाष्ठा हुन्छ। अन्तःकरणमा सद्भावको अभिव्यक्ति समाधि हो भने, चिद्भावको अभिव्यक्ति ज्ञान हो, सच्चित् आनंदको अभिव्यक्ति भक्ति हो। भगवत्-प्राप्तिको सुलभ साधन भक्ति हो। भक्ति दुई किसिमको छ-पराभक्ति र गौणीभक्ति। पराभक्तिमा स्व-स्वरूपको अनुसन्धान हुन्छ, गौणीभक्ति वैधी एवं रागात्मिका दुई किसिमको छ। रागात्मिका भक्ति गोपीहरूको जस्तो हो। वैधी भक्तिका भगवान्‌का गुणानुवाद, श्रवण, नामकीर्तन, स्मरण, पादसेवन, पूजा, वन्दना, दास्यभाव र सखाभाव यी नौ किसिम हुन्छन्। भगवान्‌को नाम कीर्तन गर्ने चाण्डाल (नीचजाति) पनि अरुभन्दा श्रेष्ठ हुन्छ 'अहो बत श्वपचोऽतो गरीयान् यज्जिह्वाग्रे वर्तते नाम तुभ्यम्' भनिएको छ।

कर्ममार्गमा यज्ञ यागादि पूजा पद्धतिको झमेला र झंझट हुन्छ, ज्ञान मार्ग कठिन छ। भक्तिमार्ग ज्यादै सरल छ। सरल हुँदा स्त्रीशूद्रादि सबैले भक्तिद्वारा भगवत्प्राप्ति या मोक्षप्राप्ति गर्न सक्छन् मुक्ति हुने सरल उपाय भक्ति भएकोले भक्तिको ज्यादै महत्व गाइएको छ। दोषले भरिएको कलियुमगा एउटा मात्र ठूलो गुण छ, त्यो हो भगवान् श्रीकृष्णको कीर्तन त्यसबाट भक्त आसक्ति रहित भएर परमात्मालाई प्राप्त गर्दछ।[१३]

**केही शङ्का र समाधानः—** देवराज इन्द्रले छल गरेर गौतम ऋषिकी पत्नी अहिल्याको सतीत्व हरण गर्दा रुष्ट भएका गौतम ऋषिको शापबाट अहिल्यालाई पाषाण हुन पऱ्यो, इन्द्र सहस्राक्ष भए। यो कुरा पुराणमा लेखिएको छ। देवराज जस्ताले अर्काकी पत्नीमाथि जाइलाग्नु नैतिक पतन र धर्मविरुद्ध काम भएको आक्षेप लगाइन्छ तर यसको समाधान कुमारिल भट्टले तन्त्रवार्तिकमा युक्तिका साथ यसरी गर्नुभएको छ-गौतम भनेका चन्द्रमा हुन् चन्द्रमाकी पत्नी रात्री अहिल्या हुन्-इन्द्र भनेका सूर्य हुन्, सूर्य-उदय हुँदा रात्री (अहिल्या) घर्षित हुन्छे, यही पुराणको वर्णन शैलीले गर्दा फरक परेको हो। फलतः पुराणवर्णित इन्द्र-अहिल्याकथा व्यभिचार र अश्लील हैन।

चन्द्रमाले आफ्ना गुरु बृहस्पतिकी धर्मपत्नी तारालाई जबर्जस्ती राखे। यसले गर्दा चन्द्रमा र बृहस्पतिमा ठूलो लड़ाई पऱ्यो। ब्रह्माले सम्झौता गराएर तारालाई फिर्ता गराउनुभयो। तर चन्द्रमाबाट बुध नामको छोरा जन्मिसकेको थियो। छोरा चन्द्रमासंग बस्यो, यस्तो कथा छ। गुरुपत्नीलाई पत्नी बनाउने हाम्रो धर्मशास्त्र विरुद्ध कुराको पुराणमा वर्णन छ,

---

*१२. वनजौ बनजौ खर्वस्त्रीरामी सकृपोऽकृपः। अवतारा दशैवैते कृष्णस्तु भगवान् स्वयम्।*

*१३. कलेर्दोषनिधे राजन्! अस्ति ह्येको महान् गुणः। कीर्तनादेव कृष्णस्य मुक्तसंगः परं व्रजेत्।*

यस्तो किन ? पुराणको शैलीद्वारा जसरी वर्णन गरिए तापनि वास्तविकता.यो हो—बृहस्पति, चन्द्रमा, तारा तथा बुध यी चार खगोलीय नक्षत्र हुन्। बृहस्पतिको भ्रमणकक्षमा तारा नक्षत्र रहन्छे। चन्द्रमाको आकर्षणले तारा चन्द्रकक्षमा आइपुग्छे। यो आकर्षण र विकर्षणबाट आकाश मण्डलमा गड़बड़ हुँदा सूर्य जसलाई प्रजापति या ब्रह्मा भन्दछन् ती सूर्यको आकर्षणले पुनः तारा आफ्नो मूलकक्ष वृहस्पतिसंग फिर्ता हुन्छे। यसरी आकर्षण विकर्षण हुँदा चन्द्रमाको कुनै भाग छोईएर अलग हुँदा बुधग्रहको जन्म भयो। बुध चन्द्रमाको अंश हुँदा चन्द्रमाको भयो। अतः-यो प्रसङ्ग हिन्दुधर्म या धर्मशास्त्र विरुद्ध छैन।

श्रीमद्भागवत पुराणमा वर्णन छ-ब्रह्मा कामको वशीभूत भएर आफ्नी पुत्री सरस्वतीसंग व्यभिचार गर्न उनका पछि दौड़े। पिताको यस्तो किसिमको अधर्म कार्य देखेर मरीचि आदि छोराहरूले रोकेर संझाएपछि ब्रह्माले लज्जित भएर आफ्नो शरीर त्याग दिए। यस्तो अनैतिक र अधार्मिक कार्यको पुराणमा वर्णन किन भयो ? पुराणको कथावर्णन शैली जे जस्तो भएता पनि वास्तविक रहस्य यस प्रकार छ-मन भनेको प्रजापति या ब्रह्मा हो। वाक् या वाणी सरस्वती को नाम हो। अतः मनले चाहेको कुरा वाणीद्वारा प्रकट गर्दछ। मन पहिलो र वाणी दोस्रो हुँदा मन पिता र वाणी (सरस्वती) छोरी भइन्। जब मनरूपी पिताले वाणीरूपी आफ्नी पुत्रीलाई प्रेरणा गर्दछन् अनि शब्दद्वारा अभिप्राय प्रकट हुन्छ। यसैका आधारमा पुत्रीपछि लागेको कथा भएको हो। यस्ता अनेक आक्षेप, शङ्का र तिनका समाधानहरू छन्, विस्तार हुने हुँदा लेखिएन।

**पुराणहरूको सामाजिक उपयोगिता :—** प्राचीन वैदिक समाजको स्वरूप, हाम्रो संस्कृति, सभ्यता, कर्म, ज्ञान, भक्तिको विकास, वर्णाश्रम व्यवस्था, भूगोल, खगोल प्राचीन-इतिहास, समस्त सृष्टि-विज्ञान, शिल्पविद्या, आयुर्वेद, रत्नपरीक्षा, आदिको ज्ञान पुराणद्वारा हुन्छ। महर्षि दधीचि राजा शिबि, मोरध्वज, हरिश्चन्द्र आदिका उपकार, परायणता, सत्यनिष्ठा, दाननिष्ठा आदि उदात्त गुणहरूको हामीमा प्रतिष्ठापन गराउन पुराणकथाश्रवणको अत्यन्त आवश्यकता छ।

सती सावित्री; सीता, अनसूया, मदालसा, दमयन्ती, सुकन्या, सुलोचना आदि पातिव्रत्य परायणा नारीहरूको पवित्र आचरणले हाम्रा महिलाहरूमा निकै प्रभाव पर्दछ। कुनै मानिस सत्य बोल धर्म गर भन्ने आदेशले मात्र धर्मात्मा बन्दैन। तत्तत्विषयमा गरिएको आचरणबाट मात्र मानिसलाई सत्यवादी या धर्मात्मा बनाउन सकिन्छ। रामचन्द्रको आदर्श चरित्र, दिलीप राजाको गोभक्ति, गोरक्षाको दृढसंकल्प, पुण्य र पापको परिणाम आदि उपयुक्त विषयहरू अध्ययनबाट जान्न सकिन्छ। आधुनिक इतिहासकार विल्सन, पार्जिटर, कीथ आदि पाश्चात्य विद्वान्हरूले र जायसवाल, राजवली पाण्डेय, हरिप्रसाद शास्त्री आदि पौरस्त्य विद्वानहरूले आफ्ना-आफ्ना इतिहासग्रन्थहरूमा पौराणिक सामग्रीको प्रचुरमात्रामा उपयोग गरेका छन् र वर्तमान इतिहासकारहरूले पनि पुराणको उपयोग गर्दैछन्। पशु, पक्षी र जड पदार्थको मनुष्यसंग सम्बन्ध, देवता र मनुष्यहरूको पारस्परिक सहयोग धार्मिक विचार, विभिन्न दार्शनिक सिद्धान्त, धर्म, अर्थ, काम, मोक्ष यी चार पुरुषार्थको विशद व्याख्या समेत पुराणहरूमा स्पष्ट पाइन्छ।

आधुनिक वैज्ञानिकहरू संहारक अणुशक्तिको अन्वेषण गरेर गर्व गर्दछन्, त्यसको प्रयोग परमाणु अस्त्रहरूको रूपमा भइरहेको छ। परन्तु उनीहरूलाई प्रजननात्मक अणुशक्ति र पालनात्मक अणुशक्तिको ज्ञान भएको छैन। सौन्दर्य लहरीमा प्रजनन पालन संहरण यी तीन किसिम को अणुशक्ति (ब्राह्मी वैष्णवी रौद्री) को वर्णन छ। वैज्ञानिकहरू यतातिर लागेमा संसार को ठूलो उपकार हुने थियो।

अन्तमा तल लेखिएका श्लोक अनुसार चाँपजस्तो कान्ति भएका ठूलो पेट र सुगाको जस्तो ठूँड भएका अक्षमाला र अभयमुद्रा लिएका अनेक किसिमका गहनाले सुशोभित पुराण देवतालाई नमस्कार छ।

**पुराणं चम्पकाभासं शुकवक्त्रञ्च तुन्दिलम्। अक्षसूत्राभयं ज्ञेयं नानाभरणभूषितम्॥**

☆



# ❀ नेपालमा संस्कृतको आवश्यकता ❀

**आचार्य पूर्णचन्द्र ढुंगेल**
पूर्व-प्राचार्य,
श्रीगोरक्षनाथ संस्कृत विद्यापीठ, गोरखपुर

मनुष्यले ईश्वरबाट पाएका विशेष वस्तु हरूमध्ये सबै व्यवहारको मूलमाध्यम 'भाषा' अत्यन्त महत्त्वपूर्ण वस्तु हो। आपसमा भाषाहरूकै प्रयोगले गर्दा नै मानव जातिले भौतिक तथा आध्यात्मिक उन्नति गर्दै आएको हो। सृष्टि कालमा केवल एक भाषा थियो। पछि क्रमशः भाषासंख्यामा वृद्धि भयो।

"भूरिति व्यहरत्-भुवमसृजत्" इत्यादि श्रुतिले शब्दोच्चारण पूर्वक संसारको सृष्टि भएको स्पष्ट पार्दछ। मानव-समाजका विकासको साथ साथै सृष्टि प्रारम्भ हुने बेलाको आदि भाषाको पनि क्रमशः विकास हुँदै जाँदा वैदिक र लौकिक दुई रूपमा संस्कृत भाषा विभक्त भयो। यो भाषा स्वतः संस्कारवान् भएकोले संस्कृत, तथा देवताहरूले पनि प्रयोग गरिने हुँदा देववाणी देवभाषा पनि भनियो। यो भाषा अत्यन्त प्रभावशाली ओजस्वी, गम्भीर, मधुर र परम वैज्ञानिक छ। अत्यन्त सभ्यजातिका भाषामा हुनुपर्ने सबै गुण संस्कृत भाषामा छन्।

विश्वका कुनै पनि भाषामा संस्कृतभाषासंग प्रतिद्वन्द्विता राख्ने शक्ति छैन। यस भाषाका एक-एक शब्दको उच्चारणले वाक्यशक्तिको विकास भई शरीरका बौद्धिक तथा मानसिक विरोधी ग्रन्थिहरूको पूर्णतया परिष्कार हुन्छ। साथै आत्मा पवित्र भई ईश्वरोन्मुख हुन्छ। यसै सृष्टिप्रारम्भकालिक संस्कृत भाषाबाट नै सबै भाषाहरूको क्रमशः तत्सम, तद्भव र तद्विकृत हुँदै जन्म भएको हो। संस्कृत मूल भाषाबाट अशक्तिवश सबै भाषहरूको जन्म भएको कुरा महान् भाषावैज्ञानिक भर्तृहरिज्यूको यो वचनबाट पनि प्रमाणित हुन्छ।

**"दैवीवाग् व्यवकीर्णेयमशक्तैरभिधातृभिः। अनित्यदर्शिनां त्वस्मिन् वादे बुद्धि-विपर्ययः॥"** (वाक्यपदीय)

अतः विश्वका सबै भाषामा स्पष्टरूपमा संस्कृत-भाषाको झलक पाइन्छ। मनुष्यजाति भन्दा अधिक शक्तिशाली देवताहरूले पनि यसै भाषामा सबै व्यवहार गर्दछन्। प्राचीन कालमा यो भाषा लोकभाषा थियो। भोजराजासंग दाउरा बेच्ने र कपड़ा धुने साधारण नागरिकको **"भारो न बाधते राजन् तव बाधति बाधते"** र **"काव्यं करोमि न हि चारुतरं करोमि"** इत्यादि सम्वादले पनि संस्कृत भाषालाई त्यस समयमा सबै नागरिकको भाषा थियो भन्ने कुरा सिद्ध गर्दछ।

मानव जीवनमा यस्ता परमपवित्र संस्कृत वाङ्मयको ज्ञान गर्नु अत्यन्त सौभाग्यको कुरा हो। यस संस्कृतभाषाको अत्यन्त परिष्कृत रूप र विलक्षण वोधन सामर्थ्य देखेर नै विश्वभरका वैज्ञानिकहरूले यस कम्प्यूटर युगमा कम्प्यूटरको लागि प्रयोगमा ल्याउन सजिलो, सबै भन्दा वैज्ञानिक र श्रेष्ठ भाषाको रूपमा संस्कृतलाई स्वीकारेका छन्। संस्कृत भाषा-भाषी समाज र संस्कृत-प्रेमी जनताको निमित्त यो अत्यन्त सौभाग्यको कुरा छ। यस्तो स्थितिमा चारैतिरबाट संस्कृतभाषाको प्रचारमा जोड़ दिनु मानवजातिको कल्याण गर्नु हो। वेद, उपवेद, वेदाङ्ग, दर्शन, पुराण, इतिहास, धर्मसूत्र, शिक्षासूत्र, विज्ञानसूत्र, कृषि, वाणिज्य, आयुर्वेद, गानविद्या, शिल्पविद्या आदि आध्यात्मिक तथा जीवनोपयोगी विषय र अपार शक्ति-सम्पन्न तन्त्र, यन्त्र एवं मन्त्रहरूको धनी संस्कृतभाषा विश्वमानवको आफ्नै भाषा हो। यसलाई ब्राह्मण-भाषा र कर्मकाण्डमात्रको भाषा भन्नु यसको अपमान गर्नु हो। यसमा विश्वबन्धुत्वको भावना टङ्कारो रूपमा विद्यमान छ।





दैशिकता, प्रान्तीयता र जातीयताको लेशमात्र पनि संस्कृतभाषामा छैन। विश्वका सबै जातिका हितको सुरक्षा गर्ने भावना अरु भाषाका ग्रन्थमा भन्दा संस्कृत-ग्रन्थमा अधिक छ :—

सर्वे भवन्तु सुखिनः सर्वे सन्तु निरामयाः।
सर्वे भद्राणि पश्यन्तु, मा कश्चिद् दुःखभाग् भवेत्॥

यस्तो पवित्र भावना अरु कुनै भाषाका ग्रन्थमा यति प्रचुररूपमा पाइँदै पाइन्न। विश्वका प्रसिद्ध भाषाहरू जर्मन, अंग्रेजी फ्रेञ्च, रुसी आदि भाषाहरूमा संस्कृतको प्रत्यक्ष प्रभाव देखिन्छ। अनावश्यक अक्षर लेखी शब्दको आकार बढाउने अंग्रजी आदि भाषाको जस्तो आडम्बर संस्कृतमा छैन। विशाल संस्कृत- वाङ्मयका एक छेउ, अत्यन्त साना भागलाई कर्मकाण्ड भनिन्छ, पूरै संस्कृति वाङ्मयलाई ब्राह्मणवृत्ति, यजमानी चलाउने ब्राह्मणहरूको विषय हो भनी कसैले विरोध गर्दछ भने त्यसलाई आजसम्म संस्कृतको विषयमा कसैले कत्ति केही बताएको रहेनछ भन्नुपर्दछ। हीराको परिचय नपाउनेले हीरालाई सामान्य ढुङ्गो भनी फ्याँक्न सक्तछ। संस्कृतको परिचय नपाउनेले मात्र संस्कृतलाई उपेक्षाको दृष्टिले हेर्न सक्तछन्। संस्कृत वाङ्मय वस्तुतः मानव जातिको सर्वोत्तम उत्कर्ष र स्वाभिमानको साधन एवं मानव जीवनलाई पूर्ण बनाई परमपद प्राप्ति गराउने उपाय पनि हो।

विश्वको एक मात्र संवैधानिक हिन्दुराष्ट्र नेपालमा प्राथमिक कक्षादेखि विज्ञान, वाणिज्य, कृषि र कला आदि विषयहरूका स्नातक र स्नातकोत्तरसम्मका कक्षामा तद्विषयसंबद्धका ग्रन्थहरू पाठ्यग्रन्थको रूपमा संस्कृतभाषा राखिनु पर्दछ। संस्कृतमा उक्त सबै विषयका पुस्तकहरू पाइन्छन्।

यसरी पाठ्यक्रममा संस्कृत समावेश गर्दा संबद्ध विषयहरूका ज्ञानको साथै संस्कृत वाङ्मयको पनि ज्ञान हुन्छ।

संस्कृतलाई अनिवार्य गर्न खोज्दा त्यसको विरोध गर्नेहरूलाई मेरो विनम्र अनुरोध छ कि वहाँहरूले संस्कृतभाषामा भएको लोकोत्तर पवित्रता, सहानुभूति सहअस्तित्वका भावनालाई बुझ्न प्रयास गरिदिनु पर्‍यो। त्यसै विरोध गर्दा हामी नै ठगिनेछौं, मानवताबाट अधः पतन हुनेछौं, नाम मात्रले मनुष्य रहनेछौं।

संस्कृत भाषामा विश्व-मानवलाई एक सूत्रमा बाँध्न सक्ने सामर्थ्य छ। भाषा सम्बन्धी आरोह तथा अवरोहका विलक्षण गुणहरू यसमा छन्। हामीलाई सभ्य र विकसित नेपाली बनाउन सक्ने अपूर्व सामर्थ्य यस जिउदो भाषामा छ। यस्ता सर्वगुण-सम्पन्न सर्वश्रेष्ठ भाषालाई यदि कसैले पनि मातृभाषा (डेथ् ल्याङ्गवेज्) भन्दछ भने त्यो विवेक-शून्य व्यक्ति नै जिउँदै मरेको संझनु पर्दछ।

संस्कृतभाषामा ती अद्भुत जीवन-शक्तिहरू छन्, जसबाट त्यो कसैले न पढे पनि जीवित रहन सक्तछ। संस्कृतले आफू बाँच्न मानिसलाई गुहार्न परेको छैन किन्तु मानिसलाई आफ्नो मानवता जोगाउन संस्कृतलाई गुहार्नु परेको छ।

संस्कृत भाषाको घोर उपेक्षाले गर्दा हामी नेपालीको सारै अपमान हुन थालेको छ। हाम्रा नामहरूमा यति विकृतिहरू आउन थालेका छन् कि नाम सुन्दा कान बन्द गर्नुपर्ने स्थिति छ। ५० प्रतिशत जति नाम अशुद्ध हुन थाले। ह्रस्व र दीर्घमा ध्यान जान छोड़ेको छ। शिक्षा क्षेत्रमैं अशिक्षाको साम्राज्य फैलिदै छ।

हिजो आजका शिक्षण संस्थानहरूबाट निस्केका स्नातक र स्नातकोत्तर उपाधि प्राप्त गर्ने व्यक्तिहरूमा पनि शब्दोच्चारण एवं लेखन शुद्ध हुँदैन; शिक्षाको स्तर घट्तै गएको छ। यिनै शिक्षण संस्थाहरूबाट निस्केका युवक-युवतिहरू सार्वजनिक क्षेत्र, रेडियो, टेलिभिजन आदिका माध्यमबाट समाचार प्रसारण गर्दछन्।

समाचारमा प्रयोग गरिएका शब्दहरूमा अगणित त्रुटिहरू सुनिन थालेको छ। राम प्रसाद लाई 'राम पर्साद' र

'ध्रुव' लाई 'धुर्व', 'क्रूर' लाई 'कुर्र' यस्ता उच्चारण र लेखन भइरहेका छन्। आज सौजन्यलाई सौजन्यता र अज्ञानलाई अज्ञानता भनिन्छ। के कति लेखेर सक्रे! हाम्रा शब्दहरू ठीक ढङ्गसंग उच्चारित हुन सकेका छैनन्।

गाउँ र नगरमा विशेष सज्जाका साथ टाँगिएका श्यामपट्ट ( साइनबोर्ड ) हरूमा ८० प्रतिशत शब्द अशुद्ध हुन थाले। ठूल्-ठूला अक्षरमा ती अशुद्ध शब्द र वाक्य लेखिई सार्वजनिक क्षेत्रमा टाँगिएकाले कोमल बुद्धिका बालक-बालिकाहरूको दृष्टि प्रतिदिन त्यहाँ पदर्छ उनीहरूले पनि सभ्यतालाई नै निर्मूल पार्ने त्यही अशुद्धिको सिको लिन थालेका छन्। ठाउँ-ठाउँमा लेखिएका अशुद्ध प्रतीक्षालयका लेखहरू देखेर एकजना भारतीय सज्जनले भने कि ''यह कितने असभ्य लोगोंका देश है, सामान्य बोलचाल में आने वाले शब्दोंको भी अशुद्ध लिखते हैं' यो निन्दा मैरै कानले धेरै पटक सुनें। त्यसमा मैले जबाफ दिएँ कि 'यो सवै जिउँदो भाषा संस्कृतको घोर उपेक्षाको फल हो। जबसम्म सबै जनताले संस्कृत सिक्दैनन् तबसम्म यस्ता दोषहरू मेटिन सक्दैनन्। सरकारको पनि संस्कृततिर ध्यान आकृष्ट हुनु नितान्त आवश्यक छ।'

मेरो वचन सुन्दा भारतीय बन्धुले भन्नु भयो—'विश्वको एकमात्र हिन्दुराष्ट्र दुई अरब हिन्दुको अस्मिताको पवित्र भूमि नेपालमा त अमर भाषा संस्कृतलाई राष्ट्रभाषा नै बनाउनु पर्ने हो; संस्कृतको अधिकाधिक प्रचार-प्रसार गर्ने प्रमुख केन्द्र नेपाल नै बन्नु पर्ने, किन यता ध्यान दिइएको छैन ?'

त्यसबेला म देशको गतिविधिलाई देख्ता निरुत्तर भएँ। अब राष्ट्ररक्षार्थ संस्कृतको लागि सबैले पर्याप्त ध्यान नदिई नहुने समय आएको छ।

स्वामी श्री परमानन्द सरस्वतीजीको स्मृति गन्थ छापिन लागेकोमा म वहाँको सम्बन्धमा दुई शब्द केही लेख्दै छु—

हिन्दुराष्ट्र नेपालको बाग्लुङ् जिल्ला धवलागिरि अञ्चलमा जन्म लिई बाल्यकालदेखि नै अखण्ड ब्रह्मचर्यको पालन गर्दै अगणित राष्ट्र-सेवाकार्यमा अग्रिम भूमिका निभाउने यतिराज स्वामीज्यूलाई नजान्ने नेपाली शायद नै कोही नहोला। राष्ट्र-भक्ति, राज-भक्ति, राष्ट्र-गौरव, नेपालीयता, आर्य संस्कृति, आर्य सभ्यता, महापुरुष-आदर्श, निर्धनजन सेवा, सदाचार, संस्कृत-शिक्षा, आश्रम-संचालन, आदि महत्वपूर्ण राष्ट्रका अत्यावश्यक सत्कर्महरूको अनुष्ठान कार्यमा नै निरन्तर मनोयोग दिई आदर्श परम्परालाई जनसमक्ष राख्दै तन, मन, धन एवं वाणीद्वारा पूर्णरूपले राष्ट्र सेवा गरी सबैको हृदयमा ससम्मान स्थान प्राप्त गर्नुभएका समाजका कर्णधार पूज्यप्रवर स्वामी परमानन्द सरस्वतीज्यूको स्मृतिमा 'नेपालमा संस्कृतको आवश्यकता' नामक लेख प्रेषित गर्न पाएकोमा मलाई अपार हर्ष प्राप्त भइरहेको छ। यस्ता पवित्र अवसरहरू जीवनमा अत्यन्त कम प्राप्त हुन्छन्। मैले स्वामीज्यूको जीवनमा ती विशेषताहरू देखें, जुन् महापुरुषहरूका हृदयग्राही विशेषताहरूको एकै श्लोकमा कविवर भवभूतिले उत्तर राम-चरितमा यसरी उल्लेख गरेका छन्—

प्रियप्राया वृत्तिर्विनयमधुरो वाचि नियमः<br>
प्रकृत्या कल्याणी मतिरनवगीतः परिचयः॥<br>
पुरो वा पश्चाद् वा तदिदमविपर्यासितरसम्<br>
रहस्यं साधूनामनुपधि विशुद्धं विजयते॥

# ✿ एकत्ववादकी स्रोतस्वती गण्डकी ✿

-डा० टीकाराम पन्थी
पूर्व शिक्षाध्यक्षः,
महेन्द्र-संस्कृत-विश्वविद्यालय,

यहाँ ''गण्डकी'' शब्द गण्डकीक्षेत्रको संकेतक हो। पुराणहरूको वर्णन अनुसार मुक्तिनाथदेखि हरिक्षेत्र (गण्डकी-भागीरथी-संगम) संमको भागलाई गण्डकीक्षेत्र, शालग्रामक्षेत्र, शालग्रामतीर्थ, चक्रतीर्थ आदि नामले पुकार्ने गरिएको छ। कृष्णागण्डकीलाई गण्डकी, चक्रनदी, शालग्रामनदी, चक्रसरित्, अमरगण्डनदी (पद्मपुराणमा गल्लिका) आदि नामहरू दिइएका छन्। वाराहपुराणले तीन अध्याय (१४४, १४५, १४६) मा गण्डकीक्षेत्रको समग्र चित्र प्रस्तुत गरेको छ। 'हिमवत्खण्ड' र काशीरामविरचित गण्डकी माहात्म्यमा गण्डकी क्षेत्रको विस्तृत वर्णन छ गणेशपुराणले (उत्तराखण्ड अध्याय ७३ देखि १२६ सम्म) मिथिला साम्राज्यको राजधानी (देवघाट देखि उँधो गण्डकीको बायाँ तट या कतै हुनुपर्छ) गण्डकी देश, गण्डकीपुर, गण्डकीनगरको व्यापक वर्णन प्रस्तुत गरेको छ। अन्य पुराणहरूमा ठाउँ ठाउँमा गण्डकी संबद्ध वर्णन पाइन्छ। मुक्तिनाथदेखि त्रिवेणीसम्मको भागलाई १२ योजन (४८ कोश या २४० किलोमीटर) लम्बाइ क्षेत्र बताइएको छ र त्यति क्षेत्रलाई शालग्राम क्षेत्र, शालग्राम पर्वत, शालग्राम गिरि भनिएको छ। त्रिवेणीसम्म शालग्राम पाइने आशय देखाइएको छ। एक ठाउँलाई मात्र, (देवघाटलाई मात्र) 'शालग्राम महाक्षेत्र' भनिएको छ, गण्डकी क्षेत्रको मुटु भाग त्यसैलाई मानिएको छ। यी विस्तृत कुरा वाराह पुराणमै छन्। त्यसमा मुक्तिनाथ, रुरुक्षेत्र, देवघाट, त्रिवेणी, हरिक्षेत्र यी ५ वटालाई गण्डकीका मूर्धन्य क्षेत्र बताएर देवघाटलाई सर्वोत्कृष्ट बताइएको छ—'शालग्राम महाक्षेत्र'। वाराह पुराणमा देवघाटको उभयमुखी भूमिका देखाइएको छ—१. गण्डकी क्षेत्रको मूर्धन्यतम तीर्थ, २. देवताहरूको पर्यटनस्थल। वाराह पुराण अनुसार यो क्षेत्र देवाट हो। देवा अटन्ति यत्र इति देवाटः। 'देवानामटनाच्चैव देवाट इति संज्ञितम्।' वर्तमान नेपाल भूमिका क्षेत्रहरूमध्ये स्वर्गका देवताहरू आफ्नी प्यारी देवीहरूका साथ पर्यटक बनेर आउने ठाउँ देवाट (देवघाट) नै (पुराणमा वर्णित) देखिएको छ। श्रीरामचन्द्र भने एक पटक सीता सहित गण्डकी र भागीरथीको संगममा नुहाएपछि काठमाण्डौ र त्यसपछि हरिहर क्षेत्र (देवघाट) घुमेका थिए।

'गण्डकी संगमे स्नात्वा नेपाले जगदीश्वरम्।
दृष्ट्वा हरिहरक्षेत्रं ययौ रघुकुलोद्वहः ॥'

(आनन्द रामायण, यात्राकाण्ड, सर्ग ६ श्लो. ७२)

वाराह पुराणको मान्यता अनुसार गण्डकी-भागीरथी-संगम 'हरिहरक्षेत्र' हो र देवघाट 'हरिक्षेत्र' हो।

यो त भयो यस लेखको शीर्षकमा लिखित 'गण्डकी' शब्दबाट आशयित गण्डकी क्षेत्रको सीमाक्षेत्र संबद्ध कुरा मात्र।

पुरा कालमा, महारण्यावस्थामा पनि यो क्षेत्र ऋषिकुल, गुरुकुल एवं तपोवन थियो। यो वानप्रस्थहरूको स्थल थियो, ब्रह्मचिन्तक साधकहरूको तपोभूमि थियो। विभिन्न किसिमका वा विभिन्न उद्देश्यका व्यक्तित्वहरूको



आश्रयणीय एक क्षेत्र भएकोले यो ऐक्य-संपादक तपोवन रह्यो। गण्डकीको दायाँ बायाँ तटमा, देवघाट, त्रिवेणी, रुरुक्षेत्र, पुलहाश्रम जस्ता ठाउँहरूमा वा एकै ठाउँमा पनि पृथक् पृथक् लक्ष्य भएका व्यक्तित्वहरू बस्ने र आउने जाने गरिरहन्थे। यस क्षेत्रमा वेद-वेदाङ्ग अध्ययन गर्ने बटुहरू र उनका उपाध्याय, आचार्य, कुलपतिहरू बस्थे। संसार र समाजसंग संबन्ध नराख्ने ब्रह्मचिन्तकहरू धुम्धुम्ती ध्यान बस्थे; भृगु जस्ता लेखकहरू बस्थे, अवधूत जडभरत र उनका शैलीका ब्रह्मज्ञानीहरू बस्थे। निश्चित अवधिको लागि तपोरत व्यास, गौतम, पाणिनि आदि मुनिहरू यहीं आएर बसे। यहाँ जीवनको तेस्रो भागमा उत्तराधिकारीहरूमा राज्यभार सुम्पेर वानप्रस्थ स्वीकार्ने भारतीय राजा-महाराजहरू शताब्दियौंसम्म आउँदै रहे; त्यस्तो शैलीका साधारण गृहस्थहरू पनि आउने गर्थे। यहाँ प्रकृति-जगत्‌बाट शिक्षा ग्रहण गर्ने दत्तात्रेयको शैलीका तथा लोकोपकारार्थ जीवन समर्पण गर्ने दधीचि मुनिको शैलीका कति महानुभावहरू आए, बसे। यहाँ सांसारिक रापले भत्भती आत्मा पोलेर आत्तिएका कति शान्तिकामी पुरुषहरू आए। यहाँ कति वैदिकहरूले कति यज्ञ संपादन गरे, यस्ता कुरा हामी यथार्थतः जान्दैनौं, केवल पौरस्त्यग्रन्थहरूको अध्ययनबाट अतीतको छायाचित्र झिल्का झिल्की मात्र प्राप्त गर्न सक्छौं। जे होस्, यो भिन्नलक्ष्यक व्यक्तित्वहरूद्वारा शरणीकृत, ऐक्य संपादक क्षेत्र थियो।

यो त भयो आश्रयिताहरूको एकाश्रयीभूत एकत्व-संपादक क्षेत्र भन्ने कुरा। पुराणहरूमा भनिए अनुसार प्राकृतिक एकत्व संपादक र ब्रह्मैक्य-बोधक क्षेत्र हो यो भन्ने चर्चा संक्षेपतः प्रस्तुत गर्दछु :- रजोगुण, सत्त्वगुण र तमोगुणको सहारा लिएर ब्रह्मा, विष्णु र शिवले विश्वको सृष्टि स्थिति र संहार गर्छन् भन्ने कुरा सिद्धान्ततः संमानित छ तापनि अठार महापुराणहरूको इष्ट (आराध्य वा उपास्य) देव विष्णु र शिव यी दुईमात्र छन्-कुनै पुराण विष्णुपरक छन् त कुनै पुराण शिवपरक छन्। अर्थात् पौराणिक यागहरू विष्णु र शिवलाई लक्ष्य गरेर मात्रै संपादन गरिन्छन्। तत्त्वतः **'द्यावाभूमी जनयन् देव एकः'** **'विश्वस्य कर्ता भुवनस्य गोप्ता'** अनुसार एक ब्रह्मका यी दुई पाटा, दुई रूप वा दुई शरीर—विष्णु र शिव हुन्। जो विष्णु हो उही शिव हो, जो शिव हो, उही विष्णु हो। यी दुईमा कत्ति पनि अन्तर छैन, दुवै एक परब्रह्मतत्त्व हुन्। यो कुरा वाराह पुराणमा दुई प्रसङ्गमा लेखिएको छ।

१. पहिले विष्णुलाई आराध्य मानेर देवदत्त मुनिले रुरुक्षेत्रमा तप गरे, उनको तपस्या प्रम्लोचा अप्सराद्वारा भङ्ग भयो। दोस्रो पटक भृगतुङ्गमा शिवको तप गरे उनले। शिवजी प्रत्यक्ष भएर देवदत्त मुनिलाई भन्नुभयो—'पहिल्यै तिमीले विष्णु र शिवलाई भेद दृष्टिले हेरेका हुनाले तिम्रो तप भङ्ग भएको हो। **'आवयोरन्तरं नास्ति'**—हामी दुवैमा भेद छैन, हामी दुबै एक हौं।'

२. देवघाटको वर्णन-प्रसङ्गमा स्वयं वाराह (विष्णु अवतार) भगवान्‌ले पृथिवीसंग भन्नुभएको छ—**'आवयोरन्तरं नास्ति'** हामी दुबै (विष्णु र शिव) एउटै हौं, हामी दुबैमा भिन्नता छैन, दुबैको संयुक्तरूप एक व्यक्ति हो।

वाराहपुराणमा प्राकृतिक संरचनालाई हेरेर देवघाट शिव र विष्णुको साझा क्षेत्र, हरिहर क्षेत्र मानिएको छ। काली गण्डकी विष्णुका गालाको स्वेदबाट बगेकी हुनाले मुक्तिनाथदेखि देवघाटसंम जे जति नद-नदीहरू खोला र मिसिन्छन् ती सबैको जलप्रवाहक भूक्षेत्र हरिक्षेत्र (विष्णु क्षेत्र) हो (कृष्णागण्डकी विष्णुमूलक हुन्।) सेतीगण्डकी शिवको जटाजूट बाट बगेकी छन्; त्रिशूलगङ्गा पनि शिवमूलिका हुनाले सेतीगण्डकी र त्रिशूली समेतका छ वटा गण्डकीहरूमा जे जति खोलाहरू मिसिन्छन्, ती सबैको जलप्रवाहक (पानी छाल) भूक्षेत्र हरक्षेत्र (शिवको क्षेत्र) हो।

यसरी पश्चिमतर्फ मुक्तिनाथ, पूर्वतर्फ त्रिशूलीको शिरसम्मको हिम-शृङ्खलादेखि प्रवाहित जल देवघाटमा एकीभूत हुन्छ। यो शिव-विष्णुको साझा क्षेत्र, हरिहर क्षेत्र उभय समन्वयात्मक, एकत्वसंपादक, प्राणतत्त्वरूप सर्वदेवमय, सर्वतीर्थमय मानियो। प्राकृतिक संरचनात्मक निदर्शन प्रस्तुत गरेर वाराहपुराणले यसलाई हरिहरको एकत्व प्रतिपादक मानेको हो। ७ वटा गण्डकीहरूमा मोटामोटी रूपमा एकेक हजारका हिसाबले ७ हजार ठूलासाना खोला-खोल्साहरू मिसिने मानेमा ती सबै देवघाटमा एकीभूत हुन्छन्। पुराणको प्रतीकात्मक प्रतिपादन शैली अनुसार समस्त प्राणिवर्ग, भूत-समुदाय, शिवैकत्व तथा हृषीकेशैकत्व प्राप्त गरेर अन्ततः एक ब्रह्ममा समाहित (विलीन) हुन्छन्, तत्त्वमसि, अहं ब्रह्मास्मि, जस्ता वाक्यार्थको संगति वा सार्थकता सिद्ध हुन्छ। यसरी गण्डकी क्षेत्र ब्रह्मैक्यबोधक क्षेत्र हो। यसै क्षेत्रमा राजर्षि भरत जन्मान्तरमा मृग तथा अवधूत जडभरत भए। उनले ज्ञानपिपासु राजा रहूगणलाई शरीरेन्द्रियातिरिक्त आत्मतत्त्वबारे बोध गराए, सच्चिदानन्द ब्रह्मको ज्ञान दिए।

हिन्दूहरूका आराध्य देवता विष्णु, शिव, सूर्य, गणेश र देवी पञ्चायतन वा पञ्चपरमेश्वर हुन्। यी ५ वटैलाई परात्पर परब्रह्म मानेर अथर्वशीर्षहरू लेखिएका छन्, अलग-अलग उपपुराणहरू छन्। गण्डकी क्षेत्र शिव र विष्णुको जस्तै सूर्य, गणेश र शक्तिको पनि आश्रित परमप्रिय क्षेत्र थियो। यी पञ्च परमेश्वरकै साझा, समन्वयात्मक क्षेत्र रहँदै आयो यो क्षेत्र। यसबारे केही चर्चा प्रस्तुत गरिन्छ :-

भविष्य पुराण (ब्रह्मपर्व, अध्याय १५६) अनुसार सृष्टिको प्रारम्भमा भगवान् विष्णुले शालग्राम क्षेत्रमा कृष्णाजिनधारी भएर ठूलो तप गरे। उनले तपद्वारा सूर्यको आराधना गरेका थिए र विष्णुबाट प्रसन्न सूर्यले उनलाई समस्त लोकको पालना गर्ने शक्ति वरदान स्वरूप दिएका थिए।

गणेशपुराण (उत्तराखण्ड, अध्याय ७३-१२६) अनुसार त्रेतायुगका राजा चक्रपाणिले यसै क्षेत्रमा तपद्वारा सूर्यको आराधना गरे। सिन्धु दैत्यले पनि सूर्यकै आराधना गऱ्यो र सूर्यबाट अनन्तकोटि ब्रह्माण्डनायक विराट् भगवान् बाहेक कसैबाट मृत्यु नहुने र तीनै लोकको राज्यप्राप्ति हुने वरदान पायो। मयूरेश्वर गणेश अवतारको उपक्रम थियो यो। सिन्धु दैत्यको साम्राज्य 'मिथिला साम्राज्य भनिन्थ्यो, राजधानीलाई गण्डकीनगर भनिन्थ्यो जो गण्डकीको तटमा थियो। भगवान् विष्णुसहित सारा लोकपाललाई कारागारमा थुनेर एरिया बन्द गरेर सिन्धुले तीनै लोकको राज्य चलायो। कारागारबाट निस्कने र आआफ्ना पदमा प्रतिष्ठित हुने इच्छाले देवताहरू गण्डकीतटमा विनायकको मूर्ति बनाई पूजा गर्छन्। शिवजी भने कैलाश छोडेर त्रिसन्ध्या क्षेत्रमा बस्छन्। आफू त्यहीं बसी जगदीश्वरको आराधना गर्छन् र पार्वतीलाई ॐ भन्ने एकाक्षरी मन्त्र जपेर १२ वर्षसम्म गणेशको तप गर्न हिमालय तर्फ 'लेखन' पर्वतमा पठाउँछन्। पुराणहरूमा 'लेखन' भन्ने पर्वत प्रसिद्ध छैन। तसर्थ पार्वतीको तपःस्थल लेखन पर्वत बागलुङ् बिहूँकोटनेरको 'लेखानी' हो कि जस्तो लाग्छ। केही वर्षपछि गण्डकी क्षेत्रमा मयूरेश्वर गणेशको अवतार हुन्छ। तसर्थ यो गण्डकी क्षेत्र सूर्यको र गणेशको पनि क्षेत्र हो।

गण्डकी क्षेत्र शक्तिको क्षेत्र पनि हो। यहाँ कति देवीहरू स्वयं तपस्विनी थिए। त्यस्तै शक्ति देवीका उपासक र उपासिकाहरू यस क्षेत्रमा आश्रय लिएर बसेका थिए। भर्खरै बताइयो गणेशावतारको संदर्भमा-जगदम्बा भगवती पार्वतीले हिमालय तर्फको लेखनाद्रि (बागलुङ् बिहूँकोटनेरको लेखानी) मा बसेर 'ॐ' जपी गणेशको आराधना गरिन् १२ वर्ष सम्म भनेर।

कूर्मपुराण अनुसार ध्रुवका छोरा शिष्टि थिए, उनकी छोरी सुच्छायाले वसिष्ठको आज्ञानुसार शालग्राम क्षेत्रैमा तप गरी ५ पुत्रलाभ गरेकी थिइन्।

आनन्दरामायण (राज्यकाण्ड, पूर्वार्ध सर्ग १२) अनुसार गण्डकी तटमा रामपुर क्षेत्रमा, रामजीतर्फ (सिद्ध गुहा र त्यसको आसपास) चारवटी ब्राह्मणकन्या र सोह्र हजार क्षत्रियकन्याले तप गरे।

वाराहपुराण अनुसार रुरुकन्याले भगवान् विष्णुको आराधना गरिन् र वरदानको रूपमा भगवान् हृषीकेशलाई त्यहीं बस्नुपर्ने बनाइन्।

देवी भागवत (स्कन्ध ६ अध्याय १६-१७) अनुसार भृगुवंशी ब्राह्मणका नारीहरूले गौरी देवीको मृण्मयी मूर्ति बनाई आराधना गरे। फलस्वरूप एउटीको ऊरुबाट और्व जन्मे। यिनले आफ्नो आश्रम अर्गलीमा राजकुमार सगरलाई सांगवेद सहित धनुर्विद्या पढाए। यो कुरा हरिवंश र विष्णुपुराणमा पनि छ।

हिमवत्खंड र शक्तिवल्लभ अर्यालका काव्यकृति लगायत सम्पूर्ण शाक्त ग्रन्थ अनुसार सप्तगण्डकीका सात धारा भगवती जगदम्बा पार्वतीका पसिनाबाट उत्पन्न भए।

यस प्रकार हिन्दूहरूका पञ्चायतन देवताहरू (विष्णु, शिव, सूर्य, गणेश, र देवी) आश्रित र प्रिय क्षेत्र गण्डकी एकत्व संपादक, अन्ततः ब्रह्मैक्यबोधक हो भन्नमा कुनै अत्युक्ति छैन। यी पञ्च-परमेश्वरको मात्र आश्रयणीय नभई तेत्तीसकोटि देवताकी आमा हुन्। वाराहपुराण अनुसार गण्डकी नदीले अनेकौं वर्षसम्म कठोर तपद्वारा विष्णुको आराधना गरिन् र विष्णुबाट प्राप्त वरदान स्वरूप विष्णु लगायत तेत्तीसकोटि देवताहरूलाई पुत्रको रूपमा आफ्नो पेटमा राख्न सफल भइन्। गण्डकी गर्भमा शालग्रामको अस्तित्व भएको क्षेत्र मुक्तिनाथदेखि त्रिवेणीसम्म १२ योजन (२४० किलोमीटर) बताइएको छ। यस प्रकार गण्डकी आफैं सर्वदेवाधिकृत परब्रह्म-स्वरूपिणी छन्। अतः एकत्व-बोधक-ब्रह्मैक्यवादको क्षेत्र हो गण्डकी। यसरी हरिहरको आश्रम भएको गण्डकी क्षेत्र आध्यात्मिक पक्षमा 'ब्रह्म सत्यं जगन्मिथ्या जीवो ब्रह्मैव नापरः' को साधनार्थ प्रमुख स्थल हो। प्राकृतिक बनोट अनुसार दशौं हजार नदीनदहरू एकीभूत हुने ठाउँ देवघाट नेपालको राष्ट्रिय सन्दर्भमा सामाजिक एकता, जातीय एकता, अनेकतामा एकताको स्मारक र प्रतिपादक छ। हामी नेपाली एक हौं भन्ने भावनाको प्रतीक देवघाट गण्डकी क्षेत्रको मुटु स्थल र शालग्राम महाक्षेत्र हो। यहाँ वेद-वेदाङ्ग, वैदिक दर्शन, वैदिक वाङ्मय, स्मृति पुराणहरूको अध्ययन अध्यापन हुनुपर्छ। अतीवातीत काल देखि देवजाति, मानवजाति र मानवजातिको आश्रयणीय एवं वन्दनीय तपः स्थल रहेको देवघाटले ऐहिक सुख र पारलौकिक शान्ति दिन सक्छ। यसलाई व्यावहारिक लौकिक विद्या तथा पारमार्थिक ब्रह्मविद्याको केन्द्रको रूपमा विकसित गर्नु हामी सबैको कर्तव्य हो।

# ✿ शरीरत्रय-विवेकको उपादेयता ✿

डा० दीर्घराज घिमिरे

आत्मामा अविद्या या माया मिसिएपछि कारणरूपमा परिणत हुने वेदान्तदर्शनको मर्यादा हो। नत्र आत्मा स्वतः अकारण मानिन्छ। जुन् वस्तु जहाँ जसको कारण हुन्छ त्यसमा अर्को वस्तु नमिसिएसम्म कारण नहुने स्थिति लोकमा देखिंदैन। त्यस कारण स्वतः अकारण आत्मवस्तुमा वस्त्वन्तरमिश्रणद्वारा कारणता संभव कसरी? यसको उत्तर बोधगम्य छ :-ब्रीहि-यवादि बीजमा धरणिसलिल संयोगादिबाट बीजभाव आएको होइन, ती त अभिव्यञ्जकमात्र हुन्। ब्रीह्यादिमा बीजत्व स्वतः छ, अतः आत्मामा बीजत्व स्वतः छ। मायाले बीजभावलाई अभिव्यञ्जितमात्र गरेको हो भन्ने स्थिति छैन। आत्मा अकारणै छ, दोषासंस्पृष्ट नै छ, मायाशवलित भएपछि कारण भनिने हो। त्यसै अभिप्रायले आत्मालाई कारण पनि अकारण पनि भन्ने श्रुतिवाक्य छन्, त्यस्ता श्रुतिको सापेक्ष्यरूपमा अर्थ हुने स्थिति वेदान्तदर्शनको हो, सापेक्षत्व र निरपेक्षत्वको निर्धारण न्यायमार्गले गर्दछ। अतः उक्त द्विविध श्रुतिमा कहीं कुनै अन्योलको स्थिति छैन। वेदान्तदर्शनको दृष्टिमा पदार्थ दुईमात्र छन् दृक् र दृश्य-दृश्य द्रष्टाको अधीनमा हुन्छ, द्रष्टृत्व अहंबुद्धिमा प्रतिभासित हुन्छ तर अहं प्रत्ययका विषयीले आत्मा बुझेको हुँदैन र पटक्कै नबुझेको पनि हुँदैन। त्यसैले शारीरक मीमांसासूत्र अध्यासभाष्यमा शङ्कराचार्यले भन्नुभएकोछ—'**नायमेकान्तेनाविषयः प्रत्यगात्मविषयत्वात्**' अतः दोधारे रूपमा बुझेको वस्तु प्रभावकारी हुँदैन। अज्ञानीको आत्मवस्तु बुझाइ दोधारे स्थितिको हुन्छ र त्यस्तो बुझाइमा अर्थकारित्व आउँदैन। त्यसै हुँदा आत्मा राम्ररी बुझाउने हेतुले शास्त्रमा अनेक उपाय बताएको हुन्छ, उपायद्वारा बुझ्नु पर्ने हुँदा नबुझुञ्जेल विषय र बुझिसके पछि त्यही आत्मवस्तु प्रयोजन हुनजान्छ, भनिन्छ—'**अज्ञातं सद् विषयो ज्ञातं सत्प्रयोजनम्**' त्यो वस्तु प्रत्यगात्म सिवाय अर्को हुँदैन, त्यही प्रत्यगात्म बुझाउने हिसाबले शास्त्र धारा छन्, त्यसै भित्र अनेक उपाय हुन्छन् त्यसमध्ये '**शरीरत्रयविवेक**' पनि एक हो।

प्रसिद्ध यो छ कि स्थूल सूक्ष्म र कारणभेदले शरीर तीन छन्। बृंहणार्थक 'स्थूल'-धातुदेखि 'अच्' प्रत्यय गर्दा स्थूल शब्द बन्दछ। त्यसको बुद्धि नभएको, कपटी, मोटो तथा जड भन्ने चार अर्थ हुन्छन्। 'शरीरम्' मा विशेषणको हिसाबले 'स्थूलम् शरीरम्' र समास गर्दा 'स्थूलशरीरम्' नै प्रयोग देखिएकाले स्थूलको जडभन्ने अर्थ गर्दा स्थूलशब्द विशेषण वाची मात्र हुन्छ। सूक्ष्म प्रपञ्चोत्पत्ति पछि पञ्चीकरण द्वारा स्थूल प्रपञ्चोत्पत्तिक्रम छँदैछ, उभयप्रपञ्चका अंशविशेषद्वारा स्थूल शरीर सृष्टि हुन्छ र त्यहाँ अदृष्टवदात्मसंयोग रहेकै हुन्छ। वास्तवमा पञ्चीकृत पञ्चमहाभूत तथा त्यसको कार्यब्रह्माण्ड पूरै आत्माको स्थूल शरीर हो समष्टि अभिप्रायमा, व्यष्टिमा भने चराचरभित्रका प्रतिप्राणीलाई लिनुपर्छ। अभिव्यक्त हुने हुनाले सत् या कार्य र अनभिव्यक्त हुने हुनाले असत् या कारण अथवा सम्यग् ज्ञान नभएसम्म निवृति नहुँने हुनाले सत्, त्यो भएपछि निवृत्ति हुने हुनाले असत् अथवा कल्पितरूपले असत् र अधिष्ठानरूपले सत् भनिन्छ। अतः दुवै प्रकारका स्थूल शरीरलाई सदसदात्मक भन्ने प्रवाद छ। यसमा अन्नमयकोशको र प्राणको प्रधानता रहन्छ। भोगायतन पनि यही हो, यसैलाई व्यक्तिको परिचायक भन्ने लोकस्थिति छ।



पैशुन्यार्थक 'सूच्'-धातुदेखि उणादि 'स्मन्' प्रत्ययद्वारा सूक्ष्म शब्द सिद्ध हुन्छ, कतक, अणु, थौरै, जुवाडे, अग्नि र अध्यात्म छ अर्थमा यो शब्द प्रयुक्त देखिन्छ। सूक्ष्मत्व पनि शरीरको विशेषण रुपमा प्रयुक्त हुने हुनाले अध्यात्म अर्थ लिनुपर्छ। अरु अर्थ पनि सङ्गत हुनसक्छन् तर व्याख्या सापेक्ष छन्, यहाँ संभव छैन, सूक्ष्मशरीर भन्दा ज्ञानेन्द्रिय पाँच, कर्मेन्द्रिय पाँच, प्राणादिवायु पाँच र मन, बुद्धि, आत्मा समेत सत्रको समूहलाई लिइन्छ, यसको अवयवमा आत्मा परिगणित हुदैन। त्यो अपरिगणित व्यापक वस्तु हो, त्यसैका आधारमा सत्रको गणना आएको हो र यिनीहरू आधेयभूत मात्र छन्। आधेयता नियामक सम्बन्ध यहाँ आध्यासिक हुन्छ, त्यसका पनि अनेक भेद छन् तापनि आत्मामा अनात्माको तादात्म्यरूपमा र अनात्मामा आत्माको संसृष्टत्वरूपमा अध्यास हुन्छ भन्ने प्रसिद्धि छ। अध्यास भनेको भ्रमात्मक ज्ञान हो; त्यो नै अनर्थको बीज पनि हो। भ्रमात्मक ज्ञानमा सत् र असत् मिसिएको हुन्छ, सत्त्व र असत्त्वको त्यहाँ एकलौटीभाव अर्थात् एकप्रवाहित्व छ, एकमाथि अर्को होइन, यसैलाई भनिन्छ- 'चिदचिद्‌ग्रन्थि'। त्यो 'अहम्' (म) हो, यसको उद्‌भव चिदाभासको माध्यमले चिज्जडतादात्म्याध्यास भएपछि हुन्छ। सूक्ष्मशरीरको अधिष्ठाता यही हो, यसका करण र उपकरणको रूपमा पूर्वोक्त सत्रको समूह पर्दछ। यही नै सूक्ष्म शरीर लोकान्तरगामी पुण्यपापफलभागी हुन्छ। यो बुद्धि र मन प्रधान भएको तथा प्राणमयकोशमा आधारित हुन्छ र विज्ञानमयकोश कर्ता मनोमय कोश-करण प्राणमयकोश कार्य, गनिने गरेको छ; यो हो व्यष्टिको कुरा। समष्टिमा कुरा गर्दा बुद्धिसमष्टि हिसावले हिरण्यगर्भ तथा क्रियासमष्टि हिसावले प्राण भनिन्छ, हिरण्यगर्भको बुद्धिलाई महान् भनिन्छ तापनि बुद्धि र महत्तत्त्वको अभेदाभिप्रायेण प्राण नै महान् भन्ने पनि चलन छ। स्थूलसूक्ष्म प्रपञ्च विधारण गर्ने सामर्थ्ययुक्त हुनाले सूत्र पनि यसको नाम हो। श्रुतिले यसैलाई वायु पनि भनेको छ। यस हिसावले अपञ्चीकृत पञ्चमहाभूत त्यसका कार्य जे जति छन् ती सबै आत्माको सूक्ष्म शरीरमा पर्दछन्। उपर्युक्त कोशत्रय र सत्र अवयवको विहति यहाँ पनि छैन।

गराँउछ अथवा गर्दछ भन्ने व्युत्पत्तिका आधारमा करणार्थक कृञ्-धातु देखि 'ल्युट्' प्रत्यय गर्दा 'कारणम्' हुन्छ, साधारण असाधारण हेतु नै त्यसको अर्थ हुन जान्छ। उपर्युक्त शरीरद्वयको साधारण कारण अविद्या नै हो र साभासअज्ञान त्यसको नाम छ। **'अव्याकृतमासीत्'** यस श्रुतिअनुसार अव्याकृत पनि यसलाई भनिन्छ, प्रलयकालमा सम्पूर्ण प्राणी मायागर्भमा संस्कारात्मना पस्तछन्, तीमध्ये भोगसंस्कार अवशेष हुनेको भोगोन्मुखता भएपछि सृष्टि प्रक्रिया हुन्छ। ती प्राणी संस्कारात्मना बीजभावमा अवशेष हुन्छन् र मायाद्वारा नै व्यक्तभावमा आउने हुनाले बीज, नाशवान् सम्पूर्ण कार्यको आश्रय हुनाले प्रधान, स्थितिकालमा सर्वकार्य त्यहीं रहने हुनाले क्षेत्र, **'तम आसीत्' 'आसीदिदं तमोभूतम्'** इत्यादि श्रुतिस्मृति अनुसार तम र अस्वतन्त्र अर्थात् चेतनद्वारा सञ्चालित हुने हुनाले सुषुप्त, नाम रहेका छन्। जे भने पनि यो माया वा अविद्या हो, व्यवहार हिसावले सत् र परमार्थ हिसावले असत् भनिन्छ , सत्वेन पनि असत्वेन पनि निर्वचन हुन नसक्ने हुँदा अनिर्वचनीय हो। त्यही जीवाज्ञान समष्टि हिसाबले ईश्वर भनिन्छ, विशुद्धसत्त्वप्रधान हुँदा उत्कृष्टोपाधि हो। मलिनसत्त्वप्रधान निकृष्टोपाधि हुनाले त्यसलाई जीव भनिन्छ। अकारण आत्मा हो तापनि माया रहेको बेला कारण हुन्छ, माया नमिसिएसम्म कारणभावमा नआउने हुनाले प्रपञ्चसृष्टिमा मायाको ठूलो भूमिका छ। त्यसैले प्रपञ्चका प्रति माया मतभेदेन द्वारकारण या सहकारिकारण हुन पुगेको छ। स्थूल र सूक्ष्म जस्तै यो पनि शरीरविशेषण भनिन्छ। उपर्युक्त तीन विशेषण शरीरका हुनाले विशेष्यभूत शरीरको विवेक पनि आवश्यक देखिन्छ। हिंसार्थक श्रृ-धातु तथा आश्रयार्थक श्रिञ्-धातुदेखि उणादि 'ईरन्' प्रत्यय हुँदा शरीर शब्द

बन्दछ, प्रतिक्षण नाश हुने वा इन्द्रियादिंको आश्रय दुबै अर्थ प्रसङ्गानुसार गर्न सकिन्छ। दुबैको समन्वय उक्त विवरणले गरे कैछ, दुबैको विश्राम अविद्यामा हुन्छ, अविद्या पनि विद्यानाश्य तथा आविद्यकावस्थामा शरीरद्वयको आश्रय भएकाले शरीर शब्दले व्यवहृत हुने गरेको हो। अखिलकारण हुनाले समष्टि अज्ञान तथा अहङ्कारादिको कारण हुनाले व्यष्टि अज्ञान 'कारणशरीर' हुन्छन्, आनन्दमयकोशको स्थिति दुबैमा समान छ, संस्कारात्ममा विज्ञानमयकोश उपसर्जनरूपमा छ भन्ने र अज्ञानब्रह्ममा आश्रित छ भन्ने वेदान्तजगत्मा प्रसिद्ध छ। अतः तीनै शरीर विनाशी हुने कुरामा कुनै विसंगति हुँदैन।

अज्ञानका दुई शक्ति हुन्छन्, शक्तिद्वययुक्त अज्ञानोपहितचैतन्य आफू प्रधान हुँदा निमित्त र आफू उपाधि प्रधान हुँदा उपादान कारण हुन्छ. **'अध्यारोपापवादाभ्यां निष्प्रपञ्चं प्रपञ्च्यते'** यस प्रवाद अनुसार आत्माधिष्ठित अज्ञानजनित शरीरत्रय विवेकगर्दा आरोपित वस्तुको सत्ता टिक्न सक्तैन, सर्वप्रपञ्च आत्मामा अनारोपित हुन पनि सक्तैन, सबै प्रपञ्च अविद्या शरीर हो। क्रियाश्रम हुनाले कर्ता, प्राण चलाउने हुनाले जीव, बुद्धिउपाधिद्वारा कामहुने हुनाले विज्ञानात्मा इत्यादि नानात्वको भ्रम आत्मामा देखिन्छ, त्यो स्फटिक मणिमा लौहित्याध्यासद्वारा भएको जस्तो हो भन्ने निर्धारण गर्नुपर्छ। उपाधिवशात् आत्मामा जीवत्वभ्रम भएको हो, उपर्युक्त शरीरत्रयसम्बन्ध जन्यकर्तृत्वादिभाव प्रत्यगात्मामा पनि रहन सर्वथा सक्तैन भन्ने निश्चय गरेमा पुण्यापुण्यफलभागी हुँदैन। त्यसैले कर्म- बन्धन त्यस्तालाई पर्दैन, मुक्तपुरुष अथवा जीवन्मुक्त नै त्यो हुन्छ।



# ❁ वैदिक सनातनमार्ग-सम्बन्धमा एक-दुई कुरा ❁

**डा० हरिप्रसाद अधिकारी**
प्राध्यापकः
तुलनात्मक धर्म-दर्शन विभाग
सम्पूर्णानन्द-संस्कृत-विश्वविद्यालय, वाराणसी

सर्वप्रथम वेद के हो ? यसमा कति तथा कुन्-कुन् विषयको वर्णन छ भन्ने तथ्य आज पनि ९९ प्रतिशत मानवका लागि अज्ञात छ, तथापि सम्पूर्ण सनातनपद्धति एवं संस्कृतवाङ्मय वेदबाटै अनुप्राणित भएको तथ्य भने निकैले बुझेका छन्। व्याकरण दृष्टिले विचार गर्दा वेद शब्द ज्ञानार्थक विद् धातुबाट जन्मिएको हो। वेद शब्दबाट 'भव' 'आगत' आदि अर्थमा ठक् प्रत्यय भएर वैदिक शब्द बन्छ। अनादिकाल देखि चलिआएको सर्वमानवका निमित्त हितकारी ज्ञानलाई नै वेद तथा त्यसबाट उत्पन्न भएका वा त्यससंग सम्बन्ध राख्ने पद्धतिलाई नै वैदिक भनिन्छ।

यसै गरी सनातन शब्दको अर्थ पनि ज्ञातव्य छ। **''सदाभवः सनातनः''** अर्थात् जो धर्म पद्धति या मार्ग कुनै देश काल या व्यक्तिसंग मात्र आबद्ध भएर अनादि कालदेखि चलेका हुन्छन् यिनैलाई प्राचीन शास्त्र एवं बुद्धिजीवीहरूले **'सनानन'** शब्दले अभिहित गरेका छन्।

धर्मको लक्षण बताउने प्रसङ्गमा मनुस्मृतिमा भनिएको छ :—

**''वेदः स्मृतिः सदाचारः स्वस्य च प्रियमात्मनः।**
**एतच्चतुर्विधं प्राहुः साक्षाद्धर्मस्य लक्षणम्॥''**

यस श्लोकमा उल्लेखित धर्मका चार लक्षणका विषयमा गम्भीरता पूर्वक चिन्तन गर्न आवश्यक छ। यहाँ वर्णित चार कुरा—''वेद, स्मृति, सदाचार एवं स्वस्य आत्मनःप्रियम्''—को विवेचन यहाँ केही स्वतन्त्ररूपले गर्न चाहन्छु। यी चारै स्थानमा वेदको सम्बन्ध जोड्ने परम्परा आजसम्म चलिआएको छ। अर्थात् वेद स्वतन्त्ररूपमा धर्म निर्णयमा प्रमाण हो त्यस बाहेक सबै वेदानुकूल भएमा मात्र प्रमाण हुन्छन्, अर्थात् धर्म-निर्णयमा स्मृत्यादिको प्रामाण्य सापेक्ष्य छ। यो मत आजसम्म आएको छ तर यहाँ चारै तथ्यलाई स्वतन्त्र इकाईको रूपमा हेर्ने प्रयास गरिएको छ। यदि वेदमात्र धर्ममा प्रमाण हो, स्मृति आदि धर्मका प्रमाण हैनन् भन्ने हो भने स्मृति सदाचार आदिको पृथक् उल्लेख गर्ने आवश्यकता नै थिएन। उक्त श्लोकबाट सनातन धर्मको उदारता बुझिन्छ।

धर्मज्ञानका लागि वेद शास्त्र मुख्य प्रमाण हो, वेद शास्त्र कठिन भएकोले त्यसमा सम्पूर्ण मानवको प्रवेश असम्भव हुँदा ती व्यक्तिहरूका लागि स्मृतिद्वारा प्रतिपादित मार्ग नै धर्म हो। यसै गरी स्मृति पनि कालक्रमले कठिन हुन सक्ने तथा अनेक ऋषि मुनि भएकोले स्मृतिमा पनि विरोधाभास सम्भव हुनाले सबैले स्मृतिको तात्पर्य बुझ्न असम्भव छ, अतः तेस्रो लक्षण ''सदाचारः'' प्रदर्शित छ। यहाँ यो प्रश्न हुन सक्छ कि सदाचार के हो ? उत्तर रूपमा—''आत्मनः प्रतिकूलानि परेषां न समाचरेत्'' अर्थात्—सम्पूर्ण प्राणीसंग आत्मवत् व्यवहार नै सदाचार हो। कुनै त्यस्तो व्यक्ति हुन

सक्छ जसले वेद तथा स्मृतिका उपदेश पढ्न सुन्न तथा गुन्न नपाएको होला, तथापि उसको आचारको आधारमा त्यसलाई धार्मिक संज्ञा दिन सकिन्छ। धर्मको चौथो लक्षण हो—''**स्वस्य च आत्मनः प्रियम्**'' अर्थात् आफ्ना लागि प्रिय। कुनै पनि मानवले स्वस्थ रूपमा चिन्तन गर्ने हो भने मात्र उसले आफ्नु प्रिय के हो ? भन्ने तथ्यको ज्ञान प्राप्त गर्न सक्छ। कसैले पनि आफ्नु अनिष्ट होस् भन्ने चाहँदैन। यहाँसम्म कि चोरले पनि मेरो घरमा चोरी होस् भन्ने चाहँदैन, हत्याराले आफ्नु हत्या चाहँदैन, सबैले के चाहन्छन् ? आफ्नु कल्याण, तर सबैले यस कुराको चिन्तन स्वस्थ भएर गर्नुपर्छ। चिन्तन गर्नु भन्दा पूर्व यो राम्रोसंग छानबीन गर्नु आवश्यक छ कि मेरो चित्त कुनै प्रकारका रागद्वेषले त प्रभावित छैन ? किनकि यो सम्पूर्ण संसार एक प्रकारको नशामा रंगिएको हुन्छ। म को हूँ ? के गर्दै छु भन्नेसम्म पनि होश मनुष्यलाई हुँदैन, त्यसैले गीतामा—

**''या निशा सर्वभूतानां तस्यां जागर्ति संयमी।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः॥''**

भनेर जागृत र सुप्त व्यक्तिको भेद बताइएको छ। यसै गरी उपनिषद् वाक्यले पनि ''**उत्तिष्ठत जाग्रत प्राप्य वरान् निबोधत**'' भनेर पैला ''उत्तिष्ठत'' अनि ''जाग्रत'' भनेको छ, यसको रहस्य के होला ? संसारमा प्रत्येक मनुष्य सुतेर पैला जाग्छ अनि उठ्छ तर उपनिषद् ऊठ अनि जाग भन्दै छ। यसबाट के सिद्ध हुन्छ भने हामी सबै जागेका छैनौं। यदि यसै स्थितिमा रहेर हामीले ''**स्वस्य च प्रियमात्मनः**'' को तात्पर्य खोज्यौं भने अवश्य नै त्यो भाव फेला पर्नेछ। हुनत आज पनि हामी समाजमा आत्माले चाहेको कुरा खानुपर्छ, गर्नुपर्छ भन्ने सुन्छौं तर त्यो आत्माले चाहेको हो कि लोभले चाहेको हो, यसको विवेक गर्ने अवसर तथा सामर्थ्य सबैमा हुँदैन।

उपर्युक्त चार लक्षणको आधारमा यो भन्न सकिन्छ कि सनातनधर्मको परिभाषाभित्र सम्पूर्ण मानवजगत् पर्न सक्छ। अतः यहाँ कुनै भेष-विशेष, चिन्तन-विशेष, मन्दिर-विशेष, सम्प्रदाय-विशेष तथा स्थानविशेषलाई मात्र धर्मको लक्षण मानिएको छैन। ईशाई तथा मुस्लिमहरूको जस्तो एक व्यक्ति तथा एक ग्रन्थसंग ''सनातन'' निर्भर छैन। यसै गरी कुनै ईश्वरलाई मान्नै पर्छ, कुनै मन्दिरमा जानै पर्छ, कुनै चिह्न धारण गर्नै पर्छ भन्ने कुनै अनिवार्य नियम नभएको विशालदृष्टिसम्पन्न सर्वमानवहितकारी मार्ग नै सनातन मार्ग हो।

पुनश्च यहाँ प्रश्न हुन्छ कि के सनातनको कुनै चिह्न नै छैन ? जे गरे पनि जसो गरे पनि सनातन भइन्छ ? त्यसो हो भने किन झंझटमा पर्ने ? किन यसको प्रचार गर्ने ?

यस विषयमा यो उत्तर पर्याप्त छ कि जुन् कुरा मानवहितकारी छन् जसबाट सर्वजगत्मा एकात्मभाव जागृत हुन्छ, जसद्वारा लोक-परलोक दुवै सुध्रिन्छन् त्यसको प्रचार गर्नु भनेको कुनै संकुचित क्षुद्र कुराको प्रचार होइन; यो मानवताको र विश्वबन्धुत्वको प्रचार हो। यसैले धर्मलक्षण बताउँदै भगवान् मनुले भन्नुभएको छ—

**''धृतिः क्षमा दमोऽस्तेयं शौचमिन्द्रियनिग्रहः।**
**धीर्विद्या सत्यमक्रोधो दशकं धर्मलक्षणम्॥''**

उपर्युक्त श्लोकमा वर्णित धर्मका १० लक्षण-धृति, क्षमा, दम, अस्तेय, शौच, इन्द्रियनिग्रह, धीः विद्या, सत्य तथा अक्रोध एक जाति, समाज, देश, काल आदिका निमित्त मात्र नभएर सम्पूर्ण मानवकै लागि उपादेय छन्। कही कसैले कदापि यिनीहरूको तिरस्कार या अस्वीकार गर्न मिल्दैन, किनकि यी मानवीय मूल्य हुन्, यिनका पात्र सम्पूर्ण मानव हुन्।

उपर्युक्त विवेचनका आधारमा यो स्पष्टसंग भन्न सकिन्छ कि यदि सम्पूर्ण मानवका लागि कुनै समानरूपले ग्राह्य-मार्ग छ भने त्यो वैदिक सनातन नै हो, किनकि यति सरल मार्ग अर्को छँदै छैन। यसको सरलता यसरी बुझ्न सकिन्छ कि-त्रिकाल स्नान सन्ध्या गर्ने पनि सनातनी, नगर्ने पनि सनातनी, द्वादशतिलक धारण गर्ने पनि सनातनी, टीकै नलाउने पनि सनातनी, मन्दिर दर्शन गर्ने पनि सनातनी, नगर्ने पनि सनातनी कर्मकाण्ड गर्ने पनि सनातनी, नगर्ने पनि सनातनी, शिखा सूत्र धारण गर्ने पनि सनातनी, नगर्ने पनि सनातनी, ईश्वरको अस्तित्व स्वीकार गर्ने पनि सनातनी, नगर्ने पनि सनातनी। अर्थात् मानव तबसम्म सनातनी कहिन्छ जब सम्म उ मानव या जीवहितको विरुद्ध कुनै कार्य गर्दैन। जुन् बेला मनुष्य प्रकृतिप्रदत्त शाश्वत मानवीय मूल्यबाट च्युत हुन्छ, तथा एक अर्काको सहयोगको सट्टा विनाशमा अग्रसर हुन्छ, जसमा अहिंसा आदि धर्मको अभाव हुन्छ, जो क्षुद्रस्वार्थमा आबद्ध भई आफूलाई नै श्रेष्ठ ठान्छ त्यो मनुष्य अवश्यमेव सनातन धर्मबाट च्युत हुन्छ। यसैले उपनिषद्मा भनिएको छ—

''इह चेदवेदीदथ सत्यमस्ति, नो चेदिहावेदीन्महती विनष्टिः।
भूतेषु-भूतेषु विचित्य धीराः, प्रेत्यास्माल्लोकादमृता भवन्ति॥''

यसै कारण सनातन संस्कृतिमा—

**'विश्वं भवत्वेकनीडम्' 'वसुधैव कुटुम्बकम्' 'सर्वे भवन्तु सुखिनः' 'आत्मवत् सर्वभूतेषु' 'सर्वं ब्रह्ममयं जगत्'**

आदि सबै मनुष्यलाई समेट्ने खालका उक्तिहरू प्रशस्तरूपमा उपलब्ध छन्। यसका तुलनामा अन्य संस्कृति धर्म एवं सभ्यताहरू सयौं कोश टाढ़ा पर्छन्। कुनै तुलना नै छैन। अतः पुनरपि—

**''उत्तिष्ठत जाग्रत प्राप्य वरान् निबोधत''**

**''क्षुरस्य धारा निशिता दुरत्यया, दुर्गं पथस्तत् कवयो वदन्ति''**





# ❀ विशिष्टाद्वैत-सिद्धान्तमा तत्त्वत्रयको स्वरूप ❀

**आचार्य श्रीनिवास कण्डेल**
वेदान्त विभागाध्यक्ष
श्रीत्रिदण्डिदेव संस्कृत महाविद्यालय, अयोध्या

गुरुभ्यस्तद्गुरुभ्यश्च नमो वाकमधीमहे।
वृणीमहे च तत्राद्यौ दम्पती जगतां पती॥

अकारणकरुणावरुणालय परमेश्वरको सत्यसंकल्पले प्राप्त भएको मनुष्य जीवनमा तत्वज्ञानी बन्नको लागि संम्बन्ध र अर्थपञ्चक यी ६ अर्थ जान्न आवश्यक छन् तापनि यी पदार्थका एक देश रूपमा तीन तत्त्व मानिन्छन्।

मुमुक्षुजनले विशेषरूपमा तत्वत्रय जान्नै पर्छ भनी उपदेश गर्ने विशिष्ट ज्ञानी आचार्यहरूको मूल आशय के हो ? भन्ने शंका हुनु स्वाभाविकै हो। मूल आशय के हो भने-देह आदि आत्मा हो भन्ने भ्रम र आत्मा स्वतन्त्र छ भन्ने भ्रम। यी भ्रमको कारणले अनीश्वरवादमा रुचि रूप महाविरोधि-भावनाहरूलाई सर्वप्रथम निरास गर्नु नै हो।

कार्यप्रकृति (देह) आदिमा हुने आत्मभ्रम, प्रकृति र जीवात्माको स्वरूप (लक्षण) जान्नाले नष्ट हुन्छ। जीवात्मा नै परमात्मा हो अथवा हैन भन्ने विवाद पनि जीव र परमात्माका असाधारण लक्षण (स्वरूप) को ज्ञानले मेटिन्छ। यसरी भ्रम हटाउने अभिप्रायले नै शास्त्रहरूमा भोक्ता, भोग्य, नियन्ताको रूपले तत्त्वको विवेक गरिएको हो। यिनै तीन तत्त्वलाई शब्दान्तरले चित्, अचित्, ईश्वर पनि भनिन्छ। चित् शब्दले बद्ध, मुक्त, नित्य तीन प्रकारका जीवात्मा कहिन्छन्। अचित् भन्नाले प्रकृति, काल, शुद्धसत्व द्रव्य (नित्यविभूति) यी तीनवटा अचेतन पदार्थ लिइन्छ। तीन अचेतनमा प्रकृति र काल जड पदार्थ हुन्, नित्यविभूति अजड-ज्ञानरूप पदार्थ हो। अचेतन भन्नाले केवल जड़पदार्थ मात्र नसंझी ज्ञानरूप पदार्थलाई पनि सम्झनुपर्छ, किन भने ज्ञानवान् पदार्थ चेतन र ज्ञानरूप भए पनि ज्ञानको आधार भएको तत्त्वलाई अचेतन भनिएको हो। आत्माको प्रकाश स्वरूप भएको धर्मभूत ज्ञानको आधार छैन तापनि आत्माको सारभूत गुण भएको हुनाले ज्ञानवान् अर्थको वाचक चेतनशब्दार्थको भित्र पर्ने हुँदा अचेतन पदार्थमा गणना नगरिएको हो। ईश्वर भन्नाले वेदान्तवेद्य परब्रह्म सर्वेश्वर नारायण कहिनुहुन्छ।

उपर्युक्त तत्त्वको विवेक गर्ने उपनिषद् आदि शास्त्रवचन धेरै भएता पनि स्थालीपुलाकन्यायले केही वचन यहाँ उद्धत गरिन्छन् :-''भोक्ता भोग्यं प्रेरितारञ्च मत्वा'' (श्वे०१-१२) ''पृथगात्मानं प्रेरितारञ्च मत्वा जुष्टस्ततस्तेनामृतत्वमेति'' (श्वे०१-६) ''क्षरं प्रधानममृताक्षरं हरः क्षरात्मानावीशते देव एकः'' (श्वे०१-१०) ''प्रधानक्षेत्रज्ञपतिर्गुणेशः'' (श्वे०६-१६) ''पतिं विश्वस्यात्मेश्वरम्''(तै० ना०) ''द्वासुपर्णा सयुजा सखाया समानं वृक्षं परिषस्वजाते। तयोरन्यः पिप्पलं स्वाद्वत्त्यनश्नन्नन्योऽभिचाकशीति'' (मु०३-१-१) ''ज्ञाज्ञौ द्वावजावीशानीशौ'' (श्वे०१-६) ''नित्योऽनित्यानां चेतनश्चेतनानामेको बहूनां यो विदधाति कामान्'' (कठ० २-१३) ''अन्तः प्रविष्टः शास्ता जनानां सर्वात्मा''(तै० आरण्यके ३-११-२१) ''मायां तु प्रकृतिं विद्यान्मायिनन्तु महेश्वरम्'' (श्वे० ४-१०)

''भोक्ता जीव, भोग्य प्रकृति, प्रेरक परमात्माको चिन्तन गरेर'' ''जीवात्मा र प्रेरक परमात्मालाई पृथक् रूपले चिन्तन गरी परमेश्वरको प्रीतिको पात्र बन्छ र प्रसन्न भएका परमात्माद्वारा मोक्ष प्राप्त गर्छ।'' क्षर-प्रधान प्रकृति र अक्षर-



विकार रहित जीवात्मा यी दुई तत्वलाई शासन गर्ने क्रीडाशील एक परमेश्वर हुनुहुन्छ। प्रधान प्रकृति र क्षेत्रज्ञ जीवका स्वामी गुणका पनि स्वामी ईश्वर हुनुहुन्छ। विश्वका पति विश्वका आत्मा-धारक, शासक परमात्मा नारायण हुनुहुन्छ। दुई पक्षी सदा साथमा रहने मित्र छन्, एउटै शरीररूपी पिपलको वृक्षमा मिलेर बसेका छन्, ती दुई ईश्वर र जीवरूपी पक्षीमा एक जीवरूप पक्षीले पीपलका मीठा फल खान्छ (कर्मफल भोग्छ) सदा दुःखी छ, अर्को ईश्वररूप पक्षी कर्मफल खाँदैन, नखाएर नै प्रकाशमान छ, सुखी छ। एउटा ज्ञानी ईश्वर स्वतन्त्र छ, अर्को अज्ञानी जीव परतन्त्र छ, दुवैको उत्पत्ति हुँदैन, नित्य छन्। नित्य र धेरै चेतन जीवात्माहरूका एक नित्य चेतन परमात्माले उनका इष्ट फल धर्म, अर्थ, काम, र मोक्षलाई प्रदान गर्नुहुन्छ। ईश्वर भित्र प्रवेश गरेका सबै प्राणीका आत्मा र शासक हुनुहुन्छ। माया प्रकृतिलाई जान्नु मायी परमेश्वर हो। यसरी वैदिक प्रमाणहरूले प्रकृति जीव र ईश्वरको भेद नित्य र स्वाभाविक छ [illegible]ी प्रकृति र जीवात्मा दुबैका आत्मा, शासक परमात्मालाई बताई शास्य र शासक दुबै थरिको स्वस्वामीभाव पितापुत्र-भाव आदि सम्बन्ध नित्य र स्वाभाविक छन् भनी निर्णय गरेका छन्। जीवात्माहरूको परस्परमा नित्य भेद पनि सुख दुःखादि व्यवस्थाले र श्रुतिका ''नित्यानां बहूनां चेतनानां'' इत्यादि बहुवचनले पनि स्पष्ट पारेका छन्।

त्यसो हुनाले अभेद बोधक ''तत्त्वमसि'' ''अहं ब्रह्मास्मि सोऽहमस्मि'' इत्यादि सामानाधिकरण्य प्रतिपादक वाक्यहरू पनि घटक श्रुतिले सिद्ध भएका शरीरात्मा भावले चेतन र अचेतन विशिष्ट एक परमात्माका बोधक छन्। त्यसकारण ''त्वम्'' ''अहम्'' इत्यादि पद पनि शरीर विशिष्ट जीवका अन्तर्यामी आत्मा भएका परमात्माका वाचक छन्। शरीरधारी जीवशरीरक परमात्मा र जगत्कारण परमात्मा एउटै हो, अर्थात् कार्य र कारण विशिष्टरूपले ब्रह्म नै हो, यस्तो अर्थ गर्दा मुख्यार्थबाध, दुबै पदमा लक्षणा, ब्रह्ममा अविद्यास्वीकार, सामानाधिकरण्यलक्षणको विरोध, उपक्रम उपसंहारको विरोध, श्रुतिमा परस्पर बाध्यबाधकभाव जस्ता दोष कुनै पनि बेहोर्न पर्दैन। भेद अभेद र घटक तीनै प्रकारका श्रुतिको समन्वय पनि स्थापित हुन्छ र ब्रह्मका गुण पनि अक्षुण्ण रहन्छन्, शास्त्र सार्थक र सत्य हुन्छन्।

**(तत्वत्रयस्वभावनिरूपण)**

**प्रथम तीन अचेतनका स्वभाव**—अचेतन, चेतन र ईश्वर यी तीन तत्त्व मध्ये अचेतन भित्र पर्ने प्रकृति तत्त्वको स्वभाव श्रुति भगवती स्वयं वर्णन गर्छिन्—''गौरनाद्यन्तवती सा जनित्री भूतभाविनी सितासिता च रक्ता च सर्वकामदुघा विभोः'' (मन्त्रिको०) ''अजामेकां लोहितशुक्लकृष्णां'' (तै०वारा०) ''अचेतना परार्था च नित्या सततविक्रिया। त्रिगुणा कर्मिणां क्षेत्रं प्रकृते रूपमुच्यते'' (परमसं०२-१८)

प्रकृति इष्टफल दिने, आदि अन्त उत्पत्ति र विनाश रहित परिणामिनित्य छन्, जीवका लागि नाना पदार्थ पैदा गर्ने, पोषण गर्ने, सेतो, कालो, रातो—सत्व, तम, रज गुणले युक्त छन्। परमात्माले चाहे अनुसार कामना पूरा गर्ने यिनको स्वभाव छ। प्रकृति स्वरूपले अजन्मा, एक, सत्व, रज, तम गुण भएकी छन्; उनको जीवात्माले अनुभव गर्छन्। त्रिगुण द्रव्य अचेतन जडस्वरूप छ, नित्य छ, निरन्तर परिणाम भइरहने तीन गुण भएको जीवको शरीर आदि क्षेत्र बनिरहने यसको स्वभाव छ।

**अचेतन पदार्थमा काल**—१४-''अनादिर्भगवान्कालो नान्तोऽस्य द्विज विद्यते'' (वि० पु० १.२.२६) १५.''कलामुहूर्तादिमयश्च कालो न यद्विभूतेः परिणामहेतुः'' (वि०पु०४.१.८) सर्वसमर्थ काल अनादि छ, यसको विनाश हुँदैन। कला मुहूर्तमय काल (समय) जुन परमात्माका ज्ञानमय नित्यविभूतिको विकारको हेतु बन्न सक्दैन। जगत्का पदार्थको परिणामको कारण बन्ने कालको स्वभाव छ।





तीन अचेतनमा शुद्धसत्व द्रव्य—शुद्धसत्व द्रव्यभन्नाले-भगवान् विष्णुको परमपद अप्राकृतलोक जान्नुपर्छ। ''तद्विष्णोः परमं पदं'' (ऋ०वेद०१.१२.२०) ''ज्ञानानन्दमया लोकाः'' (पाञ्चरात्र) ''कालं स पचते तत्र न कालस्तत्र वै प्रभुः'' (भा०शा०१९६.९)

भगवान् विष्णुको त्यो परमपदलाई सूरिहरूले सधैं देखिरहन्छन्। ज्ञान र आनन्दस्वरूप भएका लोकहरू छन्। त्यो धामले काललाई नै पचाउँछ, काल वहाँ परिणाम गर्न समर्थ छैन। इत्यादि प्रमाणले शुद्धसत्व विभूतिका स्वभावलाई बताएका छन्।

**तीन तत्त्वमा ईश्वर—**

यसपछि परमात्माका स्वभाको निरूपण पनि छोटो रूपमा—''यः सर्ववित्'' (मुण्डक१.१.९) ''परास्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलक्रिया च'' ''सर्वज्ञः सर्वदृक् सर्वशक्तिज्ञानबलर्द्धिमान्। क्लमतन्द्राभयक्रोधकामादिभिरसंयुतः॥'' (वि०पु०५.१.४७)

परमात्मा सामान्यरूपले सम्पूर्ण वस्तुको ज्ञाता हुनुहुन्छ, विशेष-प्रत्येक वस्तुका गुण, स्वभाव, शक्ति र स्वरूपको पनि विशेषज्ञ हुनुहुन्छ। यो लीलाविभूति विश्वब्रह्माण्ड एक पाउ र त्रिपाद् विभूति (तीनपाउ) मा रहने चेतन अचेतन समस्त पदार्थलाई निरन्तर देखिरहनुहुन्छ। यस्ता ईश्वरका पराशक्ति ज्ञानशक्ति क्रियाशक्ति र बलशक्ति आदि अनेक शक्ति स्वभाविक छन् भनी श्रुतिहरू वर्णन गर्छन्। सबलाई जान्ने, प्रत्यक्षरूपमा पनि सदा देखिरहने, शक्ति, ज्ञान, बल, ऐश्वर्य सम्पन्न हुनुहुन्छ, मलीनता, आलस्य, भय, क्रोध, काम, लोभ, पाप, जरा, मृत्यु, शोक, प्यास, भोक आदि समस्त प्राकृत दुर्गुणले शून्य रहनु परमात्माको स्वभाव हो।

**जीवस्वरूप आदिको निरूपण**

कुनै पनि वस्तुको स्वरूप आफ्नो असाधारणधर्म युक्तरूपमा निरूपित हुने हुनाले जीवात्माको स्वरूप ज्ञानत्व, आनन्दत्व, अमलत्व, अणुत्व आदि स्वरूपनिरूपकधर्मले निरूपित भएर ज्ञान, आनन्द, अमल र अणुस्वरूप छ भनी यस प्रकारले व्यवहार गर्न योग्य हुन्छ। जीवात्माको स्वरूप, ''एषोणुरात्मा चेतसा वेदितव्यः'' ''बालाग्रशतभागस्य शतधा कल्पितस्यच। भागो जीवः स विज्ञेयः स चानन्त्याय कल्पते।'' (श्वे० ५.९) ''यो अणुस्वरूप आत्मा विशुद्ध मनले जान्न योग्य छ।''

रौंको अगाडिको टुप्पाको भाग निकाली त्यसलाई सय टुक्रा बनाई ती मध्ये एक टुक्रा लिई त्यसलाई सय टुक्रा बनाउँदा एक टुक्रा जत्रो अणु हुन्छ त्यस्तै अणु यो जीवात्माको स्वरूप छ, भन्ने शास्त्रवचन बमोजिम जीवको लक्षण हुन आउँछ, ''अणुत्वे सति चेतनत्वम्'' ''अणु भएको चेतन हुनु'' ''स्वतः शेषत्वे सति चेतनत्वम्'' ''निरूपाधिक शेष भएर चेतन हुनु'' पनि जीवात्माको लक्षण हुनसक्छ, किनभने जीवात्मा परमात्माको प्रमाणसिद्ध स्वतः शेष छ।

ईश्वरको लक्षण—''विभुत्वे सति चेतनत्वम्'' ''व्यापक भएर चेतन हुनु हो।'' यस्तै ''अनन्याधीनत्व'' अर्काको अधीनता रहित स्वतन्त्र हुनु, ''निरुपाधिकशेषित्व'' आदि ईश्वरका लक्षण हुन्।

जीव र ईश्वर रूप आत्मवर्गका सर्वसाधारण लक्षण—चेतनत्व र प्रत्यक्त्व हुन्। चेतनत्व भनेको ज्ञानको आश्रय बन्नु हो। प्रत्यक्त्व भनेको आफ्नो लागि आफैं प्रकाशमान हुनु भनेको हो, आफै प्रकाशमान हुनु भनेको धर्मभूत ज्ञानको अपेक्षा नराखीकन ''अहं'' म यसप्रकारले प्रकाशित हुनु हो। यसरी चेतनत्व र प्रत्यक्त्व ईश्वर र जीव दुवैमा हुने साधारण लक्षण भएको हुँदा ईश्वरदेखि जीवको भेद बताउन जीवको लक्षणमा स्वतः शेषत्व आदि निवेश गरिएको हो।



**बद्धचेतनको अन्यचेतनदेखि भएको भेद—**

बद्धचेतनको अरु चेतनदेखि भेद-अविद्या, कर्मवासना, रुचि र प्रकृति सम्बन्धले युक्त हुनु हो। बद्धचेतनको परस्पर मा हुने ज्ञानसुखादिको भेद ब्रह्मादेखि लिएर स्थावर सम्मका विभागमा देखिन्छ। यी बद्धजीव आ-आफ्ना कर्मानुसार ईश्वरले दिएका शरीरलाई धर्मिस्वरूप आत्माले र धर्मभूतज्ञानले धारणा गर्छन्। हाम्रो देहमा धर्मिस्वरूप आत्मा रहेर हुने धारण शरीरका सत्ताको साधक हुन्छ। जागृत अवस्थामा धर्मभूतज्ञानले गरिने शरीरधारण पुरुषार्थ र तिनका उपायका अनुष्ठानको उपयोगी हुन्छ। प्रपत्ति आदि उपायको अनुष्ठान गरिसकेका परमैकान्तिप्रपन्नको लागि भगवान्को अनुभव र सेवाको उपयोगी हुन्छ। पाप गर्ने मानिसको लागि यो शरीरधारण विपरीत फलको कारण बन्छ। यी जीवात्माले आफ्ना शरीरलाई त्यागीदिए भने पञ्चमहाभूतको समुदाय यो शरीर विशीर्ण हुन्छ। त्यतिखेर पनि शरीरका उपादान भएका द्रव्यहरू परमात्माका शरीरका रूपमा रहन्छन्। संसारको बन्धन मोक्ष नहुँदा सम्म रहिरहनु हो। प्रवृत्तिको भेद—पुण्यपापरूप प्रवृत्ति र पुण्यपाप रहित उदासीन प्रवृत्ति हो।

**मुक्तहरूको अन्य जीवदेखि भेद**—प्रतिबन्धक (संसार) निवृत्तिपूर्वक आत्मस्वरूपको प्रकाश हुनु हो। स्थितिभेद—संसारको निवृत्तिरूप मोक्ष हुने कालका पूर्वसीमाको अघि पछि मात्र हो। मुक्तहरूको प्रवृत्तिभेद—अनादिकालदेखि नमिलेको मोक्ष भएको दिनदेखि मिलेको भगवान्को परिपूर्ण अनुभव र प्रीतिपूर्वक सेवा आदि हुन्।

**आत्माका धर्मभूतज्ञानको निरुपण—**

यी सबै आत्माको धर्मिस्वरूप जस्तै धर्मभूतज्ञान पनि मणि आदिका प्रभारूप तेज द्रव्य समान द्रव्यरूप छ, ता पनि चेतन शब्दको अर्थ चैतन्यवान् हुनाले ज्ञानरूप विशेषणले विशिष्ट चेतनमा अन्तर्भाव गरी पृथक्रूपले वर्णनन गरियेको हो।

यो धर्मभूतज्ञान विषयप्रकाशन गर्ने समयमा आफ्नो आधार आत्मालाई आफैं प्रकाश हुन्छ। यो धर्मभूतज्ञान परमात्मा र नित्यसूरिहरूको सधैं नै व्यापक रहन्छ। अन्य जीवात्माको संसार अवस्थामा पाप पुण्य कर्मानुसार धेरै प्रकारको संकोच र विकाशले युक्त हुन्छ। यस्तो संकोच र विकाशको लक्ष्य गरी पराशर ब्रह्मर्षि भन्नुहुन्छ—"तया तिरोहितत्वाच्च शक्तिः क्षेत्रज्ञसंज्ञिता। सर्वभूतेषु भूपाल तारतम्येन वर्तते॥" (वि०पु०)

कर्मनासको अविद्या तेस्रो शक्ति मनिन्छ, त्यो शक्तिले क्षेत्रज्ञ-जीवात्माशक्ति ढाकियेको हुनाले ब्रह्मादेखि तृणसम्मका प्राणीहरूमा ज्ञानको संकोच र विकाशरूप तारतम्य देखिन्छ। यो धर्मभूतज्ञानको मुक्तावस्थामा समस्त अज्ञान निवृत्त भई एक पटक विकाश भएपछि अनन्तकालतक व्यापक रहन्छ। आत्माको स्वरूप त सदा निर्विकार हुनाले एकरूपमा रहन्छ।

धर्मभूतज्ञानको प्रवृत्ति—विषयहरूको प्रकाश गर्नु हो। प्रयत्न अवस्थामा शरीर इन्द्रिय आदि को प्रेरणा गर्नु, बद्धअवस्थामा संकोच र विकाश हुनु, अनुकूल र प्रतिकूलरूपले प्रकाशित भई भोगरूप अवस्थावाला बन्नु हो। भोग भनेको आफ्नो अनुकूल या प्रतिकूल रूपमा कुनै पदार्थको अनुभवगर्नु हो।

**कर्मफल—अनुभवको उपयोगी-योग्यता**

कर्मफल अनुभवको विषयमा बद्धजीवका स्वरूप योग्यता र सहकारी योग्यता दुबै छन्। स्वरूप योग्यता परतन्त्र चेतनत्व हो, सहकारी योग्यता सापराधत्व हो। नित्य र मुक्तहरूको परतन्त्र चेतनत्वरूप स्वरूपयोग्यता भए पनि सापराधत्वरूप सहकारी योग्यता छैन र नित्य मुक्तलाई जन्म-मरणरूप संसार हुँदैन। ईश्वर सर्वशासक हुनाले र अर्काले

शासन गर्न नसकिने रूपले रहेको हुँदा ईश्वरमा परतन्त्रचेतनत्वरूप स्वरूप योग्यता छैन। स्वतन्त्र शासकको आज्ञा उल्लङ्घनरूप सहकारी योग्यता सापराधत्व पनि छैन।

**धर्म र धर्मिः ःको अन्तर निरूपण—**

जीव ईश्वररूप सबै आत्माको स्वरूप, आफुलाई आफैं प्रकास हुनु हो। बद्ध जीवको पनि यो धर्मिस्वरूपको प्रकाश कहिल्यै पनि संकोच-विकाश हुँदैन। सबै आत्माको धर्म भूतज्ञान, विषय प्रकाश गर्ने बेलामा आफ्नो आधार आत्माको लागि आँफै प्रकाश हुन्छ। ज्ञानत्व र स्वयं प्रकाशत्व यी दुई, धर्म-धर्मी दुवैका समान धर्म हुन्। धर्म भूतज्ञानको विषयित्व विशेष धर्म छ, धर्मिस्वरूप आत्माको प्रत्यक्त्व धर्म विशेष छ। ज्ञानत्व भनेको—कुनै पनि वस्तुको प्रकाशकत्व हो, आफ्नो होस् या अन्य कसैको जुन् कुनैको भए पनि व्यवहारको योग्य होस् या अन्य कसैको, जुन् कुनै को भए पनि व्यवहारको योग्य बनाउनु हो। त्यस्तै प्रत्यक्त्व र चेतनत्वधर्मले युक्त नभएको वस्तुलाई आत्मा भनिंदैन।

यी धर्म र धर्मी दुइटै स्वयंप्रकाश छन्, तापनि नित्यत्व, अणुत्व, एकत्व, सूक्ष्मत्व आदि धर्म विशिष्टरूपले अन्य ज्ञानका विषय पनि हुन्छन्।

**तीन अचेतन निरूपण—**

तीनै प्रकारका अचेतन अर्का (आत्मा)का लागि मात्र प्रकाशमान हुन्छन्। अचेतन भनेको ज्ञानको आधार नहुनु हो। तीन अचेतन शब्दले लिइएका पदार्थमा प्रकृति र काल जड़ हुन्। जड़ भनेको-आफैँ प्रकाशित नहुनु हो। अप्राकृत शुद्धसत्व द्रव्य त शास्त्रप्रमाणले ज्ञानरूप सिद्ध हुने हुनाले स्वयं प्रकाश स्वरूप छ। **स्वसत्ताभासकं सत्वं गुणसत्वाद् विलक्षणम्** (पौष्कर सं०२५.४२) **''तमसः परमो धाता''** (वा०रा०पु०११४.१५) **''अप्राकृतं सुरैर्वन्द्यमयुतार्कसमप्रभम्''** (जितन्तेस्तो० २.२१) **''आदित्यवर्णन्तमसः परस्तात्''** (पुरुषसू०उत्त०२१) **''षाड्गुण्यप्रसरो नित्यं स्वाच्छन्द्यात् देशतां गतः''**(पाञ्चरात्र)

आफ्ना स्वरूपको प्रकाशक शुद्धसत्वद्रव्य प्रकृतिको सत्वगुणभन्दा विलक्षण छ। अन्धकारमय प्रकृतिदेखि पारी रहने शंखचक्रगदा धारणगर्ने विधाता परमात्मा हुनुहुन्छ। नित्यधाम परमात्माका ज्ञानशक्ति आदि ६ गुणको फैलाव हो, परमात्माको नित्य इच्छाले ज्ञानमय देशको रूपमा बनेको छ। इत्यादि प्रमाणद्वारा प्रकृतिदेखि माथि देश विशेष सिद्ध छ। यो शुद्धसत्व द्रव्य स्वयं प्रकाश भए तापनि ज्ञानको आधार नभएको र ज्ञान मात्र भएको हुनाले तीन अचेतनको भिन्न पारियेको हो, जड भएर हैन। उपनिषद् आदि शास्त्रहरूमा-नित्यलोक, त्रिपाद्विभूतिका नाम यसरी कहिएका छन् ''ज्ञानानन्दमया लोकाः......'' ज्ञानलोक, आनन्दलोक हिरण्मयलोक, अप्राकृतलोक, अपराजिता पुरी, अयोध्या, परंपद, परमव्योम, परमाकाश इत्यादि अनेक छन्। विभिन्न नामले निर्देश गरिए पनि जीवात्माको मोक्ष भएपछि मिल्ने परमधाम सायुज्य मोक्ष यही हो भन्ने उपनिषद् विद्याका फलप्रकरणमा बताइयेको छ।

**त्रिगुणद्रव्यका स्वरूप स्थिति र प्रवृत्तिको निरूपण—**

तीन अचेतनमा त्रिगुण (प्रकृति) द्रव्यको स्वरूपभेद—सत्व-रज-तमगुणको आश्रय बन्नु हो। निरन्तरपरिणाम स्वभाव भएको यस द्रव्यको सत्वरजतमगुणको परस्परमा समान परिणाम हुँदा महाप्रलय हुन्छ। त्रिगुणको विषम अवस्थाले परिणाम हुँदा सृष्टिरूप स्थूल जगत् प्रकट हुन्छ। प्रकृति अनन्त छ तापनि गुणको विषमता भएको प्रदेशमा महान्, अहंकार आदि विकार उत्पन्न हुन्छन्। प्रकृतिका विकार भएका र नभएका प्रदेशलाई लिएर प्रकृति, महान्,



अहङ्कार, पञ्चतन्मात्रा, पञ्चमहाभूत, मन र दश इन्द्रिय समेत चौबीस तत्त्वका रूपमा शास्त्रले विभाजन गरी बताएका छन्। यो चौबीस तत्त्वमा विभाजित प्रकृति आत्मादेखि भिन्न छ भन्ने ज्ञान प्राप्त गर्नु नै यहाँ प्रधान उद्देश्य हो। चौबीस तत्त्वको परस्परमा स्वरूपको भेद, ती ती लक्षणलाई बताउने शास्त्र-पुराणादिद्वारा जान्न सकिन्छ।

**कालका स्वरूप स्थिति र प्रवृत्तिको निरूपण**

कालको स्वरूप जड़ भएर व्यापक हुनु हो। यसको स्थितिकालले सीमित नभएको हुनाले नित्य छ।-

प्रवृन्तिको भेद—कलाकाष्ठा-मुहूर्त आदि रूपमा विभाजित भई सृष्टि, पालन, संहारको उपकरणको रूपमा रहनु हो।

**सबै पदार्थको ईश्वराधीनत्व निरूपण**

यहाँसम्म कहिएका सम्पूर्ण पदार्थमा भएका स्वरूप स्थिति र प्रवृत्तिका भेद ईश्वरका अधीन छन्; किनभने ईश्वरको सत्ता र इच्छा विना यी चेतन र अचेतन पदार्थका सत्ता आदि रहन सक्दैनन्। त्यसो हुनाले सबै वस्तुको स्वाभाविक अनुकूलता ईश्वरीय इच्छाको अधीन छ। त्यसकारण ईश्वर र नित्य मुक्तका लागि सबै पदार्थ अनुकूल हुन्छन्। बद्धजीवका लागि कर्मानुसार व्यक्ति र कालका भेदले यी पदार्थमा प्रतिकूलता र अल्प अनुकूलता रहन्छ। यी बद्धजीवको पनि आत्मस्वरूपको सदैव हुने अनुकूलता ईश्वरको नित्य इच्छाले सिद्ध छ। यसरी अनुकूल आत्मस्वरूपका साथ एकताको भ्रम हुनाले कर्मका वशमा हुनाले पनि यो मल मूत्र र सप्तधातुले भरिएको, एकै दिनमा सड्ने, अन्न आदिले पोषियेको त्याज्य शरीर ज्ञान नभएका मानिसको लगि अनुकूल भान हुन्छ। यी शरीर, कर्मरूप उपाधिका कारणले प्रतिकूल लाग्ने हुँदा मुमुक्षुका लागि त्याज्य छन्। स्वाभाविक अनुकूल रूपले प्रतीत हुने हुँदा मुक्तहरूको लागि ईश्वर विभूतिको रूपमा अनुकूल देखिन्छन्। जस्तै, अपराध गरी जेलमा परेको राजकुमारको लागि जेल प्रतिकूल एवं बाधक भइरहेको हुन्छ तापनि राजकुमारको अपराध निवृत्त भई राजाले आफू समानको भोग सुखमा ल्याई स्थापना गरेपछि आफ्नो र आफ्ना पिताको सम्पत्ति सम्झी त्यही जेल अनुकूल देखिन्छ, त्यस्तै कर्मबन्धनबाट छुटेका मुक्तहरूको लागि विश्व ब्रह्माण्डनै पिता परमेश्वरको विभूति सम्झी अत्यन्त अनुकूल देखिन्छ।

**ईश्वर तत्व निरूपण**

यसरी सम्पूर्ण विश्वको सत्ता आफ्ना अधीनमा भएका दुबै विभूतिका स्वामी परमात्माको स्वरूप सत्यत्व, ज्ञानत्व, अनन्तत्व, आनन्दत्व, अमूलत्व यी स्वरूप निरूपक धर्मले युक्त भएको हुनाले सत्य, ज्ञान, अनन्त, आनन्द र अमलरूप छ।

परमात्माका स्वरूपलाई निरूपण गर्ने गुणदेखि भिन्न गुणहरू र दिव्य मंगल-विग्रह (ज्ञानमय शरीर) आदि पनि निरूपित स्वरूपका विशेषण हुन्छन्। यिनी गुणहरूमा ज्ञान, शक्ति, बल, ऐश्वर्य, वीर्य, तेज, यी ६ गुण परमात्माको परत्व सिद्ध गर्नमा उपयोगी छन्। शौशील्य, वात्सल्य,. औदार्य आदिगुण परमात्मालाई सुलभ बनाउनमा उपयोगी छन्। यी सम्पूर्ण गुण सबै समयमा परमात्माका स्वरूपमा आश्रित रहन्छन्। परव्यूह, विभाग आदि विभागमा कम, वेशरूपमा गुणको विषमतालाई बताउने शास्त्रवचन सबै तत् तत् रूपको अनुसन्धान गर्ने भक्तहरूका विषयमा भगवान्ले आविष्कार गरियेका गुण हुन् भन्ने यति मात्र अर्थलाई बताउँछन्। अरु आविष्कार नगरिएका गुणहरू पनि भगवान्का साक्षात् अवतारमा सबैमा रहन्छन्। प्रत्येक उपनिषद् विद्या विंशेषमा अनुसन्धान गरिने गुण विशेष जस्तै निश्चित छन्, त्यस्तै भगवत्शास्त्रमा बताइएका अवतार विशेषको अनुसन्धानको लागि गुणविशेष पनि नियत छन्।





भगवान्का व्यूह अवतार वासुदेव, संकर्षण, प्रद्युम्न, अनिरुद्ध यी चतुर्व्यूहका रूपमा प्रसिद्ध छन्। केशवादि चौबीस व्यूह पनि चार व्यूहका अवतारभेद मानिन्छन्।

विभव अवतार-ब्रह्मा आदिलाई सृष्टि गर्ने पद्मनाभ नारायणदेखि लिएर मत्स्य, कूर्म, वराह, वामन, राम , कृष्ण, इत्यादि तीस संख्या भन्दा पनि केही अधिकै मानिन्छन्। यी विभव अवतारमा ईश्वरले तत् तत् कार्य बमोजिम अपेक्षित गुणहरूको इच्छानुसार प्रकाशन र प्रच्छादन गर्नुहुन्छ। यस्तै विभव अवतारका अवान्तरभेद ''कृष्णरूपाण्यसंख्यानि'' इत्यादिमा बताए अनुसार असंख्य छन्।

पर, व्यूह आदि रूपहरू मध्ये आश्रित भक्तका उपासनाको लागि अपेक्षा गरे अनुसार मूर्तिको समानरूप बनाई मूर्तिमा प्रवेश गरी तदाकार बनिरहने अवतार अर्चावार कहिन्छन्। यी अर्चावतार भक्तलाई अनायास पुरुषार्थचतुष्टय प्रदान गर्ने हुन्छन्; तर शस्त्रले बताए अनुसार रूपलक्षण, प्रतिष्ठा, पूजा हुनुपर्छ भन्ने अर्चावतारको रहस्य विस्तृत रूपमा ''विष्णुधर्मोत्तर'' मा श्री शौनक महर्षिले बताउनुभएको छ। दिव्यसूरिहरूले पनि अर्चावतारको रहस्य प्रत्यक्ष गरी दिव्यप्रबन्धहरूमा प्रकाश गर्नुभएको छ।

यसरी तीन तत्त्वको विभाजन गरी चिन्तन गर्ने सर्वविशिष्टरूपले परमात्मा एकतत्त्व हुनुहुन्छ भनी अनुसान्धन गर्ने, ईश्वर र ईशितव्य दुई तत्त्वको रूपमा चिन्तन गर्ने, आत्मा र अनात्मा अथवा उपाय र उपेय दुई अर्थ ज्ञातव्य छन् भनी अनुभव गर्ने र यस्तै रक्ष्य, रक्षक, त्याज्य, उपादेय यी चार अर्थ जान्नयोग्य छन् भनी विभाजन गर्ने। पहिले बताए जस्तै—अर्थ पञ्चक, अर्थ षट्क र अर्थसप्तक छन् भनी विवेक गरी चिन्तन गर्ने आचार्यहरूका-ज्ञान र अनुष्ठानका परिपक्क अवस्था प्राप्तिरूप प्रयोजन विशेष सिद्ध छन् भनी जान्न योग्य छ।

अन्त्यमा, उपर्युक्त तत्त्व लगायत ब्रह्मैक्य-बोधक समस्त शास्त्रीय सिद्धान्तको सारलाई आत्मसात् गरी ब्रह्मस्वरूपमा प्राप्त श्री१००८ स्वामी परमानन्द सरस्वती महाराजका **सर्वजनहिताय, सर्वजन-सुखाय** का उदार चरित्र, पूर्ण ज्ञान, तपोमय जीवन र त्यागशीलत्व जस्ता दिव्य गुणद्वारा अभिप्रेरित भै यो तत्त्वत्रय-विवेचनात्मक लेखको एक थुंगा पुष्प वहाँकै चरणकमलमा समर्पण गर्दछु।

# ✿ परमात्मा-गँजडीको गफ जस्तो हैन ✿

—रामचन्द्र पौडेल 'रम्घाली',
(निर्वाचन आयुक्त)
रम्घा, तनहूँ

यद्यपि केही दार्शनिकहरू ईश्वरको सत्ता नै स्वीकार्दैनन्, तदपि यहाँ तिनीहरूका मतको सम्बन्धमा विवेचना गर्न खोजिएको छैन। यहाँ त ईश्वर-सत्ता मान्नेहरूद्वारा स्वीकृत श्रुति, स्मृति, पुराण आदि प्रमाणवचनहरूमा देखिएका द्विभाव तथा विपरीत भावका सम्बन्धमा विचार गर्न मात्र खोजिएको छ।

हुन त 'तेत्तीसकोटि देवता' सुन्दै आएको हाम्रो समाज ती देव-देवीहरूको विभिन्न भावको वर्णन हुनु के अस्वाभाविक हुन्छ र? तदपि एउटै श्रुतिवचनमा एउटै प्रकरणमा, एउटैको चित्रणमा विपरीत कुरा आउँदा के प्रमाणकारहरू गँजडी थिए वा नभएका कुराको कल्पना गर्दा 'ढाँटेको कुरा काटे नमिले' जस्तै भएको हो कि! भन्ने पनि लाग्न सक्छ; त्यसैले परमात्माको स्वरूपका सम्बन्धमा पुरः स्थापित प्रमाण-वचनमा चर्चा गर्नु प्रासङ्गिक ठानेको छु।

परमात्माको सम्बन्धमा श्रुति-स्मृति-पुराणादि प्रमाणवचनहरूमा विभिन्न रूपले वर्णन गरेको पाइन्छ। यसैले वास्तवमा परमात्मा कस्तो हो त भनेर ढुक्क हुन गाह्रो परेको छ। त्यस्ता प्रमाण-परक वचनहरूमा देखिएको विषमतामा समता, अनेकतामा एकता, अनन्वयमा समन्वय, राख्न नसक्नाले नै विभिन्न धारणा बनेका हुन्। विभिन्न वचनहरूमा प्रतीयमान द्विभाव अथवा विपरीत भावले गर्दा परमात्मास्वरूप नै उपहास्पद जस्तो भएको छ। जस्तो कि श्वेताश्वतरोपनिषद्मा :—'**अपाणिपादो जवनो ग्रहीता, पश्यत्यचक्षुः स शृणोत्यकर्णः**'।
अर्थात् 'परमात्मा हातगोडा नभएको भए तापनि छिटो दौडन्छ; ग्रहण गर्दछ। आँखा नभएको भए पनि देख्दछ; कान नभएको भए तापनि सुन्दछ'—इत्यादि विरोधाभासपूर्ण वर्णन गरेको छ। यसैले परमात्म-स्वरूपको बारेमा साधारणतया अल्मलिनु अस्वाभाविक होइन। वस्तुतः यी आधारप्रमाणहरू गँजडीका गफ पनि हैनन्; कोरा कल्पना पनि हैनन्।

सच्चिदानन्द परमात्मा स्वरूपतः सदा एकभावमा विराजमान भएतापनि मायाको सम्बन्धले गर्दा तीन भावमा प्रतीयमान हुन्छ। अध्यात्म भावमा ब्रह्म, अधिदैव भावमा ईश्वर, अधिभूत भावमा विराट्। यी तीन भाव र तद्गत स्वरूपलाई शास्त्रहरूमा वर्णन गरेको छ। श्रीमद्भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ—

**अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते॥**
**अधिभूतं क्षरोभावः पुरुषश्चाधिदैवतम्॥**

अर्थात् अक्षर परब्रह्मको माया-सम्पर्क-रहित जो भाव हो त्यो 'अध्यात्म' हो। क्षरसंज्ञक प्रकृति विलासमय जो भाव हो त्यो 'अधिभूत' हो। जो पुरुष-संज्ञक नियतृभाव हो, त्यो 'अधिदैव' हो। यी तीन भाव र तद्गत स्वरूपहरू बुझेपछि कुनै भ्रममा पर्नुपर्ने छैन। स्वतः सामञ्जस्य हुन आउँछ।

**अध्यात्मभाव—**

ब्रह्मको यो भाव श्रुति स्मृतिहरूमा 'तत्' पदद्वारा शब्दित छ। ब्रह्मको सच्चिदानन्दमयी जो सत्ता छ, त्यो तरङ्गमयी त्रिगुणा माया भन्दा पर छ, यसमा नै मायाको पनि लय हुन्छ। जीवको मुक्ति पनि यसैमा हुन्छ। व्यक्त तथा अव्यक्त मायाको चिरसंपर्क विहीन, निर्गुण, निरञ्जन, निष्कल, स्वराट् परब्रह्मको सत्ता हो 'अध्यात्मभाव'।

यद्यपि श्रुतिले यस भावलाई तत्पदगम्यको रूपमा चित्रण गरेको छ तर यो भाव शब्दातीत, अनिर्देश्य, निर्गुण, अनिर्वचनीय हुनाले यस भावको वर्णन गर्दै जाँदा **'नैव वाचा न मनसा प्राप्तुं शक्यो न चक्षुषा' 'न विद्मो न जानीमः'** समेत भन्नु परेको छ। यो भाव कुनै विशेषण द्वारा विशेषित तथा शब्द द्वारा शब्दित हुन नसक्ने हुनाले श्रुतिले पनि 'नेति नेति' शब्द द्वारा परिचय गराएकोछ। यस विषयमा बृहदारण्यकोपनिषद्मा—

**'अथात आदेशो नेति नेति नहनह्येतस्मादन्यत्परमस्ति।'**

त्यो यो हैन, यो हैन, यस भन्दा अतिरिक्त अरु केही पनि छैन भनिएको छ। यसरी यसभावको वर्णन निषेध शैलीले गरिएको छ। यस मायातीत निर्गुण ब्रह्मको चित्रण 'नञ्' को प्रयोगद्वारा नपुंसकलिङ्गी शब्दमा गरिएको छ। यस विषयमा केही उपनिषद् वचनहरू—

**(क) तदेतद् ब्रह्मा पूर्वमनपरमनन्तरमबाह्यम्। (बृहदारण्यक)**

**(ख) अशब्दमस्पशमरूपमव्ययं तथाऽरसं नित्यमगन्धवच्च यत् (कठ.)**

**(ग) स एष नेति नेत्यात्माऽग्राह्यो न हि गृह्यतेऽशीर्यो न हि शीर्यतेऽसङ्गो न हि सज्जतेऽसितो न हि व्यथते। (वृहदारण्यक)**

**(घ) नान्तः प्रज्ञं न बहिः प्रज्ञं नोभयतः प्रज्ञं न प्रज्ञानघनं न प्रज्ञं नाप्रज्ञमदृष्टमव्यवहार्यमग्राह्यमलक्षणमचिन्त्य मव्यपदेश्यम्। (माण्डूक्य)**

**(ङ) अन्यत्र धर्मादन्यत्राऽधर्मादन्यत्रास्मात्कृताकृतात्। अन्यत्रभूताच्च भव्याच्च। अन्यदेव तद् विदितादथोऽविदितादधि। (कठ.)**

**(च) यत्तददेश्यमग्राह्यमगोत्रमचक्षुःश्रोत्रं तदपाणिपादम्। (मुण्डक.)**

**(छ) स पर्यगाच्छुक्रमकायमव्रणमस्नाविरं शुद्धमपापविध्दम्। (ईशावास्य.)**

यसै अध्यात्मभावलाई प्रकृतिविलास रहित हुनाले 'निर्विशेषब्रह्मभाव' वा 'निर्गुणब्रह्मभाव' पनि भन्दछन्। श्रुतिस्मृतिहरूमा जति 'नञ्' नपुंसक-लिङ्गी पदको प्रयोग भएको छ, त्यसबाट माया सम्पर्करहित, नित्यशुद्धबुद्धमुक्त, निर्विशेष, निर्गुण, निरञ्जन, निष्कल, परब्रह्म परमेश्वर, को भाव संझनुपर्दछ।

परमात्माको यही निर्विशेष, निर्गुणभाव बुझेर परीक्षित् महाराजले—

**ब्रह्मन्! ब्रह्मण्यनिर्देश्ये, निर्गुणे गुणवृत्तयः।**
**कथं चरन्ति श्रुतयः साक्षात्सदसतः परे॥**

**(श्रीमद्भागवत१०/८७।)**

भनेर प्रश्न गरेकोमा शूकदेवजीले भन्न नसकिने त्यस निर्विशेष, निर्विग्रह, ब्रह्मलाई—

**बुद्धीन्द्रियमनःप्राणाञ्जनानामसृजत्प्रभुः।**
**मात्रार्थं च भवार्थं च आत्मनेऽकल्पनाय च ॥ श्रीमद्भागवत १०/८७।**

अर्थात् अनिर्देश्य, निर्गुण सत् असत् भन्दा पर भएको ब्रह्मलाई गुणवृत्ति भएका श्रुतिहरुले कसरी प्रतिपादन गर्दछन् भन्ने राजाको प्रश्नमा शुकदेवजीले मानिसहरूको बुद्धि, इन्द्रिय, मन, प्राण आदि भगवान्ले सृष्टि गरे भनी 'कहाँ जान्छौ ?' भन्ने सोधनी (प्रश्न) को 'खीर खाएँ' भने जस्तो जवाफ गरे, किनकि निर्गुण ब्रह्मको प्रतिपादन सोझै त हुनै सक्दैन। त्यसैले सगुण ब्रह्मको साक्षात्प्रतिपादन गरेर निर्गुण ब्रह्मको तात्पर्यवृत्तिले मात्र श्रुतिहरूले प्रतिपादन गर्दछन् भन्नुपरेको हो। वास्तवमा यस भावमा अवस्थित परब्रह्मलाई परमात्मा परमेश्वरको शब्दले चित्रण गर्न नै मिल्दैन।



**अधिदैवभाव—**

परमात्माको विकार रहित दृष्टि सृष्टितिर आकृष्ट भएर अर्धाङ्गिनी जगज्जननी महामायासित शबलित, सविशेष, सगुणभाव अधिदैव भाव हो। यही परमात्माको 'सत्' शब्दद्वारा संज्ञित सगुण ईश्वर भाव हो। यो भाव अन्तःकरण अथवा ज्ञानको अवलम्बन-द्वारा जान्न सकिने भनी श्रुतिमा बताएको छ।

(क) पराञ्चि खानि व्यतृणत्स्वयम्भूः तस्मात् पराक् पश्यति नान्तरात्मन्॥
कश्चिद्धीरः प्रत्यगात्मनमैक्षदावृत्तचक्षुरमृतत्वमिच्छन्॥ (कठ.)

(ख) एष सर्वेषु भूतेषु गूढोत्मा न प्रकाशते॥
दृश्यते त्वग्रया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः॥ (कठ.)

(ग) एषोऽणुरात्मा चेतसा वेदितव्यः॥

(घ) ज्ञानप्रसादेन विशुद्धसत्वस्ततस्तु तं निष्कलं ध्यायमानः॥

(ङ) हृदा मनीषा मनसाऽभिक्लृप्ता य एतद्विदुरमृतास्ते भवन्ति॥

आदि श्रुतिहरूले सविशेष सगुण ब्रह्म ईश्वरलाई ज्ञानगम्य भनेर बताएकाछन्।

यस भावको अधिष्ठानद्वारा महामाया प्रकृति चेतनवती बनेर अनादि अनन्त सृष्टिधाराको विस्तार गरी रहन्छे। यसै भावलाई श्रुतिले यसरी दर्शाएको छ—

(क) पादोऽस्य विश्वाभूतानि त्रिपादस्याऽमृतन्दिवि॥ (यजुः)

अर्थात् परमात्माको एकै पाउमा समस्त विश्व छ, बाँकी तीन पाउ यस मरणधर्मा संसारभन्दा भिन्नै रूपमा छ।

(ख) त्रिष्वेकपाच्चरेद् ब्रह्म त्रिपाच्चरति चोत्तरे॥
सत्यानृतोपभोगोर्थो द्वैतीभावो महात्मनः॥

(ग) यस्तूर्णनाभ इव तन्तुभिः प्रधानजैः स्वभावतो देव एकः स्वमावृणोत्॥ (श्वेताश्वतर.)

(घ) नारायणे भगवति तदिदं विश्वमाहितम्॥
गृहीतमायोरुगुणः सर्गादावगुणः स्वतः॥ (श्रीमद्भागवत)

(ङ) विष्टभ्याऽहमिदं कृत्स्नमेकांशेन स्थितो जगत्॥ (श्रीमद्भगवद्गीता)

(च) तच्छक्त्युपाधिसंयोगाद् ब्रह्मैवेश्वरतां व्रजेत्॥ (विष्णुपुराण)

महासमुद्रको निर्वात, निष्कम्प, शान्तिमय र सवात अनन्त तरङ्गमय वीचिविक्षुब्ध यी दुई अवस्था जस्तै एउटै ब्रह्मको पनि माया-यवनिका द्वारा आवृत, सगुण, संकुचित र मायाशून्य, निर्गुण व्यापक यी दुई अवस्था छन्। अधिदैव र अध्यात्म यी दुई भावद्वारा क्रमशः ब्रह्मका उक्त दुई अवस्थाको प्रतिपादन भएको छ।

यी दुवै भाव यस ऋचामा एकसाथ देखाइका छन्।

(क) द्वे वाव ब्रह्मणो रूपे मूर्तं चैवाऽमूर्तञ्च। मर्त्यञ्चाऽमृतं च। स्थितं च यत् च। सत् च त्यच्च॥ (बृहदारण्यक)

(ख) द्वे वाव खल्वेते ब्रह्मज्योतिषे रूपके॥ (मैत्रायणी)

(ग) सन्त्युभयलिङ्गाः श्रुतयो ब्रह्मविषयाः।
सर्वकर्मा सर्वकामः सर्वगन्धः सर्वरस इत्येवमाद्याः सविशेषलिङ्गाः।





**अस्थूलमनण्वह्रस्वमदीर्घमित्येवमाद्याश्च निर्विशेषलिङ्गाः॥ (श्री शंकराचार्य भगवत्पाद)**

वस्तुतः यी दुईभावमा फरक छैन तापनि एउटा निर्विशेष (अध्यात्म) हुनाले साक्षात् बताउन नसकिने र अर्को विशेषणद्वारा विशेषित गरेर बताउन सकिने (अधिदैव) छ यति मात्र दुईमा फरक छ।

श्रुतिमा निर्विशेष ब्रह्मलाई क्लीबलिङ्ग र सविशेष ब्रह्मलाई पुंलिङ्गद्वारा एउटै ऋचामा पनि फरक गरी देखाइएको छ।

(क) **यत्तदद्रेश्यमग्राह्यमनेत्रमचक्षुःश्रोत्रं तदपाणिपादं नित्यं विभुं सर्वगतं**
**सुसूक्ष्मं तदव्यंतद्भूतयोनिं परिपश्यन्ति धीराः॥ (मुण्डक)**

यस मन्त्रमा अद्रेश्यदेखि अपाणिपादसम्म नञ् प्रयोग गरेर नपुंसकलिङ्गद्वारा निर्विशेष ब्रह्मको बाँकी पुल्लिङ्गी द्वितीयान्त पदद्वारा सविशेष ब्रह्मको वर्णन गरिएको छ।

यी दुई भावको वर्णन श्रीमद्भागवतमा यसरी भएको छ—

(क) **लीलया कापि युञ्जेरन् निर्गुणस्य गुणाः क्रियाः।**

(ख) **सर्वं त्वमेव सगुणो विगुणश्च भूमन्॥**

(ग) **वदन्ति तत्तत्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम्॥**
**ब्रह्मेति परमात्मेति भगवानिति शब्द्यते॥**

(घ) **सदक्षरं ब्रह्म य ईश्वरः पुमान्, गुणोर्मिसृष्टिस्थितिकालसंलयः॥**

यही सगुण ब्रह्म ईश्वर विश्वको सृष्टि, स्थिति र लयको कर्ता मानिन्द छ। ब्रह्मसूत्रको 'जन्माद्यस्ययतः' सूत्रको प्रतिपाद्य विषय यही ईश्वर हो, यही अनन्तशक्ति तीन भागमा विभक्त भएर सृष्टि, स्थिति, लय को कारण हुन्छ।

**आत्ममायां समाविश्य सोऽहं गुणमयीं द्विज॥**
**सृजन् रक्षन् हरन् विश्वं दध्रे संज्ञा क्रियोचिताम्॥ (भागवत)**
**भक्तचित्तसमासीनो ब्रह्माविष्णुशिवात्मकः॥**

यही सगुण ब्रह्म ईश्वर नै 'अधिदैव भाव' हो।

**आधिभौतिकभाव—**

परमात्माको अधिभूत स्वरूप अनन्तकोटि ब्रह्माण्डमय कार्यब्रह्म हो। कारण ब्रह्म र कार्यब्रह्ममा भिन्नता नहुनाले कारण ब्रह्म परमात्मामा जो मायाद्वारा कार्यब्रह्मको रूपमा विद्यमान छ, यही विराट्रूप परमात्माको अधिभूतभाव हो। श्रुति-स्मृतिहरूमा यस भावको वर्णन पनि प्रशस्त पाइन्छ। जस्तै केही उदाहरणहरू—

(क) **स एव अधस्तात् स उपरिष्टात् पश्चात् स पुरस्तात् स दक्षिणतः स उत्तरतः स एवेदं सर्वम्।**
(छान्दोग्य)

(ख) **सर्वं खल्विदं ब्रह्म**

(ग) **अग्निर्मूर्धा चक्षुषी चन्द्रसूर्यौ दिशः श्रोत्रे वाग् विवृताश्च वेदाः॥**
**वायुः प्राणा हृदयं विश्वमस्य पद्भ्यां पृथिवी ह्येष सर्वभूतान्तरात्मा॥ (मुण्डक)**



(घ) सर्वाननशिरोग्रीवः सर्वभूतगुहाशयः ॥
सर्वव्यापी स भगवान् तस्मात् सर्वगमः शिवः ॥ (श्वेताश्वतर)

(ङ) सहस्त्रशीर्षा पुरुषः सहस्त्राक्षः सहस्त्रपात् ॥ (यजु.)

(च) अनेकबाहूदरवक्त्रनेत्रं पश्यामि त्वां सर्वतोऽनन्तरूपम् ॥
नान्तं न मध्यं नपुनस्तवादिं पश्यामि विश्वेश्वर विश्वरूप ॥ (गीता)

(छ) द्यां मूर्द्धानं यस्य विप्रा वदन्ति एवं वै नाभिश्चन्द्रसूर्यौ च नेत्रे ॥
दिशः श्रोत्रं विद्धि पादौ क्षितिश्चसोऽचिन्त्यात्मा सर्वभूतप्रणेता ॥ (स्मृतिः)

(ज) ब्राह्मणोऽस्य मुखमासीद् बाहू राजन्यः कृतः।
ऊरू तदस्य यद् वैश्यः पद्भ्यां शूद्रोऽअजायत ॥ (यजुः)

(झ) विश्वतश्चक्षुरुत विश्वतोमुखो विश्वतो बाहुरुत विश्वतस्पात् ॥
सं बाहुभ्यां धमति संपतत्रैर्द्यावाभूमी जनयन् देवऽएकः ॥ (यजुः)

यस प्रकारले परमात्माको आधिभौतिक भावको वर्णन पाइन्छ।

सच्चिदानन्दमय परमात्माको आध्यात्मिक आधिदैविक, आधिभौतिक यो त्रिविध भाव वेदादि शास्त्रसम्मत हो। गंभीरतापूर्वक सम्यक् अवलोकन गरेमा मुमुक्षु साधकले कुनै झमेलामा अल्झनुपर्दैन। समस्त श्रुतिस्मृतिका वचनहरूको यँही तात्पर्य हो।

परमात्माको अध्यात्मभाव तात्पर्य वृत्तिबाट मात्र जान्न बुझ्न सकिने हुनाले अधिदैव र अधिभूत भावद्वारा परमात्माको ज्ञान गराउने शास्त्रको उद्देश्य देखिन्छ। जसरी सूर्यनारायणमा किरण प्रदान गर्ने शक्ति भएर पनि कुनै वस्तुमा प्रतिफलित भएन भने प्रकाश वा प्रभाव सोझै देखिन सक्दैन, त्यस्तै परमात्मामा भएको सत् चित् आनन्दमय भाव पनि उपाधिका आधारमा नपरी व्यक्त हुन सक्दैन। यसैको निमित्त अधिदैव र अधिभूत भाव तटस्थ लक्षणवेद्य हुन्।

परमात्माको स्वरूपका सम्बन्धमा भगवत्पाद शङ्कराचार्यले भन्नुभएको छ—'**सर्वकार्यधर्मविलक्षणे ब्रह्मणि**'। यसको आशय हो—ब्रह्मको स्वरूप र स्वभाव समस्त कार्य र धर्मभन्दा विलक्षण छ। यही कुरा योगवाशिष्ठमा वशिष्ठले पनि निर्गुणब्रह्म–सत्तामा अखिल द्वैत प्रपंच सत्ताको समन्वयको वर्णन गर्दै—

**ज्ञाता ज्ञानं तथा ज्ञेयं द्रष्टा दर्शनदृश्यभूः**
**कर्ता हेतुः क्रिया यस्मात्तस्मै ज्ञप्त्यात्मने नमः ॥**

भन्नु भएको छ।

अंतमा कर्म, उपासना, ज्ञान एवं ज्ञान इच्छा क्रिया को त्रिवेणी स्मृतिमा ज्ञाता, ज्ञान ज्ञेय एवं अध्यात्म, अधिदैव र अधिभूत भावात्मक त्रिपुटी विलक्षण परमात्मामा नमन गर्दै समाधिस्थ स्वामीज्यूमा सबैको बुद्धि शुद्ध गरिदिनुहुन प्रार्थना गर्दछु।





# ❁ वैदिक साहित्यको एक झलक ❁

**हरिप्रपन्न शर्मा, कण्डेल**
सचिव
वै०ध०प०चितवन

वेद शब्द वैदिक युगमा वाङ्मयको पर्यायवाची थियो। जसरी आज शास्त्रका नाममा धर्मशास्त्र, व्याकरण-शास्त्र, अर्थशास्त्र र दर्शनशास्त्र आदि विषयको बोध हुन्छ र शास्त्र शब्दले कुनै विशिष्ट अर्थको प्रतिपादन नगरेर आफ्नो पूर्वमा जोडिएका शब्दको अर्थलाई नै बताउँछ। त्यसरी नै वेद शब्दको प्रयोग अति प्राचीन समयमा सम्पूर्ण वाङ्मयको लागि हुन्थ्यो। जसरी ब्राह्मण युगीन सारा साहित्य ब्राह्मण ग्रन्थको नामले व्यवहृत हुन्थे, जसरी सूत्रयुगमा-श्रौतसूत्र, धर्मसूत्र, गृह्यसूत्र व्याकरण र दर्शनका मूल ग्रन्थ समेत सूत्र कहिए, जसरी स्मृति युगका अधिकांश कृति स्मृतिका नामले अभिहित भए, जसरी पुराणकालीन धेरैजसो कृति पुराण कहिए त्यसरी नै वैदिक युगमा वेद शब्दान्तर्गत ब्राह्मणग्रन्थ पनि समावेश गरियो। 'मन्त्रब्राह्मणयोर्वेद नामधेयम्'—मन्त्र र ब्राह्मण दुबै वेद हुन्। यत्ति होइन गोपथ ब्राह्मणमा-ताभ्यः पंचवेदमिति-उनीबाट सर्ववेद, पिशाचवेद, असुर-वेद, इतिहासवेद र पुराणवेद निर्मित भए भनिएको छ। यस्तै नाट्यशास्त्रमा नाट्य नामक पञ्चमवेद निर्माण भएको उल्लेख छ जसलाई ब्रह्माले चारैवेदबाट चार सार निकालेर निर्माण गरेका थिए। धेरै पछि वेद शब्द ऋक्, यजु, साम र अथर्वको मात्र सूचक रह्यो। ब्राह्मण, आरण्यक र उपनिषद् आदि विषय वेद अन्तर्गत हुँदाहुँदै पनि मूल वेद भन्दा सर्वथा भिन्न गरिएको छ। ब्राह्मणग्रन्थ व्याख्याग्रन्थ भएको हुनाले मन्त्रमा आधारित छन्। यिनको स्वतन्त्र अस्तित्व छैन। मन्त्रको स्वतन्त्र अस्तित्व छ। अतः वेद शब्दले मन्त्र नै सम्झनु पर्छ न कि ब्राह्मण आरण्यक र उपनिषद्। यी ग्रन्थहरू मन्त्रका व्याख्यान र महत्त्वका प्रतिपादक हुन्। सम्पूर्ण ज्ञानको मूल श्रोत वेद भएको हुँदा मनुले 'सर्वज्ञानमयो वेदः' भनेका छन्। यो कुरा मैक्समूलर र स्वामी दयानन्द सरस्वती आदि विद्वान्हरूले पनि स्वीकार गरेका छन्।

वेद चार छन्—ऋक्, यजु, साम र अथर्व। यिनका चार संहिता छन्। संहिता भनेको संकलन हो। प्रातिशाख्यको कथन अनुसार पत्रको मूल प्रकृति संहिता हो। प्रत्येक संहितामा वेदका पृथक् पृथक् मन्त्रहरू संकलित छन्।

वेद शब्दको निर्वचन 'विद् ज्ञाने' 'विद् सत्तायाम्' 'विद्लृ लाभे र' 'विद् विचारणे' यी चार धातुबाट हुन्छ। उपनिषद् आयुर्वेद नाट्यशास्त्र, कोश, कल्प र मनुस्मृति आदिमा वेद शब्दको प्रयोग मन्त्रसंहिताकै निमित्त भएको छ। ऋग्वेद—भाष्य भूमिकामा स्वामी दयानन्द सरस्वतीले वेद शब्दको व्युत्पत्ति—विदन्ति-जानन्ति, विद्यन्ते-भवन्ति, विदन्ति अथवा विदन्ते-लभन्ते, विन्दन्ति-विचारयन्ति सर्वे मनुष्याः सत्यविद्यां यैर्येषु वा तथा विद्वांसश्च भवन्ति ते वेदाः—जसबाट मानिसहरू सत्य विद्या जान्दछन् वा प्राप्त गर्दछन् वा विचार गर्दछन् वा विद्वान् हुन्छन् अथवा सत्यविद्या प्राप्तिको लागि प्रवृत्त हुन्छन् त्यो वेद हो, भन्ने गरेका छन्।

वेद ईश्वरीय ज्ञान हो। यसको व्याकरण-निष्पन्न शास्त्रीय अर्थ हो-ज्ञान। 'ज्ञान' शब्द व्यापक अर्थको प्रतिपादक हुनाले इतिहास, भूगोल, गणित आदि, विषयको ज्ञान पनि वेद शब्दको अर्थ भन्न नसकिने होइन, आदि विषयको ज्ञान पनि वेद शब्दको अर्थ भन्न नसकिने होइन तर यहाँ वेदको अभिप्रेत अर्थ हो—ईश्वरीय ज्ञान। जसलाई ऋषि महर्षिहरूले तपोबलद्वारा अनुभव गरेका थिए। आफ्नो तपोबलले मन्त्रहरू ऋषिद्वारा दृष्ट भएको हुँदा 'ऋषयो मन्त्रद्रष्टारः' भनिएको हो। ऋषिहरू द्रष्टा हुन्, स्रष्टा होइनन्। यिनीहरू स्त्री र पुरुष-दुबै थिए।

दर्शनग्रन्थको ज्ञान कारिकाद्वारा, व्याकरणको सूत्रद्वारा र महाकाव्यको श्लोकद्वारा प्रतिपादन गरिए झैं वैदिक ज्ञान



मन्त्रद्वारा अभिव्यक्त भएको छ। ऋषिहरूले जुन ईश्वरीय ज्ञान प्राप्त गरे त्यो ज्ञान शब्द समूह र वाक्य समूहमा आबद्ध छ। तिनै शब्द समूह र वाक्य समूहको नाम हो—मन्त्र।

ज्ञानार्थक, विचारार्थक र सत्कारार्थक 'मन्' धातुमा स्टून् प्रत्ययको योगबाट मन्त्र शब्दको निर्माण हुन्छ। यसको व्युत्पत्ति—मन्यते—जायते, वा मन्यते—विचार्यते वा मन्यते-सत्क्रियते ईश्वरादेशः अनेन इति मन्त्रः यस्तो हुन्छ। यसको अर्थ हो—जसद्वारा ईश्वरको आदेशको ज्ञान हुन्छ वा ईश्वरीय आदेशको सम्यक् चिन्तन मनन र विचार हुन्छ वा देवता विशेषको सत्कार गरिन्छ त्यो मन्त्र हो। वेद ईश्वरीय आदेश भएको र तत्सम्बन्धी चिन्तन मनन का साथै देवता विशेषको स्तुति प्रार्थना पनि वेदमा भएको हुँदा उक्त व्युत्पत्तिहरू विषय सम्मत नै देखिन्छन्। साथै वेद ईश्वरीय ज्ञान हो भन्ने कुराको पनि पुष्टि हुन्छ।

मन्त्रहरू हजारौं छन्; अनेक विषयक छन्। प्रारम्भमा यी मन्त्रहरू अविभक्त थिए। धेरै पछि समय-समयमा सम्पूर्ण वेदमन्त्रहरूलाई संख्या र विषयका आधारमा क्रमवद्ध रूपमा भिन्न-भिन्न भागमा विभाजन गरियो। विभाजनको क्रममा पहिला ऋक्, यजु र साम त्रिधा विभाजन गरी सामूहिक रूपमा 'त्रयी' नाम राखियो। ऋक् पद्यमय, यजु गद्यमय र साम गीतिमय छ। ऋक्मा स्तुति र प्रार्थना छ। यसको व्युत्पत्ति हुन्छ—ऋच्यते-स्तूयते अनया इति ऋक् मन्त्रलाई ऋचा पनि भन्छन्। यसमा देवता विशेषका पूजा सम्बन्धी मन्त्रहरू छन्। यसको व्युत्पत्ति-यजति यजते वा अनेन इति यजुष् (यज्+उसि=यजुष्) हुन्छ। साममा गीतिपरक मन्त्रहरू छन्। यसको व्याकरण सम्मत व्युत्पत्ति समयति-नाशयति विघ्नं इति वा समयति-सन्तोषयति देवान् अनेन इति 'सामन्' हुन्छ। व्युत्पत्ति अनुसारको अर्थ हुन्छ-जसले यज्ञको अवसरमा विघ्न नाश गर्दछ वा देवताहरूलाई सन्तोष दिन्छ त्यो साम हो। यी सामहरू स्वर र तालबद्ध गाइन्छन्।

अग्निवायुरविभ्यस्तु त्रयं ब्रह्म सनातनम्।
दुदोह यज्ञसिद्ध्यर्थं ऋग्यजुःसामलक्षणम्॥

परमात्माले यज्ञको सिद्धिको लागि ऋग्, यजु र साम लक्षणवाला सनातन वेदलाई अग्नि वायु र सूर्यको लागि दुहुनुभयो। यो मनुको कथन र 'तस्माद् यज्ञाद् सर्वहुत ऋचः सामानि यज्ञिरे। छन्दांसिऽयज्ञिरे तस्माद्यजुस् तस्मादजायत, यो वेदको कथन अनुसार पनि प्रथम अवस्थामा वेदको त्रिधा विभाजन गरिएको थियो भन्ने प्रमाणित हुन्छ।

उक्त तीन वेदमा समावेश हुन नसकेका—मारण, मोहन, उच्चाटन आदि विषयक मन्त्रहरू संकलन गरी पछिमात्र चौथा अथर्ववेदको निर्माण गरिएको हो। कालक्रमिक र विषयको आधारमा यो वेद चौथा भए पनि प्राचीनता र महानतामा समान छ। यो ज्ञानको प्रथमवक्ता ब्रह्म र प्रथम श्रोता ब्रह्मा हुन्। त्यसपछिको परम्परा-ब्रह्मा-वशिष्ठ-पराशर-शक्ति हुँदै कृष्णद्वैपायनसम्म आइपुग्दा व्याससंख्या ३२ पुगेको छ। वेदको संकलक संपादक र व्याख्याताको नाम हो व्यास। आज जुन् रूपमा वेद उपलब्ध छ त्यसको अन्तिम विभाजक कृष्णद्वैपायन हुनुहुन्छ। यिनी द्वापर र कलिका सन्धिकालका प्रतिभा हुन्छ। वैदिक ज्ञानको यो विराटस्वरूप विभिन्न समयमा विभिन्न आश्रमका अनेक ऋषिद्वारा दृष्ट ज्ञान हो। सामूहिक रूपमा सुदीर्घकालमा निर्मित विचारधारा हो। यसमा वेला वेलामा उत्थान र पतनका क्रियाहरू पनि हुँदै आएका छन्। एकले अर्कोलाई सुनाउँदै मौखिकरूपमा धेरै समयसम्म आइपुगेको हुँदा यसलाई श्रुति पनि भनिन्छ।

धर्म-संस्कृति, समाज, राजनीति, दर्शन, कर्म र अर्थ सम्बन्धी विषयको तुलनात्मक अध्ययनको दृष्टिले वैदिक युगलाई दुई भागमा विभाग गर्न सकिन्छ, पूर्व वैदिक युग र उत्तर वैदिक युग। पूर्ववैदिक युगमा मन्त्र संहिता र उत्तर वैदिक युगमा ब्राह्मण, आरण्यक र उपनिषद्देखि छवटै वेदाङ्गसम्मका ग्रन्थहरू पर्दछन्। विषयको आधारमा वेदका तीन भाग छन्—कर्मकाण्ड उपासनाकाण्ड र ज्ञान-काण्ड। ब्राह्मणग्रन्थमा कर्मकाण्ड, आरण्यकमा उपासनाकाण्ड र उपनिषद्मा ज्ञानकाण्डको प्रतिपादन गरिएको छ।

प्रत्येक वेदका अलग-अलग शाखां छन्। कृष्णद्वैपायनले अविभक्त वेद चारभागमा बाँडेर क्रमशः पैल, वैशम्पायन जैमिनि र सुमन्तुलाई पढाउनुभयो। उनीहरूले आफ्ना शिष्यलाई पढाए। यसरी गुरु-शिष्य परम्पराद्वारा चल्दै आएका पाठ भेद र क्रम भेदका मन्त्रहरूलाई शाखा भनिन्छ। यी शाखाको विस्तार चरणव्यूहमा छ। महाभाष्यकार पतञ्जलिका कथन अनुसार ऋग्वेदका २१, यजुर्वेदका १०१, सामवेदका १००० र अथर्व वेदका ९ शाखा छन्। ऋग्वेदका २७ शाखामा प्रमुख हुन्—शाकल, वाष्कल आश्वलायन, शाखायन र माण्डूकेय। यिनमा वर्तमानमा उपलब्ध शाकल शाखा मात्र छ। यजुर्वेदमा शुक्लका १५ र कृष्णका ८६ गरी १०१ शाखा हुन्। यिनमा प्रमुख शुक्लका माध्यन्दिन र काण्व, कृष्णका तैत्तिरीय, मैत्रायणी काठक र कठ हुन्। सामवेदका १००० शाखामा कौथुम र राणायणीय अथर्वका ९ शाखामा पैप्पलाद र शौनक शाखा उपलब्ध छन्। चारैवेदका सबै शाखा जोड्दा ११३१ शाखा हुन्छन्। अहिले नेपालमा शुक्ल यजुर्वेदको माध्यन्दिनीय शाखा बढी प्रचलित छ।

चारवेदका चार संहिता छन्, तिनमा ऋग्वेद संहिता प्रथम हो। ऋक्-स्तुति-वेद-ज्ञान-संहिता-संकलन भिन्न-भिन्न अर्थवाला तीन शब्दको योगले निर्मित ऋग्वेद संहिताको संयुक्त अर्थ हुन्छ—स्तुतिपरक ज्ञानको संकलन। यसका तीन भाग छन्-मण्डल अनुवाक् र वर्ग। यिनलाई क्रमशः अष्टक अध्याय र सूक्त पनि भनिन्छ। समग्र संहितामा १० मण्डल ८४ अनुवाक् र २००८ वर्ग छन्। तदनुसार प्रथमादि मण्डलमा क्रमशः १९१,४३,६२,५८,८७,७५,१०४,१०३, र १९१ सूक्त छन्। प्रत्येक सूक्तको प्रधान विषय कुनै दिव्य शक्तिको स्तुति गर्नु हो। यी सूक्तहरू अनेक छन्द, देवता र ऋषिहरूसित सम्बन्धित छन्।

महर्षि शौनकका कथन अनुसार यो संहितामा १०,५८० मन्त्र, १,५३,८२६ शब्द, ४,३२,००० हजार अक्षर छन्। यसको मण्डल वर्ण अनुवाक् र शाखा आदिको गणनामा मतमतान्तर भए पनि यहाँ केही उल्लेख गरिन्छ।

मुद्‌गल, गालव, शालीय, वात्स्य, रौशिरि, बोध्य, पराशर अग्रिमाटर जातूकर्ण्य, आश्वलायन, कौषीतकी महाकौषीतकी, शाम्व्य, माण्डूकेय, बह्वृच, पैङ्ग्य, उद्दालक, शतवलाक्ष, गज, वाष्कलि, भारद्वाज, ऐतरेय, वशिष्ठ, सुलभ र शौनक। तर संख्या २७ उल्लेख गरिएको छ।

उक्त शाखाहरू मध्ये ५ प्रमुख मानिन्छन्—शाकल, वाष्कल शांख्यायन, भाश्वलायन र माण्डूकेय। वर्तमानमा शाकलनगर निवासी ऋषि शाकल्य (देवमित्र) नामका ऋषि र उनका शिष्यद्वारा संपादित अधीत शाखा शाकल नै उपलब्ध र प्रचलित छ। अहिले ऋग्वेदको नामले प्रसिद्ध संहिता पनि यही नै हो। अरु अनुपलब्ध छन्। उक्त गणना यही संहिताको हो।

प्रत्येक वेदका संहिता (मन्त्र समूह) ब्राह्मण, आरण्यक र उपनिषद् चार भाग हुन्छन्। यो संहिताको ब्राह्मण हुन्छः ऐतरेय र कौषीतकी (सांख्यायन)। यज्ञ विषय-प्रतिपादक ग्रन्थ हुनाले ब्राह्मण भनिएको हो। गोपथ ब्राह्मणमा यज्ञलाई प्रजापति र प्रजापतिलाई ब्रह्म भनिएको छ। तत् सम्बन्धी ग्रन्थ हुनाले यिनलाई ब्राह्मण भनिएको हो। यी ग्रन्थहरू जति वेद त्यत्ति नै हुन्छन्। तर उपलब्ध १८ छन्, गद्यमा छन्। यसका आरण्यक ग्रन्थ हुन्—ऐतरेय र कौषीतकी। उपनिषद्—ऐतरेय, कौषीतकी, वाष्कल र मैत्रायणी हुन्। वानप्रस्थीहरूको यज्ञयागको वर्णन र उनीहरूद्वारा नै अध्ययन अध्यापन गरिने भएको हुँदा आरण्यक भनिएको हो। **(अरण्य एव पाठ्यत्वादारण्यकमितीर्यते।)** वेदको अन्त भाग वेदान्त हो। आत्म ब्रह्म र मोक्षको ज्ञानप्रतिपादक ग्रन्थलाई उपनिषद् भनिन्छ। उपनिषादति सर्वानर्थकरसंसारं विनाशयति संसारकारणभूतामविद्यां च शिथिलयति च ब्रह्म च गमयति—इति उपनिषद्। सम्पूर्ण अनर्थकर संसारलाई नाश गर्ने संसारको कारणभूत अविद्यालाई शिथिल गर्ने र ब्रह्ममा पुर्‍याउने ज्ञानको प्रतिपादक ग्रन्थ उपनिषद् हो। यी ग्रन्थहरू १०८

हुन्छन्। तिनमा प्रमुख ईशादि १२ हुन्। सायणका मत अनुसार आर्यजीवनका तीन स्थिति—गार्हस्थ्य वानप्रस्थ र संन्यासका प्रतीक हुन् ब्राह्मण, आरण्यक र उपनिषद्।

यजुर्वेद संहिता संख्यामा दोश्रो हो। शुक्ल र कृष्ण यसका दुई भाग छन्। गुरु-शिष्यको खटपटको कारणले यसको दुईभाग बन्न गएको हो भन्ने पौराणिक कथन छ। शुक्ल यजुर्वेदलाई वाजसनेय संहिता भनिन्छ। वाज-अन्न, सनि-वलि-पूजायज्ञमा अन्नको आहुति दिनेवाला, वाजसन, उनको पुत्र याज्ञवल्क्य-वाजसनेय उनीसित सम्बन्धित संहिता भएको हुँदा वा याज्ञवल्क्यले वाजी (घोड़ा) को रूप लिई प्राप्त गरेको हुँदा यसको नाम वाजसनेय र सूर्यद्वारा दिनमा प्राप्त गरेको हुनाले शुक्ल एवं देवयजन विषयक भएको हुँदा यजुष् नाम रहेको हो—शुक्लयजुर्वेदको। यसका—काण्व, माध्यन्दिन, जाबाल, बुधेय, शाकेय, तापनीय काणीश, पौडवहा, आवर्तिक, परमावर्तिक, पाराशरीय, वैन, बौधेय, यौधेय, र गालब गरी १५ शाखा छन्। यी सबैलाई वाजसनेय संहिता भनिन्छ। याज्ञवल्क्यले उक्तनामका आफ्ना शिष्यहरूलाई अध्यापन गरेको हुँदा र उनीद्वारा परम्परा अगाडि बढाइएको हुँदा ती प्रतिभाका नामबाट शाखाका नाम रहन गएको हो। चरणव्यूहमा उल्लेख भएअनुसार यसमा १,९०० सय मन्त्र छन्। यसका ब्राह्मण-शतपथ, आरण्य-बृहदारण्यक र उपनिषद् हुन्।

यजुर्वेदको दोश्रो संहिता कृष्ण यजुर्वेदलाई तैत्तिरीय संहिता पनि भनिन्छ। गुरु-शिष्यको मनोमालिन्यको कारणले यजुको रंग कालो भएको हुनाले यसको नाम कृष्ण रहेको हो। गुरु वैशम्पायनले क्रुद्ध भई आफ्नो शिष्य याज्ञवल्क्यलाई आफूले पढाएको वेद फिर्ता मागे। शिष्य याज्ञवाल्क्यले अधीत वेद वमन गर्दिए। गुरु आज्ञाले उनका अन्य शिष्यहरूले तित्रा बनेर खाए। त्यसैले यसको नाम तैत्तिरीय रहेको हो। शवर स्वामीको मीमांसाभाष्य, वायुपुराण र ब्रह्माण्डपुराणमा उल्लेख भए अनुसार यसका ८६ शाखा छन्। बाह्याभ्यन्तरको आधारमा ४१ शाखा छन्। यसमा १८,००० मन्त्र, ७ काण्ड र प्रत्येक काण्ड प्रपाठकमा विभक्त छन्। यसका शाखाहरूमध्ये एउटै चरकशाखाका उपशाखा—चरक, आह्वरक, कठ, प्राच्य, कापिष्ठ-कठ, आष्ठल-कठ, चारायणीय, वारायणीय, वार्तान्तरेय, श्वेताश्वतर औपमन्यु र मैत्रायणी गरी १५ छन्। यिनमा पनि मैत्रायणीका मानव, दुन्दुभ, आत्रेय, वाराह, हारिदेय, श्याम र शामाननीय ७ उपशाखा छन्। अर्को एउटा खाण्डकीय शाखा भएको कुरा पनि उल्लेख छ।

कृष्ण यजुर्वेदका ३२ उपनिषद् छन्। तिनमा उपलब्ध र प्रचलित—तैत्तिरीय, मैत्री, श्वेताश्वतर र कठ छन्। आरण्यक-तैत्तिरीय र मैत्रायणी दुईटा छन्। ब्राह्मण, तैत्तिरीय, मैत्रायणी र काठक ३ छन्। सामवेद तेस्रो संहिता हो। सामको अर्थ हुन्छ सुन्दर र सुखकर वचन एवं संगीत। उद्गाताले यो वेद, देवताको प्रसन्नताको लागि संगीतमय वाणीद्वारा गाउँछ। उद्गाता भनेको वेदमन्त्रको गायक हो। सामका १००० शाखामा उपलब्ध र प्रचलित शाखा हुन्—कौथुम, जैमिनी र राणायणीय। कौथुम गुजरातमा जैमिनीय कर्णाटकमा र राणायणीय महाराष्ट्रमा विशेष रूपमा प्रचारित छ।

वेदमा तीन प्रकारका मन्त्र छन्—ऋचा यजुष् र साम। ऋचा दुई प्रकारका छन्—गेय र अगेय। सामवेदमा गेय ऋचा र गेय यजुष दुबै छन्। सामवेदका ऋचा समूहलाई आर्चिक र यजुषलाई स्तोक भनिन्छ। आर्चिक र स्तोक दुबै साम हुन्। यिनका अनेक भेद छन्। सामवेदको प्रथम द्रष्टा जैमिनी हुन्। उनले आफ्ना शिष्य सुमन्तुलाई सुमन्तुले सृत्वालाई सृत्वाले सुकर्मालाई र सुकर्माले सूर्यवर्चासहस्रलाई दिँदै आएको पारम्परिक ज्ञान हो—सामवेद। अनध्यायमा सूर्यवर्चासहस्रले यसको अध्ययन गरेको हुँदा इन्द्रले नष्ट गर्दिए, र अर्को शिष्य पौष्यंजीलाई यो ज्ञान दिए। त्यसपछि पौष्यंजीबाट हिरण्यनाभ, पाच्यसामग, लौगाक्षि, कुथुमी, कुशीति र लंगाली प्रभृति विहान्‌हरूबाट परम्परित रूपमा यो ज्ञानको प्रचार भएको हो।





विषयका दृष्टिले सामवेदका दुईभाग छन्; पूर्वार्चिक र उत्तरार्चिक। पूर्वार्चिकलाई छन्दस्, छन्दसिका र छन्दसी पनि भनिन्छ। उत्तरार्चिकलाई ऊह र रहस्य पनि भनिन्छ। पूर्वार्चिकमा ग्राम्यगीत र आख्यगीत, उत्तरार्चिकमा ऊह-गीत र उह्य-गीत छन्। ग्राम्य-गीत ग्रामवासी र आरण्यगीत वनवासी समाजको लागि बढ़ी उपयोगी देखिन्छन्। ऊह र ऊह्य यी दुवै रहस्यमय ज्ञान छन्। सर्वसुलभ नभएर साधकलाई मात्र उपयोगी छन्। साधकद्वारा मात्र गाइन्छन्।

सामवेदका कूल मन्त्र संख्या १५,४९ छन्। यसमा ७५ स्वतन्त्र आफ्ना मन्त्रहरू र बाँकी सबै ऋग्वेदका नै हुन्। यी सबै मन्त्रहरू गायत्री (आठ आठ अक्षर वाला त्रिपदा) छन्द र जगती (१२, १२ अक्षरको चतुष्पदा) छन्दमा छन्। यसमा गाउने नियमहरू पनि दिइएको छ। ऋचाहरू सछन्द र सस्वर गाइन्थ्यो। स्वर तीन छन्-उदात्त अनुदात्त र स्वरित। पछि उदात्तबाट - निषाद र गान्धार, अनुदात्तबाट ऋषभ र धैवत र स्वरितबाट षड्ज, मध्यम र पञ्चमको उत्पत्ति भयो। उदात्तलाई तार अनुदात्तलाई मन्द र स्वरितलाई, मध्यस्वर पनि भन्दछन्। यसरी तीनस्वरबाट तीन सप्तक-स्वरको उत्पत्ति भएको छ जुन् संगीतकलाका आधार हुन्। यसमा प्रयोग हुने वैदिक युगीन वाद्य हुन्—वीणा, वेणु र दुन्दुभि। सामवेदबाट नै गान्धर्व वेदको उत्पत्ति भयो। गान्धर्व वेदबाट १६,००० हजार राग रागिनीको निर्माण भएको छ। आधुनिक संगीतकलाको उत्पत्तिको मूल स्रोत पनि यही हो।

सामवेदका ब्राह्मणग्रन्थ—ताण्ड्य, आर्षेय, षड्विंश, अद्भूत, मन्त्र, छान्दोग्य, जैमिनी र जैमिनी उपनिषद् ब्राह्मण हुन्। आरण्यक ग्रन्थ—छान्दोग्य र तवलकार हुन्। उपनिषद् केन र छान्दोग्य हुन्।

अथर्ववेद चौथा संहिता हो। अथर्वऋषिको नामबाट यसको अथर्ववेद नाम रहेको हो। यसलाई भृग्वंगिरसवेद या अथर्वांगिरसवेद पनि भनिन्छ।

विषयका दृष्टिले अथर्वका अथर्वन् र अंगिरस दुई भेद छन्। अथर्वन्मा औषधि प्रतिपादक मन्त्र छन्। अंगिरसमा मारण मोहन र उच्चाटनविषयक मन्त्रहरू छन्। यसका अतिरिक्त अथर्वमा यज्ञ सम्बन्धी र ब्रह्मविद्या विषयक मन्त्रहरू पनि छन्। ब्रह्मविद्या प्रतिपादक मन्त्रहरू भएको हुँदा यसलाई ब्रह्मवेद पनि भनिन्छ। शाप, वशीकरण, मोहन, उच्चाटन, आशीर्वाद, स्तुति र प्रार्थना विषयक मन्त्रहरूलाई ब्राह्मण भनिन्छ। उक्त विषयक मन्त्रहरू यसमा भएको हुँदा पनि यसको नाम ब्रह्मवेद रहन गएको हो। अथर्वका २० काण्ड र नौ शाखा छन्। नौ शाखा हुन्—पैप्पन्लाद, शौनकीय, दामोद, तोत्तायन, जामल, ब्रह्मपालास, कुनरवा, वेददर्शी र चरणविद्या। वर्तमानमा उपलब्ध—शौनक र पिप्पलाद छन्। २० काण्ड, ४८ प्रपाठक, ७६० सूक्त र ६००० मन्त्र छन्। ब्राह्मण ग्रन्थ हो—गोपथ ब्राह्मण; आरण्यक ग्रन्थ छैन। उपनिषद्-प्रश्न (पिप्पलाद शाखा) मुण्डक (शौन) र माण्डूकेय हुन्।

वेदका उक्त शाखा प्रशाखा र मूल सस्वर र सछन्द वाचन गरिन्छन्। वर्णको उच्चारणमा स्वर चिह्नहरू - वर्णमा खाली ( ) उदात्त, वर्णमाथि ठाडो (') धर्को स्वरित र वर्णभन्दा तल (-) तेर्सो धर्को अनुदात्त हो। यिनलाई संगीतीय भाषामा क्रमशः तार, मन्द्र र मध्य स्वर भनिन्छ। पिङ्गल शास्त्र अनुसार छन्द ५६ छन्। तिनमा बढी प्रचलित छन्द हुन् गायत्री, जगती र अनुष्टुप्।

ऋषिहरूले यसको अध्ययन र अध्यापन गर्दा पदपाठ, क्रमपाठ, जटापाठ र घनपाठ पूर्वक गर्थे। यो वेद पठन-पाठनको प्रक्रिया हो। पदपाठ—प्रत्येक शब्दको परिच्छेद गर्नु, क्रमपाठ-पदपाठका प्रत्येक शब्दलाई जोड्नु, जटापाठ—उल्टोपाल्टो गरी पढ्नु, घनपाठ—यो जटापाठ भन्दा पनि कठिन हुन्छ। यो अध्ययन-अध्यापन अद्यावधि दक्षिण भारतमा देख्न र सुन्न पाइन्छ। अन्यत्र लुप्त प्रायः भइसकेको छ। सस्वर सरल पाठ भने नेपाल र भारतमा परमानन्द गुरु जस्ता त्यागी सन्तशिरोमणिहरूको प्रयासमा सुरक्षित नै छ।



# ❋ वृक्क सम्बन्धी रोगको निदान तथा चिकित्सा ❋

## [मृगौला (Kidney) गुर्दा ]

**कमलनयनश्रीनिवासरिजाल**
पाङ्-पर्वत, हाल, वाराणसी

**परमानन्द गुरुमा श्रद्धा-भक्ति समर्पण।**
**गरी किड़नी यद्वा यो मृगौला रोगलक्षण॥**

**निदान पूर्वसम्प्राप्ति चिकित्सापथ-पथ्यता-**
**को, यो पालन गर्ने ती जन हुन् दीर्घ जीविता॥**

**पाई सद्गुरुको ज्ञान आत्मा निर्मल-स्वच्छता-**
**बनाई लक्ष्यमा पुग्छन् पालनै गरि साधुता॥**

**भन्ने यो भाव मनमा राखी शास्त्र विचारँदा।**
**वृक्कका रोगले दिक्क नबनून् जन सर्वदा॥**

परिचय-वृक्क-लगंभग सिमीका बीजका आकारको कलेजी रंग भएको मेरु दण्डका दायाँ वायाँ पार्श्वमा दुईखण्डमा विभाजित कटि प्रदेशका चौथा करङ्गका बीचमा रहेको लाखौं शिराजाल युक्त ग्रन्थिमय पिण्ड विशेषलाई वृक्क या गुर्दा भनिन्छ। यसको लम्बाई लगभग ५ से० मी० देखि ११ से० मी० सम्म हुन्छ। यसको तौल १२५ ग्राम जति हुन्छ। पुरुषको भन्दा नारीको अलिकति सानो र हल्का हुन्छ। वृक्क धेरैजसो दुइटा हुन्छन् कतै यौटा र कतै दुई भन्दा बढ़ी पनि देखिन आएको छ।

दुबै वृक्कका चारैतिर मसिनु पारदर्शक वसायुक्त झिल्लि वेष्टित रहेको हुन्छ जसलाई वृक्ककोश भनिन्छ। यसको माथिल्लो भागमा यौटा सानो अधिवृक्क या उपवृक्क ग्रन्थि पनि हुन्छ। प्रत्येक वृक्कको बाहिरी भाग उठेको र भित्रीभाग केही दबेको हुन्छ। यसैलाई ''हाइलम्'' अर्थात् वृक्कनाभि भनिन्छ। यसै स्थानबाट वृक्क धमनीको वृक्कमा प्रवेश हुन्छ जसलाई ''रिनल'' भनिन्छ। रिनल शिराको मुख्य काम रक्त संचय गरेर अधः महाशिरामा पहुँचाउनु हो। वृक्कको बनावट गहिरो रातो रंगको हुन्छ। यो सूक्ष्म नसाहरूले वनेको वृक्क असमर्थ भएमा छालाले पनि विजातीय पदार्थलाई पसिनाको रूपमा बाहिर निकाली दिन्छ र वृक्कको सहयोगी बन्छ।

पिण्ड विशेषनै हो वृक्क का मुख्य दुई काम हुन्छन्—

शरीरका दूषित पदार्थलाई मूत्रका रूपमा शरीरबाट बाहिर निकाल्नु र हृदयलाई रक्त निर्माण आदि कार्यमा सहयोग दिनु।

हामीले भोजनबाट लिइने पोषकपदार्थ आमाशय हुँदै पक्वाशयमा पुग्दछ। त्यस पोषक पदार्थका सारभागलाई आवश्यकता अनुसार शरीरका प्रत्येक तन्तुले शोषित गर्दछन् र बाँकी भाग जो शरीरकोलागि हानिकारक हुन्छ त्यो सबै मृगौलाले लिन्छ र त्यसलाई पिशाबका रूपमा बदली बाहिर निकाली दिन्छ। यदि वृक्कमा कुनै दोष उत्पन्न भई वृक्कले आफ्नो काम गर्न सकेन भने यी दोष उत्पन्न हुन्छन्।





नीद नलाग्नु, अग्निमन्दहुनाले भोक नलाग्नु, आँख, मुख, गोडा सुनिनु, नाड़ीको गतिमा मन्दता एवं तीव्रता आउनु पूरै शरीरमा जलन हुनु, छाला फुस्रो हुनु, रगत कम भएर शरीर पहेंलो हुनु, पसीना नआउनु, कमर, पेट र मृगौलामा दुख्नु, घरि घरि थोपा थोपा पिशाब हुनु, पिशाबले पोल्नु वृक्कको निष्क्रियताले यकृत् (लिवर) हृदय एवं फियो समेतमा विकार उत्पन्न हुन्छ। कानमा स्वाँ स्वाँ शब्द हुनु, आँखामा विकार, हातगोडा चीसा भई, गह्रुंगा हुनु, शिर, घांटी, काँध भारी हुनु, आदि।

रक्तको दवाव अनुसार पिशाबको मात्रा थौरै धैरै हुने हुन्छ। रक्तचाप घटेमा पिशाबको मात्रा बढने र रक्तचाप बढेमा पिशाबको मात्रा कम हुने हुन्छ।

**शरीरमा रहेका विजातीय पदार्थ—**नाइट्रोजन, सल्फर एवं विषाक्त पदार्थ या औषधिगत अनावश्यक तत्त्वलाई मूत्रका साथमा शरीरबाट निकाल्ने काम वृक्कको हो। वृक्कमा विकृति आयो अथवा शोथ उत्पन्न भयो भने त्यसलाई अर्वाचीन विद्वान् नेफ्राइटिस भन्दछन्। यस्तै अनेक प्रकारका विनाशोथका विकारहरू पनि उत्पन्न भई उदकमेह, लालामेह, ओजोमेह एवं वृक्कमा अनेक प्रकारका अश्मरीहरूको उत्पत्ति भई रक्तमेहादि रोग उत्पन्न हुन्छन्। वृक्कबाट उत्पन्नरोगले मूत्राशयलाई विशेष प्रभावित पार्दछ। जब वृक्कले शरीरलाई नचाहिने वस्तु पिशाबका रूपमा बदली मूत्रमार्गद्वारा मूत्राशय (युरेनरीब्लाडर)मा एकत्रित हुन्छ। अनि पिशाब गर्ने इच्छा हुन्छ र मूत्रनलीद्वारा मूत्र बाहिर निष्कन्छ। यदि कुनै अवरोध उत्पन्न भयो भने मूत्रत्याग गर्दा कष्ट हुन्छ।

सामान्यरूपमा २४ घण्टा भित्र लगभग १५०० ग्राम जति पिशाब शरीरबाट बाहिर निस्कन्छ। यसको मात्रा भोजन, पान र ऋतुमा निर्भर हुन्छ। यसको रङ्ग सामान्यतया हल्का पहेंलो हुन्छ। साधारण रूपमा आधुनिक परीक्षण अनुसार २४ घण्टामा लगभग १०० ग्राम प्रोटीन लिने व्यक्तिका पिशाबमा निम्न तत्त्वहरू पाइन्छन् :—

रक्तमा हुने अम्लता र क्षारताको अनुपातमा अन्तर हुनु।
हानीकारक पदार्थ रक्तमा मिलेर जोर्नीका रोग एवं गठियाबात हुनु।

**तालिका**

| *पिशाबको मात्रा* | *सी०सी०१५००.०० ग्राममा* |
|---|---|
| पानी सी०सी० | १४४०.०० |
| ठोस | ७०.०० |
| युरिया | ३५.०० |
| यूरिक एसीड | ०.७५ |
| ट्यूरिक एसीड | ००.०७ |
| सोडियम क्लोराइड | १६.०५ |
| फास्फेरिक | ०३.०५ |
| सल्फ्यूरिक एसिड | ०२.०० |
| अमोनिया | ००.६५ |



| | |
|---|---|
| क्रियेटिनीन | ०९ |
| क्लोरीन | ११.०० |
| पोटेसियम | ०२.०५ |
| सोडियम | ०५.०५ |
| क्याल्शियम | ००.२६ |
| म्याग्रेशियम | ००.२१ |

उक्त तालिका अनुसार तत्त्वहरूको मात्रामा फरक परेमा रोग लागेको हुनसक्छ।

प्राय: वृक्कको खराबीले अश्मरी हुनु, पिशाबनलीमा घाउ, पौरुषग्रन्थिको वृद्धि भएमा पिशाब बन्द हुने, घरिघरी पिशाब लाग्ने, पिशाबमा रगत आउने, रोकिए जस्तो हुने, पोल्ने, जस्ता लक्षण देखिन्छन्।

आज चार प्रकारले परीक्षागरी वृक्करोगान्तर्भूतरोगहरूको चिकित्सा गरिन्छ।

१. भौतिक, रासायनिक, सूक्ष्मेक्षणयन्त्रले मूत्रगत जीवाणु तथा शुक्लिमा (एल्वुमिन) प्रोभुजिन (प्रोटिन) फास्फेट युरिया, एसिटोन यूरिया, काइल युरिया, स्परमेटयूरिया, लिथुरिया, आक्सलयुरिया, हिमेच्यूरिया, मेलनयूरिया, हिमोग्लोविन यूरिया, लाइप्यूरिया, वाइल यूरिया आदिको पत्ता लगाई उपचार गर्ने प्रक्रिया चलेको छ।

२. **रक्त परीक्षा**—रक्त परीक्षाद्वारा उपरोक्त तत्त्वहरू रक्तमा पनि देखिने हुँदा रोग पत्ता लगाउन सजिलो हुने हुँदा यो पद्धति पनि प्रशंसनीय छ।

३. **उपकरण परीक्षा**—मूत्रनलीमा शलाका प्रवेश गराई मूत्र-मार्ग सफा गर्नु एवं मूत्रको परिमाण नाप्नु आदि।

४. **विकिरण** ( X-Ray ) परीक्षाद्वारा शरीरका भित्री अंगको निरीक्षण गरी कुन् अंगमा के विकृति छ भन्ने कुरो पत्तालगाई उपचार गर्न सजिलो हुने पद्धति हो। वृक्क विकारबाट हुने अनेकरोग मध्ये मुख्य रोग अश्मरी, (पत्थरी) भएकाले यसैको यहाँ निदान चिकित्सातिर ध्यान दिइएको छ।

**निदान—**

अश्मरीलाई अंग्रेजीमा कैलकुलस स्टोन भन्दछन्। यसैको कारण पिशाब रोकिनु, रगत मिसिएको पिशाब हुनु, थोपा थोपा कष्टका साथमा हुनु आदि।

अश्मरी कसरी बन्दछ र त्यसका भेद कति छन् लक्षण के हो ? र उपचार कसरी गर्ने आदि विचार :—

**उत्पत्ति—**

नयाँ घैंटामा राखिछाड़ेको स्वच्छजलमा केही दिनपछि झ्याऊ हिलो आदि उत्पन्न भएझैं ठीक हाम्रा शरीरका वस्तिरूप घैंटामा पनि अश्मरीको उत्पत्ति हुन्छ।

आकाशमा रहेको जल वायु र विजुलीले असिनाको रूपमा बदले झैं वस्तिस्थानमा पुगेको कफ नै संयुक्त वात-पित्तले जमाइएर अंश्मरीको रूपमा बदलिन्छ।

वस्तिगत शुक्र, मूत्र, पित्त र कफलाई वायुले सुकाई अश्मरीको रूपमा बदल्छ, जस्तै—गाईको पित्ताशयमा गोरोचन बनेर बढे झैं अश्मरी पनि क्रमैले बढ्छ।

अश्मरी मुख्य चार भागमा विभक्त छ—

१. बातज अश्मरी २. पित्तज अश्मरी, ३. कफज अश्मरी, ४. शुक्रज अश्मरी

बात पित्त-कफका प्रकोपले तीन र शुक्रका कारण चौथो अश्मरी उत्पन्न हुन्छ र समयमै चिकित्सा हुन नसके चारोटै मृत्युकारक हुन्छन्।

**१. बातज अश्मरी**—यसमा रोगी अत्यन्त व्याकुल भई दाँत कट्कट्याउँदै शरीर कमाउँछ र घरि घरि कहराउँदै जननाङ्ग र नाभि मिच्न थाल्छ। अपान वायुका साथ मल त्याग्दछ। पिशाब थोपा थोपाका रूपमा हुन्छ। अश्मरी काँडादार कलेजीरङ्गको हुन्छ।

**२. पित्तज अश्मरी**—यसमा मूत्राशय भत्भती पोल्ने र भित्र पाकेको घाउ भएजस्तो अनुभव हुन्छ। पत्थरी भलायोको भित्री दानाको आकारमा गहीरो रातो या पीताम हुन्छ।

**३. कफज अश्मरी**—यसमा मूत्राशयमा चस्कन्छ,

शीतलताको र गह्रुंगो पनाको अनुभव हुन्छ। अश्मरीको आकार अन्यमा भन्दा ठूलो आकारको, चिप्लो एवं हल्का रङ्गको सेतो हुन्छ।

यी तीनै अश्मरी प्रायः बालककालदेखि नै हुने गरेको देखिन्छ। तुरन्त उपचार हुन सके सुखसाध्य हुन्छन्।

**४. शुक्रजाश्मरी**—यो वयस्क पुरुषमा शुक्रका गडबडीले हुने अश्मरी हो। शुक्रस्थानबाट विचलित भएको शुक्र बाहिर ननिस्की कहीं रोकिन गयो भने वायुले सुकाई दिंदा अश्मरीको रूप लिन्छ। थाहा हुँदा बित्तिकै यताउति मिचमाच पारी दिएमा मूत्रमा विलीन भै बाहिर निस्कन्छ। यसमा मूत्राशय दुख्ने, अण्डकोष फुल्ने र पिशाब गर्दा कष्ट हुने हुन्छ।

**पाश्चात्यमतमा**—सामान्यरूपले वृक्कमा नै अश्मरी बन्दछ। कहीं मूत्राशय, मूत्रनली, पौरुषग्रन्थि र गविनीमा पनि बनेको पाइन्छ। कुनै रोगका कारणले शरीरमा तापमान बढी कफ, पीप, श्लैष्मिक कलाका झिल्ली र सौत्रिक धातु मूत्रमा मिली मूत्र बाक्लो भई जम्दै जाँदा कालान्तरमा अश्मरी बन्न सक्दछ। अश्मरीको आकार र संख्यामा विविधता देखिन्छ। कतै एक र ठूलो कतै स-साना धेरै पनि। कतै मूत्राम्ल, मूत्रलवण, आक्जेलेट लवण चूनाको फास्फेट लवण र सिष्टीन एवं जैन्थीनका योगले अश्मरी बन्दछ। आकारमा कुनै खरिढुङ्गा जस्ता कमला, चेप्टा, अण्डाकार काँढा उम्रेका, कठीन र विविध रङ्गका हुन्छन्। कहिलेकाहीं मूत्राशयमा अश्मरी बनेर पनि आफ्नो प्रभाव नदेखाई रहेका हुन्छन् त कतै कष्टदायी बन्दछन्। अश्मरी पुरुषमा भन्दा नारीमा कम देखिन्छ। नारीको शारीरिक बनावट फरक हुने हुनाले साना तिना अश्मरी पिशाबका साथमा पनि बाहिर निस्कन्छन्।

अश्मरी बन्नमा जल वायुको पनि प्रभाव हुन्छ। धेरै चूना भएको पर्वतीय जलपान गर्ने मानिसमा बढी र समतलको तरल जल पान गर्नेमा कमी।

यसले ग्रसित व्यक्तिमा निम्न लक्षण देखिन्छन्-कमर र वस्तिमा (तलपेटमा) दुख्नु, पिशाब घरि घरि, थोपा थोपा, रगत मिलेको हुनु, धेरै परिश्रम, बाटो हिंडाइ, घोड़ा या शरीरलाई हलचल गराउने सवारीमा पहाडमा चढ्दा क़ष्ट बढनु, मलद्वार तिघ्रा र प्रजननाङ्गका चारैतिर दुख्नु, एकाएक पिशाब बन्द हुनु र शरीरलाई हल्लाउँदा पिशाब खुल्नु आदि अश्मरीका लक्षण हुन्। कहिलेकाहीं अश्मरी गविनीमा अड्क्योभने वृक्कशूल भई रोगी छटपटिई व्याकुल हुन्छ। रोगीलाई जरो आउने वमन हुने हुन्छ भने केही समयपछि आफैं केही कम हुन्छ तर मन्द मन्द दुखाइ निकै दिनसम्म रही रहन्छ। यदि धेरै समयसम्म गविनी या मूत्रमार्गमा अश्मरी अड्की पिशाब बन्दभयो भने मूत्र विशमयता रोग भई रोगीको मृत्यु सम्म हुन्छ

**चिकित्सा—पाश्चात्यमतानुसार—**

वृक्करोगीले २४ घण्टामा कमसे कम ३ लीटर उमालेको पानी पिउनु र साथमा पिशाब बढाउने औषधि सेवन गर्नु आवश्यक हुन्छ।

| | |
|---|---|
| पोटेशियम साइट्रेट | ३० ग्रेन |
| पोटेशियम वाइकार्बोनेट | २० ग्रेन |
| स्प्रिट क्लोरोफार्मा | ७ बूँद |
| जल | १ औंस |

(यी सब मिलाएको 'मिक्चर' दिनमा ३ पटक दिने।)

मूत्रल औषधिका साथ बेलाडोना ५ बूँद दिने। दुखेको बेला मार्फिन, एट्रोपीन, स्पाज्मोसिवाल्जिन आदि औषधिको प्रयोग गर्ने। यदि अश्मरी ठूलो भयो भने पाश्चात्य मतानुसार शल्य कर्म नै अन्तिम उपचार मानिएको छ।

**आयुर्वेदिक औषधि—**

अश्मरीको शंका हुँदा व्रित्तिकै पानीको मात्रा बढाउने मूत्रल औषधि सेवन गर्ने

जस्तै—सिप्लिकान (वरुण)को बोक्रा, कुश र काशका जरा, परवानवेत जबाखार, गहत, कुटकी, अमला प्रत्येक वस्तुको उचित मात्रा लिई काँढा पकाई पिउनाले अश्मरी फुटेर पिशाबका साथ बहिर निस्कन्छ।

वातज अश्मरीमा सुण्ठ्यादि कषाय (काँढा) सुठो, गिनरीको बोक्रा, पखानवेत, शीतल चीनी, सिप्लीकानको बोक्रा, गोखरू, खमारी, राजवृक्षको गुदी प्रत्येक १-१ तोला आठगुणा जलमा पकाई चतुर्थांश शेष रहेको काँठमा शुद्ध हींग ५ रत्ती, सिंधेनून १० ग्राम मिलाई पिउनाले अश्मरी निको हुन्छ।

**एलादिक्काथ**—सुकमेल, पिपला, जेठीमधु, पखानवेत, कवावचीनी, गोखरु, असुरो र अडेरका जराको काँढामा शिलाजीत मिलाई पान गर्दा वात अश्मरी निको हुन्छ।

**वरुणादिक्काथ**—सिप्लिकान त्रिफला, सुठो, गोखरु, गुड़ जवाखार यी सबैको काँढा पिएमा पुरानु बाजत अश्मरी निको हुन्छ। यस्तै—वीरतरादिगणको क्वाथ, पाषाण-भेदादिघृत, हींग, एवं क्षारलवण चूर्ण, तातो पानीसित पिउनाले बातज अश्मरी निको हुन्छ।

**पित्तज अश्मरी**—यसमा-कुश, काश, गन्धप्रसारिणी, सरपत, शर (तीर) उखूको जरा, पखानबेल, कुरिलो, विरालेको गानु, गीठो, धानको जरा, गोखरु, पुनर्नवा, जेठीमधु, शिरीष यी द्रव्यको क्वाथमा शिलाजीत र काक्राको बिञा मिलाई पानगर्नाले पित्तज अश्मरी निको हुन्छ। साथै पथ्यमा-क्षारीय पदार्थ, यवागू, दूधका साथै पित्तशामक भोजन लिने।

**३.कफज अश्मरी**—वरुणादिगणका औषधिमा गुग्गुल, सुकमेल, कवाव चीनी, कूठ, नीम, मरीच, चितो, देवदारु, मिलाई शिद्ध गरेको वाखीको घ्यू सेवन गर्ने साथै शट्यादिगण, अथवा श्यामादिगणका औषधिको क्वाथ या यिनले सिद्धगरेको घृतपान गर्ने।

**वरुणादिगण**—सिप्लिकान, रातो कटसरैया, शीतलचीनी, गिंदरी, सानो पांग्रो, सानो गिदरी, उखूको जरा, गोलकाँक्री, आँक, चितो कटसैरया अपामार्ग मेषशृंगी, कुरिलो, कुश कुटज सानु र ठूलो कण्टकारी, यी सबैको अष्टमांशशेष क्वाथ या सिद्धघृतमा मह मिलाई सेवन गरेमा कफज अश्मरी निको हुन्छ।

**शुक्रज अश्मरीमा उक्त कफज अश्मरीकै औषधिले काम गर्छ। सबै अश्मरीमा निम्न योग—**

१. फुर्सेका रसमा जबाखार र पुरानु गुड मिलाई पान गर्ने।

२. तिल, अपामार्ग, पलाश, केरा, जौ, बेलको काँढामा भेडाको पिशाब मिसी पान गर्ने।

३. सुपारी, अंफी, निर्मली, बाँझका गेडा, कमलगट्टाका क्काथमा गुड़ मिलाई पिउने।

४. पत्थरबेल-भस्म ४ रती, वरुणाद्यलौह २ रती, यवक्षार २ रती नारियलको फूल १ माशा यी सब मिलाई एक मात्रा वरुणादि काँढ़ासंग लिने।

५. दोषानुसार—पाषणवज्ररस, श्वेतपर्पटी, त्रिविक्रमरस, वरुणादिघृत एवं तैल, अपामार्गक्षार, केराको क्षार सेवन गर्ने र उचित पथ्यमा रहे पत्थरी निको हुन्छ।

**योगासनको पद्धति पनि सो रोगमा उपयोगी छ जस्तै—**

क. पश्चिमोत्तानासन ख. शशांकासन, भुजङ्गासन, धनुरासन, हलासन, शीर्षासन गोमुखासन, भ्रामरी, कपालभाती, प्लावनी, यिनको विधि योगासनको पुस्तकमा हेरी गर्नुपर्छ।

**टिप्पणी—**

निद्रानाशो बह्निमान्द्यं च शोथो नेत्रे चास्ये पादयोर्वृक्करोगे।
नाडी स्तब्धा वेगयुक्ताऽथ चोष्णा त्वाचं रौक्ष्यं पूर्वरूपं प्रदिष्टम्॥
रक्तह्रासात्पाण्डुवर्णत्वमास्ये स्वेदाभावस्त्वाचरौक्ष्याग्निमान्द्ये।
पीडा कट्यां चोदरे वृक्कदेशे नाडी नूनं वेगयुक्ता भवेच्च॥
मूत्रं शश्वद्बिन्दुरूपेण चोष्णं पीडायुक्तं वृक्करोगे स्रवेद्वै।
एवं तीव्रं लक्षणं वृक्कयुग्मे जातु स्यादेवाश्मरीयोगतोऽपि॥

मा०नि०परि०

अप्सु स्वच्छास्वपि यथा निषिक्तासु नवे घटे।
कालान्तरेण पङ्कः स्यादश्मरी सम्भवस्तथा॥

सु०नि०अ०३/३०

विशोषयेद् वस्तिगतं सशुक्रं मूत्रं सपित्तं पवनः कफं वा।
यदा तदाऽश्मर्युपजायते तु क्रमेण पितेष्विव रोचना गोः॥

भा०प्र०३७

वातपित्तकफैस्तिस्रश्चतुर्थी शुक्रजा मता।
प्रायः श्लेष्माश्रयाः सर्वा अश्मर्यः स्युर्यमोपमाः॥

भा०प्र०३७अ०



# ❃ योग ❃

**आचार्य कृष्ण प्रसाद सापकोटा**
श्रीगुरुगोरक्षनाथ संस्कृत विद्यालयं, वाराणसी,

यो संसार आधि–दैविक, आधि–भौतिक र आध्यात्मिक तीन प्रकारका ताप र कायाक्लेश आदि कष्टहरुले सधैं दुःखी छ। धन पुत्र र स्वर्ग आदि लोकबाट प्राप्त हुनेभएको सुख पनि स्वतः जड इन्द्रियहरूद्वारा अनुभव गरिने भएको हुँदा इन्द्रियहरूनै अनित्य छन् भने उनबाट प्राप्त हुने सुख पनि अनित्य र दुःखमूलक नै छ। जुन चीज आज खायो त्यो २४ घण्टा भित्र नै नष्ट भएर जान्छ त्यस्ता पदार्थ द्वारा रक्षागरिएका शरीरको रक्षा कहिलेसम्म हुन्छ यसको निश्चितता कुनै संगपनि छैन। ये हि संस्पर्शजा (गीता ५/२२) यही कारण हो कि हाम्रा हजारौं पूर्वजहरू आज हाम्रा अगाडी छैनन्। हामी आफै सखा–सम्बन्धिलाई घाटमा लगेर अन्त्येष्टि गर्छौं उसैलाई राति मसान बनेर घर आउँछ कि? न आए हुँदोहो भनेर पनि सम्झन्छौं तर आफ्नो पनि गति कस्तो छ भनेर त्यस यथार्थ सत्यका प्रति विचार गर्न छाडेर उहीविषय सुख जो एक मृग–तृष्णां स्वरूप छ त्यसलाई प्राप्त गर्ने इच्छाले 'यति भयो अब ता यति जोडुला, भन्ने बलवती आशाले बाँधिन थाल्दछौं। यही आसा बस्ने ठाऊँलाई चित्त वृत्ति भन्दछन्। यसैको एक अवस्था मन हो।

जस्तै अन्धकारको कुनै सत्ता छैन। सम्पूर्ण सत्ता प्रकाशको नै हो। तर प्रकाशको अभाव अनुभव भएको ठाऊँमा भ्रमरूप अन्धकार उपस्थित हुन्छ। त्यस्तै चराचर जगत् ब्रह्मकै सत्तामा छ र ब्रह्म आनन्द स्वरूप हो तापनि अविद्याले गर्दा भ्रमरूप सन्सार र सन्सारका दुःखहरू प्रकाशका अभावमा स्वतः अन्धकार उपस्थित भए झैं आफै आई पर्दछन्। यसको यथार्थलाई योगीले नै जान्दछन्।

सामान्यतः योग शब्दको शब्दार्थ हेरौं भने 'युजिर्योगे' बिछोडिएकालाई एकमा जोड्नु अर्थमा रहेको युज् धातुवाट योग शब्द बन्दछ। यही यौगिक अर्थलाई लिंदा अर्थ स्पष्ट हुन्छ कि अखण्ड अनन्त, सर्वेश्वर ज्ञान स्वरूप परमसुख स्वरूप, स्वयं प्रकाश स्वरूप परमानन्दमय परमात्मामा महाकाशमा घटाकाश मिलेर एक भए झैं यो दुःखै दुःखले भरिएको सन्सारलाई भ्रमले सुखरूप मानेर भुलीरहेको जीवात्मालाई लगेर मिलाउने क्रियाको नाम हो योग। योगीले नै यसको यथार्थलाई जान्दछन्।

**योऽन्तः सुखाऽन्तरारामस्तथान्तर्ज्योतिरेव यः स योगी ब्रह्मनिर्वाणं ब्रह्म भूतोऽधिगच्छति॥**

गीता ५.२४

यही जीवात्मा अनादि कालदेखि लागिरहेका चित्तरूपी रोगका औषधिको नाम योग हो।

**योगश्चित्तवृत्ति निरोधः** (पा. यो. दर्शन)

**चित्तं कारणमर्थानां तस्मिन् सति जगत्रयम् तस्मिन् क्षीणे जगत् क्षीणं तच्चिकित्स्यं प्रयत्नतः।**

(योगवाशिष्ठ)

जब चित्तका वृत्तिहरू बन्द हुन्छन् (रोकिन्छन्) तब मात्र यो जीवात्माको आफ्नो स्वरूप परमानन्दमा स्थिति





हुन्छ। परमात्मा ज्ञानस्वरूप र आनन्दस्वरूप भएकाले ॐ द्रष्टा नित्यानन्द स्वरूपमा लीन हुन्छ र जीवात्माका लागि सबभन्दा ठूलो उपलब्धि पनि यही हो। मृत्युबाट सधैंको लागि छुटकारा पनि त्यसपछि प्राप्त हुन्छ।

यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः। गीता

जबतक योग साधनाद्वारा चित्तका वृत्तिहरूको निरोध हुँदैन तबतक द्रष्टाले उसका चित्तमा सत्व, रज र तमोगुण मध्ये कुन गुणको अधिक प्रभाव छ उसै प्रभाव अनुसार नै आफ्नो स्वरूप सम्झन्छ र उसलाई आफ्नो वास्तविक स्वरूपको ज्ञान रहँदैन, त्यसैले चित्तवृत्ति निरोधरूप योगको आश्रय गर्नु पर्दछ।

**वृत्तिसारूप्ययियत्र ( पा. यो. द. )**

श्रीमद्भागवत्को तृतीय स्कन्दमा कपिल देवावतार भगवान्ले आफ्नी आमालाई अष्टाङ्ग, योगको उपदेश दिनुभएको छ। सांख्ययोगका प्रवर्तक भगवान् भन्नु हुन्छ कि 'हे माता ध्येय स्वरूपका आलम्बनले युक्त योगको स्वरूप यस प्रकार छ। जुन योगद्वारा चित्तशुद्धभई एवं प्रशन्न भएर परमात्मामा लाग्न सक्दछ।

(१) शास्त्र विहित स्वधर्मको पालन गर्नु र शास्त्र विरुद्ध आचरणको परित्याग गर्नु।

(२) आफ्नो प्रारब्ध अनुसार जस्तो परिस्थिति छ, जस्तो लाभ प्राप्त छ, उसैमा सन्तुष्ट रहनु। आत्मज्ञानी सन्तमहात्माका चरणको पूजागर्नु-सत्संग गर्नु।

(३) विषय वासनालाई बढाउने कर्मदेखि टाढारहनु। संसारबन्धनबाट मुक्त हुनु। धर्ममा प्रेम गर्नु। पवित्र परिमित भोजन गर्नु। निरन्तर एकान्त र निर्भय स्थानमा रहनु।

(४) मन वाणी शरीरदेखि कुनै जीवलाईपनि नसताउनु। सत्य बोल्नु। चोरी नगर्नु। आवश्यकताभन्दा अधिक वस्तुहरूको संग्रह नगर्नु। ब्रह्मचर्यको पालन गर्नु। तपस्या गर्नु। तन र मन दुवै पवित्र राख्नु। शास्त्रहरूको अध्ययन गर्नु। भगवान्को पूजा गर्नु।

(५) वाणीको संयम गरी मितभाषी बन्नु। उत्तम योगासनहरूको अभ्यासगरी स्थिरता पूर्वक बसेर शनैः शनैः प्रणायामद्वारा श्वासलाई जित्नु। इन्द्रियहरूद्वारा गरिने विषयभोगको निस्सारतालाई राम्रोसंग जानेर मनलाई विषयहरूबाट हटाई हृदयमा परमात्माको चिन्तन गर्नु।

(६) मूलाधारादि कुनै एक केन्द्रमा मनसहित प्राणहरूलाई स्थिर गर्नु। निरन्तर भगवान्का लीलाहरूको चिन्तन गर्दै चित्तलाई तल्लीन गराउनु।

उपर्युक्त पद्धति र ब्रत-दान आदि अरू साधनहरूबाटपनि सावधान भएर प्राणहरूलाई जितेर बुद्धिद्वारा कुमार्गगामी दुष्ट चित्तलाई शनैः शनैः एकाग्र गर्नु र त्यो एकाग्रचित्तलाई परमात्माका ध्यानमा लगाउनु।

सामान्य शारीरिकयोगमार्गमा लाग्नका लागि प्रथमतः उत्तम आसनको राम्रो अभ्यास गर्नु। फेरी प्रणायामको अभ्यासका लागि पवित्र देशमा कुशादिले युक्त नबिझाउने सजिलो स्थिरआसन बिछ्याउनु। त्यस्ता आसनमा सुखपूर्वक बसेर शरीरलाई सीधा र स्थिर राखी प्राणायामको अभ्यास गर्नु। आरम्भमा पूरक, कुम्भक र रेचक यस्ता क्रमले अथवा रेचक, कुम्भक र पूरकगरी प्राणमार्गको शोधन गर्नु जसबाट चित्त स्थिर र निश्चल हुन्छ। जस्तै अग्निद्वारा तताएको

सुनले आफूमा भएको मललाई फालेर शुद्ध निर्मल हुन्छ त्यस्तै जुन योगीले प्राणवायुलाई जित्दछ उसको मन शीघ्रनै शुद्ध हुन्छ।

अतः योगीको यो कर्तव्य हुन्छ कि 'प्राणायाम द्वारा बात पित्तादिबाट भएका दोषहरूलाई धारणबाट पापहरूलाई प्रत्याहारबाट इन्द्रिय र विषयहरूको आकर्षणलाई र ध्यानबाट भगवद् विमुख गर्ने भएका राग द्वेष आदि दुर्गुणहरूलाई दूर गर्नु पर्दछ। जब योगको अभ्यास गर्दा गर्दै चित्त निर्मल र एकाग्र हुन्छ तब नाकका अग्रभागमा दृष्टि स्थिर गरेर ध्यान गर्नु पर्दछ।

यसप्रकारका ध्यानका अभ्यासबाट साधकको श्रीहरिमा प्रेमा भक्ति उत्पन्न हुन्छिन। साधकको हृदय भक्तिले द्रवित हुन्छ। यस्तोभक्त भगवानकै कृपाबाट यो दुःख रूपी सन्सारलाई पार गरेर आफ्नो यथार्थ स्वरूप ब्रह्मलाई प्राप्तगरी ब्रह्मानन्द स्वरूप बन्दछ। श्रीकृष्णद्वारा श्रीमद्भगवद्गीताका माध्यमबाट अर्जुन तथा सम्पूर्ण मानव समाजलाई योगमा रहेर आफ्नो जीवात्मालाई परमात्मामा जोड्ने उद्देश्यले गरिएको 'उपदेशामृत' योगशास्त्र, गीता उत्तम योगशास्त्र हो। यसमा कर्मयोग राजयोग, भक्तियोग, पुरुषो त्तमयोग, ज्ञानयोगका विशिष्ट उपायहरू बताइएका छन्। सम्पूर्ण गीता नै योग शास्त्र हो। भगवानले योगको निष्कर्षतालाई यसरी प्रकट गर्नु हुन्छ—

**योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना। श्रद्धावान् भजते यो मां स मे युक्ततमो मतः ॥ गीता**

अर्थात् योगीहरूमा श्रेष्ठ योगी उही नै हो जसको अन्तकरण ममा लीन भएर श्रद्धा भक्ति सम्पन्न भई मेरो भजन गर्दछ। त्यही नै युक्ततम परमयोगी हो।

# ❀ गीतामा कृषिको चर्चा ❀

**नारायणप्रसाद खनाल**
उप प्राध्यापक
केन्द्रीय क्याम्पस, रामपुर चितवन

महाकवि वेदव्यास द्वारा रचित महाभारत नामक विशाल ग्रन्थबाट उद्धृत गरिएको एक दार्शनिक लघु ग्रन्थ नै श्रीमद्भगवद्गीता हो। यसमा निस्काम कर्मयोगको माध्यमबाट मुक्ति प्राप्त हुने कुराको वर्णन गरिएको छ। गीताले त्यही निस्काम कर्मबाट नै कार्यसिद्धि हुने र कर्म नगरी कुनै पनि कार्यमा सफलता प्राप्त नहुने कुरामा विश्वास राख्दछ।[१] कृषि एक शास्त्र हो र यो पूर्णतया विज्ञानमा आधारित छ। यसलाई विश्वका धेरै मुलुकहरूले अर्थतन्त्रको मेरुदण्डका रूपमा स्वीकार गरेका छन् र जुन देशमा उद्योग-धन्दामा आधारित अर्थतन्त्र प्रमुख छ त्यहाँ पनि सहायक अर्थतन्त्र कृषि नै रहेको हुन्छ। गीतादर्शनले निस्काम कर्मलाई आधारमानेर ''कर्म गर फलको आशा नगर''[२] भनेको छ तर यसको ठीक विपरीत कृषि व्यवसाय पूर्णतया सकाम कर्ममा आधारित छ। कुनै पनि कृषकले उत्पादनका लागी नै खेती गर्दछ अत्यधिक उब्जनी बढ़ाउन उत्तम बीउ, मल, विषादि को प्रयोग गर्छ। सिंचाइ, गोडमेल इत्यादिको उपयोग गरेर पर्याप्त उब्जा लिनु किसानको कर्तव्य हो। फलको आशा न राख्ने हो भने कुनै पनि किसानले खेतीपातीमा खटेर किन ध्यान दिइरहनुपर्छ? अत: कृषि सकाम कर्ममा आधारित व्यवसाय हो। यो पूर्णत: प्रयोगात्मक क्रियाकलापमा सफल हुन्छ। कृषि विद्या जीवनको अभिन्न अङ्ग भएकाले जोगी-जलन्धरदेखि वैज्ञानिक-दार्शनिक र राजा, वादशाह सम्म सवैलाई यसले प्रभावित पार्नु स्वाभाविक छ तापनि गीतामा कृषि-विज्ञानको व्याख्या वा कृषि व्यवसाय कसरी सम्पन्न गर्ने भन्ने बारे विस्तृत विवरण दिएको छैन। यसको अर्थ कृषि क्षेत्रलाई बिलकुलै बेवास्ता गरिएको छ भन्न पनि पटक्कै सकिंदैन।

गीताले अन्न नभई प्राणी जीवित रहन सक्दैन, वर्षा नभई अन्न उब्जँदैन, यज्ञ नगरी वर्षा हुँदैन र कर्म बिना यज्ञ नै हुँदैन भनेर कर्मयोगको मूल आधार खेतीपाती[३] हो भन्ने कुरा प्रष्ट्याएको छ। गीताका प्रवक्ता कृष्ण आफै ''गोपालनन्दन'' या व्यावसायिक रूपमा गाई पाल्ने बाबुका छोरा थिए। उनको व्यावसायिक तथा परम्परागत 'गोविन्द' भन्ने अर्को नाउँ पनि छ, जसको मतलब हो गाई भएको या गोठालो। उनी गोप वा गोठालाहरूकी स्त्रीजाति या गोपिनी हरूमध्ये सोह्रहजार भन्दा पनि बढ़ीले खूबै मन पराइएका थिए। यसको खास कारण पनि आफ्ना व्यवसाय प्रतिको कुशलता र प्रतिबद्धता नै हो। गीताका माहात्म्यमा उल्लिखित निम्न रूपकबाट ''कृष्ण'' दूध दुहुन निकै सिपालु थिए भन्ने कुरो झल्किनुका साथै कृषि व्यवसायको अभिन्न अंगका रूपमा रहेको पशुपालन व्यवसायको पनि राम्रो परिचय पाइन्छ—

एकसय आठवटै उपनिषद् गाई हुन्; गोपाल नन्दन या कृष्ण दूध दुहुने गोठालो हुन्; अर्जुन बाच्छो हो; गीता रूपी अमृत दूधको पोखरी हो; बुद्धिमान् त्यसका उपभोक्ता हुन्[४]।

प्रसङ्गवश गीतामा कर्मयोगी मनुष्यका लागि गाई, हात्ती र कुकुर समान हुन्[५] भन्दै पालतू पशु हरूमा सेतो घोड़ा[६] उच्चै:श्रवा घोड़ा[७], कामधेनु गाई[८] ऐरावत हात्ती[९] आदि र जङ्गली जानवरहरूमा मृग, मृग्रेन्द्र (सिंह)[१०] आदि र जलचरमध्ये मत्स्य जातिका मकर[११] तथा अनन्तनाग[१२], वासुकि सर्प[१३] आदि एवं पन्छीमा गरुड[१४], आदिको उत्तमता रहेको भन्ने उल्लेख भएको हुँदा कृषिव्यवसायको अभिन्न अङ्गको रूपमा रहेको पशुपालन व्यवसायको प्रत्यक्ष रूपमा पुष्टि हुन्छ। यी बाहेक चर र अचर प्राणी, जीवन, पृथिवी, शीतोष्ण, पीपल, मूल, शाखा, भोजन, अन्न, पत्र, पुष्प, फल, यन्त्र, वर्णसङ्कर;



सूर्यचन्द्र, आहार, जोताइ, बीज, औषधी, घ्यू क्षेत्र वा खेत, प्रकृति, ऋतु, ज्ञानविज्ञान, पतङ्ग आदि आधुनिक कृषि-विज्ञानमा बहुप्रचलित शब्दहरू गीतामा यत्रतत्र एक वा अनेक पटक आएका छन् र कृषि शब्दावलिको क्षेत्रमा विशिष्ट स्थान ओगट्छन्।

गीताले काम-काजमा सिपालु बन्नु नै योग हो[१५] भनेर कर्मयोगीको जुन परिचय प्रस्तुत गरेको छ त्यस्तो कर्मयोगी एउटा असल र परिश्रमी किसान नै हुन सक्छ जो बाह्रै मास चौबीसै घण्टा, श्रम, सीप र पसिना लगाएर कृषि-कर्ममा व्यस्त रहन्छ। कृष्णले अर्जुनलाई अर्को के कुराको पनि जानकारी दिएका छन् भने आफू पृथिवी भित्र पसेर आफ्ना शक्तिले सबै प्राणीलाई, बचाउंछन् र रस रूपी चन्द्रमा बनेर सम्पूर्ण वनस्पतिहरूलाई हुर्काउने-बढाउने गर्छन् तथा सबै प्राणीका पेटमा बसेर पाचन शक्ति बनी उनैले नै निम्न चार प्रकारको अन्न पनि पचाउँछन् :—[१६]

१. शाली धान्य ( धानबाली-जडहन, मार्सी, सठिया आदि खाद्यान्न )

२. शमीधान्य ( कोसेबाली—मास, मुग् गहत, चना, मसुरो, केराउ आदि )

३. शूक धान्य ( टूडेबाली—गहूँ, जौ, ऊवा आदि )

माथिका खाद्यान्नका अतिरिक्त चार प्रकारको अन्न भन्नाले निम्न अवस्थालाई पनि लिन सकिन्छ :—

१. भक्ष्य=अलि अलि चपाएर खानुपर्ने लड्डू आदि खाद्यान्न

२. भोज्य=नचपाए पनि खान सकिने भात आदि खाद्यान

३. लेह्य=चाटेर खानुपर्ने चटनी जस्तै खाद्यान्न

४. चोष्य=चुसेर खानुपर्ने आँप जस्तै खाद्यान्न

गीतामा सात्विक, राजस र तामस गरी भोजनका तीन भेद देखाइएका छन[१७]। राजसी भोजनका सन्दर्भमा खुर्सानी, मरिच, अदुवा, जाइफल, टिमुर, गोरखपान ( मरहट्टी ) अमारो, कागती, विमिरो, ज्यामिर, भोगटे, अमला, चूक, अचार, चिया, कफी, मूला, मासु, प्याज, लहसुन, गाँजा, अफिम, धतुरो आदि कृषि उपजमा आधारित उत्पादनलाई संकेत गरिएको छ।[१८]

त्यस्तै सात्विक भोजनमा दूध, दही, घ्यू, चिनी, मह, खीर, खोआ, आँप, केरा, मेवा, नास्पाती, दाल, भात, रोटी, तर्कारी, जस्ता सुपथ्य, सुपाच्य, सस्निग्ध, बल तथा स्फूर्तिवर्द्धक खाद्यान्नलाई संकेत गरेको छ जो कृषि, फलफूल र पशुपालनमा आधारित रहेका छन्[१९]।तामसी भोजन भन्नाले जाँड-रक्सी, कच्मरो, नीरस, दुर्गन्धी, बासी, जूठो र फोहोरी एवं विषाक्त भोजनलाई लिइएको छ।[२०] यस्तो अस्वस्थकर अरूचिकर भोजन सर्वथा त्याज्य हुन्छ जो कृषि उपजकै परिधि भित्र पर्छ।

गीताको रचना काल ई० पू० ५००-१५०० सम्ममा रहेको अनुमान गरिन्छ। त्यति वेलाको समाजमा वर्ण व्यवस्थको कट्टरता कायम थियो। बाहुन र क्षत्रियका झैं वैश्य जातिका पनि पेशा वा व्यवसायको निधो शास्त्रले नैं गरेको हुन्थ्यो। गीतामा तदनुसार कृषि-कर्म वा खेती गर्नु, गौ वा पशुपालन गर्नु र वाणिज्य वा व्यापार गर्नु वैश्यका व्यवसाय हुन् भनी ठोकुवा गरिएको छ[२१]। यसरी कृषि जस्तो बहु-आयामिक व्यवसायलाई एक सीमित जातीय परिधिमा बाँधेर वैश्यले उत्पादन गरेको कृषि-उपजमा ब्राह्मण, क्षत्रिय लाई निर्भर रहनुपर्ने बाध्यता हिन्दुधर्म र दर्शनका अरू ग्रन्थ हरूले जस्तै गीताले पनि दर्साएको छ। अर्को कुरा माथि पाद टिप्पणि ५ अनुसार के पनि स्पष्ट हुन्छ भने सबै प्राणी समान भएकाले छुवाछुत बेकार सिद्ध भएको छ। अतः सवै जातले लाभप्रद व्यवसायहरूमध्ये हाँस, खरायो, मौरी, मत्स्य, कुखुरा, बाख्रा-भेड़ा, बङ्गुर पालन आदि सबै व्यवसाय सुखपूर्वक सहज रूपमा गर्न सकिन्छ मन्ने

गूढार्थ पनि गीताको अध्ययनबाट निकाल्न सकिन्छ। गीतामा मानिसका जीविकाका लागी जाति, वर्ण र धर्मानुसार गरिने कर्म वा व्यवसायलाई कसैल खोट लगाउन नपाइने कुरा समेत प्रष्ट पारिएको छ[२२]। वर्तमान सन्दर्भमा स्वेच्छाले व्यवसाय अपनाउदा कसैले कसैको निन्दा-चर्चा गर्दैन सामाजिक विकाको प्रतिफल वस्तुतः यी नै कुराहरूमा आएको परिवर्तनबाट पहिचान गर्न सकिन्छ। यसैले पादटिप्पणि ५ अनुसार कृषि व्यवसाय जुनसुकै धर्म, जाति, वर्ण, लिङ्गका नर-नारीले गर्न सकिने कुरो आज भन्दा धेरै अघि निधो भइसकेको थियो र जातिभेद, रङ्गभेद, वर्णभेद, लिङ्ग भेद अपवादका रूपमा मात्र रहेका थिएभन्न सकिन्छ।

क्षेत्र (खेत), क्षेत्री (खेतको मालिक), क्षेत्रज्ञ (खेत वा खेती सम्बन्धमा जानकारी राख्ने व्यक्ति वा विशेपज्ञ) यी तीनवटा शब्दलाई गीताले कृषिबाट लिएको छ र यी शब्दलाई क्रमशः शरीर, शरीर धारण गर्ने व्यक्ति र आत्मा भन्ने रूप दिएको छ[२३]। वेदान्त दर्शनको ज्ञान गराउने उद्देश्यले प्रतिपादित यसै उदाहरणले आत्मज्ञानका निमित्त पञ्चज्ञानेन्द्रिय, पञ्चकर्मेन्द्रिय, पञ्चतन्मात्रा (रूप, रस, गन्ध, स्पर्श, शब्द ) मन, बुद्धि, अहंकार, इच्छा, द्वेप, सुख-दुःख, संघात र चेतना आदिको राम्रो ज्ञान गराउने प्रयत्न गरेको छ। ऋग्वेदको आदेश के छ भने शिष्यहरूलाई अन्नको उदाहरण दिएर सारा ज्ञान विज्ञानको शिक्षा दिनुपर्छ।[२४] जीवनका लागी प्रत्येक दिन आवश्यक पर्ने र हरेकजसोले उब्जाउने अन्नको उदाहरण दिएर संझाउने-बुझाउने हो भने जति सुकै गहन र जटिल विषय भए पनि न बुझ्ने कोही हुने छैन।

जरायुज, अण्डज, उद्भिज्ज र स्वेदज गरी चार प्रकारका प्राणीको उल्लेख भएको छ।[२५] कृष्णको भनाइ के छ भने माया अथवा प्रकृति नै यी प्राणीहरुको योनि वा गर्भाधानको स्थल हो, र त्यसमा उनले बीजाधान गरेपछि मात्र सन्तान फैलने वा अङ्कुरण हुने भएकाले आफू सबै प्राणीका पिता हुन्।[२६] यस हिसाबले गीताका व्याख्याता कृष्णले कृषि प्रजनन र पशु प्रजनका क्षेत्रमा आफ्नो एकाधिकार रहेको कुरा स्पष्ट पार्दछन्। यसबाट पनि यस क्षेत्रमा कृष्णको ज्ञान कम्ती थिएन र उनी कृषि र पशु-विज्ञानका विशिष्ट ज्ञाता रहेको अनुमान लगाउन सकिन्छ।

कृष्णले पितृलाइ दिइने अन्न, समस्त वनस्पति जगत र घ्यू तथा हवन सामग्री आफैमा अभिन्न छ भन्दै[२७] कृषि-कर्मका निमित्त सञ्जीवनीका रूपमा रहेको जलवृष्टि पनि छोड्ने कि रोक्ने भन्ने शक्ति सम्पन्न व्यक्ति आफै भएको[२८] उद्घोषण गरेका छन्। यी कुराहरुबाट त्यस समयमा बीउ-बीजन पशु-पन्छी तिनको उत्पादन समेतको बिक्री वितरण तथा सिंचाई सुविधा आदि कृष्णकै अधिकार क्षेत्र भित्र रहेको हुँहा उनको अनुमति बाट मात्र प्रयोग गर्न सकिने स्थिति देखा पर्छ। यसरी सारा अधिकार र शक्ति आफूमा रहेको दाबी गरे पनि जनताहरुमा शोषण गर्ने नियतले कर, शुल्क आदिमा कडिकसाउ नरहेको तथ्य 'जो खान्छौ त्यसबाट अलिकति मलाई पनि देओ[२९] र पात, फल, फूल, पानी आदि जे भए पनि खुसी भएर देओ[३०] म खान्छु' भनेर आफ्ना सामान्य हितैषी कृषकहरुलाई मिली जुली बसौं र बाँडीचुँडी खाऔं भन्ने राम्रो शिष्टता खोजेका छन्।

कृष्णले अर्जुनलाई युद्धमा मरे पनि स्वर्गीय सुख पाइने र जिते पनि पृथिवीको उपभोग गर्न पाइने[३१] कुरो बताएको हुँदा निष्काम कर्म कसरी भयो भन्न नसकिने होइन तर पृथ्वीको उपभोग चाहिं कृषि व्यवसाय द्वारा उत्पादित पर्याप्त उपज बिना असम्भव भएकोले कृषिमा आधारित अर्थतन्त्रलाई नै इसारा गरेको हुनुपर्छ। यहाँ प्रतिपादित निष्काम कर्म वस्तुतः शास्वत र समय सापेक्ष छैन बरु 'हाम्रा गाईहरुले थुप्रै दूध दिऊन'[३२] 'हाम्रा बाली-बिरुवा फूल फलले लटरम्म भएर पाकून'[३३] 'हाम्रा खेती-पातीलाई अत्यधिक फलदायी बनाऊ'[३५] जस्ता वैदिक सूक्तिहरुलाई नै आजको उत्तम गीता भन्नुपरेको छ।



हिन्दू धर्म ग्रन्थहरूमा दानको विशेष महिमा छ। गीताले अन्नदान बिनाको यज्ञलाई तामस वा चुत्थे यज्ञ मान्छ र भोकालाई गरिने अन्नदानलाई सात्विक दान वा जीवन-दान मानेको छ।[३६] यसैले अन्नदान सब भन्दा ठूलो दान पनि हो। अन्न पूर्णत: कृषि-प्रणालीमा आधारित भएकाले सम्पूर्ण गीताले कृषिकै महत्व देखाएको छ। कर्मयोगमा 'यज्ञ' लाई निकै महत्व दिइन्छ र यज्ञ गर्नु आवश्यक हुन्छ। यज्ञमा हवन अनिवार्य हुन्छ। हवनका लागी चाहिने सामग्रीहरु कृषि र पशुपालन व्यवसायबाट मात्र उपलब्ध हुंन्छन्। गाईको दूध, दही,घ्यू, गोबर र गहुँत बिना पञ्चगव्य, दूध, दही, घ्यू, चिनी र मह बिना पञ्चामृत, जौ, तिल, कुश, अर्ध्य र फूल बिना कर्मपात्र, धान, जौ, तिल घ्यू, बदाम, केरा, नरिवल र छोहोरा बिना हव्य सामग्री, धान, चामल घ्यू, जनै (कपास), दही र सुपारी बिना पूर्णपात्र, बेसार, तरकारी, दाल, घ्यू, दही, चामल र नून बिना सिद्धान्न दान आदि तयार हुनै सक्दैनन् र यी सामग्री नै नभए यज्ञ नै असम्भव हुने भएकाले यज्ञ भन्नु नै कृषि विज्ञान र पशु विज्ञान को निचोड हो। अत: प्रकारान्तरले कृषि उपज र पशुधन बढाउन गीताले पाइला पाइलामा आह्वान गरेको कुरा विर्सन सकिदैन।

गीताले कर्मयोगको माध्यमबाट मानिसलाई नित्यनैमित्तिक कर्म र काम्य कर्महरु गरिरहन सदा सजग र सचेत गराएको छ। यी कर्महरुमा उत्तम अन्न (धान, गहुँ, जौ, मकै, तिल, तोरी आदि), फलफूल (केरा, नास्पाती, स्याउ, सुन्तला आदि), वस्त्र (कपास, सनपाट, रेशम, पूवा आदि) तथा अन्यान्य विधि विहित वस्तु आराध्य देवतालाई चढाउनै पर्ने र जे जे चढाइन्छ त्यो आफूले प्रसादका रूपमा खान-लाउन पर्ने अन्यथा दोष लाग्ने भएकाले यसै वहानामा मानव समुदायले गास, वास, कपासको राम्रो बन्दोबस्त गरोस् भन्ने उदात्त धारणा उक्त कर्मयोगमा अन्तर्निहित रहेको देखिन्छं।

खुशी भएर या आफैलाई ज्ञान आएर अथवा लोकलज्जाले या करकापले वा जुनसुकै कारणले पनि खेती र पशुपालन गरेर मानिस धन धान्य तथा पशुधन ले परिपूर्ण भई सम्पन्न होऊन भन्ने नै गीता द्वारा परिलक्षित यज्ञको मूल अभिप्राय रहेको देखिन्छ। छोटकरीमा भन्नुपर्दा गीतामा कृषिका र पशुपालनका महत्वपूर्ण एकाइहरुमध्ये वाली प्रजनन, वागवानी, कृषि जलवायु विज्ञान आदि, कृषि अर्थ शास्त्र, बाली प्रजा विज्ञान, पशु प्रजनन विज्ञान, गृह विज्ञान, खाद्य तथा प्रविधि, पशुपालन विज्ञान आदिका अति संक्षिप्त र सूक्ष्म झिल्काहरु मात्र प्रयोग वा प्रस्तुत भएको कुरा सर्सर्ती गरिएको अध्ययनवाट बुझ्न सकिन्छ। गहिरिएर खोज्ने हो भने गीतामा कृषि कर्म सम्बन्धी ज्ञानगुनका अरु पनि महत्वपूर्ण कुराहरुको रहस्योद्घाटन न होला भन्न सकिन्न।

❋

---

*१. श्रीमद्भगवद्गीता २/४७-५१, गोरखपुर २०४६ २. ऐजन २/४७ ३. ऐजन ३/१४ ४. ऐजन गीतामाहात्म्य ६ ५. ऐंजन ५/१८ ६. ऐजन १/१४ ७. ऐजन १०/२७ ८. ऐजन १०/२८ ९. ऐजन १०/२७ १०. ऐंजन १०/३० ११. ऐजन १०/३१ १२. ऐजन १०/२९ १३. ऐजन १०/२८ १४. ऐजन १०/३० १५. ऐजन २/५० १६. ऐंजन १५/१४ १७. ऐज़न १७/७ १८. १७/९ १९. १७/८ २०. ऐजन १७/१० २१. ऐजन १८/४४ २२. ऐजन १८/४७ २३. १३/१-३४ २४. मण्डल १ अ० २४ सूक्त १८५ मन्त्र ७ २५. वेदान्त-सार/२६. गीता १४/३-४ २७. ९/१६ २८. ९/१९ २९. ९ २७ ३०. ९/२६ ३१. २/३७ ३२. शुक्ल यजुर्वेद २२ अ० २२ मन्त्र ३३. ऐजन २२ अ० २२ मन्त्र ३४. ऐजन ३५. ऐंजन २६/३ ३६. १७/१३-२०*





# ✿ ''निम्बार्क दर्शन मूल सन्दर्भमा'' ✿

**—प्रा. दुर्गाप्रसाद दहाल**

पूर्वीय दर्शनशास्त्रको क्षेत्रमा निम्बार्काचार्यको द्वैताद्वैत वा भेदाभेद दर्शन समन्वयवादी चिन्तनधाराका दृष्टिले चर्चित मानिन्छ। यसको बीज द्वापर युगको अन्त्यतिर नै देखा परिसकेको भएपनि अङ्कुर चाँही आचार्य रामानुज भन्दा केही पछि र आचार्य मध्व भन्दा अघि लगभग एघारौं शताब्दिमा प्रकट हुनु भएका आचार्य निम्बार्कको चिन्तनद्वारा प्रस्फुटित हुनपुगेको हो। निम्बार्क एक तेलगु बैष्णव ब्राह्मण हुनुहुन्थ्यो, उहाँले ब्रह्मसूत्रमाथि 'वेदान्त पारिजात सौरभ' नामक एउटा संक्षिप्त भाष्य लेख्नुभयो। पछि त्यसका माध्यमद्वारा आफ्नो सिद्धान्तको स्थापना गरेर जनसाधारण सम्म पुऱ्याउन उहाँले 'दशश्लोकी' को पनि रचना गर्नुभयो। यस ग्रन्थमा केवल दशश्लोकमा ईश्वर, जीव र जगत सम्बन्धी आफ्नो मतको स्पष्टीकरण गरिएको छ। 'वेदान्त पारिजात सौरभ' मा श्रीनिवासाचार्यको टीका र केशव कास्मीरीको गीता भाष्यले निम्बार्क मतको पुष्टिमा ठूलो योगदान गरेका छन्। निम्बार्कदर्शन मूल रूपमा खण्डन-मण्डनरहित शुद्ध सिद्धान्त स्थापनामा मात्र समाहित थियो। पछि अरु चिन्तन प्रणालीका देखादेखीमा यसले पनि खण्डन-मण्डनको सरणीको आश्रय लिन थाल्यो। निम्बार्काचार्यको मात्र ग्रन्थ हेर्दा उहाँको कुनै वादविवादमा रूचि देखा पर्दैन। उपासनाले परिपुष्ट भक्तिद्वारा मोक्ष (भगवद्‌भावापत्ति) प्राप्त गर्न सकिन्छ भन्ने दृढता आचार्यका तात्विक विचारमा देखा पर्छ। भक्तियुक्त कर्म नै ब्रह्मज्ञानको साधन हो। यस संक्षिप्त लेखमा वादविवादको घेरा भन्दा टाढा रहेर द्वैताद्वैत दर्शनको वास्तविक परिचय प्रस्तुत गर्ने जमर्को गरिएको छ।

ब्रह्मसूत्रको निम्बार्क भाष्यमा ब्रह्म-परिणामवादको सिद्धान्त प्रकट गरिएको छ। पुरुषोत्तम (परमात्मा) स्वतन्त्र हुनुहुन्छ। जीव र प्रकृति पराश्रित छन्। जीव र ईश्वर दुबै आत्मचेतन भए पनि जीव परिमित शक्तिमुक्त छ भने ईश्वर अपरिमित शक्तिवाला हुनुहुन्छ। जीव भोक्ता, संसार भोग्य र ईश्वर सर्वोपरि नियन्ता छ। जसरी सूर्य प्रकाशरूप र प्रकाशका कारण दुबै हुनुहुन्छ, त्यसरी नै जीव ज्ञानस्वरूप र ज्ञानवान् दुबै छ। धर्म र धर्मीको सम्बन्ध जस्तै आत्मा र उसका गुणको सम्बन्ध हुन्छभने त्यसमा भेद र अभेद त्यस्तै रूपमा देखा पर्छन्। आकारतः जीव अणु भए पनि ज्ञानका व्यापकताले गर्दा पूरै शरीरको सुख-दुःखको अनुभूति गर्न सक्छ। जीवको काही स्वतन्त्र ज्ञान अथवा क्रिया हुँदैन। सुषुप्ति र मोक्षमा पनि उसको अस्तित्व रहिरहन्छ। ऊ जहिले पनि ईश्वरको नियन्त्रणमा रहन्छ। जीवको संख्या अनन्त छ।

जडका तीन भेद छन्। (१) अप्राकृत-यसको उत्पत्ति प्रकृतिबाट हुँदैन। (२) प्राकृत-यसको उत्पत्ति त्रिगुणात्मक प्रकृतिबाट हुन्छ र (३) काल। यी सबै नित्य छन्। ईश्वरको स्वभाव शासन गर्नु हो। ऊ सबै अप्राकृत दिव्य-गुणहरूले परिपूर्ण हुन्छ। निम्बार्कका अनुसार परमात्मा र कृष्ण एउटै तत्व हो। उसमा अज्ञान वासना आदि कुनै पनि दोष हुँदैन। उसले आफूलाई वासुदेव; संकर्षण, प्रद्युम्न र अनिरुद्ध नामक चार व्यूहको रूपमा प्रकट गर्दछ। ऊ विभिन्न अवतारको रूपमा प्रकट हुन्छ। ईश्वर विश्वको उपादान र निमित्त दुबै कारण हो। सृष्टिको अर्थ ईश्वरका सूक्ष्म चित् र अचित् शक्तिको अभिव्यक्ति हो। जीवलाई आफ्नो आफ्नो कर्म अनुसार फल भोगाउने अर्थमा ऊ निमित्त कारण हुन्छ र सृष्टि आदिको सामग्री आफैंबाट खडा गर्ने हुँदा उपादान कारण पनि हुन्छ।

आचार्य शङ्करले विश्वलाई भ्रमको रूपमा स्वीकार गरे जस्तो निम्बार्काचार्यले स्वीकार गर्नुभएको छैन। ईश्वरमा सूक्ष्म रूपमा रहेको प्रपञ्च नै स्थूल रूपमा व्यक्त हुन्छ। त्यसैले निम्बार्क विवर्तवादको आलोचना गर्नुहुन्छ र परिणामवादको

स्थापना गर्नुहुन्छ। जीव, जगत र ईश्वर यी तीन तत्वको परस्परमा अद्वैत वेदान्तले भने जस्तो नितान्त एकत्व वा अभेद छैन, भेद परक असंख्य श्रुतिहरू भेदको कल्पना गर्छन्। यसको तात्पर्य यी तीनका बीचमा विलकुलै भेद छ भन्ने पनि होइन। विल्कुल भेद मानेको खण्डमा अभेदपरक श्रुतिहरू निरर्थक हुन्छन्। परमात्मा, जगत र जीवभन्दा नितान्त भिन्न मानेमा उसको सर्वव्यापकता रहन सक्दैन। त्यसैले उपनिषद्का दुबैथरी वाक्यहरूको समन्वय गर्दै निम्बार्काचार्य द्वैताद्वैतसिद्धान्तको स्थापना गर्नुहुन्छ। जीवात्मा र जगत ब्रह्म भन्दा भिन्न छन्। त्यसैगरी जीव र जगत ब्रह्म भन्दा अभिन्न पनि छन्। किनभने उनीहरू आफ्नो स्वतन्त्र अस्तित्व राख्न सक्दैनन् र ईश्वरमा आश्रित रहन्छन्। भेदको अर्थ पृथक्त्व हो भने अभेदको अर्थ स्वतन्त्र अस्तित्वको अभाव हो। यस परिप्रेक्ष्यमा 'तत्त्वमसि' महावाक्यको अर्थ हुन्छ-तद् सर्वव्यापक ब्रह्म तथा त्वं जीवात्मालाई असि पदले सम्बद्ध गराउँदछ। यसको अर्थ जीवको अस्तित्व ब्रह्ममा निर्भर हुन्छ भन्ने हो। सूर्य र किरणको अथवा अग्नि र झिल्काको जस्तो सम्बन्ध छ त्यस्तै जीव र ईश्वरको सम्बन्ध छ। त्यसैगरी प्रकृति पनि ईश्वरसँग भिन्न पनि छ र अभिन्न पनि छ। भेद र अभेद दुबै यथार्थ छन्-यही नै भेदाभेद सिद्धान्तको मूल मर्म हो। प्रलयको बेला जीव र जगत् दुबै ईश्वरमा विलीन हुन्छन् र सृष्टिको सुरूमा फेरि प्रकट हुन्छन्। ब्रह्मको शक्तिद्वारा संसारको उत्पत्ति हुन्छ र भिन्न भिन्न जीव त्यसैबाट शरीर आदि प्राप्त गर्दछन्।

ब्रह्मको शक्ति संसारको परिवर्तनको उपादान कारण हुन्छ। यसबाट ब्रह्मको अखण्डतामा कुनै प्रभाव पर्दैन। संसारको रचनाका लागि सर्वशक्तिमान् ईश्वरलाई इच्छा शक्तिका अतिरिक्त अर्को कुनै सामग्रीको आवश्यकता पर्दैन ईश्वर एकैचोटी संसारको उपादान र निमित्त दुबै कारण हुन्छ। संसारको परमात्माका साथ एकात्मभाव सम्बन्ध छ र उसले कर्म गर्नका लागि परमात्मामा निर्भर रहनु पर्दछ। यसो हुँदाहुँदै पनि परमात्मा संसार भन्दा भिन्न हुनुहुन्छ।

ईश्वर सम्पूर्ण दोषहरूबाट रहित हुनुहुन्छ। सौन्दर्य, माधुर्य, औदार्य आदि अनन्त दिव्य गुणहरू द्वारा उहाँ परिपूर्ण हुनुहुन्छ। जीवात्मा अनन्त छन् र स्वरूपत: अणु मानिने ती जीवात्मा परमात्माका अंशका रूपमा देखा पर्छन्। जीव विशुद्ध स्वरूपको भए पनि कर्म आदिको कारणले आवरणयुक्त हुनपुग्छ। अनादि मायाद्वारा आबद्ध जीव ईश्वरको कृपाबाट मात्र मुक्त हुनसक्छ। ईश्वर प्रतिको पूर्ण शरणागति नै एकमात्र मोक्षको उपाय हो। आफ्ना प्रपन्न भक्तहरूलाई ईश्वरले कृपा गर्नुहुन्छ र अन्त्यमा ब्रह्म साक्षात्कार हुन्छ। भगवद्भक्ति भित्र ईश्वरीय सत्ताको ज्ञान, जीवात्माको स्वरूप, ईश्वर कृपाको फल आदि रहन्छन्। त्यसैले जीव अज्ञानबाट मुक्त हुन्छ। ईश्वर प्राप्तिको मार्गमा जति पनि बाधाहरू छन् ती सबै वहाँको कृपाद्वारा नै समाप्त हुन्छन्। निम्बार्क स्वामीले राधाकृष्णको उपासनाको प्रतिपादन गर्नु भयो। भक्ति र उपासना एउटै जस्तो लागेपनि वास्तवमा भक्ति उपासनाको फल हो। ईश्वरको कृपा सधैं नै जीवलाई अज्ञानबाट माथि उठाएर परमात्माको स्वरूप ज्ञान गराउनका लागि नै तत्पर रहन्छ। शास्त्र विहित आचार-विचारको पालन गर्नाले ईश्वरको जीवमाथि कृपा हुन्छ। निष्काम कर्मले ब्रह्मज्ञान प्राप्त गराउन मद्दत गर्छ तर साथसाथै भक्ति आवश्यक हुन्छ।

निम्बार्काचार्यले भेद र अभेदको तात्पर्य प्रसङ्ग अनुसार स्पष्ट गरेर उपनिषद्को व्याख्यामा महत्वपूर्ण देन दिनुभयो। श्रुतिमा भेदपरक र अभेदपरक दुबै वाक्यहरू पाइन्छन्। वास्तवमा तिनको समन्वय कसरी गर्ने ? त्यो अप्ठ्यारो परिस्थितिमा निम्बार्कले दुबैमा समन्वय गर्ने जुन प्रयास गर्नुभयो, त्यो भारतीय दर्शन-शास्त्रको इतिहासमा एक अमूल्य देन मानिन्छ। अस्तु

# ✿ जीवनको साधना ✿

**चिन्तामणि योगी**
प्रधानाचार्य–हिन्दू विद्यापीठ
काठमाण्डौ,

जीवनका हरेक क्षण व्यस्तताले भरिएका छन्। प्रत्येक नयाँपनले संघर्षको सन्देश बोकेर ल्याउँछ। हामी हरेक क्षण भागिरहेका छौं, कुदिरहेका छौं अनवरत, अविश्रान्त। तर जीवनको यस भागदौडमा कहीं त कुनैयस्तो समय पनि हुनु पर्ने हो, जहाँ एक दिन छिन मात्रै भए पनि यसो बसेर सुस्ताउन सकियोस्। केही बेर मात्रै भए पनि सोच्ने समय त मिलोस्–कति दौडियो ? कति बाँकी छ ? यात्रा कहाँबाट शुरू गरेको हो ? र अन्त्यमा कहाँ पुगिने हो ? आदि।

कहिलेकाहीं मलाई के लाग्छ भने हामी हाम्रो जीवनको दौड़ शुरू गर्दासम्म त ठीक छौं, तर अलि अगाडि पुगिसकेपछि हामीलाई स्वयं थाहा हुँदैन कि हामी ठीक बाटोमा छौं कि बेठिक ? यो कस्तो दौड़ ?

यो कस्तो यात्रा ? प्रारम्भ त राम्रो छ, उत्साहप्रद छ तर अन्त्य भने वीभत्स एवं दयनीय छ। कैयौं हामी थाहै नपाइकन चिप्लन्छौं, चिप्लँदा–चिप्लँदा यति टाढा पुग्छौं कि चाहेर पनि फर्किन सक्दैनौं, अनि उल्टै भन्न थाल्छौं—'ओहो ! चिप्लँदा कस्तो आनन्द आयो, यो चिप्लेटी त कति सजिलो रहेछ—आऊ, आऊ, तिमी पनि चिप्ल, धेरै नसोच, धेरै चिन्ता नगर, हेर, यहाँ सबै त चिप्लिरहेका छन्, तिमी पनि चिप्लिहाल' आदि।

हाम्रो समाजमा यही रोग आज झन् झन् बल्झिंदैछ। यसले कुनै भयानक महामारी झैं समग्र हाम्रो राष्ट्रलाई निल्न खोज्दैछ। हाम्रो धर्म–संस्कृति–भाषा–नैतिकता आदि सब यसै रोगको शिकार भएका छन्। राष्ट्रियता मात्र ढुँगा–माटोको विषय हुन गइरहेको छ। नोट र भोटको समस्याले देशका बुद्धिजीवीहरू जेलिएका छन्। समाजमा सुख, शांति र उल्लासको लक्षण पनि देखिंदैन। सामाजिक जीवन मृतप्राय: भैसकेको छ। पारिवारिक जीवन पनि मात्र केही स्वार्थका सम्झौताहरुले बाँचेको छ, वास्तविक पारिवारिक आदर्श र जीवनशैली पाइँदैन। हरेक व्यक्ति आफ्नै अन्तर्द्वन्द्वको शिकार भएको छ, एउटा भयानक महाभारत चलिरहेको छ उसभित्र, तर खै ! जित्ने कुनै लक्षणै छैन।

गीतामा भगवान् भन्नुहुन्छ—'आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मन:' अर्थात् आफू नै आफ्नो बन्धु हो र आफू नै शत्रु हो। हो, हामी आफै आफ्नो शत्रु भएका छौं, आफूलाई आफै रात–दिन गिराउँदैछौं। आफै गिरेपछि कसको के लाग्छ[1] आफै गिरेकोले अर्कालाई कसरी उठाउन सक्छ ? त्यसले परिवारलाई के देला ? समाजलाई के देला[2] ? एउटा सडेको माछोले पूरा तलाउलाई सडाइदिन्छ, विषाक्त बनाइदिन्छ भने झ एउटा पतित मान्छेले सिंगो परिवार, सिंगै समाज र राष्ट्रलाई नै पतनको मार्गतिर धकेलिदिन्छ।

यस महामारीबाट बच्नु छ र बचाउनु छ भने समयमै हामीले सही निर्णय लिनुपर्दछ। सही निर्णयका साथ सही दिशामा हिंड्दै गयो भने एक दिन अवश्य पनि आफ्नो सही मंजिलमा (साध्यमा) पुग्नेछौं। दृष्टिकोणमा सुधार एवं विचारमा दृढ़ता मात्र आवश्यक छ, यही हो हाम्रो सफलताको रहस्य र आध्यात्मिक चिन्तनको सार्थकता पनि। हामी भित्रका असीमित शक्तिलाई जागृत गराइदिनु नै अध्यात्म हो। जुन दिन हामीमा अध्यात्मप्रति निष्ठा जाग्छ, श्रद्धा बढ्छ, त्यही दिनदेखि नै हाम्रो कायाकल्प भैहाल्छ।

त्यसैले हाम्रा व्यस्त जीवनका क्षणहरुबाट हामीले वास्तविक जीवनको चिन्तनका लागि समय निकाल्नै पर्छ। जसरी जग नबनाइकन घर बन्दैन त्यसरी नै जीवनको वास्तविक वैचारिक आधार नबनाइकन जीवन श्रेष्ठ बन्दैन। हो मार्ग कठिन अवश्य छ होला तर असंभव भने यसमा केही पनि छैन। उच्च आनंद, परम सन्तोष र शाश्वत केही पाउनका लागि केही साधना त अवश्य गर्नैपर्छ। श्रीकृष्ण भन्नुहुन्छ—**'अभ्यासेन तु कौतेय वैराग्येण च गृह्यते'** अर्थात् अभ्यास र वैराग्य द्वारा यसलाई (मनलाई) प्राप्त गर्न (नियंत्रण गर्न) सकिन्छ। मूलतः जीवनको आवश्यकता साधन होइन, साधना हो। साधन सम्पन्न व्यक्ति पनि मानसिक रूपमा विपन्न हुन सक्छ तर साधनासम्पन्न व्यक्ति शान्त र सुखी रहन्छ। भनिएको पनि छ—

**चाह मिरी चिन्ता गई मनुआ बेपरवाह।**
**जिनको कुछ ना चाहिए सोही शाहशाह॥**

अतः जिउनुको अर्थ के हो? यसको लक्ष्य के हो? बुझ्ने प्रयास गरौ। हाम्रा वैदिक उद्घोषहरूको अनुसरण गरौं र **"अप्पदीपो भव"** लाई चरितार्थ गरौं।





# ❋ द्विजातिका दैनिक कृत्य ❋

**आचार्य लोकमणि दहाल**
नेपाली संस्कृत महाविद्यालय
मंगलागौरी, वाराणसी

याज्ञवल्क्यस्मृतिमा भनिएको छ—**'ब्राह्मण-क्षत्रियविशस्त्रयो वर्णा द्विजातयः'** अर्थात् ब्राह्मण क्षत्रिय र वैश्य यी तीन वर्ण द्विजाति भनिन्छन्। द्विजातिका दैनिक कृत्यहरूका बारेमा दक्षस्मृतिमा विस्तारपूर्वक बताएको छ। त्यहाँ भनिएको छ कि द्विजातिले समयलाई ध्यानमा राखेर तदनुसार कर्म गर्नुपर्दछ। द्विजातिले कहिल्यै पनि फुर्सद साथ समय विताउनुहुन्न। **'उदयास्तमयं यावन्नविप्रः क्षणिको भवेत्'** यसरी कर्त्तव्य गर्दा प्रातः-कृत्य, पूर्वाह्ण-कृत्य, मध्याह्न-कृत्य, अपराह्न-कृत्य, सायाह्न-कृत्य, रात्रि-कृत्य र निशा-कृत्य, गरी कर्त्तव्यलाई सात भागमा बाँडनु पर्दछ। 'पाँच घडी' (२.३०) रातबांकी छँदादेखि सूर्योदय सम्मको अवस्था प्रातः काल मानिन्छ। भनिन्छ—

**'पञ्च पञ्च उषः कालः सप्तपञ्चारुणोदयः। अष्ट पञ्च भवेत्प्रातस्ततः सूर्योदयः स्मृतः'** यसै काललाई ब्रह्ममुहूर्त पनि भनिएको छ। पचपन्न घडी सम्म ऊषाकाल, त्यसपछिका दुई घडी अरुणोदयकाल, त्यसपछिको एक घडी प्रातः काल, त्यसपछिको दुई घडी सूर्योदय काल भनिन्छ। ऊषाकालमा जाग्नु प्रभात स्मरण गर्नु, मलमूत्र त्याग, दन्त धावन इत्यादि गर्नु पर्दछ। त्यसपछि पूर्व दिशा अरुणका किरणले रातो भएको देखेपछि स्नान गर्नु पर्दछ। **'अरुणकिरणरक्तां प्राणी विलोक्य स्नायात्'**। सन्ध्या आदि कर्मको लोप न होस भन्नकालागि प्रातः स्नान धेरै लम्याउनु हुँदैन—**'अल्पत्वाद्धोमकालस्य बहुत्वात् स्नानकर्मणः। प्रातर्न तनुयात्स्नानं होमलोपो विगर्हितः'**।

स्नानपछि सुखा धोती पहिरी संध्यावन्दन गर्नु पर्दछ। यसै क्रममा सन्ध्या, जपयज्ञ, होमयज्ञ, ब्रह्मयज्ञ, दानयज्ञ सूर्यार्घ्यदान, यति कर्म गर्नुपर्ने हुँदा तिनिहरूको लोप नहोस् भन्नका लागि प्रातः सन्ध्याको पनि धेरै विस्तार गर्नु हुन्न। प्रातः सन्ध्यामा ध्यानदिने कुरा हुन्—आसन, आचमन, प्राणायाम, जलस्पर्श, मार्जन, अघमर्षण अवभृथ, जलोपस्पर्श, सूर्यार्घ्यदान, सूर्योपस्थान, गायत्र्यभिमन्त्रण, उपस्थान, जप र विसर्जन। (यसका लागि कुनै पनि सन्ध्याविधि-प्रयोग दर्शनीय छ) सन्ध्या पछि जपयज्ञ गर्नु पर्दछ। जसमा इष्टदेवताका मन्त्रको जप हुन्छ। मन्त्रजपको सत्ताइस भन्दा कम संख्या हुनु हुँदैन। जपयज्ञ पछि होमयज्ञ गर्नु पर्दछ। होम अग्निमा गर्नु पर्दछ। सो उपलब्ध न भएमा पानी आदिमा गर्न सकिन्छ। जल अग्निको वैकल्पिक द्रव्य हो। नित्यहोम, प्रायश्चित्त होम। नैमित्तिकहोम र काम्यहोम गरी चार प्रकारका होम गरिन्छन्। होम पछि भस्म धारण गर्नु पर्दछ। यसपछि ब्रह्मयज्ञ सम्पादन गर्नु पर्दछ। यसमा चारै वेदका मन्त्रहरूको पाठ गरिन्छ। त्यसपछि सूर्यलाई अर्घ्य दिएर प्रातः कृत्य पुरा हुन्छ। कुनै कारणबाट समयमा यी कर्म पुरा गर्न नसके पनि त्यस पछिको समयमा भए पनि गर्नु अवश्य पर्दछ त्यही समयका नाउँमा।

त्यस पछि आउँछ दिवाकृत्य। सूर्योदय पछि सूर्यास्त सम्मको समयलाई आठ भागमा बाँड्नु पर्दछ र प्रत्येक भागमा नियत गरिएका कर्म गर्नु पर्दछ। प्रथम भागमा आ-आफ्ना सम्प्रदाय अनुसार देवपूजन गर्नु पर्दछ।

दोस्रा भागमा वेदाध्ययन गर्नु पर्दछ। तेस्रा भागमा पोष्य-वर्ग चिंता आदि कार्य पर्दछन्। यी तीन काललाई पूर्वाह्णकाल भनिन्छ। त्यसपछिको चौथो र पाँचौ भागलाई मध्याह्न काल भनिन्छ। यसकालमा मध्याह्नस्नान मध्याह्न-सन्ध्या, तर्पण, बलिवैश्वदेव, नित्यश्राद्ध र सबभन्दा पछि भोजन गर्नुपर्दछ। त्यसपछिको छैटौं र सातौं भाग इतिहास पुराण आदिको अध्ययनमा विताउनु पर्दछ।

आठौ भागमा देवमंदिर आदिमा जाने काम गर्नुपर्दछ। त्यस पछि आउँछ सायाह्नकृत्य। सूर्यास्त हुनुभन्दा दुई घडी अगाडीदेखि यो शुरू हुन्छ। यसमा सायंस्नान, सायंसन्ध्या, सायंहोम, संक्षिप्त-देवपूजा आदि कृत्य गर्नुपर्दछ। सूर्यास्तदेखि अर्को सूर्योदय-सम्मको काललाई निशाकाल भनिन्छ। निशाकाललाई चार भागमा बाँड्नु पर्दछ त्यसका प्रथम भागमा सायन्तनकृत्य, संक्षिप्त अध्ययन र लघुभोजन, दोस्रो र तेस्रो प्रहरमा सुखनिद्रा, चौथो प्रहरमा प्रातः कृत्यहरूको सम्पादन गर्नुपर्दछ।

यसरी समयलाई क्रमंबद्धरूपमा सञ्चालन गरी निश्चित समयमा तोकिएको कर्तव्य पूरा गर्नुपर्दछ। कारणवश निर्दिष्ट समयभित्र निर्दिष्ट कर्तव्य गर्न नसकिएमा केही विकर्षण अथवा अपकर्षण गरेर भए पनि निर्दिष्ट समयका नाउँमैं गर्नै पर्दछ। जस्तै मध्याह्नकृत्य मध्याह्नकालमा गर्न नसकिने भएमा पूर्वाह्न मैं भए पनि मध्याह्न कालकै नाउँमा गर्नुपर्दछ।

यसरी दैनिक कृत्यहरूको सम्पादन गर्नु नै द्विजातिको परम कर्त्तव्य मानिन्छ। कर्तव्यका सवै भाग पूरा गर्न न सके प्रतीकात्मक रूपमा भए पनि सवै कर्त्तव्य गर्नै पदर्छ।

स्नान, सन्ध्या, जप, होम, ब्रह्मयज्ञ, देवपूजा, स्वाध्याय, मध्याह्न-स्नान-सन्ध्या-देवपूजा, देवमनुष्य-दिव्यपितृ-स्वपितृ तर्पण, पञ्चमहायज्ञ (देवयज्ञ, मनुष्ययज्ञ, अतिथियज्ञ, पितृयज्ञ, भूतयज्ञ) नित्यश्राद्ध, भोजन, मंदिर जानु, आदि लोक यात्रा गृहस्थ वाहेक अरुको सायं स्नान संध्या होम, संक्षिप्त देवपूजा स्वाध्याय, लघु भोजन र निद्रा यी द्विजाति मात्रका विहित तत् ततत् विधिको अनुपालन यथासंभव गरिनु पर्दछ। जन्मले शूद्र बराबर हुन्छ। संस्कार र विहित त्रैवर्णिक कर्मका अनुष्ठानले द्विज कहलाउँछ।

जन्मना जायते शूद्रः संस्कारात् द्विज उच्यते।

# कल्याण मार्ग

केशव रेग्मी................

यस संसारमा सद्‌वस्तुदेखि अतिरिक्त अरू केही पनि सार वस्तु छैन। संज्ञा रहित तत्त्व नै परमात्मा हो। श्रीमद्‌भागवत्‌मा भगवान्‌को संज्ञा रहित तत्त्वको नै वर्णन छ। एकै वस्तुको अनन्त नाम छ तर सत्य एकै छ। गीतामा पनि भगवान्‌ले सद् र असद्‌को निरूपण गर्नु भएको छ।

**'जो छैन त्यो हुँदै हुन्न जो छ त्यो छ सधैं पनि। सद् असद् दुइको तत्व देख्दछन् ज्ञानवान् मुनि।**
**ननाशिने उही ज्ञान जस्ले यो परिपूर्ण छ। त्यो नित्य तत्वको नाश गर्न लौ कुन सक्दछ॥'**

(कोमल गीता द्वि०अ०)

भगवान्‌को यो शाश्वत वचनमा नै सार छ। सम्पूर्ण शास्त्रहरूको निचोड र सार तत्त्व पनि उही परमात्मा बाहेक अरू केही छैन। श्रीमद्‌भागवत महापुराणमा बताइए अनुसार पनि सम्पूर्णको सार कृष्ण तत्त्व नै हो। अनेक राजा, विद्वान् धनी, शूर वीर पराक्रमी आए-गए तर नित्य तीनै कालमा रहिरहने परमतत्त्व भगवान् हरि नै हुनुहुन्छ। भक्त प्रह्लादलाई कसले रक्षा गऱ्यो? सर्वदा रक्षा गर्ने भगवान् हरि नै हुनुहुन्थ्यो। असुर कुलमा जन्मे पनि बाबु र छोराको मान्यतामा कति विशाल भिन्नता थियो। भगवान् निर्भय पद हो। उसको चरित्रलाई हृदयमा लिँदा सारा पाप नाश हुन्छ। संसारका कुराले के पाप नाश होला र? यो आफूले निरूपण गर्ने विषय हो। प्रजापति ब्रह्माजीलाई पनि भगवान् श्रीकृष्णको चरित्रमा शंका लागेर सारा गाईहरू हरण गर्नुभयो। पछि भगवान्‌लाई यो सब थाहा भयो अनि यत्र तत्र सर्वत्र श्रीकृष्ण नै बनिदिनु भयो। लट्ठी, गाई, गोठाला, बाँसुरी सब कृष्णमय भए। वास्तवमा जो जे पनि गर्न र बन्न सक्छ त्यही नै परमात्मा हो। पृथिवी, जल, वायु, तेज आकाश सब उही तत्व हो। सारा प्राणीको हृदयमा वास गर्ने चेतन तत्त्व भएकोले नै भगवान्‌लाई वासुदेव पनि भनिएको छ। यशोदाले भगवान् श्रीकृष्णको मुखमा सारा विश्व देख्नुभयो, त्यहाँ कुनै सीमा नै थिएन। रास लीलालाई पारमार्थिक तात्त्विक दृष्टिले विचार गर्ने मनीषीहरूले ठूलो गूढ रहस्य फेला पारेका छन्। उनीहरूले सारा गोपिनीहरूलाई परमात्माका अनन्य स्वरूप हुन् भन्ने अनुभव गरे। त्यसैले मुमुक्षुहरूले पनि सर्वप्रथम भगवान्‌को भक्तिमा आफूलाई सपर्पण गर्नुपऱ्यो। भक्ति कृष्ण तत्वमा पुग्ने सोपान हो। साध्य भक्ति आत्म स्परूप नै हो। कुनै पनि वस्तुको स्वरूपलाई निधारिण गर्नु भनेको आफ्नो संस्कार र अनुभवलाई विकसित गर्नु हो। विषयको इच्छा र कामनालाई नाश गर्ने तत्त्व नै कृष्णतत्त्व हो। जबसम्म विषयको कामनाबाट चित्तको निवृत्ति हुँदैन तवसम्म तत्त्व फेला पार्न सकिन्न। व्यवहार चलाउन पनि सम्पत्तिको आवश्यकता परे जस्तै तत्व प्राप्त गर्न पनि सम, दम, उपरति, तितिक्षा, श्रद्धा, समाधान जस्ता षट्‌सम्पत्तिको धनी हुनुपऱ्यो। अनिमात्र परमात्मामा अभिमुख हुन सकिन्छ। हृदयको अत्यन्त नजिक रहेको आत्मातत्त्व आत्मस्वरूप आफैं भएर पनि त्यसलाई प्राप्त गर्न नसक्नु भनेको नै अज्ञान हो। वेदले प्रतिपादन गरेर निश्चयात्मक रूपमा जीव र ब्रह्मको एकता बारेमा ठोकेर भनेको कुरालाई पुण्यात्माहरूले आफ्नो अनुभवमा उतारेर दिएको शिक्षा कसरी निरर्थक हुने? यसको निरूपण गर्न आफैं तत्पर हुनुपऱ्यो भोक, तृष्णा, बन्धन र मोक्षका कुरा अरुले निरूपण गरेर हुँदैन आफैंले गर्नुपर्छ। गुरु र शास्त्रले हामीलाई युक्ति मात्र सिकाइदिने हो तर त्यसको साक्षात्कार भने आफैले गर्नुपर्दछ। इन्द्रियनिग्रह, मनोनिग्रह गर्ने अभ्यास भएका मुमुक्षुहरूलाई यो कुरा प्रष्ट हुन्छ। शास्त्रमा जति पनि वर्णित कर्म, धर्म, ज्ञान, उपासनाका कुराहरू छन् तिनलाई धर्मपथ मानेर चल्नेले नै आफ्नो अन्तःकरणलाई निर्मल पार्न सक्दछ। जन्मान्तर कल्पान्तरदेखि रहेको र चित्रिएको विषयवासना र संस्कारले दूषित अन्तःकरणलाई नमाझिकन हाम्रो कल्याण छैन। कर्म गर तर निष्कामनापूर्वक भनेर भगवान्‌ले गीतामा पष्ट पार्नु भएको छ। कामनाले कामना नै जन्माउँछ। हिलोलाई साफ गर्न स्वच्छ पानीकै आवश्यकता पर्दछ। हिलोले हिलो कहिल्यै साफ हुँदैन। हामी चाहिं हिलोले हिलो साफ गर्न प्रयत्नशील छौं। अनि कर्म बन्धन र जन्म बन्धनमा जकडिएका छौं। वास्तवमा दुःख नै यही हो— **'जन्ममृत्यु-जराब्याधिदुःखदोषानुदर्शनम्'** जन्म मृत्युको चक्कर नै दुःख हो। आत्मपुराणमा पनि यो कुराको दृष्टान्त दिइएको छ।

**जातो बालो युवा वृद्धो मृतो जातः पुनस्तथा। वंभ्रमीत्येष संसारे घटीयन्त्रसमोऽवशः।**

बालक, युवा, वृद्ध हुँदैं कुमालेको चक्र झैं चौरासी योनिमा चक्कर काटी आवागमन भैरहन्छ। आफ्नो अज्ञान र विस्मृतिको कारणले गर्दा नै वास्तवमा दुःख भएको हो। त्यसैले मनले जता जता लैजान्छ त्यता त्यता नदौडीकन हाम्रो शास्त्रमा श्रद्धा र विश्वास हुनुपर्‍यो। शास्त्र नै सारा कुराको प्रमाण हो भनेर गीतामा विवेचन गरिएको छ। यसैले हामीलाई शास्त्रले यो पनि भनेको छ–मतयो यत्र गच्छन्ति तत्र गच्छन्ति वानराः। शास्त्राणि यत्र गच्छन्ति तत्र गच्छन्ति ते नराः (मन जता जान्छ त्यता दौडने वानर हो तर शास्त्रको पछि लागेर त्यसको अनुशरण गर्ने मनुष्य हो)। हाम्रो वास्तवमा सक्कलीरूप वानर जस्तै भएको छ। इन्द्रिय भनेको चोर जस्तै हो। यसको पछि लाग्रे हामी चोर नै हौं। चोरले चोर्न सिकाउँछ दुर्बुद्धि सिकाउँछ, अब चोर हुने कि नारायण हुने? यो हाम्रो आफ्नो अधीन को कुरा हो। स्मृतिमा पनि गुरु–शिष्य–संवाद–क्रममा भनिएको छ– यो संसारमा देव भनेको एक मात्र छ जो आफ्नो मनको साक्षी हो। तिम्रो मनको साक्षी तिमी स्वयं हौ अरु होइन र त्यो साक्षी परमदेव हो–**'को देवो यो मनः साक्षी मनो मे दृश्यते मया। तर्हि देवस्त्वमेवासि एको देव इति श्रुतेः।'**

संकल्प, विकल्प, सुख–दुःख भोग्नु मनको धर्म हो। पदार्थका विषयमा गमनागमन हुन्छ। त्यसैले मनको धर्मलाई जान्ने र त्यसको साक्षी म स्वयं हूँ, त्यसैले सो साक्षी छ आत्मा नै, त्यै देवरूप हो भनेर बुझ्न सक्नुपर्छ। ब्रह्मादेखि कमिला सम्मलाई प्रकाश गर्ने चैतन्य रूप देव एकै हो अद्वितीय हो। यो कुरामा स्वयंले अभ्यास गर्नुपर्छ। त्यसैले परमात्मालाई पाउन अत्यन्त सजिलो छ भने उत्तिकै कठीन पनि छ। चित्तको बाह्य पदार्थसंगको संसर्ग र संपर्कलाई हटाएर चित्तलाई विषयशून्य पार्दा अर्कै आनन्दको अनुभूति हुन्छ भने चित्त वृत्तिलाई हटाउन सकेनौं भने क्षितिजलाई समाउन दौडे जस्तै हुन्छ। परमात्माको प्राप्ति पनि त्यस्तै हो, त्यसैले ऊसंग अभिमुख संमुख हुन ३६ होइन ६३ हुनुपर्‍यो।

परमहंस खप्तड स्वामीले मुमुक्षुहरूलाई भन्नुहुन्थ्यो–'इन्द्रिय निग्रह गर, सबभन्दा खतरनाक इन्द्रिय रसनेन्द्रिय नै हो। त्यसलाई नियंत्रण गर, यसलाई नियंत्रण गर्न नसक्दा आज सर्वत्र हिंसा र कामुकता बढिरहेछ।' कति शाश्वत सत्य कुरा थियो स्वामीज्यूको। सत्य कुरामा तागत तथा आत्म–विश्वास हुन्छ। उहाँको यस वाणीलाई प्रत्येक मनुष्यले मनन गरेर हेरून् त एकैछिन भएपनि, अनि वास्तविकता थाहा हुन्छ। रसनेन्द्रिय र जननेन्द्रियको दासताले आज मनुष्य पशुभन्दा पनि निकृष्ट कोटिमा गणना भइरहेछ। के खाने? के खायो भने के हुन्छ? त्यसको इन्द्रिय र मस्तिष्कमा के प्रभाव पर्छ? त्यसबाट के भाव निस्कन्छन्? यी कुराहरूमा के हामी विचारशील छौं? जे पायो त्यही कुरा कहिल्यै नअघाउने ओढारभित्र हालेर पवित्र मस्तिष्कलाई फोहर फ्याँक्ने रछान जस्तो बनाएका छौं। यसमा कसलाई दोष दिने? मनुष्य को अनमोल जीवन पाएका छौं। त्यो पनि हाम्रो साथमा छ, त्यो पनि अनमोल छ। गुरु पनि पाएका छौं जसले हाम्रो अज्ञान र अंधकारलाई नाश गरिदिन्छन्। हामी कति भाग्यमानी, यस्तो अमूल्य समयको सदुपयोग गरौं; हाम्रो जीवन सुध्रन्छ, नत्र शिरमाथि मडारिएको कालपाशले हामी कसैलाई पनि छोड्दैन। कुरा नबुझिकनै हामीहरूले अनमोल नरदेह बिताइरहेका छौं। कुरा नबुझ्दा कल्प–कल्पसम्म–वास्तविकताको निरूपण हुन सक्दैन। त्यसैले अफूलाई दुःख दिने अवरोध खडा गर्ने तत्त्वलाई छोड्दै जानु नै श्रेय मार्ग हो। त्यही नै त्याग हो। भगवान् बुद्धले दृश्यलाई हेरेर मिथ्यात्त्वको निर्माण गर्नुभयो। तीव्र वैराग्यको उदय नभई अन्तरमुख हुनै सक्दैन। बाहिरी दृष्टिले करोडौं जन्मसम्म पनि ज्ञान संभव छैन। ज्ञान नभै मुक्ति संभव छैन, मुक्ति नभै जीवको परम कल्याण संभव छैन। त्यसैले विषयको आशक्ति हटाएर भगवान्मा समर्पित हुनुपर्‍यो। 'यद् दृष्टिः तद् नष्टम्' देखिने दृश्यमान पदार्थ सब नाशवान् हुन्। शुद्ध, बुद्ध, अविनाशी, शाश्वत, अविकारी त परमात्मा नै हो जो व्यापक र सर्वत्र छ, त्यो देखिंदैन, जुन छैन त्यो देखिन्छ। सत्यको जन्म पनि हुँदैन अनि व्याप्त वस्तु उत्पन्न हुँदैन। त्यसैले विवेक–वैराग्य र अभ्यासले मात्र पाइने त्यो अमृत तत्वको चिन्तन, मनन गर्नाले नै हामीहरूको उद्धार हुन्छ। वास्तवमा कल्याण मार्ग भनेको नै यही मार्ग हो; यसैको सदा सर्वत्र निरन्तर अवलंवन गरिरहनु पर्छ।

# एकजीववाद

—पं० विष्णुप्रसाद न्यौपाने

जीव अथवा आत्मा एक हो कि नाना भन्ने विषयमा दार्शनिकहरूमा मतभेद देखिन्छ। सांख्य र योगदर्शन अनुसार आत्मा नाना छ।

"अजामेकां लोहितकृष्णशुक्लां बह्वीः प्रजाः सृजमानाः सरूपाः,
अजो ह्येको जुषमाणोऽनुशेते जहात्येनां भुक्तभोगामजोऽन्यः॥" (श्वेताश्वतर०)

त्रिगुणात्मक एक प्रकृतिबाट त्रिगुणात्मक प्रजाहरूको सृष्टि भएको छ। यौटा जीव प्रकृतिको सेवा गरेर बन्धनमा पर्छ, अर्को वैराग्ययुक्त जीव प्रकृतिबाट अलग रहेर मुक्त भएर बस्छ। विषयासक्त जीवहरू बन्धनमा पर्छन्, वैराग्य र विवेकले युक्त कतिपय जीवहरू मुक्त हुन्छन्। यसरी उक्त श्रुति अनुसार आत्मा नाना छन् भन्ने आभास पाइन्छ। उहाँहरूको भनाइ अनुसार आत्माको एकत्व मान्दा बन्धमोक्षको व्यवस्था पनि मिल्दैन। यदि आत्मा एक छ भने एक जना मुक्त भएमा अरु सबै मुक्त हुनुपर्ने। शुकदेव, वामदेव मुक्त भए भनिन्छ। उनीहरू मुक्त हुँदा अरु सबै जीव मुक्त हुनुपर्ने, त्यस्तो त देखिएन। फेरि एक जना बद्ध हुँदा अरु सबै बन्धनमा पर्नुपर्ने, त्यो पनि देखिँदैन, किनकि कोही-कोही त बन्धन तोडेर मुक्त भएका ज्ञानीजन देखिन्छन्, सुनिन्छन् पनि। अर्को कुरा, आत्मा एकमात्र हो भने एक जनाले अरुको मनमा भएको सुख-दुःखलाई जान्नुपर्ने, त्यो पनि देखिंदैन। त्यसकारण आत्मानानात्व मानेमा नै बन्ध, मोक्ष र सुख-दुःखादि ज्ञानको व्यवस्था पनि मिल्छ। कुनै पनि कुरामा लोक-सामञ्जस्य पनि हुनुपर्छ। आत्मा एक छ भन्दा लोकले पनि पत्याउँदैन। आत्मा एक भए परस्पर राग-द्वेष, झै-झगड़ा, मारामुग्री नहुनुपर्ने, तर भएकै देखिन्छ। सर्गको आदिमा 'अहमेको बहुस्याम' भनेर एक परमात्माले अनेक जीव सृष्टि गर्नु भएको प्रसंग अनुसार पनि अनेकात्मवाद नै युक्तिसंगत छ भन्ने उहाँहरूको भनाइ पाइन्छ।

उक्त भनाइको विपरीत एकात्मवादीको विचार यस्तो छ कि स्थूल दृष्टिले हेर्दा आत्मानानात्व प्रतिभासित देखिन्छ तापनि सूक्ष्म दृष्टिले विचार गरेमा आत्मैकत्व नै सिद्ध हुन्छ। शङ्कराचार्यको भाष्यानुसार भनिन्छ 'अजामेकाम्'। श्रुतिले आत्मानानात्व देखाएको होइन, किन्तु अप्रत्यक्षरूपले एकात्मता नै देखाएको हो। आत्मानानात्व मानेमा बन्धनमा परेको जीव मुक्त नभएर अर्को जीव मुक्तहोला, यस्तो त संभव छैन। वास्तविकता यो हो कि जो बद्ध छ त्यो नै ज्ञानद्वारा अज्ञान नष्ट गरेर अज्ञानकृत बन्धनबाट मुक्त हुन्छ। मूर्खसन्तोषन्यायले उक्त श्रुतिले जीवनानात्वाभास देखाएको हो। उक्त श्रुतिको नानात्वाभासलाई श्वेताश्वतरको अर्को मन्त्रले प्रत्यक्षरूपले नै खण्डन गरेको छ—

'एको देवः सर्वभूतेषु गूढः सर्वव्यापी सर्वभूतान्तरात्मा।
कर्माध्यक्षः सर्वभूताधिवासः साक्षी चेता केवलो निर्गुणश्च॥'

यौटै देव (आत्मा) सबै प्राणीमा गुप्तरूपले रहनुभएको छ। उहाँ सर्वत्र व्याप्त भईकन सबै प्राणीहरूको अन्तरात्मरूपले रहनु भएको छ। कर्मको हाकिम अर्थात् कर्मफल प्रदाता पनि उहाँ नै हुनुहुन्छ। सर्वाधिष्ठान भएकोले उहाँ नै सबै प्राणीहरूको निवास स्थान हुनुहुन्छ, उहाँ नै मनका सकलवृत्तिको प्रकाशक साक्षिचैतन्यरूपले विराजमान हुनुहुन्छ र उहाँ केवल (एक) र निर्गुण हुनुहुन्छ।

उक्त श्वेताश्वतर श्रुतिले प्रत्यक्षरूपले आत्मैकत्व प्रतिपादन गरेको छ। आत्मा एक भए तापनि उपाधिले नाना हुन्छ 'एकधा बहुधा चैव दृश्यते जलचन्द्रवत्' धेरै भाँडामा पानी राख्यो भने जस्तै एक चन्द्रमा पनि धेरै देखिन्छ त्यस्तै आत्मा एक भएर पनि अन्तःकरणरूप उपाधिले नाना प्रतिभात हुन्छ। प्रतिबिम्बरूपमा धेरै देखिए तापनि आकाशको चन्द्रमा बिम्बरूपमा यौटै छ त्यस्तो अन्तःकरणरूप उपाधिले आत्मा नाना देखिए तापनि बिम्बभूत साक्षीरूपले देखिने विज्ञानमय आत्मा सुषुप्तिमा अन्तःकरणको लय हुँदा सत्स्वरूप परमदेवका साथ एकीभूत हुन्छ।

'सत्सम्पन्नो भवति, स्वमपीतो भवति' इत्यादि श्रुतिवाक्य यसमा प्रमाण छन्। योगसूत्रमा पतञ्जलि भन्नुहुन्छ 'तदा द्रष्टः स्वरूपेऽवस्थानम्' सकल चित्तवृत्तिको स्वरूपमा अवस्थान हुन्छ। यही स्वरूपस्थितिलाई कैवल्य भनेको छ। कैवल्य माने केवल हुनु अर्थात् परमदेव चैतन्यस्वरूप आत्माका साथ एकीभूत हुनु। चित्तवृत्तिले गर्दा नाना अवस्था नाना घटना आए। त्यसैले आत्माको पनि नानात्व देखिन गएको थियो। सर्ववृत्तिनिरोध भएपछि त्यो निर्विकल्प समाधिको अवस्थामा स्वरूपभूत एकात्मासित एकीभूत भइहाल्छ, तब कुनै द्वैत वस्तु शेष रहँदैन। यदि त्यस बेला पनि अरु द्वैतवस्तु बाँकी रहन्छ भन्छौ भने सर्ववृत्तिको निरोध भएन भन्नुपर्छ। अरु द्वैत वस्तु बाँकी रहन्छ भन्ने भनाइ बाहिर बसेको तटस्थ मानिसको हो कि समाधिस्थ पुरुषको? समाधिस्थ पुरुषको भनाइ हो भन्न सकिंदैन, किनकि त्यसबेला ऊ एकात्मा भएर बसेको छ। बाहिर स्थित तटस्थ मानिसको भनाइ अज्ञातकृत भएको हुनाले साँचो होइन। वास्तवमा भन्ने हो भने समाधि अवस्थामा अर्थात् 'न वेद बाह्यं न च किञ्चिदन्तरम्' यस्तो स्थितिमा बाहिर बसेर द्वैतको कुरा गर्ने मानिस छँदै छैन।

अज्ञातकृत मनका नाना वृत्तिले गर्दा नानात्वको आभास भएको हो। आभासरूप भएको हुनाले नानात्व साँचो होइन। मनको लय भएपछि समाधि अवस्थामा योगी ब्रह्मीभूत भएर एकात्माको नै अनुभव गर्नुहुन्छ भन्ने कुरा गीता षष्ठ अध्यायमा भगवान्ले भन्नुभएको छ—**'प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम्। उपैति शान्तरजसं ब्रह्मभूतमकल्मषम्॥'**

यदि जीव एकमात्र हो भने सृष्टिकर्ता ईश्वर जीवदेखि भिन्न हो कि अभिन्न हो, यस्तो शंका हुन सक्दछ। यसमा भनिन्छ-सृष्टिकर्ता ईश्वर जीवदेखि भिन्न होइन। छान्दोग्य षष्ठ अध्यायमा भनेको छ-'सदेव सोम्येदमग्र आसीत्' 'तत् तेजोऽसृजत' सृष्टिको पहिले सद्रूप आत्मामात्र विद्यमान थियो, सृष्टिको समयमा त्यही सदात्माले तेज सृष्टि गऱ्यो। सृष्टि माने जाग्रत् र स्वप्न हो। यो सर्ग खडा हुनुभन्दा पहिले आफू कस्तो थियो? सुषुप्तिमा आफू एक सद्ब्रह्मरूपले विद्यमान थियो। त्यसैले अज्ञानोपाधिरूप सृष्टिशक्तिले सम्पन्न भएर जाग्रत् र स्वप्नरूप सृष्टिको आभास रच्यो र नाना आकार जीव र जगत्रूपले भासित भयो। यो सर्गाडम्बर केवल आफूको विवर्तमात्र हो, परिणाम होइन। त्यसैले सुषुप्तिमा सम्पूर्ण सृष्टिलाई आफैंमा समेटेर अद्वितीय आत्मरूपले विराजमान हुन्छ। अधिष्ठानतिर हेरेमा एकात्मा सिवाय दोस्रो वस्तु देखिंदैन। अधिष्ठानलाई भुलेपछि नाना आकार भासित हुन्छ, तर त्यो आभास मरूभूमिको पानी झैं हो, साँचो होइन। 'माया भासेन जीवेशौ करोति' जीवभाव र ईश्वरभाव मायाको चेतन आभास हो र जगत् जडाभास हो। त्यसैले जीव, जगत्, र ईश्वरभाव मायाकृत हुनाले सत्य होइनन्। सत्य वस्तुको कहिल्यै पनि अभाव हुँदैन। सुषुप्तिमा जीव, जगत् र ईश्वरभाव रहँदैन, केवल अद्वितीय आत्मा आफू बाँकी रहन्छ। 'तत् सत्यं स आत्मा तत्त्वमसि श्वेतकेतो' त्यही सत्य हो र त्यही आत्मा हो, त्यो आत्मरूप तिमी नै ब्रह्म हौ, भनेर उद्दालक ऋषिले छोरा श्वेतकेतुलाई उपदेश दिनुभएको छ।

ब्रह्म दुईटा छ भनेर कुनै पनि वादी भन्न सक्तैन। ब्रह्म एक भएपछि आत्मा पनि एक हुने नै भयो। आत्मा नै ब्रह्म भएको हुनाले 'तत्त्वमसि' महावाक्यमा 'असि' पदले अखण्डार्थता बुझाएको छ भनी विद्वान्हरू भन्नुहुन्छ। त्यसो हुनाले आत्मा र ब्रह्म एउटै अखण्ड वस्तु हो, त्यसमा टुक्रा छैन। त्यो अखण्डता सदा विद्यमान छ। त्यसको ज्ञान हुनु र नहुनुमा भेद छ। ज्ञानमा एक आत्मब्रह्म सिवाय दोस्रो वस्तु छैन। अज्ञानमा भ्रमले मिथ्या नानात्वाभास देखिन्छ तर त्यो डोरीको सर्प झैं झूटो हो, साँचो होइन। अज्ञानीहरू विद्वान् भएर पनि मायाको जालमा फँसेर आत्मा नाना छ भनी बरबराउँछन्। हठवादी तिनीहरू शास्त्रको मर्म जान्दैनन्, आफ्नै अनुभव र ज्ञानवान् महात्मा पुरुषको भनाइलाई पनि स्वीकार गर्दैनन्। तिनीहरू एकात्मा मानेमा 'एकमुक्तौ सर्वमुक्तिप्रसंगः' भनी एकात्मवादीलाई दोष दिन्छन्, तर तिनीहरू सुषुप्ति र समाधितिर दृष्टि दिंदैनन्। केवल संसारतिर मात्र दृष्टि दिन्छन् र संसारलाई अड्याउन खोज्दछन्। यो संसारलाई अड्याउन जतिसुकै यत्न गरे पनि सुषुप्ति र समाधिमा सिन्को पनि रहँदैन, भए पो रहोस्, जो छ त्यही रहन्छ। सद्वस्तुको कहिल्यै पनि अभाव हुँदैन। जब दोस्रो वस्तु नै छैन भने ज्ञान प्राप्त भएपछि नभएको संसार रहँदैन भनी किन चिन्ता लिनुपऱ्यो?

अज्ञानावस्थामा जसले आफूलाई बद्ध भनी मानेको थियो, ज्ञानद्वारा अज्ञान नष्ट भएपछि त्यही मानिस मुक्त हुन्छ। मुक्त हुनुको माने हो स्वरूपमा अवस्थान। स्वरूपमा बसेर हेर्दा आफूदेखि भिन्न दोस्रो मानिस देखिंदैन। त्यसकारण एक जीव

मानेमा बन्धमोक्ष व्यवस्था मिल्दैन भन्ने अज्ञजनको भनाइ ठीक हैन। अज्ञानी अज्ञानीको संख्या बढाउन र संसारलाई स्थिर गराउन खोज्छ तर संकल्पबाट बनेको मिथ्या संसार संकल्परहित भएपछि रहँदैन। मानिस आफ्नै संकल्पले बन्धनमा परेको छ र निःसंकल्प भएपछि स्वयं मुक्त हुन्छ भनी योगवासिष्ठमा बताएको छ। संकल्परहित भए अर्थात् नचिताए संसार छैन। यो संसार संकल्पको हाट बजार हो। संकल्प झिकेमा केही छैन, केवल अधिष्ठानमात्र शाश्वत आफू ब्रह्मरूपले विराजमान छ।

एक आत्मा मानेमा अरुको मनको कुरा जान्नुपर्ने भन्ने शंका पनि ठीक होइन। ज्ञान प्राप्त गरेर आत्मस्वरूपमा स्थित भएपछि दोस्रो मानिस कहाँ छ र उसको मनको कुरा जान्नु। हो, व्यवहारकालमा कसै कसैले यौगिकसिद्धि प्राप्त गरेर अरुको मनको कुरा जान्न सक्छन्, तर त्यो मायिक कुरा हो। माया भित्रको कुरा साँचो हुँदैन। अथवा अर्काको मनको कुरा जान्न पनि योगद्वारा एकात्मता हासिल नगरीकन सकिंदैन। जब परस्पर एकात्मता सिद्ध गरिन्छ तब आफू र अर्को भन्ने रहन सक्तैन।

बृहदारण्यकमा भनेको छ 'त्रयः आवसथाः, त्रयः स्वप्नाः' जस्तो यौटा मानिस तीन कोठामा गमनागमन गर्छ। त्यस्तो एक आत्मा तीन अवस्थामा गमनागमन गर्छ तर ती तीनै अवस्था स्वप्न (मिथ्या) हुन्। तीन अवस्था मिथ्या भएको हुनाले गमनागमन गर्नु भन्ने कुरा पनि वास्तविक होइन। त्यसकारण आत्मा आफ्नो तुरीय स्वरूपको महिमामा नै अवस्थित छ। तुरीय (चतुर्थ) भन्नु पनि तीन अवस्थाको अपेक्षाले हो। जब तीन अवस्था मिथ्या हुनु तब तुरीय भन्ने पनि साँचो होइन, त्यसकारण आत्मालाई तुरीयातीत भनेको छ। यो द्वैत संसार अलिकति त कतै होला कि भन्ने शङ्का-निवारणार्थ प्रत्यक्षरूपमा श्रुतिले भनिदिनुभयो-'नेह नानास्ति किञ्चन' आत्मस्वरूपमा नाना भन्ने अलिकति पनि छैन। यसरी श्रुतिले प्रत्यक्ष निषेध गर्दा-गर्दै पनि नाना आत्मा (जीव) छन् भनी मान्नु अज्ञताको परिचायक सिवाय अरु केही होइन।

मुमुक्षु जनले सर्वदा एकात्मताको भावना गर्नुपर्छ। संसार छ, द्वैत वस्तु छ-यस्तो मानेसम्म वासनाको क्षय हुन सक्दैन। 'मुक्तिं प्राहुस्तदिह मुनयो वासनातानवं यत्' वासनाको विनाशलाई मोक्ष भनेको छ। संसारको झिलिमिलीमा भुलेपछि वासना झन् झन् बढेर जान्छ र मानिस जन्ममृत्युको चक्करमा घुमिरहन्छ र दुःख पाउँछ। भगवान् श्रीकृष्णले गीताको अन्तिम उपदेशमा भन्नुभयो-'सर्वधर्मान् परित्यज्य मामेकं शरणं व्रज'। सारा धर्म-अधर्मको त्याग गरेर त्यागकर्ता अहंकारको पनि त्याग गर र एकात्मताको भावना गर, अर्थात् एक अद्वितीय सर्वात्मा म (ब्रह्म) लाई आफ्नो वास्तव स्वरूप भनी जान। यस्तो अद्वैतात्मज्ञानबाट नै तिमी शोक र मोहबाट पार हुन सक्छौ।

हामीहरूले शोक-मोहबाट पार भएर परम शान्ति लाभ गर्न एकदेवको उपासना गर्नुपर्छ र त्यो एक देवलाई आफ्नै स्वरूप भनी जान्नुपर्छ। 'एको देव इति श्रुतेः' देवता एकमात्र छ। धेरै देवता छैनन्। सबैको हृदयमा नित्य प्रकाशमान चैतन्य आत्मालाई देवता भनेको छ। सत्संग र सत्शास्त्रको अभ्यासबाट आत्मदेवलाई यथार्थमा जानेर साक्षात्कार गर्नुपर्छ। तब मात्र परमशक्ति प्राप्त हुन्छ। नानात्व देखेसम्म राग-द्वेष जाँदैन र मन शान्त हुँदैन।

यद्यपि यो जीवैकत्ववाद सर्वसाधारणलाई अनौठो जस्तो लाग्छ, तथापि सूक्ष्म दृष्टिले हेरेमा संगत हुन जान्छ। पुरुष-सूक्तमा भनेको छ-'पुरुष एवेदं सर्वम्' भूत, भविष्य र वर्तमानमा जे जति छ त्यो सब पुरुष मात्र हो। 'पुरे शरीरे शेते इति पुरुषः' शरीर भित्र स्वयं प्रकाश चैतन्यरूपले विराजमान आत्मा नै पुरुष हो। आत्माको यथार्थ ज्ञान भए आत्मा नै ब्रह्म हो। ब्रह्मलाई गीता पञ्चदश अध्यायमा पुरुषोत्तम भनेको छ। त्यहाँ क्षर, अक्षर र पुरुषोत्तम यस्तो विभाग देखाएको छ। भूत, भौतिक जगत् क्षर हो र सृष्टिकर्ता ईश्वर (परा प्रकृति) अक्षर हो। क्षर र अक्षर ब्रह्मदेखि भिन्न होइन। त्यसैले क्षरब्रह्म र अक्षरब्रह्म भन्ने चलन छ। क्षर र अक्षररूप कल्पित दुई विभाग साँचो होइन, यस्तो जानेर तिनको परित्याग भए शेष आत्मा पुरुषोत्तमरूपले विराजमान हुन्छ।

सारा श्रुति, स्मृति र पुराणहरूले ब्रह्मैकत्व प्रतिपादन गरेको छ। ब्रह्मैकत्व र आत्मैकत्व भन्नु पर्याय शब्द हो। त्यसकारण ब्रह्म र आत्मामा भेद देख्न हुदैन। बृहदारण्यकमा भनेको छ-'उदरमन्तरं कुरुते अथ तस्य भयं भवति' ब्रह्म र आत्मामा जो अलिकति पनि भेद देख्छ, त्यसलाई भय हुन्छ। ब्रह्म र आत्मामा भेददर्शी पुरुष अभयपद प्राप्त गर्न सक्तैन र जन्म-मरणरूप संसार-समुद्रको भुमरीमा घुमिरहन्छ। त्यसकारण आत्मैकत्वपक्षलाई स्वीकार गर्नु नै परम कल्याणको मार्ग हो।

# ❋ हाम्रो धर्म र संस्कृति ❋

**वासुदेव ढकाल**

शास्त्रमा धर्मका लक्षण धरै छन् तर यथार्थमा धर्मको मर्म बुझ्न चाहीँ धैरै गाह्रो छ। सामान्यतः लोक व्यवहारमा पुण्य कर्मलाई धर्म र पाप कर्मलाई अधर्म भन्ने चलन छ। धर्म गरेपछि सुख पाइने र पाप गऱ्यो भने नर्क जानुपर्ने चर्चा शास्त्रमा पनि उल्लेख भएको र प्रचलित जनधारणा पनि यस्तै रहेको पाइन्छ।

'मुण्डे मुण्डे मतिर्भिन्ना:' भने झैं धर्म पनि विभिन्न रूपले परिभाषित भएको शास्त्रमा पाइन्छ। **'धारणाद् धर्म इत्याहुः', 'धर्मो विश्वस्य जगतः प्रतिष्ठा', 'धर्मस्य सूक्ष्मा गतिः', 'धर्मस्य तत्त्वं निहितं गुहायां, 'महाजनो येन गतः स पन्थाः' 'एक एव सुहृद् धर्मो निधनेप्यनुयाति यः' 'वेदोऽखिलो धर्म मूलम्'** इत्यादि। संक्षेपमा भन्नुपर्दा धर्मलाई कर्त्तव्याकर्त्तव्यको विवेक भन्नु नै मनासीव होला अथवा गीतामा 'स्वभावोध्यात्ममुच्यते' भने झैं धर्म मनुष्यको स्वभाव हो, आभूषण हो। भनिएको पनि छ—

आहार-निद्रा-भय - मैथुनञ्च सामान्यमेतत् पशुभिर्नराणाम्।
धर्मो हि तेषामधिको विशेषो धर्मेण हीनः पशुभिःसमानः॥

अझ स्पष्टसंग भन्ने हो भने हाम्रो शास्त्रमा धर्मको लक्षण यसरी दिइएको छ-

धृतिः क्षमा दमोस्तेयं शौचमिन्द्रियनिग्रहः।
धीर्विद्या सत्यमक्रोधो दशकं धर्मलक्षणम्॥

वस्तुतः धर्म एक नितान्त चोक्खो वस्तु हो जो स्वयं प्रकाशित छ, जसलाई विशेषण लगाउने कुनै आवश्यकता नै पर्दैन। हिन्दु, बौद्ध, जैन इसाई, इस्लाम आदि विभिन्न संप्रदायमा धर्मलाई जोडेर मानव-मानवमा तेरो-मेरोको भावना ल्याउनु आजको विश्वबन्धुत्वको दृष्टिमा अवश्य पनि यति सारो उपयुक्त होओइन, तथापि हामी मनुष्य मात्रको लागि सर्वप्रथम मनुले चलाएको मानव धर्म नै सर्वश्रेष्ठ धर्म हो भन्न हिच्किचाउन चाहीं कदापिं हुँदैन। यो मानव धर्म वेद सनातन छ। **'वेदोऽखिलो धर्म मूलम्'** वेद नै अखिल धर्मको मूलस्रोत हो। सनातन धर्म भनेको यही वेद प्रतिपादित धर्म हो। त्यसैले यसलाई आर्यधर्म वा वैदिक धर्म पनि भन्न सकिन्छ। वैदिक धर्म कुनै एक व्यक्ति विशेषले चलाएको धर्म होइन। वेद अपौरुषेय हो। वेदमा यस्तो मन्त्र छ **'ब्राह्मणोस्य मुखमासीद् वाहू राजन्यः कृतः। ऊरू तदस्य यद्वैश्यः पद्भ्यां शूद्रो अजायत।'** अर्थात् ब्राह्मणहरू भगवान्का मुखबाट, राजन्य वर्ग (क्षत्रिय वर्ग) दुई हातबाट, वैश्यवर्ग तिघ्राबाट र शूद्रवर्ग पाउबाट उत्पन्न भए। यहाँ चारै थरि एउटै भगवान्का शरीरबाटै उत्पन्न भएकाले सबै समान महत्वपूर्ण छन्। यसरी वेदबाट नै वर्णाश्रम धर्मको व्यवस्थापन भएको हो।

वर्णाश्रम धर्मको अर्थ व्यापक छ। यसलाई साधारण तवरले चुल्हो चम्कोको मात्र संकुचित घेरामित्र राख्नु आजको यो फराकिलो दुनियामा मनासीव देखिंदैन। अतः वर्णाश्रम धर्म या व्यवस्था अव यसरी चार वर्णमा विभाजित गर्न समय सापेक्ष देखिएला! ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र यो वर्णव्यवस्थाले देश काललाई अतिक्रमण गरेको छ। समय सापेक्ष सिद्धान्त अनुसार आजको परिप्रेक्ष्यमा ब्राह्मण भन्ने वित्तिकै संसार भरिका पठन-पाठन वृत्तिमा लागेका समस्त बुद्धिजीवी

वर्ग, त्यस्तै क्षत्रिय भन्दा सबै जनताको सुरक्षाको व्यवस्था गर्ने जन समूह, अनि वैश्य वर्ग भन्नाले व्यापारको काममा कुशल व्यक्ति वा संस्था र शूद्र वर्ग भन्दा सबैलाई सेवा गर्ने काममा अग्रसर हुने सकली अर्थका समाजसेवी बन्धुहरूलाई संझने बेला आएको छ। साँच्ची भन्ने हो भने आजको समयको माग 'तँ ठूलो कि म ठूलो' भन्ने होइन, सबै एक जुट भई परस्परमा समन्वय गरी अगाडि बढ्नु हो।

पहिले पहिले धर्मको क्षेत्र ज्यादै विस्तृत भएको देखिन्छ। यसमा धर्म सम्बन्धी कुरा मात्र नभएर अरु सामाजिक, आर्थिक, राजनैतिक, नैतिक, ऐतिहासिक, वैज्ञानिक, आध्यात्मिक आदि समाजका हर क्षेत्रका जुन् सुकै कुराहरू, र समस्याहरू अटाएका थिए। अरु त के कुरा, देशको कानून र शासन प्रणाली समेत वेद, रामायण, महाभारत, मनुस्मृति, याज्ञवल्क्य स्मृति, कौटिल्य अर्थशास्त्र आदि धार्मिक ग्रन्थका आधारबाटै निर्मित हुन्थे। सबै विषयका कुराहरू धर्मको कसीमा घोटिन्थे र निक्यौल निकालिन्थ्यो अब आजको स्थितिमा धर्मको क्षेत्र केही साँघुरिएको जस्तो प्रतीत हुन्छ। यसले आध्यात्मिकता र केही मात्रामा नैतिकतालाई मात्र अँगालेको देखिन्छ र अन्य कतिपय विषय यसले संस्कृतिलाई सुम्पेको प्रतीत हुन्छ, तापनि हाम्रो धर्म अंग्रेजीको रिलिजन (Religion) भन्दा त अझै पनि ठूलो छ, व्यापक छ।

सामान्यतः धर्म दुई किसिमका छन्-सकाम रूपले गरिने धर्मकार्य र निष्काम रूपले गरिने धर्मकार्य। सकाम धर्म भन्दा कामना अर्थात् भाकल राखेर गरिने धर्म बुझ्नुपर्छ भने निष्काम धर्मभन्दा कुनै कामना नै नराखी 'श्रीकृष्णार्पणमस्तु! वा शिवसंकल्पमस्तु!' भनी गरिने धार्मिक क्रियाकलाप संझनुपर्दछ। त्यसैले धर्म र अधर्म अर्थात पुण्य र पापको विषयमा भगवान् वेद व्यासको अठारै पुराणको सारभूत स्वरूप दुई कुरा यसरी मननीय भएको छ-

**अष्टादशपुराणेषु व्यासस्य वचनद्वयम्। परोपकारः पुण्याय पापाय परपीडनम्॥**

धर्मको विषयमा श्रीकृष्णले अर्जुनलाई गीतामा ठाउँ ठाउँमा यसरी भन्नु भएको छ—

**श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनिष्ठितात्। स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः॥ ३/३५**

यहाँ स्वधर्म भन्नाले वर्णाश्रम व्यवस्था बमोजिम स्वकर्तव्य भन्ने बुझ्नुपर्छ। माथि भने झैं धर्म भनेको स्वभाव हो, कर्त्तव्यनिष्ठा हो। अनि फेरि धर्मको सम्बन्धमा भगवान् भन्नुहुन्छ-

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत। अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम्॥**

**परित्राणाय साधूनां विनाशय च दुष्कृताम्। धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे॥**

धर्म रक्षाको लागि स्वयं भगवान्ले यत्रो कष्ट उठाउनु भएको छ। अनि यति मात्र हो र! भगवान् अन्तमा अर्जुनलाई यसरी भन्नुहुन्छ-

**सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज। अहं त्वा सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुच॥ १८/६६**

अनि आखीरमा हामीले धर्मको विषयमा 'कृष्णं वन्दे जतद्गुरुम्' भन्नै पर्दछ। त्यसैले होला अर्जुनले गीताको शुरुमा नै प्रभुसंग यसो भनेका छन्-

**कार्पण्यदोषोपहतः स्वभावः पृच्छामि त्वां धर्मसंमूढचेता॥**
**यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम्॥**

सकाम धर्म किंवा लोकधर्मको विषयमा कसै कसैले यसो पनि भनेका छन्-धर्मको नाममा स्वार्थ सिद्धि गर्न

खेज्नु, भाकल गर्नु भनेको एक किसिमको लगानी गर्नु हो, चिठ्ठा हाल्नु हो, जूवा खेल्नु हो। त्यसैले यस किसिमको क्रियाकलापलाई सक्कली अर्थमा धर्मको संज्ञा दिन कसरी मिल्ला र?

यस सम्बन्धमा ठूला वैज्ञानिक आइन्स्टाइनले भनेका छन्-(God does not play dice) अर्थात् ईश्वर पाशा खेल्दैनन्।

माथि बताइएका कुराहरूका अतिरिक्त धर्मका विषयमा यस्ता विचारधाराहरू पनि सुन्नमा आएका छन्—

धर्म अभिनय होइन। अनुकरण होइन। धार्मिक जीवनमा कोही कसैको काँधमा चढ्न सक्तैन। आफ्नो खुट्टाले आफैं उभिनुपर्दछ। भुइँमा टेक्नेलाई लड्ने डर हुँदैन।

धर्म त साधना हो समाधिको। धर्म अन्तः प्रवेश हो। भित्र जाने बाटो हो। त्यसैले अन्तर्मुखी हुनु नै वस्तुतः धार्मिक हुनु हो।

धर्मको सम्बन्धमा केही कुरा जान्नु छ भने पुस्तक पढ्नु जरूरी छ तर धर्मलाई नै जान्नु छ भने पुस्तक पढ्ने जरूरी छैन। पण्डित त्यो हो जो धर्मको सम्बन्धमा सब कुरा जान्दछ, किनभने उसले शास्त्रको भारी बोकेको हुन्छ। तर धार्मिक चाहीं त्यो हो जसको प्रज्ञा खुलेको छ 'ऋतम्भरा तत्र प्रज्ञा'। (यो.सू.४८)।

जीवनको रहस्यको अनुभव गर्नु नै धर्मको पहिलो सिंडी हो। जीवनको साक्षात्बाट नै व्यक्ति धार्मिक हुन्छ।

धर्म जीवनको काव्य हो, फिलोशफी होइन, तत्त्वज्ञान होइन। धर्म विवेकमा आधारित छ। ज्ञान नै यसको प्राण हो। धर्म त बरु चेतनाको विज्ञान बन्न सक्तछ।

अब संस्कृतिको कुरा गरौं। संस्कृति भनेको संस्कार गरिएको, माझिएको, सफा तुल्याइएको विषय वा वस्तु हो। अंग्रेजीमा यसलाई कल्चर (Culture) भन्दछन्। समग्र रूपमा भन्ने हो भने संस्कृतिलाई मनुष्यको उत्कृष्टताको उज्यालो रूप मान्न सकिन्छ। संस्कृतिले गर्दा नै मानिस सर्वश्रेष्ठ वा सर्वोत्कृष्ट बुद्धिजीवी प्राणी मानिएको हो। तर यसलाई संकुचित रूपमा भन्नुपर्दा संसारमा रहेका मनुष्य समाजका विभिन्न जात-जातिका, आ-आफ्ना रूपरंग, आ-आफ्ना पन, शैली र आ-आफ्ना वैशिष्ट्यको नाम हो संस्कृति। त्यसैले संस्कृतिको क्षेत्र धर्मको क्षेत्रभन्दा पनि यस अर्थमा धेरै गुना ठूलो र फराकिलो मान्न सकिन्छ, किनभने संस्कृतिमा नै कुनै देश वा जातिको धर्मकर्म, रहनसहन, वेशभूषा, भाषाबोली, चालचलन, रीतिथिति, भूगोल इतिहास, कला साहित्य, चाडवाड, तिथिपर्व, खानपान, आजा-पूजा, खेलकूद, यात्रा-पर्यटन र मनोरञ्जनका कुराहरू समेत पर्न सक्तछन्। आर्य संस्कृतिमा भारतीय, ग्रीक, ल्याटिन आदि प्रसिद्ध छन् भने मंगोल महत्वपूर्ण छन्। तर अमेरिका भने भौतिक रूपमा धनी देश भए तापनि संस्कृतिको दृष्टिमा गरीब छ।

संस्कृतिको क्षेत्रमा अब नेपाल र नेपालीतर्फ लागौं। नेपाल सांस्कृतिक क्षेत्रमा धेरै धनी देश हो। हिन्दू संस्कृति र बौद्ध संस्कृतिको संमिश्रण नै खास नेपाली संस्कृति हो। नेपाल तन्त्रप्रधान देश पनि भएकोले यहाँको संस्कृतिमा तन्त्रले पनि महत्वपूर्ण भूमिका ओगटेको पाइन्छ। यो इलाका आर्यावर्त्त, हिमवत्खण्ड पाशुपत क्षेत्र भएकोले परापूर्व कालदखि नै यो क्षेत्रलाई धार्मिक क्षेत्र, देवभूमि आदि नामले पुकारिने गरेको हो। हुन पनि यो देश यस्तो छ जहाँ सबै किसिमको हावापानी पाइन्छ।

यस देशको उत्तरतर्फ मंगोल जातिका मानिसहरू धेरै छन् भने अन्यत्र आर्य जातिका मानिस प्रशस्तै भेटिन्छन्।

वैदिक धर्मका आराध्य देव पशुपतिनाथ यहाँ छन् भने बुद्धधर्मका अग्रदूत गौतम बुद्ध यहीं जन्मेका हुन्। यसैले संसारका ३ अरब भन्दा बढी मानिसहरूको धार्मिक केन्द्र किंवा पावन भूमि नेपाल अधिराज्य नै भएको कुरा सामान्य ज्ञान भएका जो कोहीलाई पनि थाहै छ। उसमाथि यस देशमा संसारको श्रीपेच सगरमाथा समेत भएकोले यसको प्रसिद्धि अरु बढ्न गएको छ।

**श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहले** काठमाडौं पाटन र भक्तपुर विजय गरे तापनि उनले यहाँको संस्कृतिलाई यथावत् रहन दिए, किनकि यहाँको संस्कृति लिच्छवी र मल्लकालदेखि नै समृद्ध थियो र छ पनि। आज पनि भादगाउँलाई नेपाली कला र संस्कृतिको ज्यूँदो प्रदर्शनीको रूपमा राखिएको छ। यद्यपि पाटनलाई पनि कला र संस्कृतिको रूपमा र काठमाण्डौलाई प्राचीन एवं अर्वाचीन कला र संस्कृतिको केन्द्रको रूपमा महत्वपूर्ण स्थान दिएको हो। हाल संसारका पर्यटकहरूलाई आकर्षण गर्ने हाम्रा विषयहरू निश्चय नै प्राकृतिक, सांस्कृतिक र धार्मिक धरोहर हुन्।

अर्को कुरा, वैदिक धर्म एवं सांस्कृतिक विषयका सम्बन्धमा पहिले पहिले गोमेध, अश्वमेध आदि ठूला ठूला यज्ञयागादिहरू हुन्थे भन्दैमा आजको परिप्रेक्ष्यमा के त्यसो गर्न सुहाउला? पहिलेका ती ऋषिमुनिहरूले गोमेध, अश्वमेध आदि महायज्ञ गरे गराए तापनि हव्य कव्यको कुरा उठाए तापनि उनीहरूमा त्यस्ता प्राणीहरूलाई बचाउने शक्ति थियो र उनीहरूले ती गाई, घोडा वा मान्छे नै जो भए पनि त्यसलाई बचाउँथे वा दिव्य देह प्रदान गरे गराएर स्वर्ग पठाउँथे भने आजका सिसीमुनिहरूले के त्यसो गर्न सक्छन्? मार्न त्यसले मात्र सक्तछ जसले बचाउन पनि सक्तछ। बचाउन नसक्ने जावालाई मार्ने अधिकार दिन उपयुक्त होला र?

संसारमा एक मात्र हिन्दू अधिराज्य भएको हाम्रो नेपालमा धार्मिक एवं सांस्कृतिक रूपमा पशुपति क्षेत्र, लुम्बिनी क्षेत्र आदि ठाउँहरू विश्व सांस्कृतिक संपदाको क्षेत्रमा गणना भैसकेका छन्। अतः यस्ता क्षेत्रहरूमा धर्म वा संस्कृतिको नाममा गरिने पशु हत्याको काम पूर्णरूपले बन्द हुनु नितान्त आवश्यक छ। यो हिन्दूराष्ट्र नेपालमा कुनै पनि मन्दिर वा मूर्तिमा रगतको छिटा पर्न दिनुहुँदैन। मन्दिर र मन्दिरका आसपासका ठाउँहरू हमेशा स्वच्छ, सफा र पवित्र गराउनमा सबैले चाख मात्र लिने होइन, यसलाई कार्यरूपमा उतार्न पनि दिलो ज्यानले कोशिस गर्नुपर्दछ।

अन्तमा '**अहिंसा परमो धर्मः**' भन्ने सिद्धान्तलाई ॐकार परिवारका सबै हिन्दू, बौद्ध, जैन, सिख आदि सबैले मानिआएकै छन्। यसमा दुईमत होओइन। अतः धर्म र संस्कृतिको नाममा खिचलो उठाउने काम कुनै क्षेत्रबाट पनि सुहाउँदैन। यतो धर्मस्ततो जयः।

# ❁ जन्म र मरणबाट छुटाउने तथ्य ❁

**ऋषिकेश शर्मा अधिकारी**

आज चराचर जगत्मा मानवले सद्‌गुरुको अभावले अज्ञानको कारणले अन्नमय आदि पञ्चकोश र जाग्रत् आदि तीन अवस्थाहरूमा अति आसक्त भएर अनादि कालदेखि जन्ममृत्युको प्रवाहमा पौड्दै देहलाई नै आत्मा सम्झी विभिन्न दुःख र कष्टहरूको सामना गरिरहनुपरेको छ। यसैले **समाश्रयेत् सद्‌गुरुमात्मलब्धये** भनेर गुरुको महत्त्व बताउनु परेको हो, किनभने आत्मज्ञानका लागि गुरुका शरणमा जानु अति आवश्यक हुन्छ। गुरुको उपदेश अनुसार श्रवण, मनन र निदिध्यासन नगरी आत्मैक्यभाव उत्पन्नहुनु असम्भव छ। यी उपायहरूबाट आत्मासाक्षात्कार भएपछि मोक्ष प्राप्त हुनु नै जन्म मरणरूपी प्रवाहबाट छुटकारा पाउनु हो। अतः वेदान्त शास्त्रमा **'ऋते ज्ञानान्न मुक्तिः'** भनिएको हो। यसै प्रसङ्गलाई स्पष्ट रूपले विवेचना गरिन्छ :—

व्यापक सच्चिदानन्द परमात्मा देहमा विद्यमान हुँदा हुँदै शरीरलाई चेतनआत्मा संझनु अविद्याको कारणले हो। आत्मा देह होइन किनकि देह जड़ र अनित्य छ तर आत्मा चेतन र नित्य छ। शरीरको उत्पत्ति र नाश हुन्छ परन्तु चेतन आत्मा उत्पत्ति र क्षय बाट रहित र नित्य मुक्त छ। जस्तो घरको मालिक घर होइन तर घरसंग त्यो पूर्ण परिचित छ यसरी नै शरीरको स्वामी पनि शरीरबाट अलग छ त्यो स्वामी देह होइन शरीर त्यसको बस्ने घर मात्र हो; विश्राम गर्ने रहने स्थान मात्र हो। जस्तो आकाश सर्वव्यापक, निरवयव अर्थात् आकार प्रकार नभएको छ भने पनि त्यो आकाशका प्रतिविम्बहरू स्वच्छ जलाशयहरूमा मात्र देखिन्छन्। त्यही स्वच्छ जलमा मात्र प्रतिबिम्ब देखिनु त्यसको उपलब्धिको स्थान हो। फेरि जुन पदार्थहरूमा मनुष्यहरूले 'मेरो' शब्द प्रयोग गर्दछन्, त्यो मानिस ती वस्तुहरू भन्दा भिन्न छन्। त्यस्तै शरीर आदि अङ्गहरूमा मेरो शब्द गर्ने आत्मा पनि तिनीहरूबाट भिन्नै छ आत्मा देह तथा इन्द्रियहरूलाई देख्ने द्रष्टा हो र देह इन्द्रिय तथा प्राण आत्मा होइनन्। किनकि स्वप्नमा सबै इन्द्रियहरू शिथिल हुन जान्छन्। स्वप्नको द्रष्टाले सपनामा नयाँ देह इन्द्रिय आदिहरूलाई रचना गर्दछ। मन पनि आत्मा होइन, किनभने प्रगाढ़ निद्रा अवस्थमा वा सुषुप्तिमा मन पनि अज्ञानमा लय हुन जान्छ तर आत्मा त्यस बेलामा पनि विद्यमान रहेर काम गरिरहेको हुन्छ। त्यस समयमा सुखको अनुभव कहिल्यै पनि हुन्न तर विविध अनुभूति भने अवश्यहुन्छ, जब जागा हुन्छ अनि भन्दछ कि–म यस्तो सुखपूर्वक सुतेको थिएँ जसमा मलाई कुनै पनि ज्ञान भएन। त्यस समयको स्मृति अनुभव पूर्वक नै भएको हो। अनुभव नभएको खण्डमा स्मृति हुँदैन। ठीक यसैबाट प्रमाणित हुन्छ कि आत्मा सुषुप्ति कालमा पनि विद्यमान छ, जाग्रत् स्वप्न सुषुप्ति यी तीनवटै अवस्थाको र कारण, सूक्ष्म, स्थूल यी तीनवटै शरीरहरूको आत्मा साक्षी हो र यिनीहरू भन्दा पृथक् छ। प्राण पनि जड़ हो। सुषुप्ति अवस्थामा सबै इन्द्रिय शिथिल हुन्छन् तर प्राण लय वा शिथिल भएको हुँदैन, किनकि यो चलिरहेको हुन्छ। प्राण चलिरहे पनि यसलाई ज्ञान हुन्न, किनकि यो जड़ हो। यस कारण प्राणलाई पनि सत्ता स्फूर्ति दिएर चलाइरहने पनि आत्मा हो। प्राण आदि आत्मा होइनन्।

आत्मा सबैको प्रकाशक हो र साक्षी पनि हो। शरीर आदिको साथमा मिलेर त्यो कर्ता वा कर्म गर्नेवाला जस्तो भान पर्दछ तर शरीर आदिहरूको सम्बन्धदेखि टाड़ा छ र अकर्ता पनि हुन्छ। कर्तृत्वपना पनि शरीर आदिको साथमा

तादात्म्य अध्यास भएर आएको हो। म देह हूँ म बुद्धि हूँ भन्ने अहम् भावना पनि आत्मामा आरोप लागेको मात्र हो। जस्तो आगोमा गोलाकारको फलाम तातेर रातो रूपको देखिन्छ तर त्यो आगो होइन। आगोद्वारा त्यसको अध्यास भएको मात्र हो। आत्माको प्रकाश (प्रतिबिम्ब) अन्तःकरण, इन्द्रिय र शरीरादिमा पर्दा आत्मवत् प्रतीत भएको हो। आत्मा त अग्नि जस्तै आकार र प्रकारमा अनाबद्ध छ, सधैं मुक्त छ। पाप पुण्यादिहरू र कर्तृत्वदेखि यो अलग्गै छ। अतः आत्मा वास्तवमा अकर्ता नै ठहर्छ। **'असंगोऽयं पुरुषः'** यो आत्मा असंगत छ। पुरुष चेतनशील छ; यसले देहलाई प्रकाश दिन्छ तर पनि त्यो चेतन देह हुन सक्दैन। आफ्नो वास्तविक स्वरूपको अज्ञान भएर मात्र शरीर आदि इन्द्रियहरूमा अहंता र ममताको गर्व लिन्छ। अज्ञानी मनुष्य कामना र तृष्णाको पशु बनेर अचेतन जड़को पूजन गर्ने र उपासना गर्ने हुन्छन्। जसमा आदान प्रदान गर्ने चेतना नै छैन र स्वयं जड़ भोग्यरूपको छ। त्यो कसरी पूजित हुने? जसमा चेतन छ। त्यसैले मात्र पूजा स्वीकार गरेर याजकलाई वरदान दिन सक्दछ। त्यही नै पूजनीय हुन्छ।

मानिसहरू अज्ञानको वशमा परेर अकर्तव्यलाई कर्तव्य र कर्तव्यलाई अकर्तव्य भनेर उल्टा धारणामा परेका छन्। घृणाको र मल मूत्रादिको भण्डार यस शरीरमा अति ममता र राग हुनु श्रीमती पुत्रहरूमा ज्यादा प्रेम हुनु अज्ञान हो। त्यस्तै देहाभिमान, जात्यभिमान, विद्याभिमान, धनाभिमान, धर्माभिमान, मानाभिमान, कुलाभिमान आदि नै नित्य-शुद्ध-बुद्ध सच्चिदानन्द स्वरूप ब्रह्मज्ञानको वास्तविक ज्ञानमा बाधक भएका हुन्छन्। अधार्मिक आत्मामा धर्मको कल्पना गर्नु चाहीं शुद्धमा अशुद्धको कल्पना गर्नु हो। त्यसैको नाम अज्ञान हो। म देहादि होइन सच्चिदानन्द स्वरुप एक अद्वितीय ब्रह्म हूँ भन्ने सोचाइ गर्नु ज्ञान हो। यसै ज्ञानले जन्म मरण-रूपी संसारबाट मनुष्यलाई छुटाउँछ। जसरी एउटा महामत्स्य नदीको कहिले यस कुनामा त कहिले उस कुनामा बस्छ र कहिले बीचमा बस्छ। यसमा माछो र नदीको कुनाको साथमा कुनै सम्बन्ध रहन्न, किनकि त्यो नदी माछो भन्दा भिन्न हो। त्यस्तै प्रकारले आत्मा पनि कहिले जाग्रत्मा कहिले स्वप्नमा र कहिले सुषुप्तिमा रहन्छ। आत्माको यिनीहरूको साथमा कुनै सम्बन्ध हुन्न। जाग्रत् अवस्थामा स्वप्न हुन्न, स्वप्नमा जाग्रत् हुन्न, सुषुप्तिमा जाग्रत् स्वप्न हुन्न, र जाग्रत स्वप्नमा सुषुप्ति हुन्न। किनभने यी तीनवटा अवस्थाहरू परस्परमा व्यभिचारी छन्। यहाँ आत्माको व्यभिचार भएको छ। आत्मा सबै अवस्थाहरूमा जस्ताको तस्तै रहन्छ। वास्तवमा भन्ने हो भने सबै अवस्थाहरू आत्मामानै कल्पित भएका हुन्। आत्माद्वारा नै सबै अवस्था इन्द्रिय आदि संचालित रहन्छन्। सत्य एवं चैतन्य तथा सबै कारण र कार्यजगत्को अधिष्ठान स्वरूप आत्मा नै हो। त्यही नै विश्व ब्रह्माण्डका मनुष्यादिको वास्तविक स्वरूप हो। संसारका सबै प्राणीहरू त्यही शुद्ध स्वरूप हुन्, यसमा केही पनि सन्देह छैन। त्यही शुद्ध-सत्य-चैतन्य स्वरूपको ज्ञान प्राप्तहुनु नै मोक्ष प्राप्त भई जन्म-मरणको चक्करबाट सदाको लागि बिदा मिल्नु हो। त्यसैले श्रुतिले **'ऋते ज्ञानान्न मुक्तिः'** अथवा ज्ञान प्राप्त नभई मुक्ति छैन भन्दै आएको हो। अस्तु।



# ❁ मानव-जीवनको चरम लक्ष्यरूप-ईश्वरप्राप्तिका साधनहरू ❁

—प्रेमप्रसाद चौलागाईं

सुख-दुःख, आँसु-हाँसो, मिलन-विछोड, घाम-छायाँ, आरोह-अवरोहको संमिश्रणस्वरूप जीवनमा दिन र रात जस्तै सुख र दुःख घुमी नै रहन्छन्, जबसम्म चरम लक्ष्य प्राप्ति हुँदैन। साधारण लक्ष्य त प्रत्येक मानिसका भिन्नाभिन्नै हुन सक्छन्। ''भिन्नरूचिर्हि लोक:'' संसार नै विविध रूचि र प्रकृतिको सङ्गम हो। यसैले त कोही डाक्टर बन्न चाहन्छन् त कोही इन्जिनियर, कोही व्यापारी बन्न रुचाउँछन् त कोही प्राध्यापक। साधारण लक्ष्यमा विविधता पाइए तापनि चरम लक्ष्य भने समस्त मानव मात्रको एउटै हुन्छ। किनभने समस्त मानवसमूहको उत्पत्तिश्रोत एउटै नै छ। यसैले जबसम्म मानिसले चरम लक्ष्य प्राप्त गर्दैन तबसम्म उसले शाश्वत र वास्तविक आनन्द प्राप्त गर्न सक्दैन। अत: चरम लक्ष्य प्राप्त गर्नको लागि सर्वप्रथमत: यसको स्वरूपलाई केलाउनु युक्तिसङ्गत देखिन्छ। पूर्वीय दर्शनले धर्म, अर्थ, काम र मोक्षलाई नै मानिसका पुरुषार्थ-अर्थात् लक्ष्यको रूपमा तोकेको छ। त्यसमा पनि मोक्षलाई नै परम पुरुषार्थको रूपमा स्वीकार गरेको छ। पूर्वीय दर्शनको यो अवधारणाबाट मानिसको चरम लक्ष्य ''मोक्ष'' नै हो भन्ने प्रमाणित हुन आउँदछ। ''मोक्ष'' को अर्थ हुन्छ- छुट्कारा पाउनु। अर्थात् जन्म र मृत्युको चक्करबाट छुटेर ईश्वरको स्वरूपमा लीन हुनुलाई नै मोक्ष भनिएको छ। अत: जबसम्म मानिसले मोक्ष प्राप्त गर्दैन तबसम्म उसले चरम लक्ष्य प्राप्त गरेको ठहरिंदैन। मानिस ईश्वरको एक अंश हो। अंश जबसम्म अंशीमा मिल्दैन तबसम्म ऊ पूर्णतामा प्राप्त हुँदैन। जसरी समुद्रको अंशस्वरूप नदीको पानी जबसम्म सागरमा पुग्दैन तबसम्म ऊ पूर्णतामा प्राप्त हुँदैन। अंशको अंशीसँग स्वत: आकर्षण हुन्छ। यसैले त पानीको समुद्रप्रति नै र ढुङ्गा माटोको पृथिवीप्रति नै आकर्षण हुन्छ। यसैले त हो कि माथि फ्याकिएँको ढुङ्गा पनि पृथिवीमा नै ठोकिन आइपुग्दछ। तर कहिलेकाही अंशको अन्य पदार्थमा आसक्ति हुन गयो भने उसको आकर्षण त्यतै नै हुन सक्छ। जस्तो कि वर्षायाममा बगेर आएको नदीको पानी खाल्डोमा पऱ्यो भने त्यो शरद्याममा खल्डोमा नै हुन्छ। त्यो पानीको समुद्रप्रति आकर्षण नै हुँदैन। किनभने उसले आफ्नो अंशीसंग पुग्ने मार्ग नै गुमाइसकेको छ। यसैले मानिस पनि ईश्वरको अंश भएकाले यद्यपि ईश्वरप्रति स्वत: आकर्षण त हुन्छ नै तर पनि संसारप्रतिको अत्यधिक आसक्तिको कारणले ऊ संसारमै रमाउँदछ र फस्दछ पनि। ईश्वरलाई प्राप्त नगरीकन शाश्वत आनन्द र चरम सुख प्राप्त नहुने हुनाले ईश्वर प्राप्त गर्नु नै मानिसको चरम लक्ष्य र परम गन्तव्यस्थल पनि हो। चौरासी लाख योनिहरूमा घुम्दै फिर्दै भगवान्‌को अनुग्रह प्राप्त गरेपछि मात्र प्राणी मानव देह प्राप्त गर्दछ। यही मानव देहबाट नै प्राणी ईश्वर प्राप्त गर्न समर्थ हुन्छ। कुनै पनि वस्तु प्राप्त गर्नको लागि अथवा गन्तव्यस्थलमा पुग्नको लागि माध्यम अथवा मार्गको आवश्यकता पर्दछ। अत: भगवत्प्राप्तिको लागि पनि मार्ग अथवा माध्यमको नितान्त आवश्यकता पर्दछ। भगवत्प्राप्तिका साधनहरू हुन्-भक्ति, ज्ञान र कर्म। यद्यपि यी सबै नै भगवान्‌लाई प्राप्त गर्ने मार्ग हुन् तैपनि यिनीहरू सबैलाई अपनाउनु पर्दछ भन्ने कुनै जरूरत छैन। कुन् चाहीं सजिलो र उपयुक्त छ, त्यही मार्गबाट मानिस ईश्वरलाई प्राप्त गर्न सक्दछ, तर लक्ष्य भने एउटै हुनुपर्दछ। जस्तो कि हाम्रो पशुपतिनाथको मन्दिरमा पुग्ने लक्ष्य छ। मन्दिरमा पुग्नको लागि अनेकौं बाटाहरू हुन सक्छन्। जुन् बाटोबाट गएपनि हामी लक्ष्य अनुरूप पशुपतिनाथकै मन्दिरमा पुग्दछौं।

त्यस्तै नै मानिसले भक्ति, ज्ञान र कर्म मध्ये जुन मार्गलाई अवलम्वन गरे पनि ईश्वर प्राप्त गर्ने लक्ष्य छ भने उसले अवश्य नै ईश्वर प्राप्त गर्दछ।

ईश्वरलाई प्राप्त गर्ने प्रथम मार्ग हो-भक्ति। भक्तिको शाब्दिक अर्थ हुन्छ-भजन अर्थात् सेवा। शुद्ध, स्वच्छ, निष्कपट भावनाले ईश्वरको आराधना, उपासना र सेवा गर्नुलाई नै भक्ति भनिन्छ। भक्ति नै ईश्वर प्राप्त गर्ने बलियो खुड्किला हो। कायिक वाचिक, मानसिक विक्षेपलाई शमन गर्ने अतुलनीय सामर्थ्य पनि भक्तिमा नै छ। मानिसको मनलाई सांसारिक आसक्तिबाट हटाएर भगवान्मा पुऱ्याउने अनुपम शक्ति पनि भक्तिमा नै छ। त्यसैले ईश्वर प्राप्त गर्नको लागि अन्य मार्ग भन्दा भक्ति मार्ग नै सरल सहज र परिपक्व छ। यसकारण भक्तिमार्गद्वारा ईश्वरलाई प्राप्त गर्ने हो भने शुद्ध स्वच्छ र निष्कलङ्कित मनले भगवान्को भजन गर्दै सेवा गर्नुपर्दछ। भगवान् बाह्य आडम्बर देखावटी र रमझममा रमाउन चाहनुहुन्न। भगवान्लाई श्रद्धा-पूर्वक अर्पण गरिएको वस्तु नै मन पर्दछ। त्यसैले त भगवान् भन्नुहुन्छ 'चाहे पात नै किन नहोस्, चाहे पुष्प मात्रे किन नहोस्, चाहे फलनै किन नहोस् जसले मलाई भक्ति अर्थात् श्रद्धापूर्वक प्रदान गर्दछ, त्यही नै ग्रहण गर्दछु' यसैले त होला भगवान् दुर्योधनको चौरासी व्यञ्जन र अनेक थरीका मिष्ठान्नले युक्त भएको भोजनलाई त्याग गरेर विदूरको घरमा सुखा भोजनको लागि जानुभयो। शवरीले फलको बोक्रा खुवाउँदा पनि अति नै मीठो मानेर खानुभयो। किनभने विदूर र शवरीको मन स्वच्छ, निष्कपट, भावनाले परिपूर्ण थियो। यसैले त भगवान्ले विदूर र शवरीकहाँ गएर भोजन गर्न मन पराउनुभयो न कि कलुषित भावनाले भरिएको मन भएको दुर्योधनकहाँ। भगवान् भन्नुहुन्छ-**'अहं भक्तपराधीनः'** म भक्तको अधीनमा छु। भक्तहरूको चाहनालाई पूर्ति गर्नु नै मेरो प्रमुख कर्तव्य हो। जो सच्चा भक्त र उपासक छ उसलाई भगवान्ले जस्तो सुकै आपत्तिबाट पनि रक्षा गर्नुहुन्छ। उदाहरणको लागि हामी प्रह्लादलाई लिन सक्छौं। प्रह्लाद भगवानका सच्चा भक्त थिए। उनलाई मार्नको लागि हिरण्यकशिपुले के के सम्म गरने ? ठूला-ठूला भीरबाट खसायो, अनेक हात्तीहरूबाट कुल्चायो। अनेक शस्त्रबाट हत्या गर्न खोज्यो। अन्तिमा केही नलागेपछि होलिकाले आगोमा नजले वरदान प्राप्त गरेकी थिई, यसैले उसको काखमा राखेर प्रह्लादलाई अग्निमा जलाएर मार्न खोज्यो। तर भगवान्का सच्चा भक्तको शक्ति अतुलनीय हुँदो रहेछ, यसैले त प्रह्लादलाई केही पनि भएन। किनभने प्रह्लाद भगवान्का सच्चा भक्त थिए। भगवान्ले आफ्ना सच्चा भक्तलाई जस्तो सुकै परिस्थितिबाट पनि रक्षा गर्नुहुन्छ भन्ने कुरा हामी मीरा वाईको जीवन-चरित्रबाट पनि थाहा पाउन सक्छौं। मीरावाई भगवान्की सच्चा उपासिका तथा सेविका थिइन्। उनलाई भगवान्प्रति पूर्ण भरोसा थियो। दुष्टहरूले मार्नको लागि उनलाई फूलको वहानाले टोकरीमा सर्प ल्याएर दिए, तर ती सर्पहरू पनि फूलको माला नै बनिदिए। प्यालामा भगवान्को चरणको जल भनेर विष ल्याएर पिलाए। उनले पनि त्यो विषलाई चरणोदक नै संझेर पिइन्। ईरवरमा विश्वास हुनुपर्दछ। सबै बेठीक पनि ठीक भइदिन्छ। यसैले त विष पनि अमृत स्वरूप चरणोदक भइदियो, यद्यपि भगवान् सबैका लागि समान हुनुहुन्छ, तर पनि जो अटल आस्था र दृढ़ विश्वासका साथ भगवान्को शुश्रूषा गर्दछ उसैले नै भगवान्लाई प्राप्त गर्दछ। स्वयं भगवान्ले नै भन्नुभएको छ-

**'समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम्'॥**

अर्थात् म समस्त प्राणीमा समभावले विराजमान छु, न त कोही मेरो प्रिय छ न त कोही अप्रिय। तर जो भक्त



मलाई प्रेमपूर्वक पूज्दछ, ऊ ममा र म उसमा अवश्य नै भइरहेको हुन्छु। साथै जसले जुन् भावनाले मेरो आराधना गर्दछ त्यही रूपबाट म उसको अगाडि उपस्थित हुन्छु। 'न मे भक्तः प्रणश्यति' त्यस्तो मेरो भक्तको कहिले पनि दुरवस्था हुँदैन। भगवान्‌लाई केवल भक्ति नै मन पर्दछ। जो भगवान्‌को भक्तिपूर्वक आराधना गर्दछ, ऊ नै भगवान्‌को प्रिय बन्दछ। 'भक्त्या तुष्यति केवलं न च गुणैर्भक्तिप्रियो माधवः' अतः जीवनको चरम लक्ष्य स्वरूप ईश्वर प्राप्तिका लागि प्रमुख साधन नै भक्ति हो भन्ने कुरा सिद्ध हुन आउँदछ।

त्यस्तै जीवनको चरम लक्ष्य स्वरूप ईश्वर प्राप्ति गर्ने अर्को साधन हो कर्म। कर्म भनेको कुनै पनि काम गर्नु हो। काम दुई प्रकारका हुन्छन्–असल काम र खराब काम, अर्थात् शुभकर्म तथा अशुभ कर्म। शुभ कर्मलाई धर्म र अशुभ कर्मलाई पाप भनिएको छ। धर्मलाई नै पुण्यको संज्ञा पनि दिइएको पाइन्छ। यसैले कस्तो कर्मलाई शुभ कर्म तथा कस्तो कर्मलाई अशुभ कर्म भनिन्छ भन्ने कुराको ज्ञान प्रथमतः हुनुपर्दछ। पुण्य र पाप अर्थात् शुभ कर्म र अशुभ कर्मलाई परिभाषित गर्ने क्रममा सत्पुरुषहरूले भनेका छन्, जुन् अठार पुराणकै सारतत्त्वको रूपमा रहेको छ—

अष्टादशपुराणेषु व्यासस्य वचनद्वयम्।
परोपकारः पुण्याय पापाय परपीडनम्॥

अठार पुराणमा व्यासले सारतत्त्वको रूपमा केवल दुई कुराको उपदेश गरेका छन्; ती हुन्–पुण्य र पाप। पुण्य गर्नु छ भने अर्काको उपकार गर्नुपर्दछ, पाप नै गर्ने हो भने अरुलाई पीडा दिनुपर्दछ। यसबाट के बुझिन्छ भने परोपकार गर्नु नै शुभकर्म गर्नु हो। यस्ता शुभकर्म पनि दुई प्रकारका छन्–सकाम शुभकर्म र निष्काम शुभकर्म। कामनाले सहित भएको कर्मलाई सकाम शुभकर्म भनिन्छ। यस्तो कर्म गर्ने हो भने स्वर्गको प्राप्ति हुन्छ तर ईश्वरको प्राप्ति हुँदैन। सकाम कर्ममा फलको आशा राखिन्छ। यसैले यस्ता कर्मको फल त भोग्नै पर्छ। सकाम कर्मजन्य कर्मफलबाट मानिसले मुक्ति पाउन सम्भव नै छैन। यस्तो कर्मबाट अवश्य नै उसले स्वर्ग प्राप्त गर्दछ तर 'क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति' अर्थात् पुण्य क्षीण भएपछि सकाम कर्मद्वारा स्वर्गमा पुग्ने प्राणीहरू फेरि मर्त्यलोकमा नै प्रवेश गर्दछन् र फेरि उही जन्म र मृत्युको चक्करमा फस्दछन्। यसैले कर्म र कर्मफलको चक्करबाट मुक्ति–पाउनु नै जन्म र मृत्युको चक्करबाट छुटेर ईश्वर प्राप्ति गर्नु हो। कर्म र कर्मफलको चक्करबाट छुटकारा पाउने एउटा सुगम बाटो छ, त्यो हो निष्काम कर्म। फलको आशा नराखी गरिने कर्मलाई नै निष्काम कर्म भनिन्छ। जसले निष्काम कर्म गर्दछ, त्यसैलाई नै भगवान् आफ्नो शरणमा लिनुहुन्छ। यसैले त भगवान्‌ले भन्नुभएको छ–कर्म गर तर फलको आशा भने नराख। यस्तै निष्काम कर्मबाट नै जनक आदि सिद्ध राजाहरूले ईश्वरलाई प्राप्त गरे। निष्काम कर्म गर्नको लागि निःस्वार्थ बन्नुपर्दछ। जो मानिस आफ्नो सन्तुष्टिको लागि मात्र कर्म गर्दछन्, तिनीहरु कर्म र कर्म फलबाट बद्ध हुन्छन्। निःस्वार्थ भावनाबाट गरिएको कर्मबाट नै मोक्ष प्राप्त हुन्छ। भगवान्‌बाट सृजित प्रकृतिमा कति निःस्वार्थता छ। प्रकृतिमा जति पनि फलफूलका वृक्षहरु छन्–ती के आफ्ना लागि फलेका छन्? अवश्य छैनन्। त्यस्तै नदीहरू रातदिन प्राणीहरूकै उपकारका लागि बगिरहन्छन्। भोलि प्रकृतिले पानी दिन बन्द गर्ने हो भने मानिसको जीवन कति दुर्दशापूर्ण होला? यो विचारणीय कुरा छ, निःस्वार्थ भावनाबाट अभिप्रेरित निष्काम कर्मबाट अवश्य नै ईश्वर प्राप्त गर्न सकिन्छ। यसैले निष्काम कर्म पनि ईश्वरप्राप्तिको एक साधन हो।

भगवान्‌लाई प्राप्त गर्ने त्यस्तै अर्को साधनको नाम हो ज्ञान; यी दुई किसिमका हुन्छन्–बाह्य ज्ञान र आत्मज्ञान।

बाह्य ज्ञान आज संसारमा धेरैले गरेका छन्। कुनै पनि नचिनेको वस्तु चिन्नु पनि बाह्य ज्ञान अन्तर्गत नै पर्दछ। तर आत्मज्ञान भने थोरैलाई मात्र हुन्छ। 'ज्ञानादेव तु कैवल्यम्' अर्थात् आत्मज्ञानबाट नै मोक्ष प्राप्त हुन्छ। 'ऋते ज्ञानान्न मुक्तिः' आत्मज्ञान विना मुक्ति सम्भव छैन। ईश्वर स्वयं प्राणीको आत्मामा विराजमान हुनुहुन्छ, तर स्वयं मानिस भने यो कुरा थाहा नपाएर ईश्वर प्राप्तिको लागि बाह्य जगत्मा भौंतारिइरहेको छ। यसैले त महाकवि लक्ष्मी प्रसाद देवकोटा भन्दछन् 'कुन मन्दिरमा जान्छौ यात्री कुन मन्दिरमा जाने हो ?' ईश्वर प्राप्तिको लागि बाह्य जगत्मा भौंतारिनु कुनै आवश्यकता छैन, ईश्वर त आफ्नै आत्माभित्र हुनुहुन्छ। यसैले त आफ्नो आत्मालाई चिन्नु नै ईश्वर प्राप्ति गर्नु हो। अविद्यारूपी अन्धकारले नै मानिसको ज्योति स्वरूप आत्मालाई ढाकेको हुन्छ। यसैकारण मानिस चिन्ता, अशान्ति, कलहबाट मुक्त हुन सकेको छैन। यही अविद्यारूपी अन्धकारकै कारण मानिसले ईश्वरलाई अनुभूत पथमा ल्याउन सकेको छैन। अतः यो अन्धकारलाई हटाएर ईश्वरको दर्शन गर्नको लागि चित्तशुद्धि गर्नु नितान्त आवश्यक छ। चित्त-अर्थात् शुद्ध मनमा नै ईश्वरको प्रतिबिम्ब पर्दछ। जस्तो कि मैलो ऐनामा हामी आफ्नो अनुहारलाई देख्न सक्दैनौं त्यस्तै नै काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य जस्ता दुर्गुणले मैलो भएको चित्तमा पनि आत्माको प्रतिविम्ब पर्दैन। अति हामी वास्तविक आत्मज्ञानबाट वञ्चित हुन्छौं। आत्माको वास्तविक स्वरूपलाई बोध गरेका हुनाले नै वास्तवमा बुद्ध भए। त्यस्तै चैतन्य महाप्रभुले पनि चेतना-अर्थात् आत्मज्ञानको वास्तविक स्वरूपलाई चिन्तन गरेर चिनेकाले नै चैतन्य महाप्रभु भए। वास्तविक आत्मालाई अनुभूति गर्न सफल भएका सत्पुरुषहरू सधैं भन्ने गर्दछन्-मैले त्यो पाएँ जो मसंगै थियो, छ र रहिरहनेछ। आत्मबोध भएपछि धेरै गुमाएँ जो मेरा थिएनन्। तर अहिले सम्म तिनीहरूलाई नै मैले मेरा भनी भनेको थिएँ। हुनपनि हो संसारमा आफ्नो भन्ने कोही र केही पनि हुँदैन। म भन्नु केवल आत्म मात्र हो। तर आज हामी अज्ञानकै कारण शरीरलाई नै म भनेर व्यवहार गरिरहेका छौं। वास्तवमा शरीर त कुनै हालतमा पनि म हुन सक्दैन। हामी व्यवहार गर्दा पनि यो मेरो हात, यो मेरो खुट्टा, यो टाउको आदि भन्दछौं, तत्त्व आत्माभावै हो। शरीर त आत्माले ल्याएको नाशो मात्र हो। शरीरमा मको आरोप गर्नाले नै चिन्ता पीड़ा कलहको सृजना हुन्छ, अतः आत्मज्ञानबाट नै ती सबै दुःखको नाश हुन्छ, आत्मज्ञान गर्नु नै ईश्वरको दर्शन गर्नु हो। शास्त्र श्रवण, सत्सङ्ग, परमवैराग्य, दृष्टिसमानता जस्ता कारणबाट नै आत्मज्ञान हुन्छ। यही आत्मज्ञानलाई नै वास्तविक ज्ञान भनिन्छ। यही आत्मज्ञानबाट नै ईश्वर प्राप्ति पनि हुन्छ। अतः जीवनको चरमलक्ष्य स्वरूप ईश्वर प्राप्तिका मुख्य साधनहरू, भक्ति, कर्म र ज्ञान नै छन् भनेर निश्चयका साथ भन्न सकिन्छ; अस्तु।



ब्रह्मलीन गुरुमहाराजको समाधि मन्दिरमा
प्रतिष्ठित श्रीपरमानन्देश्वर महादेव
देवघाटधाम, तनहूँ

# परिशिष्ट

### स्वामी परमानन्द स्मृति : ग्रन्थ-परिशिष्ट

## समाधि प्रकरण

स्वामीज्यूको परिनिर्वाण महायात्रा आरम्भदेखि समाप्तिसम्म साक्षात् जान्ने बेहोर्नेहरूदेखि लिएर परस्परमा वहाँका अतिमानुष चरित्र सुन्नेहरू पनि आज अपार शोकमहासागरमा निमग्न थिए। टाढाटाढासम्म किनारा नभएको यस सागरबाट बाहिर निस्कने कुनै अवलम्बन नपाएको स्वामीज्यूबाट उपकृत जनसमुदाय आज अत्यन्त दन्केको दावानलका बीचमा उकुसमुकुस भइरहेको थियो। कोही कसैसंग केही बोलिरहेको थिएन। बाग्मतीको पश्चिम किनारामा ब्रह्मलीन स्वामीज्यूका आत्माले छाडेर निश्चेष्ट हुँदा पनि धप्धपाउँदो श्रीविग्रहंका चारैतिर घेरेर बस्ने अश्रुपूर्ण चेहराहरूको संख्या झन् झन् बढिरहेको थियो। आज झन् सूर्यका तातो र उज्यालोमा कमी आएको सबैले अनुभव गरिरहेका थिए। जे-जस्तै परे पनि सूर्यलाई भव्य आकाशतिर चढी फेरि अस्ताचलतर्फ गिर्ने दैनिक कार्यक्रम आज पनि छाड्न मिलेको थिएन। सबैतिर प्रकाश दिने सूर्य आज निस्तेज प्रतीत भइरहेका थिए। राजधानीमा रहनेहरूले फोनद्वारा यो भन्न नसकिने भएर पनि नभनी नहुने खबर बाहिर पठाइरहेका थिए। देवघाट चितवनतर्फ पहिला प्रसिद्ध फोनवालाहरूले प्राप्त गरिएको यो खबर कहीँ फोन र धेरै ठाउँमा व्यक्ति-व्यक्तिद्वारा पुराना जमानाको विकराल विफर झैं संग्रालिँदै गएको थियो। २ बजेसम्म देवघाट हरिहर मन्दिरमा स्वामीज्यूको श्रीविग्रह सवारी हुने खवरले जनसमूहको धारो देवघाटतर्फ लागिरहेको थियो। यता राजधानी पनि यस खवरले काँपिरहेको थियो। बहुदलीय व्यवस्थामा त धेरैतिर यस्तो देखिइरहेको थियो कि डाक्टर, वैज्ञानिक, कवि, लेखक, समालोचक र पत्रकारहरूको मात्र नभएर विद्वान् साधु-सन्तसम्म पनि दलीय दलदलामा नदलिईकन देखिन सकेका हुँदैनन्। आन्तरिक रूपमा कुनै एक दलविशेषको विशेष प्रीतिमात्र भेट्टाउन सक्ने सामर्थ्यमात्र राख्दछन्। सर्वदलीय सर्वमान्य बनी सबैका अविशेष अत्यधिक आदरको पात्रता आफूमा ल्याउनु भनेको कुनै पनि युगमा साधारण विषय होइन, तर हाम्रा चरित्रनायक महापुरुष भने यी सबै दलीय दलदलादेखि एकदमै टाढा रहनुभयो।

आज स्वामी परमानन्दज्यू जस्ता देशका रत्नलाई कहीँ केही भइजाने हो कि ! भन्ने चिन्तामा सन्त्रस्त सबै दलका प्रमुखहरू फुर्सद अनुसार शरीरले या मनले त्यस पशुपति मन्दिरको परिसर वाग्मतीमा हत्तारिँदै पुगे। आत्मा उडेपछि पनि बलिहेको अनुहारले सबैमा आश्चर्यको सञ्चार गरिरहेको थियो।

गाडीहरू गुडे, भक्तहरू भेला भए, स्वामीज्यूको तर्फबाट भगवती वाग्मती र भगवान् शिवको प्रार्थना भयो। बीच-बीचमा कति नै रोक्ता रोक्तै पनि निस्कने विरह, वेदना, चीत्कारहरू निकटस्थ आकाशीय वायुमण्डलसंग संघर्ष गर्दै महाकाशमा विलीन भइरहेको थियो। अगरधूपको सुगन्धका बीच मालाहरूले पूजित स्वामीज्यूको श्रीविग्रह यानमा राखियो। एकपटक फेरि करुण क्रन्दनको चर्को स्वर वायुमण्डलमा फैलियो। आज माता अन्नपूर्णा र पिता पशुपति पनि

चिन्तित थिए। सनातन मूर्तिपूजन परम्परामा यस युगका महान् स्तम्भ एकाएक थानकोटको गिरिकूटबाट ओरालो लाग्यो डाँडाले छेक्यो; यताको यतै उताको उतै दुईतिर भइयो। उता त्यस्तो थियो भनी संझनुमात्र अब आधार रह्यो। कालले पनि हामीलाई डाँडापारी र डाँडावारी बनाइरहेको छ। महादेवका त्रिशूलबाट निस्केकी त्रिशूली पनि आइन्। ती प्राचीन अग्ला-अग्ला हिमचुलीहरू आज झन् टाउको उठाएर यस घटनाको चिन्तामग्न मुद्रामा जानकारी लिइरहेका देखिन्थे।

अब मर्स्याङ्दी, सेती र मादी आदि धेरै नदीहरूले सल्लाह गरेर एक सामूहिक साझा नाम नारायणी राख्न सहमत भई एकजूट भएर हिंडेका थिए। मानौं आज यी नदीका सामूहिक गति पनि नारायणगढ भरतपुरतर्फबाट उँभो देवघाटतर्फ आइरहेको महान् जनसागरका सामू निस्तेज भइरहेको थियो। यो महान् गुरुयात्रा दियालो बङ्गालाबाट योगीहरूले उत्तरायण लागेपछि उत्तरपथ स्वीकारे झैं उत्तरतर्फ स्थित देवघाटतिर लम्किरहेको थियो।

अब ज्ञान, भक्ति र वैराग्यको त्रिवेणी रहनुभएको स्वामीज्यू देवघाटको त्रिवेणीसङ्गम नवगण्डकी-जलप्रवाहका समीपमा पुऱ्याइनुभयो। मनभरि विरह र गहभरि आँसुको श्रद्धाञ्जलि बोकेर आएका जनसमूहको भीडलेगर्दा आज पुलको मुखमा तिलको दानाले पनि आफू अटाउने ठाउँ देखेको थिएन। अर्कोतिर प्रत्येक समाचार माध्यमद्वारा ११ बजेदेखि नै यह दुःखद घटनाको प्रसारण र देवघाटमा लगत्तै हुनलागेको स्थलसमाधिका बारेमा व्यापक जानकारी गराइँदै थियो।

नारायणी नदी मुश्किलले आफ्नै पथबाट मन्दगतिमा बग्दै थिइन् भने आँखामा झरी लागेका जनता जनार्दनको गड्गडाउँदो बाढी भने उत्तरतर्फ लागिरहेको थियो। पारी हरिहर क्षेत्रका अधिष्ठाता प्रधानदेवता हरिहर हुनुहुन्थ्यो। 'हरि' र 'हर' यस्तो पृथक् पृथक् भावमा होइन हरि र हर एकत्वभावमा समास भएर तात्विक एकता प्राप्त एक देवता हरिहर हुनुहुन्छ। ''देवौ द्वारवतीस्मशाननिलयौ''—अर्थात् जो एकसाथ द्वारवतीको प्रवृत्तिमय सिर्जनात्मक भूमि र स्मशानको निवृत्तिमय संहारात्मकभूमिमा एकसाथ रहन सक्छ त्यही त हरिहर हो। बढाइ र घटाइ, जीवन र मरण एकसाथ रहने मात्र नभएर एकात्मक पनि हुन्। यही हो असली हरिहराद्वैत। शुक्ला र कृष्णा नदीद्वारा वेष्ठित अभेदात्मक स्थिति भएको देवघाट नै सबै प्रकारले उपयुक्त भूमि भएकोले स्वामीज्यूद्वारा यहीं हरिहर मन्दिरको निर्माण भएको हो। यसै आश्रमको मूलद्वारमा स्वामीज्यूलाई ल्याइयो।

त्यसदेहलाई कसरी चैतन्यविहीन या आत्मारहित भनौं! जसका गन्धमात्रले आज हजारौं नरनारी सल्बलाइरहेका छन्; जसलाई देख्ने इच्छाले भोक-प्यास समेतमा अन्य समस्त आसक्तिका कारणहरूलाई टाढै पन्छाइएको छ; जसको अनुभव गर्न अनन्तौं इन्द्रियले तँछाड-मछाडका साथ अघि बढ्दै छन्; जसले आज महीनौंबाट विस्तारामा लडेकालाई पनि नवचैतन्य सञ्चार गराई विस्तारा छोडाएर हरिहर मन्दिर परिसर पुऱ्याएको छ। चैतन्यवान् भनौं कसरी भनौं! जसका आगमनले हजारौं आँखाबाट आनन्दाश्रुका झरना बग्दथे; जसका दर्शनका शुभ-सन्देशले परमानन्द सागर सल्बलाउँथ्यो, आज त्यो श्रीविग्रह निश्चेष्ट, पराश्रित! छोडिदिए लड्ने, उठाए मात्रै ठडिने भएको छ। उसले आज यहाँ आएर आफ्नै हातले जनताका हात-हातमा धेरै-धेरै प्रसाद बाँडिरहेको छैन; बरु दिलदिलमा अनन्त विषाद बाँडिरहेको छ; प्रसन्नताको प्रवाहको बदला विषण्णताको कालो मुस्लो निस्किरहेको थियो।

हरिद्वार पंरमगुरु श्रीस्वामी सत्यप्रकाशानन्द सरस्वतीज्यूको निर्देश अनुसार मन्दिरको समीपमा स्वामीज्यूलाई राखियो। सबैले पालैसंग दर्शन गर्दै अन्तिम श्रद्धाञ्जलि चढाउँदै गए। 'मेरी आँबै र मेरा बाबै'का गाउँलेपनको रडाको त्यति नभए पनि शोकको तीव्रता र वेदनाको गहिराइ भने त्यहाँ निकै थियो। दुनियामा कुनै एक सम्बन्धले छोइएको व्यक्ति मात्र



एकपटक वियोग हुन्छ, तर यहाँ त एकैसाथ माता, पिता, बन्धु, सखा, धनदौलत, विद्या, बुद्धि आदि सबैको वियोग एकैपटक पर्दाको जस्तो वेदना सहनु परेको थियो। यही क्रमले आजको दिन पनि बितेर सन्ध्याको आगमन भयो। स्वामीज्यूको अन्तिम दर्शन भोलि १९ गतेलाई बाँकी नरहने आशंकाले धेरैलाई आजै यस ठाउँमा ल्याइपुऱ्याएको थियो। रात्रिमा अखण्ड हरिकीर्तन भयो। शायद पृथ्वीमाताले पनि यस वियोगको असह्य वेदना खप्न नसकेर नै राती पटकपटक भूकम्प भएको थियो।

आज कालीगण्डकीमा झन् कालोपन र त्रिशूलीमा झन् विरहशूल बढेको थियो। आकाशमा सूर्य पनि मलीन प्रतीत हुन्थे; दिन र मानवीय मन सबै स्तब्ध नै थिए। यस्तै नीरवतामा १९ औं गतेको दिन ११ बजे हरिद्वारबाट परमगुरुको पदार्पण भयो। स्वामीज्यूको आज्ञानुसार परमगुरुलाई देवघाटमा पदार्पण गराउन जानुभएका ब्रह्मचारी ज्ञानानन्दज्यू पनि साथै आइपुग्नुभयो। परमगुरुको आदेश अनुसार एकै क्षणमा समाधि गराउन गर्त निर्माण भयो। उतातर्फ स्वामीज्यूको पार्थिव शरीरलाई पञ्चामृत (दूध, दही, घ्यू, मह, शर्करा)ले स्नान, षोडशोपचारले पूजन र स्वस्तिवाचन आदि वैदिक कृत्यकर्म पूरा गरी माला र सुगन्धित चन्दनले सुसज्जित बनाइएको थियो।

त्यसपछि वैदिक बटुद्वारा गरिएको मन्त्रपाठ, भक्तहरूका मुखबाट निस्किएको "हर हर महादेव!" का तुमुलध्वनिका बीच स्वामीज्यूलाई समाधितर्फ लगियो। अविरल रूपले रूद्रीपाठ चलेकै थियो। विशिष्ट विद्वान साधुमण्डली, शिष्यगण र भक्तसमूहका बीच सुशोभित परमगुरुका करकमलबाट स्वामीज्यूको पार्थिव शरीर विधिवत् समाधिस्थल (गर्त)मा स्थापित गरियो। विरह र वेदनाले उद्वेलित जनसमूहको हुरी समाधिस्थलतिरै मडारियो। अब छिट्-छिटै भक्तमनोहारी स्वामीज्यूको विग्रहलाई जनसमूहका हातबाट छुटेका नूनका अखण्डित धाराले छोप्दै लग्यो। हेर्दाहेर्दै त्यस सुन्दर स्वरूपले बिदा लियो। सबैका आँखामा आँसु टिल्पिलाएर अँध्यारो भइरहेका बेला कतिखेर समाधिभूमि समथर भइसकेछ; थाहै भएन।

× × ×

त्यसभूमिमा रङ्गवल्ली (रेखी) पऱ्यो, शिवजी आउनुभयो। त्यसमाथि बन्ने मन्दिरको रूपरेखा तैयार भयो। अहिले त्यसै भूमिमा सुन्दर मन्दिर निर्माण गरी श्रीपरमानन्देश्वर शिवलिङ्ग प्रतिष्ठापन गरिएको छ। वैदिक विधि अनुसार दैनिक पूजा चलिरहेको छ।

गुरुविरह-शोकाग्निमा पिल्सिएका घाउको पीडा सहन मुश्किल परे पनि दिन त घुचेटिनै कर लाग्ने रहेछ। विभिन्न स्थानबाट श्रद्धाञ्जलि चढाउन आउने भक्तहरूको आउने-जाने क्रम चलि नै रह्यो। गुरु-उपासनाका १४ दिन पनि बिते। १५ औं दिन (फाल्गुन ३ गते) स्वामीज्यूका स्मृतिमा चढाइने श्रद्धाञ्जलि सहितको शोक-सभाको आयोजना भयो। विशिष्ट विद्वान्, लेखक, पत्रकार, समाचार सम्वाददाता, कवि, सभामुख लगायत सबै जनसमुदाय जुट्यो। सबैले आ-आफ्ना गुरुवेदनाहरू पोखे। उही हृदयविदारक घाउ सबैका मनमा नवीन बनेर पलाउँदै आँसुका रूपमा निस्कनु सिवाय जीवन्को अरु विकल्प केही रहेन। विविध स्थानबाट प्राप्त अनगिन्ती समवेदना-पत्रहरू पढेर सुनाउने समय नै पुगेन। २०५३ फाल्गुन ४ गते (१६औं दिनमा) स्वामीज्यूको षोडशी भण्डाराको तैयारी हुँदै थियो भने यता गुरु-शिष्य परम्परानुसार आश्रमको उत्तराधिकारित्व-पदभार सम्हाल्ने विषयमा सबैको सल्लाह भएअनुसार ब्रह्मचारी ज्ञानानन्दज्यूलाई नै उक्त भार वहन गर्न आग्रह भयो। परमगुरुले ब्रह्मलीन स्वामीज्यूकै नामबाट ब्रह्मचारीज्यूलाई फाल्गुन ३ गते नै संन्यास दीक्षा प्रदान

गरिसक्नुभएको थियो। ४ गते बिहान विशाल जनसमूहका बीच नवसन्त श्री स्वामी ज्ञानानन्द सरस्वतीज्यूलाई पीठाधीश पदमा पदासीन गराउनुभयो। उपस्थित समूहले नवपीठाधीशज्यूलाई च्यादर ओडाएर स्वागत गऱ्यो।

अर्कोतिर विशाल षोडशी भण्डारा चलिरहेको थियो। दशौं हजार आत्माले सल्बलाएको हरिहर-परिसरमा अब बिस्तारै सन्ध्याले पाइला बढाउँदै आइन्। सबै आ-आफ्ना गन्तव्यतिर लागे।

यस पछिको वर्षभरिका दिनहरू गुरुस्मृतिमा नै बिते। प्रत्येक महीनाको शुक्ल र कृष्ण-अष्टमीमा स्वामीज्यूद्वारा स्थापित र सञ्चालित प्रत्येक आश्रममा श्रद्धाञ्जलि-सभा र भण्डाराका कार्यक्रमहरू हुँदै गए। जहाँ यी कार्यक्रम हुन्थे त्यहाँ ठूलो जनसमुदायको उपस्थिति हुँदै गयो। २०५४ माघ ८ गते प्रथम वार्षिक स्मृतितिथिमा ब्रह्मलीन स्वामीज्यूको पुण्य-स्मृतिमा सप्ताहव्यापी श्रीमद्भागवत र विशाल भण्डारा सम्पन्न भयो। वहाँकै पुण्य स्मृतिमा शिवमहिम्नः स्तोत्रको प्रकाशन पनि यसै अवसरमा भएको थियो।

दोस्रो वर्ष ब्रह्मलीन स्वामीज्यूको पुण्यस्मृतिमा वहाँकै पूर्वसङ्कल्प अनुसार हरिहर संन्यास आश्रममा २०५५, मार्गशीर्ष १७ देखि २५ गतेसम्म श्रीमद्भागवत र विविध अनुष्ठान सहितको अभूतपूर्व 'धान्याचल महायज्ञ' सम्पन्न भयो जसमा लाखौंलाई ब्रह्मलीन स्वामीज्यूको व्यक्तित्व र कीर्तिका बारेमा नजाने नसुनेको भए पूर्णरूपमा जान्ने-सुन्ने मौका मिलेको थियो। यसै कार्य समाप्तिका १ महीनापछि पौष २४ गते द्वितीय वार्षिक भण्डारा पनि पूर्ववत् सम्पन्न भयो।

गुरुस्मृतिका दुईटा वर्षले सबैसंग बिदा लिएर गए। अब ब्रह्मलीन स्वामीज्यूको तृतीय वार्षिक स्मृतितिथिमा अव्यक्त रूपले व्याप्त गुरुचेतनलाई व्यक्त विग्रहको रूपमा बाहिर प्रकट गराउने सबैको इच्छा जागेर आयो। समाधि मन्दिरमा राखिने गुरुमूर्ति देवघाट भित्रियो। परमगुरु श्री स्वामी सत्यप्रकाशानन्द सरस्वतीज्यू महाराजको समुपस्थितिमा श्रीमद्भागवत र विविध अनुष्ठान भइरहेका अवसरमा वहाँकै करकमलद्वारा ब्रह्मलीन स्वामीज्यूको मूर्ति स्थापना गर्ने पूर्वनिर्णय भए-अनुसार २०५६ माघ १४ गते कृष्ण अष्टमीमा उक्त समारोह सम्पन्न हुने कार्यक्रम रहेको छ।

× × ×

यसरी मातृभूमि नेपालको मध्यभागमा जन्मेर जीवनको पूर्वकालमा अक्षुण्ण तपस्याद्वारा ब्रह्मसिद्धि, उत्तरकालमा लोककल्याण र अन्त्यमा ईश्वरको अनन्य चिन्तन गरी इहलीला समाप्त गर्ने स्वामीज्यू आज हाम्रा सामू नभए पनि वहाँका आदर्शमय जीवनचरित्रले हामीलाई आदर्शमानव बन्न अक्षय सम्पदा प्रदान गरेको छ। आज पनि वहाँको धवल कीर्तिध्वजा हामी समक्ष फहराइरहेको छ। यस कीर्तिध्वजाले युगौं युगसम्म मानवमात्रको लागि कर्तव्यबोधको सन्देश अविरल रूपमा दिइ नै रहने छ।



श्रीगुरुचरणकमलेभ्यो नमः

## यस स्वामी परमानन्द गुरु-स्मृतिग्रन्थ प्रकाशनका लागि आर्थिक सहयोग गर्ने महानुभावहरूको नामावली यस प्रकार छः—

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | सहयोग रु. |
|---|---|---|---|
| १. | श्री १००८ स्वामी रामानन्द गिरि, | महेश संन्यास आश्रम, देवघाट धाम .... | १०,०००/- |
| २. | श्री धान्याचल महायज्ञ आयोजक समिति, | तल्लोफाँट, आँपचौर, गुल्मी .... | १०,०००/- |
| ३. | श्री पीताम्बर पँगेनी, | ट्राफिक चोक, बुटवल (हाल देवघाट धाम) | १०,०००/- |
| ४. | स्वामी श्री पद्मानन्द सरस्वती, | हरिहर संन्यास आश्रम, देवघाट .... | ७,१५१/- |
| ५. | श्री ज्ञानेश्वर पन्त, | रूपाकोट, गुल्मी .... | ६,००१/- |
| ६. | स्वामी श्री रघुनन्द सरस्वती, | हरिहर संन्यास आश्रम, देवघाट .... | ५,५५५/- |
| ७. | श्री भूपति खरेल, | आँपचौर - ५, गुल्मी .... | ५,१००/- |
| ८. | श्री लीलाराम न्यौपाने, | सिद्धार्थनगर-५, भैरहवा .... | ५,१००/- |
| ९. | श्री नरहरि खरेल, | शङ्करनगर-७, नयाँमील रूपन्देही .... | ५,०५१/- |
| १०. | श्री चक्रपाणि पाठक, | आनन्दवन-५ मणिग्राम, रूपन्देही .... | ५,००१/- |
| ११. | श्री हेमलाल, मनरूपा खरेल, | आँपचौर, गुल्मी .... | ५,०००/- |
| १२. | श्री इन्दिरा भक्तिनी - | इन्दिरा आश्रम,देवघाट धाम .... | २,२००/- |
| १३. | श्री इन्दिरा भक्तिनी (घिमिरे) - | देवघाट धाम,कल्पवास .... | २,२००/- |
| १४. | श्री रामप्यारी श्रेष्ठ - | भ.न.पा.-४, नारायणगढ .... | २,१०५/- |
| १५. | श्री टेकनारायण कंण्डेल - | हेटौंडा, मकवानपुर .... | २;१०१/- |
| १६. | श्री धनञ्जय सापकोटा, खगीश्वरा सापकोटा, | देवघाट कल्पवास .... | २,०१५/- |
| १७. | श्री स्वामी खिमानन्द सरस्वती- | हरिहर सं. आश्रम, देवघाट धाम .... | २,००२/- |
| १८. | श्री पूर्णबहादुर भुजू - | नक्साल, काठमाण्डौ (हाल देवघाट) .... | २,००२/- |
| १९. | श्री राधिका भक्तिनी - | देवघाट धाम, कल्पवास .... | २,००१/- |
| २०. | श्री ऋषिराम खरेल - | दिब्रुङ्‌ गुल्मी .... | २,००१/- |
| २१. | श्री प्रेमानन्द सरस्वती- | देवघाट कल्पवास .... | २,००१/- |
| २२. | श्री घनश्याम, अर्याल, टीका अर्याल - | आँपचौर-५, गुल्मी ... | २,००१/- |
| २३. | श्री गोविन्द कण्डेल, | बिहूँ-४, बागलुङ .... | २,००१/- |
| २४. | श्री टंकप्रसाद कण्डेल, | बिहूँ-३, बागलुङ .... | २,००१/- |
| २५. | श्री पृथ्वीलाल सुवेदी, | बिहूँ-९, बागलुङ .... | २,००१/- |

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| २६. | प्रा. श्री हीरामणि अर्याल – | आँपचौर – ५, गुल्मी | .... | २,०००/– |
| २७. | श्री ऋषिराम तथा सीता खरेल – | मजुवा, तुराङ् गुल्मी | .... | २,०००/– |
| २८. | श्री दुर्गादत्त खरेल, | आँपचौर, गुल्मी | .... | २,०००/– |
| २९. | पं. श्री रघुनाथ अर्याल, | पृथ्वीनारायण न.पा.–१, गोर्खा बजार | .... | १,६०१/– |
| ३०. | श्री शिवकुमार खड्का, रेणु खड्का – | मैजुपाल, काठमाण्डौ | .... | १,५५१/– |
| ३१. | श्री मेजर मेषबहादुर,श्रीमती सत्यरूपा राणाभाट, | का.म.न.पा.१६, बालाजु, काठमाण्डौ | .... | १,५१२/– |
| ३२. | श्री बालानन्द सरस्वती, | देवघाट, कल्पवास | .... | १,५००/– |
| ३३. | श्री हरिनारायण सापकोटा, | देवघाट धाम–२, तनहूँ | .... | १,५००/– |
| ३४. | श्री नुमानन्द भण्डारी, | देवघाट, कल्पवास | .... | १,५००/– |
| ३५. | श्री षडानन्द पौडेल, | परमानन्द सं. गुरुकुल, देवघाटधाम, तनहूँ | .... | १,१११/– |
| ३६. | श्री उमादेवी भण्डारी, | देवघाट कल्पवास | .... | १,१११/– |
| ३७. | श्री गौरी प्रसाद सापकोटा, | भ.न.पा.१०, चितवन | .... | १,१११/– |
| ३८. | श्री लीलाबहादुर, सावित्री त्रिपाठी, | भ.न.पा.–११, बसेनी | .... | १,१११/– |
| ३९. | श्री नारायण बराल, | बैदाम, पोखरा उ.म.न.पा., कास्की | .... | १,१०१/– |
| ४०. | श्री कृष्णप्रसाद सापकोटा, | देवघाट कल्पवास | .... | १,१०१/– |
| ४१. | श्री पार्वती भक्तिनी, | देवघाट, कल्पवास | .... | १,१०१/– |
| ४२. | श्री ढुण्ढीराज गौतम, | बागलुङ् | .... | १,१००/– |
| ४३. | श्रीमती देबू शर्मा कण्डेल, | गैंडाकोट – ७, नवलपरासी | .... | १,०५५/– |
| ४४. | श्री शिवलाल न्यौपाने, | अर्लाङ्कोट – गुल्मी | .... | १,०५२/– |
| ४५. | श्री मणिराम पौडेल, | अर्घाखाँची | .... | १,०५१/– |
| ४६. | श्री टीकाराम पाण्डेय, | दुर्गानगर, रूपन्देही | .... | १,०५१/– |
| ४७. | श्री ठाकुर प्रसाद अर्याल, | आँपचौर, गुल्मी | .... | १,०५०/– |
| ४८. | श्री केशव सापकोटा, | दिव्रङ्ग – ६ गुल्मी | .... | १,०२०/– |
| ४९. | श्री कुन्ति पन्त, | भ.न.पा. – ११, बसेनी, चितवन | .... | १,०२०/– |
| ५०. | श्री सीता न्यौपाने, | गैंडाकोट – २, नवलपरासी | .... | १,०१३/– |
| ५१. | आचार्य श्री कृष्णमणि पहारी, संगीता पहारी, | सूर्यपाल–६ लमजुङ्–<br>(हाल देवघाट–२तनहूँ) | .... | १,०१२/– |
| ५२. | श्री राम प्रसाद अर्याल, | परमानन्द सं. गुरुकुल, देवघाट धाम | .... | १,०११/– |
| ५३. | श्री मिठु पौडेल, | देवघाट–२, तनहूँ | .... | १,०११/– |
| ५४. | श्री गीता भक्तिनी, | देवघाट कल्पवास | .... | १,०१०/– |

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| ५५. | श्री ईश्वरी भक्तिनी, | देवघाट कल्पवास | .... | १,०१०/- |
| ५६. | श्री ईश्वरी पोखेल, | देवघाट कल्पवास | .... | १,०१०/- |
| ५७. | श्री खगीश्वरा सापकोटा, | भ.न.पा. - भरतपुर | .... | १,०१०/- |
| ५८. | श्री धर्मचैतन्य ब्रह्मचारी, | हरिहर आश्रम, देवघाट | .... | १,०१०/- |
| ५९. | श्री पं. चन्द्रमणि कण्डेल, | अमरापुरी-६, नवलपरासी | .... | १,००८/- |
| ६०. | श्री चेतराज कण्डेल, | अमरापुरी-२, नवलपरासी | .... | १,००८/- |
| ६१. | श्री नेत्रमाया भण्डारी, | देवघाट, कल्पवास | .... | १,००८/- |
| ६२. | श्री कृष्ण कण्डेल, | | .... | १,००५/- |
| ६३. | श्री भवीश्वर खनाल, | सन्धिखर्क, अर्घाखाँची | .... | १,००५/- |
| ६४. | श्री दुर्गा अधिकारी, | देवघाट कल्पवास | .... | १,००५/- |
| ६५. | सुश्री मोहनतारा श्रेष्ठ, | भोटाहिटी, काठमाडौ | .... | १,००५/- |
| ६६. | श्री देवकी भक्तिनी, | देवघाट कल्पवास | .... | १,००५/- |
| ६७. | श्री धनञ्जय सापकोटा, | देवघाट कल्पवास | .... | १,००५/- |
| ६८. | श्री शिवप्रसाद कण्डेल, | बिहूँ-१, बागलुङ् | .... | १,००५/- |
| ६९. | श्री पं० आनन्दमणि उपाध्याय, | गौरीगञ्ज-८ चितवन | .... | १,००५/- |
| ७०. | श्री टीकाराम अर्याल, | आँपचौर-५, गुल्मी | .... | १,००५/- |
| ७१. | श्री द्वारकानन्द सरस्वती- | देवघाट कल्पवास | .... | १,००२/- |
| ७२. | श्री इन्द्रकला अर्याल, | देवघाट कल्पवास | .... | १,००२/- |
| ७३. | श्री स्वरूपानन्द सरस्वती, | देवघाट कल्पवास | .... | १,००२/- |
| ७४. | आचार्य श्रीजगन्नाथशर्मा कण्डेल, | गैंडाकोट-५, नवलपरासी | .... | १,००१/- |
| ७५. | श्री धनेश्वरानन्द सरस्वती, | देवघाट कल्पवास | .... | १,००१/- |
| ७६. | श्री गोपालानन्द सरस्वती, | देवघाट कल्पवास | .... | १,००१/- |
| ७७. | श्री नेत्रप्रसाद कण्डेल- | भ.न.पा.-९ शरद्पुर | .... | १,००१/- |
| ७८. | श्री रामानन्द सरस्वती-- | त्रिपुरेश्वर शिवाश्रम, शरद्पुर चितवन | .... | १,००१/- |
| ७९. | श्री पूर्णानन्द सरस्वती- | राममन्दिर, बिहूँ बाग्लुङ् | .... | १,००१/- |
| ८०. | श्री चिन्मयानन्द सरस्वती- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८१. | श्री विद्यानन्द सरस्वती- | धर्मद्वारी, दिब्रुङ गुल्मी | .... | १,००१/- |
| ८२. | श्री कमलानन्द सरस्वती- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८३. | श्री अम्बिका भक्तिनी- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८४. | श्री शान्तानन्द सरस्वती- | देवघाट कल्पवास | .... | १,००१/- |

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| ८५. | श्री उमानन्द सरस्वती- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८६. | श्री लीलावती खराल- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८७. | श्री सावित्रा भक्तिनी- | देवघाट कल्पवास | .... | १,००१/- |
| ८८. | श्री रविनन्द (भानु) ब्रह्मचारी- | रामकोट, बिहूँ बाग्लुङ् | .... | १,००१/- |
| ८९. | श्री छाया भक्तिनी- | देवघाट कल्पवास | .... | १,००१/- |
| ९०. | श्री सूर्यभक्त वाग्ले- | व्यास नगरपालिका, दमौली, तनहूँ | .... | १,००१/- |
| ९१. | श्री कोमलदत्त तिवारी | देवघाट, कल्पवास, | .... | १,००१/- |
| ९२. | श्री विशुद्धानन्द सरस्वती | देवघाट कल्पवास | .... | १,००१/- |
| ९३. | श्री दुर्गाप्रसाद श्रेष्ठ, | देवघाट कल्पवास | .... | १,००१/- |
| ९४. | श्री प्रताप कण्डेल, | वीरेन्द्रनगर, चितवन | .... | १,००१/- |
| ९५. | पं० श्री जगन्नाथ कण्डेल, | वीरेन्दनगर, चितवन | .... | १,००१/- |
| ९६. | श्री एकदेव भट्टराई, | भ.न.पा.-७, चितवन | .... | १,००१/- |
| ९७. | श्री रामलाल भट्टराई, | भ.न.पा.-६, यज्ञपुरी चितवन | .... | १,००१/- |
| ९८. | श्री पार्वती खराल, | देवघाट कल्पवास | .... | १,००१/- |
| ९९. | श्री सोमानन्द सरस्वती, | शालिमेदह आश्रम-गुल्मी | .... | १,००१/- |
| १००. | श्री दुर्गादत्त खराल, | अमरापुरी-५, नवलपरासी | .... | १,००१/- |
| १०१. | श्री डिलाराम सापकोटा, | अमरापुरी-६, नवलपरासी | .... | १,००१/- |
| १०२. | श्री डिलाराम सापकोटा, | अमरापुरी-६(१६नं०चोक)नवलपरासी | .... | १,००१/- |
| १०३. | श्री मणिकण्ठ कण्डेल, | अमरापुरी-६, नवलपरासी | .... | १,००१/- |
| १०४. | श्री जायेश्वर सापकोटा, | अमरापुरी-५, नवलपरासी | .... | १,००१/- |
| १०५. | श्री डिलाराम सापकोटा, | भ.न.पा.-६ लंकू, चितवन | .... | १,००१/- |
| १०६. | श्री कृष्णकुमार शर्मा कण्डेल, | भ.न.पा-६, लंकू, चितवन | .... | १,००१/- |
| १०७. | श्री भीमलाल कण्डेल, | भ.न.पा.-५, लंकू, चितवन | .... | १,००१/- |
| १०८. | श्री सुभाष कण्डेल, | भ.न.पा.-४, नारायणगढ | .... | १,००१/- |
| १०९. | श्री केशव सापकोटा, | भ.न.पा.५, लंकू, चितवन | .... | १,००१/- |
| ११०. | श्री भानुभक्त कण्डेल, | भ.न.पा.-४, नारायणगढ, चितवन | .... | १,००१/- |
| १११. | श्री ताराविक्रम शाह, | भ.न.पा.-७, शरदपुर, चितवन | .... | १,००१/- |
| ११२. | श्री प्रजापति कण्डेल, | बिहूँ-८, दहपानी बागलुङ् | .... | १,००१/- |
| ११३. | श्री देवीप्रसाद कण्डेल, | बिहूँ-३, दहपानी बागलुङ् | .... | १,००१/- |
| ११४. | श्री कमलादेवी चापागाईं, | चितवन | .... | १,००१/- |

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| ११५. | श्री भागीरथ सापकोटा, | अर्लाङ्कोट, गुल्मी | .... | १,००१/- |
| ११६. | श्री तिलकुमारी सापकोटा, | देवघाट, कल्पवास | .... | १,००१/- |
| ११७. | श्री कौशिला खरेल | देवघाट, कल्पवास | .... | १,००१/- |
| ११८. | श्री एकनारायण आचार्य, | देवघाट-२, भतेरी | .... | १,००१/- |
| ११९. | श्री टिनीमाया सापकोटा, | खजुरा, बाँके | .... | १,००१/- |
| १२०. | श्री विष्णुप्रसाद सापकोटा, | देवघाट-२, तनहूँ | .... | १,००१/- |
| १२१. | श्री धनमाया पौडेल, | आनन्दवन-४, मणिग्राम रूपन्देही | .... | १,००१/- |
| १२२. | श्री मायादेवी भक्तिनी, | देवघाट, कल्पवास | .... | १,००१/- |
| १२३. | श्री लक्ष्मी देवी भक्तिनी, | देवघाट, कल्पवास | .... | १,००१/- |
| १२४. | श्री दुर्गादेवी भण्डारी, | देवघाट, कल्पवास | .... | १,००१/- |
| १२५. | कर्णेल श्री होमप्रसाद गिरि, | पुरानो वानेश्वर, काठमाण्डौ | .... | १,००१/- |
| १२६. | श्री अमरबहादुर, इन्दिरा पौडेल, | भ.न.पा.-२,क्षेत्रपुर चितवन | .... | १,००१/- |
| १२७. | श्री शान्ति सुवेदी, | भ. न. पा. - ११, बसेनी, चितवन | .... | १,००१/- |
| १२८. | श्री प्रजापति कण्डेल, | अमरापुरी - ६, नवलपरासी | .... | १,००१/- |
| १२९. | श्री ऋषिराम कण्डेल, | अमरापुरी - ६, नवलपरासी | .... | १,००१/- |
| १३०. | श्री शिवलाल रिजाल, | पूर्व चितवन सुर्तानी | .... | १,००१/- |
| १३१. | श्री शेषानन्द वानप्रस्थी, | दिब्रुङ् आश्रम, गुल्मी | .... | १,००१/- |
| १३२. | श्री इन्द्रकला भक्तिनी, | देवघाट कल्पवास | .... | १,००१/- |
| १३३. | श्री नारायण चैतन्य, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३४. | श्री तारा भक्तिनी, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३५. | श्री लक्ष्मिमा भक्तिनी, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३६. | श्री सावित्रा भक्तिनी, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३७. | श्री सच्चिदानन्द सरस्वती, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३८. | श्री रूपा भक्तिनी, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १३९. | श्री काशिकानंन्द सरस्वती, | रुद्रवेणी आश्रम, गुल्मी | .... | १,००१/- |
| १४०. | श्री लोकनाथ भुषाल, | देवघाट कल्पवास | .... | १,००१/- |
| १४१. | श्री केशव भण्डारी, | देवघाट कल्पवास | .... | १,००१/- |
| १४२. | उप प्रा. श्री रामचन्द कण्डेल, | अमरापुरी-२, नवलपरासी | .... | १,००१/- |
| १४३. | श्री बुधमाया भक्तिनी, | द्यौराली अर्लाङकोट, गुल्मी | .... | १,००१/- |
| १४४. | श्री स्वामी जगदीश्वरानन्द सरस्वती, | राममन्दिर, रूपाकोट, गुल्मी | .... | १,००१/- |





| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| १४५. | श्री तुलसीराम रिजाल, | बिहूँ - ९, बाग्लुङ् | .... | १,००१/- |
| १४६. | श्री ओमकान्त सुवेदी, | बिहूँ-९, बाग्लुङ· | .... | १,००१/- |
| १४७. | श्री देवीलाल सुवेदी, | लेखानी - शिवालय, बाग्लुङ् | .... | १,००१/- |
| १४८. | श्री शंकरमान दली, | देवघाट कल्पवास | .... | १,००१/- |
| १४९. | श्री सरस्वती दली, | देवघाट कल्पवास | .... | १,००१/- |
| १५०. | श्री तुलाराम भक्त, | तोरीखोला बाग्लुङ् | .... | १,००१/- |
| १५१. | श्री हरिलाल कण्डेल, | रामकोट - बिहूँ, बाग्लुङ् | .... | १,००१/- |
| १५२. | श्री मोतीलाल कण्डेल, | बिहूँ - ५, बाग्लुङ् | .... | १,००१/- |
| १५३. | श्री गंगाप्रसाद कण्डेल (कान्रोटे), | बिहूँ -५, बाग्लुङ् | .... | १,००१/- |
| १५४. | श्री पं० सिद्धिनाथ पाण्डेय, | रामकोट, बिहूँ, बाग्लुङ् | .... | १,००१/- |
| १५५. | श्री कमलप्रसाद सुवेदी, | बिसुखर्क भञ्ज्याङ, गुल्मी | .... | १,००१/- |
| १५६. | श्री गंगाराम गौतम, | बिसुखर्क भञ्ज्याङ, गुल्मी | .... | १,००१/- |
| १५७. | श्री दुर्गाबहादुर सुवेदी, | बिसुखर्क भञ्ज्याङ्ग, गुल्मी | .... | १,००१/- |
| १५८. | श्री परशुराम (मिठु) गैरे, | भ. न. पा-९, चितवन | .... | १,००१/- |
| १५९. | श्री लालु गैरे, | भ. न. पा-९, चितवन | .... | १,००१/- |
| १६०. | श्री परमानन्द कण्डेल, | भ. न. पा-९, चितवन | .... | १,००१/- |
| १६१. | श्री प्रेमप्रसाद कण्डेल, | भ. न. पा-९, चितवन | .... | १,००१/- |
| १६२. | श्री दधिराम सापकोटा, | भ. न. पा-६ लंकू, चितवन | .... | १,००१/- |
| १६३. | श्री फणीन्द्र सापकोटा, | गैंडाकोट-९, नवलपरासी | .... | १,००१/- |
| १६४. | श्री विक्रम गौतम, | दिब्रुङ- ८, गुल्मी | .... | १,००१/- |
| १६५. | श्री बालकृष्ण खरेल, | दिबुङ- ६ गुल्मी | .... | १,००१/- |
| १६६. | श्री खगेश्वर पौडेल, | गैंडाकोट-८, नवलपरासी | .... | १,००१/- |
| १६७. | श्री धनकुमारी रानाभाट, | देवघाट कल्पवास | .... | १,००१/- |
| १६८. | श्री नर्मदा भक्तिनी, | देवघाट, कल्पवास | .... | १,००१/- |
| १६९. | श्री धनकला भक्तिनी, | देवघाट, कल्पवास | .... | १,००१/- |
| १७०. | श्री मुक्तिराम कण्डेल, | बिहूँ-२, बाग्लुङ् | .... | १,००१/- |
| १७१. | पं० श्री गदाधर घिमिरे, | देवघाट, चितवन | .... | १,००१/- |
| १७२. | श्री मधुसूदन बर्तौला, | भ.न.पा-११, बसेनी | .... | १,००१/- |
| १७३. | श्री मीतु अर्याल, | भ.न.पा-११, बसेनी | .... | १,००१/- |
| १७४. | श्री दुर्गाप्रसाद कण्डेल, | अमरापुरी-६, नवलपरासी | .... | १,००१/- |

| क्रम सं. | सहयोगदाताको नाम | ठेगाना | | सहयोग रु. |
|---|---|---|---|---|
| १७५. | श्री विष्णुप्रसाद लुइटेल, | अमरापुरी-६, नवलपरासी | .... | १,००१/- |
| १७६. | श्री बलबहादुर खत्री, | सुर्तानी, पूर्व चितवन | .... | १,००१/- |
| १७७. | श्री हेमलाल कण्डेल, | सुर्तानी, पूर्वचितवन | .... | १,००१/- |
| १७८. | श्री रमाकान्त कण्डेल, | कठार, शान्तिबजार-४, चितवन | .... | १,००१/- |
| १७९. | श्री मोतिलाल ढकाल, | गुञ्जानगर, चितवन | .... | १,००१/- |
| १८०. | श्री तिलकप्रसाद सापकोटा, | गैंडाकोट, नवलपरासी | .... | १,००१/- |
| १८१. | श्री रामप्रसाद कण्डेल, | पुरानो पर्सा, चितवन | .... | १,००१/- |
| १८२. | श्री लोकनाथ खरेल, | भ. न. पा-६, लङ्कू | .... | १,००१/- |
| १८३. | पं० श्री इन्द्रप्रसाद भट्टराई, | कावासोती, नवलपरासी | .... | १,००१/- |
| १८४. | श्री रत्नाखर सापकोटा, | गैंडाकोट, नवलपरासी | .... | १,००१/- |
| १८५. | श्री चन्द्रमणि पौडेल, | दुर्गानगर -रूपन्देही | .... | १,००१/- |
| १८६. | श्री लीलाभक्त आचार्य, | पार्दी पोखरा उ. म.न.पा. कास्की | .... | १,००१/- |
| १८७. | श्री डम्बरबहादुर श्रेष्ठ, | बाग्लुङ् बजार | .... | १,००१/- |
| १८८. | श्री द्वारिकानारायण भारी, | बाग्लुङ् बाजार, | .... | १,००१/- |
| १८९. | श्री टीकारामाचार्य, | गुरुमन्दिर, नाङ्लीबाङ् पर्वत | .... | १,००१/- |
| १९०. | श्री मीठु अर्याल, | अमरापुरी -६, नवलपरासी, | .... | १,००१/- |
| १९१. | श्री हरिलाल रिजाल, | भ. न. पा.-९, शरद्पुर | .... | १,००१/- |
| १९२. | श्री त्रिलोचन रिजाल, | भ. न. पा.-९, शरद्पुर | .... | १,००१/- |
| १९३. | श्री केशव अर्याल, | दिब्रुङ् गुल्मी | .... | १,००१/- |
| १९४. | श्री कृष्ण सापकोटा, | दिब्रुङ् गुल्मी | .... | १,००१/- |
| १९५. | श्री जयन्ती श्रेष्ठ, | शान्तिनगर, गुल्मी | .... | १,००१/- |
| १९६. | श्री भोजराज भण्डारी, | शिशुवा, कास्की (हाल देवघाट-२) | .... | १,०००/- |
| १९७. | श्री कलाधर खरेल, | अर्जेवा-७, गुल्मी | .... | १,०००/- |
| १९८. | श्री पं० कमलाकान्त सुवेदी, | देवघाट, चितवन | .... | १,०००/- |
| १९९. | श्री रुक्माङ्गद अर्याल, | देवघाट, गुल्मी | .... | १,०००/- |
| २००. | श्री दिव्यदेव ज्ञवाली, | देवघाट, कल्पवास | .... | १,०००/- |
| २०१. | श्री कुलानन्द वानप्रस्थी, | श्रीराम मन्दिर, अमरापुरी-६ | .... | १,०००/- |
| २०२. | श्री होमबहादुर सापकोटा, | खैरहनी-६, पूर्वचितवन | .... | १,०००/- |

★



## श्रद्धेय ब्रह्मलीन श्री १००८ स्वामी परमानन्द सरस्वतीजी महाराजद्वारा स्थापित एवं सञ्चालित विशिष्ट आश्रम तथा शाखा प्रशाखाहरू :—

१. श्री परमानन्द संन्यास आश्रम, धर्मद्वारी दिब्रुङ्, गुल्मी।
२. श्री त्रिपुरेश्वर शिवाश्रम (श्री परमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुल) बिहूँ, रामकोट बाग्लुङ्ग।
३. श्री परमानन्द आश्रम, राममन्दिर, बिहूँ बाग्लुङ्ग।
४. श्री हरिहर आश्रम तपोवन, शालिमे दह, गुल्मी।
५. श्री नर्मदेश्वर शिवाश्रम (श्री परमानन्द वेदवेदाङ्ग संस्कृत गुरुकुल) रूपाकोट, गुल्मी।
६. श्री पञ्चवटी रामाश्रम, रूपाकोट् सोता, गुल्मी।
७. श्री परमानन्द शान्ति आश्रम, परमानन्द नगर गुल्मी।
८. श्री राम आश्रम (राममन्दिर-रुद्रवेणी) गुल्मी।
९. श्री गायत्री विद्यापीठ, रुरुक्षेत्र (रिडी) गुल्मी।
१०. श्री परमानन्द गुफा, रुरुक्षेत्र (रिडी) गुल्मी।
११. श्री दुर्गा संस्कृत-वेदवेदाङ्ग-विद्यापीठ, दुर्गानगर, रूपन्देही।
१२. श्री शिव मन्दिर, अमरापुरी, नवलपरासी
१३. श्री रामाश्रम (राममन्दिर) अमरापुरी, नवलपरासी
१४. श्री त्रिपुरेश्वर आश्रम (श्री परमानन्द वेदवेदाङ्ग-संस्कृत-विद्यालय) शरद्पुर, चितवन।
१५. श्री शिवालय (पशुपति मन्दिर) बोल बम काँवरिया लंकू, चितवन।
१६. श्री हरिहर गुफा, भलाम, कास्की।
१७. श्री हरिहर आश्रम (श्री जैमिनी संस्कृत-विद्यापीठ) शिवपुरी, दमेक बाग्लुङ्ग।
१८. श्री लक्ष्मीनारायण मन्दिर, क्यूँ, गुल्मी।
१९. श्री शिव मन्दिर पचुवा, बाग्लुङ्ग।
२०. श्री नर्मदेश्वर शिवालय, लेखानी, बाग्लुङ्ग।
२१. श्री हरिहर मन्दिर, शीतलनगर गैंडाकोट, नवलपरासी।
२२. **प्रमुख केन्द्र : श्री हरिहर संन्यास आश्रम (हरिहर मन्दिर) देवघाट धाम, तनहूँ।**

# स्वामी परमानन्द गुरु-स्मृतिग्रन्थ निर्माण मूलसमिति

| | | | |
|---|---|---|---|
| १. | अध्यक्ष | - | श्री १००८ स्वामी डॉ० रामानन्द गिरि, देवघाट धाम, तनहूँ |
| २. | उपाध्यक्ष | - | श्री १००८ स्वामी ज्ञानानन्द सरस्वती, देवघाट धाम, तनहूँ |
| ३. | उपाध्यक्ष | - | प्रा० श्रीजगन्नाथ शर्मा कण्डेल, चितवन |
| ४. | सचिव | - | श्रीचूड़ामणि शर्मा कण्डेल, नवलपरासी |
| ५. | सह-सचिव | - | श्रीगुरुप्रसाद सुवेदी, देवघाट |
| ६. | कोषाध्यक्ष | - | श्रीआत्माराम पौडेल, ललितपुर |
| ७. | सह-कोषाध्यक्ष | - | श्रीऋषिराम खरेल, गुल्मी |
| ८. | सदस्य | - | श्रीगोविन्दप्रसाद कण्डेल, बाग्लुङ |
| ९. | सदस्य | - | श्रीजगन्नाथ त्रिपाठी, काठमाण्डौं |
| १०. | सदस्य | - | श्रीचेतराज कण्डेल, नवलपरासी |
| ११. | सदस्य | - | श्रीदत्तात्रेय दाहाल, दाङ् |
| १२. | सदस्य | - | श्रीदेवमाया ज्ञवाली, रुपन्देही |
| १३. | सदस्य | - | श्रीनवीन अग्रवाल, काठमाण्डौं |
| १४. | सदस्य | - | श्रीनरहरिखरेल, रुपन्देही |
| १५. | सदस्य | - | श्रीपूर्णबहादूर भुजू, देवघाट |
| १६. | सदस्य | - | श्रीरामचन्द्र शर्मा पौडेल, तनहूँ |
| १७. | सदस्य | - | श्रीइन्द्रप्रसाद भट्टराई, नवलपरासी |
| १८. | सदस्य | - | श्रीहीरामणि अर्याल, गुल्मी |
| १९. | सदस्य | - | श्रीलोकनाथ खरेल, रूपन्देही |
| २०. | सदस्य | - | श्रीरामचन्द्र कण्डेल, नवलपरासी |
| २१. | सदस्य | - | श्रीयज्ञमूर्ति खरेल, काठमाण्डौ |

★

# हार्दिक कृतज्ञता र अनुरोध

* ब्रह्मलीन स्वामीज्यूको जीवनी प्रकाश पार्ने सम्बन्धमा सकेसम्म वास्तविकता झल्काउने प्रयासले यथासम्भव प्राप्त जनश्रुति, प्रत्यक्षदर्शीहरूको भनाइ, वर्तमानका प्रत्यक्ष प्रमाण र विभिन्न लेखहरू सङ्कलन गरी परिमार्जित रूपमा पाठकवर्ग समक्ष पुऱ्याउने लक्ष्य रहेकै हो, तथापि कतिपय प्रसङ्गमा भिन्नै तिथि उल्लेख हुन गई मतमा एकता आउन नसक्ला; यस सम्बन्धमा विज्ञजनबाट कुनै ठोस प्रमाण प्राप्त भएमा स्वामीज्यूसंग सम्बन्धित आगामी लेखन र प्रकाशनको अवसर मिलेमा उक्त विषयलाई समावेश गर्ने नै छौं।

* ब्रह्मलीन स्वामीज्यूको व्यक्तित्व र विविध विषयगत लेख प्रदान गर्नुका साथै विभिन्न सामाग्री उपलब्ध गराई ग्रन्थको गौरव बढाइदिनुहुने विशिष्ट मनीषि एवं अन्य सहयोगीवर्ग प्रति हामी आभार व्यक्त गर्दछौं। साथै ग्रन्थको आंकार, प्रकाशन क्षमता र उपयुक्त लेखचयनतर्फ दृष्टि दिँदा प्राप्त सबै लेखहरू प्रकाशन गर्न न सकिएकोमा क्षमाप्रार्थी छौं।

* धार्मिक जागृति र लोक-कल्याणनिम्ति आफ्नो सिङ्गो जीवन लगाउनुहुने स्वामीज्यूका महत्ताको कदर गरी विभिन्न संघ, संस्था र सामाजिक निकायबाट समर्पित प्रशंसापत्र र थुप्रै अभिनन्दन-पत्रहरू थिए तापनि विविध कारणवश उपलब्ध हुन नसकेकाले प्रकाशन गर्न असक्षम भयौं।

* आगामी वर्षहरूमा लेखक, पाठक, बुद्धिजीवी तथा सहयोगीवर्गको सुझाव, स्नेह र प्रेरणा प्राप्त हुँदै गएमा ब्रह्मलीन स्वामीज्यूका विविध पक्षलाई समेटी प्रकाशन विधामा नयाँ आयाम थप्दै लान सकिने आशा समेत व्यक्त गर्दछौं।

—सम्पादक-मण्डल

